# विषयसूची

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

## अथर्ववेद - संहिता

# ॥अथ प्रथमं काण्डम् ॥

### १. मेधाजनन सूक्त

**ऋषि**— अथर्वा । **देवता**— वाचस्पति । **छन्द**— अनुष्टुप् चतुष्पदा विराट् उरोबृहती ।

**ये त्रिषप्ताः परियन्ति विश्वा रूपाणि बिभ्रतः । वाचस्पतिर्बला तेषां तन्वो अद्य दधातु मे ॥१॥**

यी तीन गुने सातका संयोगहरू विश्वका सबै रूपहरूलाई धारण गरेर सर्बतिर व्याप्त रहँदै गतिशील अवस्थामा रहेका हुन्छन् । हे वाचस्पतिदेवता ! तिनका शरीरमा भएको बल आज हामीलाई तिमी प्रदान गर ।

**पुनरेहि वाचस्पते देवेन मनसा सह । वसोष्पते नि रमय मय्येवास्तु मयि श्रुतम् ॥२॥**

हे वाचस्पतिदेवता ! तिमी दिव्य प्रकाशित ज्ञानले युक्त भएर, बारम्बार हाम्रा सामु आऊ । हे वास्तोस्पतिदेवता ! हामीलाई तिमी प्रसन्न गराऊ । हामीले आर्जन गरेको ज्ञान हामीसँगै स्थिर रहोस् ।

**इहैवाभि वि तनूभे आर्त्नी इव ज्यया । वाचस्पतिर्नि यच्छतु मय्येवास्तु मयि श्रुतम् ॥३॥**

हे देवता ! धनुषमा चढाइएको ताँदोले तानेका दुवै किनाराको जस्तै दैवी ज्ञान धारण गर्नमा समर्थ, प्रतिभा र बुद्धि एवं वाञ्छित साधन सामग्री हामीलाई तिमी नै प्रदान गर । हामीले आर्जन गरेको बुद्धि र वैभव सधैँ स्थिर रहोस् ।

**उपहूतो वास्पतिरुपास्मान् वाचस्पतिर्ह्वयताम् । सं श्रुतेन गमेमहि मा श्रुतेन वि राधिषि ॥४॥**

हे वाणीका देवता ! हामीलाई तिमी आफ्ना नजिकै बोलाऊ भनेर नै तिमीलाई हामी आह्वान गर्दछौँ । हामीलाई सधैँ तिम्रो निकटता प्राप्त होस् । हामी कहिल्यै ज्ञानबाट विमुख नहोऔँ ।

### २. रोग उपशमन सूक्त

**ऋषि**— अथर्वा । **देवता**— चन्द्रमा पर्जन्य । **छन्द**— अनुष्टुप् त्रिपदा विराट् गायत्री ।

**विद्मा शरस्य पितरं पर्जन्यं भूरिधायसम् । विद्मो ष्वस्य मातरं पृथिवीं भूरिवपसम् ॥१॥**

अनेकौँ किसिमका चर तथा अचरलाई धारण गर्ने र तिनको पालनपोषण गर्ने पर्जन्यलाई हामी यसै शरका पिताका रूपमा चिन्दछौँ । अनेकौँ किसिमका स्वरूप प्रदान गर्ने पृथ्वीलाई पनि हामीले राम्रो किसिमले नै चिनेका छौँ ।

**ज्याके परि णो नमाश्मनं तन्वं कृधि । वीडुर्वरीयोऽरातीरप द्वेषांस्या कृधि ॥२॥**

हे जन्मदात्री हुनाले ज्याके नाम हुने ! हाम्रा शरीरलाई ढुङ्गोजस्तै बलियो पारेर शक्ति प्रदान गर । द्वेषरूपी शत्रुहरूलाई शक्तिहीन बनाएर हामीदेखि टाढा हटाइदेऊ ।

**वृक्षं यद्गावः परिषस्वजाना अनुस्फुरं शरमर्चन्त्यृभुम् । शरुमस्मद् यावय दिद्युमिन्द्र ॥३॥**

विश्वरूपी वृक्षसित संयुक्त गाईरूपी प्रत्यञ्चा वा इन्द्रियहरूले तेजस्वी शररूपी जीवनतत्त्वलाई स्फुर्ति प्रदान गरेझैँ हे इन्द्रदेवता ! तिमी यस्ता प्रक्रियाका सङ्गठक हुनाले यस तेजयुक्त शरलाई अझै बढाऊ र गतिशील बनाऊ ।

**यथा द्यां च पृथिवीं चान्तस्तिष्ठति तेजनम् । एवा रोगं चास्रावं चान्तस्तिष्ठतु मुञ्ज इत् ॥४॥**

द्युलोक र पृथ्वीका मध्य भागमा रहेका तेजको जस्तै यो मुञ्ज नामको मुक्तिदाता तत्त्व सबै कालका सिर्जित र प्रवाहित रस तथा रोगका बीचमा प्रतिष्ठित रहोस् ।

## ३. मूत्र मोचन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** पर्जन्य मित्र वरुण चन्द्रसूर्य । **छन्द–** अनुष्टुप् पथ्यापङ्क्ति ।

**विद्मा शरस्य पितरं पर्जन्यं शतवृष्ण्यम् । तेना ते तन्वे३ शं करं पृथिव्यां ते निषेचनं बहिष्टे अस्तु बालिति ॥१॥**

यस शरीरका जनक शतवृष्ण पर्जन्यलाई हामी राम्ररी चिन्दछौँ । उनीबाटै तिम्रो कल्याण होस् भन्ने हामी कामना गर्दछौँ । उनैले तिमीलाई विशेष रूपले सेचन गरून् र विकाररूपी शत्रुलाई बाहिर निकालिदिऊन् भन्ने कुरो शरसँग ऋषिले भने ।

**विद्मा शरस्य पितरं मित्रं शतवृष्ण्यम् । तेना ते तन्वे३ शं करं पृथिव्यां ते निषेचनं बहिष्टे अस्तु बालिति ॥२॥**

अनन्त बलशाली प्राणवायुरूपी मित्रदेवता नै शरका पिता हुन् भन्ने कुरो हामीले जानेका छौँ । उनीबाट तिम्रो कल्याण होस् भन्दै त्यस कुराको हामी व्यवस्था गर्दछौँ । तिम्रो सेचन त्यसैले गरोस् र विकारहरू सबै बाहिर आऊन् ।

**विद्मा शरस्य पितरं वरुणं शतवृष्ण्यम् । तेना ते तन्वे३ शं करं पृथिव्यां ते निषेचनं बहिष्टे अस्तु बालिति ॥३॥**

शरलाई पालनपोषण गर्ने शक्तिशाली वरुणदेवतालाई हामी चिन्दछौँ । उनले तिम्रो शरीरलाई कल्याण गरून् । तिमीलाई विशेष किसिमको पोषण प्राप्त होस् र विकृतिजति बाहिर निस्केर जाऊन् ।

**विद्मा शरस्य पितरं चन्द्रं शतवष्ण्यम् । तेना ते तन्वे३ शं करं पृथिव्यां ते निषेचनं बहिष्टे अस्तु बालिति ॥४॥**

शरका पिता आनन्ददायक चन्द्रदेवता हुन् भन्ने हामीले जानेका छौँ । उनैले तिमीलाई कल्याण गरून् । उनीबाट नै तिमीलाई विशेष पोषण प्राप्त होस् र दोषहरू सबै बाहिर निस्किऊन् ।

**विद्मा शरस्य पितरं सूर्यं शतवृष्ण्यम् । तेना ते तन्वे३ शं करं पृथिव्यां ते निषेचनं बहिष्टे अस्तु बालिति ॥५॥**

विशेष शक्तिले सम्पन्न, पवित्रतायुक्त सूर्यदेवता नै शरका पालक हुन् भन्ने कुरो हामीलाई थाहा छ । उनैले तिनको विशेष कल्याण गरून् । उनैबाट विशेष पोषण प्राप्त होस् र विकार एवं विकृतिहरू बाहिर निस्केर जाऊन् ।

**यदान्त्रेषुगवीन्योर्यद्वस्तावधि संश्रुतम् । एवा ते मूत्रं मुच्यतां बहिर्बालिति सर्वकम् ॥६॥**

मूत्रवाहिनी नाडीहरू, मूत्राशय र आँतमा रहेको दूषित जल मूत्रका रूपमा यस उपचारले सम्पूर्ण रूपमा वेगका साथ शब्द गर्दै वगेर शरीरबाट बाहिर निस्केर जाओस् ।

**प्र ते भिनद्मि मेहनं वर्त्रं वेशन्तया इव । एवा ते मूत्रं मुच्यतां बहिर्बालिति सर्वकम् ॥७॥**

यस शरले मूत्रको मार्ग खोलिदिन्छ । बाँध भत्किएपछि जलाशयको जल तुरुन्तै बाहिर निस्केर गएझैँ रोगीका पेटभित्र रहेका सबै खालका विकारहरू वेगपूर्वक बाहिर निस्केर जाऊन् ।

**विषितं ते वस्तिबिलं समुद्रस्योदधेरिव । एवा ते मूत्रं मुच्यतां बहिर्बालिति सर्वकम् ॥८॥**

तिम्रा मूत्राशयबाट बाहिर आउने प्वाल खोलिदिन्छौँ । विकारयुक्त जल मूत्रका रूपमा उसरी नै शब्द निकाल्दै निस्कोस्, जसरी नदीको पानी गड्गडाएर समुद्रतिर वगेर जान्छ ।

**यथेषुका परापतदवसृष्टाधि धन्वनः । एवा ते मूत्रं मुच्यतां बहिर्बालिति सर्वकम् ॥९॥**

धनुषबाट छोडिएको, तीव्र गतिले अगाडि जाने बाणजस्तै भएर तिम्रो सम्पूर्ण मूत्ररूपी विकार वेगपूर्वक बाहिर निस्केर जाओस् ।

## ४. अपांभेषज सूक्त

**ऋषि**— सिन्धुद्वीप । **देवता**— अपांनपात् सोम आपःदेवता । **छन्द**— गायत्री बृहती ।

**अम्बयो यन्त्यध्वभिर्जामयो अध्वरीयताम् । पृञ्चतीर्मधुना पयः ॥१॥**

...दिदीबहिनीजस्ता यज्ञले उत्पन्न गराएका पोषक धाराहरू यज्ञकर्ताका लागि दुध र पानी ...एर त्यसमा मधुर रस मिसाउँछन् ।

**अमूर्या उप सूर्ये याभिर्वा सूर्यः सह । ता नो हिन्वन्त्वध्वरम् ॥२॥**

...को सम्पर्कमा आएपछि वाष्पीकृत भएर पवित्र बनेको जल, उसैका शक्तिले पर्जन्यको वर्षाका ...ना आएर हाम्रा सत्कर्महरूलाई बढाओस् र हाम्रो यज्ञ पनि सफल गराओस् ।

**अपो देवीरुप ह्वये यत्र गावः पिबन्ति नः । सिन्धुभ्यः कर्त्वं हविः ॥३॥**

...उसै दिव्य जलधारालाई प्रार्थना गर्दछौँ, जो सिन्धु वा अन्तरिक्षका लागि हवि प्रदान गर्दछ ... त्यसै धाराले हाम्रा गाईरूपी इन्द्रियहरू अथवा वाणीलाई सन्तुष्ट गराउँछ ।

**अप्स्व१न्तरमृतमप्सु भेषजम् । अपामुत प्रशस्तिभिरश्वा भवथ वाजिनो गावो भवथ वाजिनीः ॥४॥**

...को शक्ति, रोगनाशक एवं पुष्टिकारक आदि दैवी गुणले युक्त यो अपतत्त्वका रूपमा रहका ...ले हाम्रा अश्व एवं गाईलाई वेग प्रदान गरोस् र हामीलाई बल तथा वैभवले सम्पन्न गराओस् ।

## ५. अपांभेषज सूक्त

**ऋषि**— सिन्धुद्वीप । **देवता**— अपांनपात् सोम आपःदेवता । **छन्द**— गायत्री ... गायत्री ।

**आपो हि ष्ठा मयोभुवस्ता नऊर्जे दधातन । महे रणाय चक्षसे ॥१॥**

...देवता ! तिमी सम्पूर्ण प्राणीलाई सुख प्रदान गर्दछौ । सुखको उपभोगका साथ सं...रमा ... गर्दै हामीलाई उत्तम दृष्टि प्राप्त गर्नका लागि पुष्ट बनाऊ ।

**यो वः शिवतमो रसस्तस्य भाजयतेह नः । उशतीरिव मातरः ॥२॥**

...माको सागर उर्लने गरेका माताको जस्तै हामीलाई तिमी आफ्ना सबैभन्दा कल्याणकारी ... सहभागी बनाऊ ।

**तस्मा अरं गमाम वो यस्य क्षयाय जिन्वथ । आपो जनयथा च नः ॥३॥**

...आदिले उत्पन्न सबै प्राणीलाई पोषण गराउने हे दिव्य रसका प्रवाह ! हामीले तिम्रो निकटता ...खोजेका छौं । हाम्रो अत्यन्त उन्नति होस् ।

**ईशाना वार्याणां क्षयन्तीश्चर्षणीनाम् । अपो याचामि भेषजम् ॥४॥**

...निवारण गर्ने दिव्य गुणले सम्पन्न जललाई हामी आह्वान गर्दछौँ । त्यसले हामीलाई सुख र ... प्रदान गरोस् । त्यस्तो औषधिका रूपमा रहेका जललाई हामी सबैले प्रार्थना गर्दछौँ ।

## ६. अपांभेषज सूक्त

**ऋषि**— सिन्धुद्वीप अथर्वा । **देवता**— अपांनपात् सोम आपःदेवता । **छन्द**— गायत्री पथ्यापङ्क्ति ।

**शं नो देवीरभिष्टय आपो भवन्तु पीतये । शं योरभि स्रवन्तु नः ॥१॥**

...गुणले युक्त जल हाम्रा लागि अनेकौँ किसिमले कल्याणकारी र प्रसन्नताप्रदायक होस् । ... हाम्रा आकाङ्क्षाहरूको पूर्ति गर्दै हामीलाई आरोग्य प्रदान गर ।

**अप्सु मे सोमो अब्रवीदन्तर्विश्वानि भेषजा । अग्निं च विश्वशम्भुवम् ॥२॥**

...को दिव्य जल हरेक किसिमका औषधीय गुणले युक्त हुन्छ । त्यसैमा कल्याणकारी ...नि विद्यमान छ भन्ने सन्देश सोमले हामीलाई दिएका छन् ।

**आपः पृणीत भेषज वरूथं तन्वे३ मम । ज्योक् च सूर्यं दृशे ॥३॥**

...लामो समयसम्म देख्न सक्ने गरी हामीले दीर्घ जीवन प्राप्त गरौँ । हे आपः देवता ! हाम्रा ... आरोग्य प्रदायक औषधिहरू तिमीले प्रदान गर ।

**शं न आपो धन्वनयाः शमु सन्त्वनूप्याः । शं नः खनित्रिमा आपः शमु याः कुम्भ आभृताः शिवा न सन्तु वार्षिकीः ॥४॥**

सुखा मरुस्थलको जल हामीलाई कल्याणकारी होस् । जलमय प्रदेशका जलले हामीलाई सुख प्रदान गरोस् । जमिनलाई खनेर निकालिएका इनार आदिको जल हाम्रा लागि सुखप्रद होस् । पात्रमा राखिएको जल हामीलाई शन्ति प्रदान गर्ने खालको होस् । वर्षाबाट प्राप्त गरेको जल हाम्रा जीवनमा सुखशान्तिको वर्षा गराउने खालको सिद्ध होस् ।

## ७. यातुधाननाशन सूक्त

**ऋषि**— चातन । **देवता**— अग्नि, अग्नीन्द्र । **छन्द**— अनुष्टुप्, त्रिष्टुप् ।

**स्तुवानमग्न आ वह यातुधानं किमीदिनम् । त्वं हि देव वन्दितो हन्ता दस्योर्बभूविथ ॥१॥**

हे अग्निदेवता ! तिमीलाई हामी वन्दना गर्दछौं । दुष्टता बढाउने शत्रुहरूलाई तिमी आफ्ना प्रभावले नजिकै बोलाऊ । हामीले तिम्रो वन्दना गरेका हुनाले तिनीहरूको खराबी नाश गर ।

**आज्यस्य परमेष्ठिञ्जातवेदस्तनूवशिन् । अग्ने तौलस्य प्राशान यातुधानान् वि लापय ॥२॥**

उच्च पदमा आसी, ज्ञानका खानी, पेटको अग्निका रूपमा शरीरलाई सन्तुलनमा राख्ने हे अग्निदेवता ! हाम्रो स्रुवा नामका पात्रले तौलेर प्रदान गरेको आज्यलाई आहुतिका रूपमा ग्रहण गर । हाम्रा स्नेहले प्रसन्न भएर तिमी दुष्ट र दुराचारीहरूलाई बिलौना गरेर रुने बनाऊ अथवा तिनको विनाश गर ।

**वि लपन्तु यातुधाना अत्त्रिणो ये किमीदिनः । अथेदमग्ने नो हविरिन्द्रश्च प्रति हर्यतम् ॥३॥**

अर्कालाई दुःख दिने, आफ्नो स्वार्थ सिद्ध गर्नेजस्ता समाजका शत्रुलाई आफ्नो विनाश हुँदै गरेको देखेर रुन देऊ । हे अग्निदेवता ! तिमी इन्द्रसँग हाम्रो हविष्यान्न प्राप्त गर । हामीलाई सत्कर्मतर्फ प्रेरित गर ।

**अग्निः पूर्व आ रभतां प्रेन्द्रो नुदतु बाहुमान् । ब्रवीतु सर्वो यातुमानयमस्मीत्येत्य ॥४॥**

पहिले अग्निदेवता असुर विनाश गर्ने कार्य आरम्भ गरून् । बलशाली इन्द्रदेवताले प्रेरणा प्रदान गरून् । यी दुवै जनाका प्रभावले असुरहरू स्वयं नै आफू उपस्थित भएको कुरो बुझेर प्रायश्चित्त गर्नका लागि तयार होऊन् ।

**पश्याम ते वीर्यं जातवेदः प्र णो ब्रूहि यातुधानान् नृचक्षः । त्वया सर्वे परितप्ताः पुरस्तान् त आ यन्तु प्रब्रुवाणा उपेदम् ॥५॥**

हे ज्ञानका रूपमा रहेका अग्निदेवता ! तिम्रो प्रकाशरूपी पराक्रम हामीले देख्न पाऔँ । तिमी पथभ्रष्ट भएकाहरूलाई मार्गदर्शन गराउन सक्छौ । त्यसो हुँदा आफ्ना प्रभावले हाम्रा शत्रुहरूलाई पनि सन्मार्गमा प्रेरित गर । तिम्रा आज्ञाले तातिएको असुरता पनि आफ्नो परिचय दिँदै प्रायश्चित्त गर्नका लागि नजिकिएर आओस् ।

**आ रभस्व जातवेदोऽस्माकार्थाय जज्ञिषे । दूतो नो अग्ने भूत्वा यातुधानान् वि लापय ॥६॥**

हे ज्ञानसम्पन्न अग्निदेवता ! तिमी यज्ञीय शुभ कर्मको थालनी गर । हाम्रो प्रतिनिधि बनेर तिमी दुष्टहरूले गरेका कार्यप्रति तिनीहरूलाई रुवाऊ ।

**त्वमग्ने यातुधानानुपबद्धाँ इहा वह । अथैषामिन्द्रो वज्रेणापि शीर्षाणि वृश्चतु ॥७॥**

हे मार्गदर्शक अग्निदेवता ! तिमी दुराचारीहरूलाई यहाँ आउनका लागि बाध्य गराऊ र इन्द्रदेवताले वज्रले तिनको टाउको गिँडिदिऊन् ।

## ८. यातुधाननाशन सूक्त

**ऋषि**— चातन । **देवता**— बृहस्पति अग्नीषोम अग्नि । **छन्द**— अनुष्टुप् बार्हतगर्भा त्रिष्टुप् ।

**इदं हविर्यातुधानान् नदी फेनमिवा वहत् । य इदं स्त्री पुमानकरिह स स्तुवतां जनः ॥१॥**

नदीले फिँज आदि फोहोर बगाएझैं यस हविले पापीहरूलाई यहाँबाट बढारेर पर लगिदेओस् । दुष्कर्ममा लागेका स्त्रीपुरुषले आफ्नो रक्षा गर्नका लागि तिमीलाई स्तुति गरून् ।

**अयं स्तुवान आगमदिमं स्म प्रति हर्यत । बृहस्पते वशे लब्ध्वाग्नीषोमा वि विध्यतम् ॥२॥**
प्रायश्चित्तका भावनाले शरण पर्न आएका दुष्टहरूलाई स्वागत गर । हे मार्गदर्शक, ज्ञानका खानी ! तिमी आफ्ना सद्गुणले तिनलाई वशमा गराऊ । अग्नि र सोमले उपचारका लागि तिनीहरूलाई विशेष किसिमले परीक्षण गरून् ।

**यातुधानस्य सोमप जहि प्रजां नयस्व च । नि स्तुवानस्य पातय परमक्ष्युतावरम् ॥३॥**
हे ज्ञानको अमृत पान गराउने सोमदेवता ! आसुरी वृत्तिको समूल नाश होस् भनेर उनीहरूका सन्तानसम्म पुगेर तिमी तिनीहरूलाई सन्मार्गमा प्रेरित गर । सन्मार्गको अनुसरण गर्नेहरूका आँखा विनयशीलताले झुकिरहून् ।

**यत्रैषामग्ने जनिमानि वेत्थ गुहा सतामत्त्रिणां जातवेदः । तांस्त्वं ब्रह्मणा वावृधानो जह्येषां शततर्हमग्ने ॥४॥**
हे प्रकाशपुञ्ज अग्निदेवता ! तिमी पथभ्रष्टहरूका सन्तान भएका गुफाहरूमा समेत पुगेर आफ्ना दिव्य प्रकाशले उनीहरूलाई सन्मार्ग देखाऊ । यसै गरेर तिमी सबैका कष्टहरू हटाऊ ।

## ९. विजयप्रार्थना सूक्त

**ऋषि–** अथर्वा । **देवता–** वसुगण इन्द्र पूषा वरुण मित्र अग्नि आदित्यगण विश्वेदेवा देवगण सूर्य अग्नि हिरण्य । **छन्द–** त्रिष्टुप् ।

**अस्मिन् वसु वसवो धारयन्त्विन्द्रः पूषा वरुणो मित्रो अग्निः । इममादित्या उत विश्वे च देवाः उत्तरस्मिञ्ज्योतिषि धारयन्तु ॥१॥**
वैभवको कामना गर्ने यी पुरुषलाई आठ वसुदेवता, इन्द्र, पूषा, वरुण, मित्र, अग्नि आदि सबै देवताले धारण गरेर आआफ्नो अनुग्रह प्रदान गरून् । आदित्य र अन्य सबै देवताले यिनलाई तेजस्विता प्रदान गरून् ।

**अस्य देवाः प्रदिशि ज्योतिरस्तु सूर्यो अग्निरुत वा हिरण्यम् । सपत्ना अस्मदधरे भवन्तूत्तमं नाकमधि रोहयेमम् ॥२॥**
हे देवताहरू हो ! सूर्यको तेजस्विता, अग्निको प्रखरता, चन्द्रको शीतलता र स्वर्णको आभाले मानिसका जीवनलाई उच्च बनाओस् । आफ्ना संयमले यी शक्तिहरूलाई बढाउँदै त्यस्ता मानिसले आसुरी वृत्तिका रूपमा रहेका शत्रुहरूलाई विनाश गरोस् । यसरी नै उसले जीवनमा सर्वोच्च स्थिति प्राप्त गरोस् ।

**येनेन्द्राय समभरः पयांस्युत्रमेन ब्रह्मणा जातवेदः । तेन त्वमग्न इह वर्धयेमं सजातानां श्रैष्ठ्य आ धेह्येनम् ॥३॥**
हे अग्निदेवता ! जुन श्रेष्ठ ज्ञानका बलमा इन्द्र आदि देवताले सम्पूर्ण रसरूपी सुखको उपभोग गर्दछन्, उसै दिव्य ज्ञानले मानिसका जीवनलाई प्रकाशित गराउँदै तिमी उन्नति गराऊ र त्यस मानिसले देवताको जस्तै सुखको जीवन निर्वाह गरोस् ।

**एषां यज्ञमुत वर्चो ददेऽहं रायस्पोषमुत चित्तानयग्ने । सपत्ना अस्मदधरे भवन्तूत्तमं नाकमधि रोहयेमम् ॥४॥**
हे अग्निदेवता ! यस्तै साधकको यज्ञ, तेज, ऐश्वर्य र चित्तलाई म स्वीकार गर्दछु । हामीसित प्रतिस्पर्धा गर्न तम्सेका शत्रुहरू हामीभन्दा तलै रहून् । हे अग्निदेवता ! यस्ता साधकलाई तिमी उचित सुखशान्ति प्रदान गर ।

## १०. पाशविमोचन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** असुर वरुण । **छन्द–** त्रिष्टुप् ककुम्मती अनुष्टुप् ।

**अयं देवानामसुरो वि राजति वशा हि सत्या वरुणस्य राज्ञः । ततस्परि ब्रह्मणा शाशदान उग्रस्य मन्योरुदिमं नयामि ॥१॥**
देवताहरूमध्ये सबैभन्दा बलिष्ठ राजा वरुणदेवता प्रकाशित भएका छन् । उनको इच्छा नै सत्य हो

तापनि हामी दैवी ज्ञानका बलमा उनको स्तुति गरेर पीडित व्यक्तिलाई उनका प्रकोपबाट बचाउँछौं ।

**नमस्ते राजन् वरुणास्तु मन्यवे विश्वं ह्युग्र निचिकेषि द्रुग्धम् । सहस्रमन्यान् प्र सुवामि साकं शतं जीवाति शरदस्तवायम् ॥२॥**

हे सम्पूर्ण ज्ञानले सम्पन्न वरुणदेवता ! तिम्रा कोपबाट पीडित भएका हामीहरू सबै शरणागत बनेर नमस्कार गर्दछौं । हाम्रा सबै खालका दोषहरूलाई तिमीले राम्ररी जानेका छौ । देवत्वका शरणमा पुगेर सद्गुण अपनाएपछि मात्रै सुखी र दीर्घ जीवन प्राप्त हुन्छ भन्ने कुरो सबै मानिसका मनमा लागेको छ ।

**यदुवक्थानृतं जिह्वया वृजिनं बहु । राज्ञस्त्वा सत्यधर्मणो मुञ्चामि वरुणादहम् ॥३॥**

हे दुःख पाएका मानिसहरू हो ! तिमीहरू आफ्ना वाणीलाई दुरूपयोग गर्दै असत्य र पाप वचन बोलेर आफ्नै गरिमा हनन गर्दछौ । सर्वसमर्थ वरुणदेवताका कृपाले यस दुःखद स्थितिबाट म तिमीहरूलाई मुक्त गराउँछु ।

**मुञ्चामि त्वा वैश्वानरादर्णवान् महतस्परि । सजातानुग्रेहा वद ब्रह्म चाप चिकीहि नः ॥४॥**

हे पतित मानवहरू हो ! तिमीहरूलाई हामी नियन्ता वरुणदेवताका प्रचण्ड कोपबाट जोगाउँछौं । हे उग्रदेवता ! तिमी आफ्ना सजातीय दूतहरूलाई यी मानिसहरूलाई मुक्त गर र हाम्रा ज्ञानसम्पन्न स्तोत्रहरूमा ध्यान देओ भन ।

## ११. नारीसुखप्रसूति सूक्ति

**ऋषि–** अथर्वा । **देवता–** पूषा, अर्यमा, वेधा, दिक्, देवगण । **छन्द–** पङ्क्ति, अनुष्टुप्, चतुष्पदा उष्णिक्गर्भा ककुम्मती अनुष्टुप्, पथ्यापङ्क्ति ।

**वषट् तेपूषन्नस्मिन्त्सूतावर्यमा होता कृणोतु वेधाः । सिस्रतां नार्यतप्रजाता वि पर्वाणि जिहतां सूतवा उ ॥१॥**

हे सम्पूर्ण विश्वका पोषक, श्रेष्ठ जनका हितैषि पूषादेवता ! हामी आआफ्नो हवि समर्पित गर्दछौं । तिमी यी प्रसूतालाई सहायता गर । यिनले सावधानीपूर्वक प्रसूतिका लागि आफ्नो अङ्ग खुकुलो पारेर तयार गरून् ।

**चतस्रो दिवः प्रदिशश्चतस्रो भूम्या उत । देवा गर्भं समैरयन् तं व्यूर्णुवन्तु सूतवे ॥२॥**

द्युलोक र भूमिलाई चारै दिशाहरूले घेरेका छन् । दिव्य पञ्चभूतले यस गर्भलाई छोपेर धारण गरेको छ । उसैले यस आवरणबाट मुक्त पारेर बाहिर ल्याओस् ।

**सूषा व्यूर्णोतु वि योनिं हापयामसि । श्रथया सूषणे त्वमव त्वं बिष्कले सृज ॥३॥**

हे प्रसवको तयारीमा लागेकी माता अथवा प्रसवका सहायक देवता ! तिमी गर्भलाई मुक्त गराऊ । गर्भका मार्गलाई फराकिलो गराउँछौं, अङ्गलाई खुकुलो पार र गर्भलाई तल आउनका लागि प्रेरित गर ।

**नेव मांसे न पीवसि नेव मज्जस्वाहतम् । अवैतु पृश्नि शेवलं शुने जराय्वत्तवेऽव जरायु पद्यताम् ॥४॥**

गर्भमा रहेका शिशुलाई बेरेर राखेको साल प्रसूताका शरीरको मासु, मांसपेशी वा बोसोजस्तो काम लाग्ने खालको हुनेछैन । बरु भित्र रहिदियो भने गम्भीर दुष्परिणाम उत्पन्न गराउने नै सिद्ध हुन सक्छ । पानीको घाँसजस्तो नरम बनेर त्यो साल बाहिर आओस् र कुकुरको आहारा बनोस् ।

**वि ते भिनद्मि मेहनं वि योनिं वि गवीनिके । वि मातरं च पुत्रं च वि कुमारं जरायुणाव जरायु पद्यताम् ॥५॥**

हे प्रसूता ! सन्तान जन्माउनमा बाधा नपरोस् भनेर गर्भको मार्ग, योनि र नाडीहरूलाई विशेष किसिमले खुकुलो पारिदिन्छु । आमा र बच्चालाई नालबाट छुट्याइदिन्छु । सालबाट बच्चालाई अलग गराइदिन्छु । सालजति जम्मै नै पृथ्वीमा खसोस् ।

**यथा वातो यथा मनो यथा पतन्ति पक्षिणः । एवा त्वं दशमास्य साकं जरायुणा पताव जरायु पद्यताम् ॥६॥**

तीव्र गतिमा वायु प्रवाहित भएझैं, वेगपूर्वक चरो आकाशमा उडेझैं र तीव्र गतिमा विषय भोगमा मन लिप्त भएझैं दसौं महिना पुगेपछि सालनालसहित गर्भमा रहेको बालक गर्भबाट मुक्त भएर बाहिर आओस् ।

## १२. यक्ष्मनाशन सूक्त

**ऋषि**— भृग्वङ्गिरा । **देवता**— यक्ष्मनाशन । **छन्द**— जगती, त्रिष्टुप्, अनुष्टुप् ।

**जरायुजः प्रथम उस्रियो वृषा वातभ्रजा स्तनयन्नेति वृष्ट्या । स नो मृडाति तन्व ऋजुगो रुजन् य एकमोजस्त्रेधा विचक्रमे ॥१॥**

गर्भका सालबाट बालक बाहिर निस्किएझैं बलशाली सूर्यदेवता वायुका प्रभावले मेघका बीचबाट प्रकट भएर हाम्रा शरीरलाई हर्षित गराउँछन् । उनी सोझो मार्गबाट अगाडि बढ्दै आफ्ना एउटै ओजलाई तीन किसिमले फिँजाउँछन् ।

**अङ्गे अङ्गे शोचिषा शिश्रियाणं नमस्यन्तस्त्वा हविषा विधेम । अङ्कान्त्समङ्कान् हविषा विधेम यो अग्रभीत् पर्वास्या ग्रभीता ॥२॥**

आफ्नै ऊर्जाले प्रत्येक अङ्गमा व्याप्त रहने गरेका हे सूर्यदेवता ! स्तुति तथा हवि प्रदान गरेर हामी तिमी र तिम्रा नजिकमा रहेका देवताहरूलाई अर्चना गर्दछौं । जसका शरीरका जोर्नीहरू रोगले ग्रस्त भएका छन्, तिनीहरूका लागि पनि हामी तिम्रो पूजा गर्दछौं ।

**मुञ्च शीर्षक्त्या उत कास एनं परुष्परुराविवेशा यो अस्य । यो अभ्रजा वातजा यश्च शुष्मो वनस्पतीन्त्सचतां पर्वतांश्च ॥३॥**

हे आरोग्य प्रदान गर्ने सूर्यदेवता ! हामीलाई रुघाखोकी र टाउको दुख्ने आदि रोगका पिरबाट मुक्त गराऊ । हाडजोर्नीमा परेका रोगका कीटाणुहरूलाई नाश गरिदेऊ । वर्षा, शीत र ग्रीष्म ऋतुका प्रभावले उत्पन्न हुने कफ, वात र पित्तसम्बन्धी रोगहरू विनाश गरिदेऊ । त्यसैका लागि हामी अनुकूल वातावरण र वनको औषधिको सहायता लिने गर्दछौं ।

**शं मे परस्मै गात्राय शमस्त्ववराय मे । शं मे चतुर्भ्यो अङ्गेभ्यः शमस्तु तन्वे३ मम ॥४॥**

हाम्रा शिर आदि श्रेष्ठ अङ्गहरूको हित होस् । हाम्रा पेट आदि साधारण अङ्गको भलो होस् । हातगोडा आदि हाम्रा चारै अङ्गमा कुशलता रहोस् । हाम्रा सम्पूर्ण शरीरमा आरोग्यता रहोस् र हामी स्वस्थ रहौं ।

## १३. विद्युत् सूक्त

**ऋषि**— भृग्वङ्गिरा । **देवता**— विद्युत् । **छन्द**— अनुष्टुप् चतुष्पाद विराट् जगती त्रिष्टुप् पङ्क्ति ।

**नमस्ते अस्तु विद्युते नमस्ते स्तनयित्नवे । नमस्ते अस्त्वश्मने येना दूडाशे अस्यसि ॥१॥**

विद्युत्लाई हाम्रो नमस्कार प्राप्त होस् । गडगडाउने गरेका अशनि नामका विद्युत्देवतालाई हाम्रो नमस्कार छ । हे देवी ! दुःख दिने दुष्टमाथि वज्र प्रहार गरेर तिमी तिनीहरूलाई पर हटाइदिन्छ्यौ ।

**नमस्ते प्रवतो नपाद् यतस्तपः समूहसि । मृडया नस्तनूभ्यो मयस्तोकेभ्यस्कृधि ॥२॥**

हे पर्जन्यदेवता ! तिमी पानीलाई आफ्ना पेटभित्र ग्रहण गर्दछौ र उचित समय नभईकन तल खस्न दिँदैनौ । हामी तिमीलाई प्रणाम गर्दछौं, किनभने हामीभित्र तिमी ताप एकत्र गराउँछौ । हाम्रा शरीरलाई तिमी सुख प्रदान गर र हाम्रा सन्तानलाई पनि सुख प्रदान गर ।

**प्रवतो नपान्नम एवास्तु तुभ्यं नमस्ते हेतये तपुषे च कृण्मः । विद्म ते धाम परमं गुहा यत् समुद्रे अन्तर्निहितासि नाभिः ॥३॥**

उचाइमा रहे पनि नखस्ने गरेका हे पर्जन्यदेवता ! तिमीलाई हामी नमस्कार गर्दछौं । तिम्रा हतियार

र तेजलाई हामी नमस्कार गर्दछौँ । तिमी जुन हृदयरूपी गुफामा निवास गर्दछौ, त्यो हामीलाई थाहा छ । तिमी समुद्रको नाभीजस्तो भएर त्यसमा पनि विद्यमान रहन्छौ ।

**यां त्वा देवा असृजन्त विश्व इषुं कृण्वाना असनाय धृष्णुम् । सा नो मृड विदथे गृणाना तस्यै ते नमो अस्तु देवि ॥४॥**

हे अशनि नामका विद्युत्देवता ! शत्रुमाथि प्रहार गर्नका लागि शक्तिशाली बाणका रूपमा देवताहरूले तिम्रो संरचना गरेका हुन् । अन्तरिक्षमा गर्जना गर्ने हे अशनिदेवता ! तिमीलाई हामी नमस्कार गर्दछौँ । हाम्रो डर हटाएर हामीलाई तिमी हर्ष प्रदान गर ।

## १४. कुलपाकन्या सूक्त

**ऋषि**— भृग्वङ्गिरा । **देवता**— वरुण यम **छन्द**— अनुष्टुप् चतुष्पात् विराट् ।

**भगमस्या वर्च आदिष्यधि वृक्षादिव स्रजम् । महाबुध्न इव पर्वतो ज्योक् पितृष्वास्ताम् ॥१॥**

मानिसले वृक्षबाट फूल ग्रहण गरेझैँ यस विद्युत् रूपी कन्याको सौन्दर्य तथा ओजलाई हामी स्वीकार गर्दछौँ । विशाल पर्वत धर्तीमा स्थिर रहेझैँ यी कन्या निर्भयपूर्वक मातापिताका घरमा लामो समयसम्म रहून् ।

**एषा ते राजन् कन्या वधूर्नि धूयतां यम । सा मातुर्बध्यतां गृहेऽथो भ्रातुरथो पितुः ॥२॥**

हे नियम पालन गर्ने प्रकाशवान् । यी कन्या तिम्री वधू बनेर आचरण गरून् । यी कन्या तिम्रा घरमा रहून्, यिनी मातापिता वा दाजुभाइका घरमा सुखपूर्वक रहून् ।

**एषा ते कुलपा राजन् तामु ते परि दद्मसि । ज्योक् पितृष्वासाता आ शीर्ष्णः समोप्यात् ॥३॥**

हे राजन् ! यी कन्या तिम्रा कुलको रक्षा गर्नका लागि हुन् । तिनलाई हामी तिम्रा लागि प्रदान गर्दछौँ । यिनी निरन्तर मातापिताका बीचमा नै रहून् । शीर्षजस्तै श्रेष्ठ स्तरमा रहेर अथवा उच्च विचारले यिनले शान्ति एवं कल्याणको बीजारोपण गरून् ।

**असितस्य ते ब्रह्मणा कश्यपस्य गयस्य च । अन्तःकोशमिव जामयोऽपि नह्यामि ते भगम् ॥४॥**

हे कन्या ! हामी तिम्रो सौभाग्य असित, गय र कश्यप नामका ऋषिहरूका मन्त्रले बाँधेर आइमाईले आफ्ना लुगागहनाहरू पोको पारेर लुकाएझैँ गरी सुरक्षित राख्छौँ ।

## १५. पुष्टिकर्म सूक्त

**ऋषि**— अथर्वा । **देवता**— सिन्धुसमूह । **छन्द**— अनुष्टुप् भुरिक् बृहती पथ्यापङ्क्ति ।

**सं सं स्रवन्तु सिन्धवः सं वाताः सं पतत्रिणः । इमं यज्ञं प्रदिवो मे जुषन्तां संस्राव्येण हविषा जुहोमि ॥१॥**

नदीहरू र वायु एकापसमा राम्रोसँग मिलेर प्रवाहित भइरहून् तथा पक्षीका समूह उचित किसिमले एकापसमा मिलेर उडिरहून् । देवताहरूको समूहले हाम्रो यज्ञ ग्रहण गरून्, किनभने हामी हविष्यका लागि सङ्गठित तथा एकीकृत गरेर आहुति प्रदान गरिरहेका छौँ ।

**इहैव हवमा यात म इह संस्रावणा उतेमं वर्धयता गिरः । इहैतु सर्वो यः पशुरस्मिन् तिष्ठतु या रयिः ॥२॥**

हे सङ्गठित रूपमा रहने गरेका देवताहरू हो ! तिमीहरू हाम्रा यस यज्ञमा आओ र यस सङ्गठनलाई बलियो बनाओ । प्रार्थना ग्रहण गरेपछि तिमीहरू यस हवि प्रदान गर्ने यजमानलाई प्रजा, पशु आदिसहित सम्पत्तिले पनि सम्पन्न गराओ ।

**ये नदीनां संस्रवन्त्युत्सासः सदमक्षिताः । तेभिर्मे सर्वैः संस्रावैर्धनं सं स्रावयामसि ॥३॥**

यी नदीहरूको अक्षय प्रवाह सर्वत्र सङ्गठित भएर बगिरहेको छ । हामी त्यसै स्रोतका सहायताले पशु तथा धनसम्पत्ति आदि प्राप्त गर्दछौँ ।

**ये सर्पिषः संस्रवन्ति क्षीरस्य चोदकस्य च । तेभिर्भे सर्वैः संस्रावैर्धनं सं स्रावयामसि ॥४॥**
यहाँ जेजति घिउ, दुध र जलका धाराहरू बगिरहेका छन्, ती सबै धाराहरूले हामी धनसम्पत्ति प्राप्त गर्दछौँ ।

## १६. शत्रुबाधन सूक्त

**ऋषि–** चातन । **देवता–** अग्नि इन्द्र वरुण । **छन्द–** अनुष्टुप् ।

**येऽमावास्यां३ रात्रिमुदस्थुर्व्राजमत्त्रिणः । अग्निस्तुरीयो यातुहा सो अस्मभ्यमधि ब्रवत् ॥१॥**
औँसीको अँध्यारो रातका समयमा मानिसमाथि आघात गर्ने र तिनलाई क्षति गराउने असुरहरू विचरण गर्दछन् । उनै असुरहरूका सम्बन्धमा असुर विनाशक चतुर्थ अग्निदेवताले हामीलाई जानकारी गराऊन् ।

**सीसायाध्याह वरुणः सीसायाग्निरुपावति । सीसं म इन्द्रः प्रायच्छत् तदङ्ग यातुचातनम् ॥२॥**
वरुणदेवताले सिसाका सम्बन्धमा बताउका छन् । अग्निदेवताले त्यो सिसा मानिसको सुरक्षा गर्ने साधन हो भनेका छन् । धनवान् इन्द्रदेवताले हामीलाई त्यही सिसा प्रदान गर्दै हे आत्मीय जन हो ! देवताले दिएको यो सिसा असुरलाई प्रतिकार गर्न सक्ने खालको छ भनेका छन् ।

**इदं विष्कन्धं सहत इदं बाधते अत्त्रिणः । अनेन विश्वा ससहे या जातानि पिशाच्याः ॥३॥**
यो सिसा अवरोध उत्पन्न गर्नेहरूलाई हटाउँछ र असुरलाई दुःख दिने गर्दछ । यसैका सहायताले हामी असुरको समस्त जातिलाई नै हामीदेखि धेरै टाढा पुऱ्याइदिन्छौँ ।

**यदि नो गां हंसि यद्यश्वं यदि पूरुषम् । तं त्वा सीसेन विध्यामो यथा नोऽसो अवीरहा ॥४॥**
हे शत्रुहरू हो ! यदि तिमीहरू हाम्रा गाई, अश्व तथा मानिसको संहार गर्दछौ भनेदेखि तिमीहरूलाई सिसाले छेडिदिन्छौँ । त्यसो भएपछि तिमीहरूले हाम्रा वीरलाई संहार गर्न सक्ने छैनौ ।

## १७. रुधिरस्रावनिवर्तनधमनीबन्धन सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** योषित लोहितवासस हीरा । **छन्द–** अनुष्टुप्, गायत्री ।

**अमूर्या यन्ति योषितो हिरा लोहितवाससः । अभ्रातर इव जामयस्तिष्ठन्तु हतवर्चसः ॥१॥**
रातो रगतलाई वहन गर्ने हाम्रा शरीरका योषा नाम भएका सबै धमनीहरू स्थिर होऊन् । दाजुभाइ विनाका प्रभावहीन दिदीबहिनीहरू बाहिर निस्कन नसकेझैँ यी धमनीबाट रक्त बाहिर ननिस्कोस् ।

**तिष्ठावरे तिष्ठ पर उत त्वं तिष्ठ मध्यमे । कनिष्ठिका च तिष्ठति तिष्ठादिद् धमनिर्मही ॥२॥**
हे शरीरका तल अथवा माथि रहेका धमनीहरू हो ! तिमीहरू स्थिर होओ । साना वा ठूला सबै खालका धमनीहरूले रगत बगाउन बन्द गरेर सबै नै स्थिर भइरहून् ।

**शतस्य धमनीनां सहस्रस्य हिराणाम् । अस्थुरिन्मध्यमा इमाः साकमन्ता अरंसत ॥३॥**
सयौँ धमनी र सयौँ नाडीहरूमध्ये मध्य नाडीहरू स्थिर भएका छन् । त्यसका साथसाथै अन्तिम धमनीहरू पनि ठिक भएका छन् । अब तिनीहरूको रक्तस्राव बन्द भएको छ ।

**परि वः सिकतावती धनूर्बृहत्यक्रमीत् । तिष्ठतेलयता सु कम् ॥४॥**
हे नाडीहरू हो ! तिमीहरूलाई रज नाडीले र धनुषका रूपमा रहेको वक्र धनु नामका नाडीले चारैतिरबाट संव्याप्त गराइसकेका छन् । तिमीहरू अब बगाउन बन्द गर र यस रोगीलाई सुख प्रदान गर ।

## १८. अलक्ष्मीनाशन सूक्त

**ऋषि–** द्रविणोदा । **देवता–** विनायक । **छन्द–** बृहती जगती पङ्क्ति त्रिष्टुप् अनुष्टुप् ।

**निर्लक्ष्म्यं ललाम्यं निरारातिं सुवामसि । अथ या भद्रा तानि नः प्रजाया अरातिं नयामसि ॥१॥**

हामी निधारमा रहेका नराम्रा लक्षणहरूलाई पूर्ण रूपमा हटाउँछौँ र हितकारी लक्षणहरू जति छन्, तिनलाई आफू र आफ्ना सन्तानका लागि प्राप्त गर्दछौँ । त्यसका अतिरिक्त हामी कृपणता आदि जस्ता कुविचारलाई पर हटाउँछौँ ।

**निररणिं सविता साविषक् पदोर्निर्हस्तयोर्वरुणो मित्रो अर्यमा । निरस्मभ्यमनुमती रराणा प्रेमां देवा असाविषुः सौभगाय ॥२॥**

मित्रावरुण, सविता र अर्यमा आदि देवताले हाम्रा हातगोडाका नराम्रा लक्षणहरू हटाइदिऊन् । सबैलाई प्रेरणा दिने अनुमतिदेवीले मन लागेको फल प्रदान गर्दै हाम्रा शरीरको नराम्रो लक्षण हटाइदिऊन् । देवताहरूले पनि उनलाई त्यसै किसिमको सौभाग्य प्रदान गर्नका लागि प्रेरित गरेका छन् ।

**यत्त आत्मनि तन्वां घोरमस्ति यद्वा केशेषु प्रतिचक्षणे वा । सर्वं तद् वाचाप हन्मो वयं देवस्त्वा सविता सूदयतु ॥३॥**

हे नराम्रा लक्षणले युक्त मानिसहरू हो ! तिमीहरूको आत्मा, शरीर, कपाल र आँखामा जेजस्ता कुरूपताका नराम्रा लक्षणहरू छन्, ती सबैलाई हामी मन्त्रको उच्चारण गरेर हटाउँछौँ । सवितादेवताले तिमीहरूलाई परिपक्व बनाऊन् ।

**रिश्यपदीं वृषदतीं गोषेधां विधमामुत । विलीढ्यं ललाम्यं ता अस्मन्नाशयामसि ॥४॥**

हरिणका जस्ता गोडा, गोरुका जस्ता दाँत, गाईको जस्तो हिँडाइ र कठोर आवाज भएकी स्त्रीका मस्तकमा रहेका यी सबै नराम्रा लक्षणहरूलाई हामी मन्त्रले हटाइदिन्छौँ ।

## १९. शत्रुनिवारण सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** ईश्वर इन्द्र बाण रुद्र विश्वेदेवा । **छन्द–** अनुष्टुप् बृहती पङ्क्ति ।

**मा नो विदन् विव्याधिनो मो अभिव्याधिनो विदन् । आराच्छरव्या अस्मद्विषूचीरिन्द्र पातय ॥१॥**

हतियारले अत्यन्त घात गरेर घायल बनाउने शत्रुहरू हाम्रा नजिकसम्म आइनपुगून् र चारै तिरबाट संहार गर्ने शत्रुहरू पनि हाम्रा नजिक आइनपुगून् । हे परमेश्वर इन्द्रदेवता ! जताततै फैलिने गरेका बाणहरूलाई तिमी हामीभन्दा धेरै पर खसाऊ ।

**विष्वञ्चो अस्मच्छरवः पतन्तु ये अस्ता ये चास्याः । दैवीर्मनुष्येषवो ममामित्रान् वि विध्यत ॥२॥**

चारैतिर फैलिने खालका बाणहरू तिमीले चलाइसकेका छौ अथवा चलाउनेछौ, ती सबै हाम्रो स्थानभन्दा पर खसून् । हे मानिसहरूले सञ्चालन गरेका दैवी बाणहरू हो ! तिमीहरू हाम्रा शत्रुलाई छिन्नभिन्न पार ।

**यो नः स्वो यो अरणः सजात उत निष्ट्यो यो अस्माँ अभिदासति । रुद्रः शरव्य यैतान् ममामित्रान् वि विध्यतु ॥३॥**

हाम्रा स्वजन होऊन् वा अरू नै कुनै भए पनि अथवा आफ्ना जातिभित्रैका होऊन् अथवा अन्य हीन जातिका नै भए पनि हामीलाई जसले दास बनाउने प्रयास गर्दछन् भनेदेखि त्यस्ता शत्रुलाई रुद्रदेवताले आफ्ना बाणले विदीर्ण गराऊन् ।

**यः सपत्नो योऽसपतनो यश्च द्विषञ्छपाति नः । देवास्तं सर्वे धूर्वन्तु ब्रह्म वर्म ममान्तरम् ॥४॥**

हाम्रा अगाडि देखिएका वा लुकेर बसेका गुप्त शत्रुहरूले विद्वेषको भावना राखेर हाम्रो संहार गर्ने प्रयास गर्दछन् भनेदेखि वा हामीलाई अभिशप्त गराउन चाहन्छन् भनेदेखि ती शत्रुलाई समस्त देवगणले विनाश गरून् र ब्रह्मज्ञानरूपी कवचले हामीलाई सुरक्षा प्रदान गरोस् ।

## २०. शत्रुनिवारण सूक्त

**ऋषि–** अथर्वा । **देवता–** सोम, मरुद्गण, मित्रावरुण, वरुण, इन्द्र । **छन्द–** अनुष्टुप्, त्रिष्टुप् ।

**अदारसृद् भवतु देव सोमास्मिन् यज्ञे मरुतो मृडता नः । मा नो विददभिमा मो अशस्तिर्मा नो विदद् वृजिना द्वेष्या या ॥१॥**

हे सोमदेवता ! आपसमा वैमनस्य उत्पन्न गराउने कार्य हामीले गर्नु नपरोस् । हे मरुत्हरू हो ! हामी जुन युद्धको अनुष्ठान गर्दै छौँ, त्यसमा हामीलाई तिमी हर्षित गराऊ । सम्मुख परेर अगाडि बढ्दै आउने शत्रुको ओज हाम्रा नजिकै आउन नसकोस् र हामीलाई अपयश पनि नआओस् । विद्वेष बढाउने खालका जेजति कुटिल कार्यहरू हुन्छन्, ती सबै हाम्रा नजिक आउन नसकून् ।

**यो अद्य सेन्यो वधोऽघायूनामुदीरते । युवं तं मित्रावरुणावस्मद् यावयतं परि ॥२॥**

[illegible] मित्र र वरुणदेवताहरू हो ! शत्रुले हामीतिर ताकेका अस्त्रले हामीलाई स्पर्श गर्न पनि नसक्ने [illegible] हामीदेखि परै राख । आजका युद्धमा हिंसाका अभिलाषाले ताकिएका शत्रुको अस्त्रहरू सबै [illegible] भन्दा परै राख्ने उपाय गर ।

**इतश्च यदमुतश्च यद् वधं वरुण यावय । वि महच्छर्म यच्छ वरीयो यावया वधम् ॥३॥**

[illegible] वरुणदेवता ! नजिकै उभिएका अथवा पर रहेका शत्रुहरूले संहार गर्नका लागि जेजस्ता शस्त्र [illegible] तिर प्रहार गरेका छन् र यता आउँदै छन्, ती सबै शस्त्रास्त्रहरू हामीबाट पृथक् गराऊ । हे [illegible] देवता ! शत्रुहरूले पाउन नसक्ने खालको उत्तम सुख तिमी हामीलाई प्रदान गर र [illegible] हरूलाई कठोर आयुध प्रहार गर्दै हामीबाट पृथक् गराऊ ।

**शास इत्था महाँ अस्यमित्रसाहो अस्तृतः । न यस्य हन्यते सखा न जीयते कदाचन ॥४॥**

[illegible] इन्द्रदेवता ! तिम्रो शत्रुलाई समाप्त पार्ने क्षमता महान् र अद्भुत खालको छ । तिम्रा [illegible] पनि कहिल्यै मृत्यु प्राप्त हुँदैनन् र न त कहिल्यै शत्रुबाट पराजित नै हुन्छन् ।

## २१. शत्रुनिवारण सूक्त

**ऋषि–** अथर्वा । **देवता–** इन्द्र । **छन्द–** अनुष्टुप् ।

**स्वस्तिदा विशां पतिर्वृत्रहा विमृधो वशी । वृषेन्द्रः पुर एतु नः सोमपा अभयङ्करः ॥१॥**

[illegible] सबैको कल्याण गर्ने, प्रजाहरूको पालन गर्ने, वृत्रासुरलाई विनाश गर्ने, युद्धकर्ता शत्रुलाई [illegible] पार्ने, साधकहरूको कामना पूरा गराउने, सोमपान गर्ने र अभय प्रदान गर्ने हुन् । हाम्रा [illegible] उनी आऊन् ।

**वि न इन्द्रो मृधो नीचा यच्छ पृतन्यतः । अधमं गमया तमो यो अस्माँ अभिदासति ॥२॥**

[illegible] इन्द्रदेवता ! तिमी हाम्रा शत्रुलाई विनाश गर । हाम्रा सेनाले पराजित गराएका शत्रुलाई [illegible] भाग्न नदेऊ । हामीलाई अधीनमा पार्न खोज्ने शत्रुलाई खाल्टामा हाल ।

**वि रक्षो वि मृधो जहि वि वृत्रस्य हनू रुज । वि मन्युमिन्द्र वृत्रहन्नमित्रस्याभिदासतः ॥३॥**

[illegible] इन्द्रदेवता ! तिमी राक्षसलाई विनाश गर । हिंसक दुष्टहरूलाई नष्ट गराऊ । वृत्रासुरको थुतुनो [illegible] । हे शत्रुविनाशक इन्द्रदेवता ! हामीलाई संहार गर्न खोज्ने शत्रुको क्रोध र घमन्ड [illegible] नाश गर ।

**अपेन्द्र द्विषतो मनोऽप जिज्यासतो वधम् । वि महच्छर्म यच्छ वरीयो यावया वधम् ॥४॥**

[illegible] इन्द्रदेवता ! तिमी शत्रुका मनलाई नै दमन गर । हाम्रो संहार गर्न खोज्ने शत्रुलाई नाश गर । [illegible] क्रोधबाट हाम्रो रक्षा गर्दै हामीलाई श्रेष्ठ सुख प्रदान गर । शत्रुबाट आउने हाम्रो मृत्यु

टारिदेऊ ।

## २२. हृद्रोगकामलानाशन सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– सूर्य हरिमा र हृद्रोग । **छन्द**– अनुष्टुप् ।

**अनु सूर्यमुदयतां हृद्द्योतो हरिमा च ते । गो रोहितस्य वर्णेन तेन त्वा परि दध्मसि ॥१॥**

हे रोगले रुख्याएका मानिसहरू हो ! हृदयको रोगका कारण हृदयको जलन र रक्त अल्पताको विकारले तिमीहरूको शरीरमा भएको पहेँलो सूर्यतिर जाओस् । रातो वर्णका गाई अथवा सूर्यका रातो वर्णका रश्मिहरूका सहायताले हामी तिमीहरूलाई अनेकौं किसिमले बलियो बनाउनेछौं ।

**परि त्वा रोहितैर्वर्णैर्दीर्घायुत्वाय दध्मसि । यथायमरपा असदथो अहरितो भुवत् ॥२॥**

हे रोग लागेका मानिसहरू हो ! दीर्घायु प्राप्त गर्नका लागि हामी रातो वर्णले तिमीहरूलाई आवृत्त गराउँछौं । त्यसो भएपछि तिमी रोगरहित भएर पाण्डुरोगबाट मुक्त हुनेछौ ।

**या रोहिणीर्देवत्यार गावो या उत रोहिणीः । रूपंरूपं वयोवयस्ताभिष्ट्वा परिदध्मसि ॥३॥**

देवताहरूले जुन रातो वर्णका गाई अथवा रातो वर्णका रश्मिहरू हुन्छन्, तिनका विभिन्न स्वरूप र विभिन्न किसिमका आयु वृद्धि गराउने गुणले तिमीलाई परिपूर्ण गराउँछन् ।

**शुकेषु ते हरिमाणं रोपणाकासु दध्मसि । अथो हारिद्रवेषु ते हरिमाणं नि दध्मसि ॥४॥**

हामी आफ्नो हरिमाण नामको शरीर सुकाउने रोग हरियो वर्णका सुगा आदि चरा, रोपणाका नामका वृक्ष तथा हरिद्रव नामका वनस्पतिमा स्थापित गराउँछौं ।

## २३. श्वेतकुष्ठ नाशन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– असिक्नी वनस्पति । **छन्द**– अनुष्टुप् ।

**नक्तंजातास्योषधे रामे कृष्णे असिक्नि च । इदं रजनि रजय किलासं पलितं च यत् ॥१॥**

हे रामा, कृष्णा र असिक्नी नामका औषधिहरू हो ! तिमीहरू सबै रातमा नै उत्पन्न भएका हौ । रङ्ग प्रदान गर्ने हे औषधिहरू हो ! तिमीहरू गलित कुष्ठ र श्वेतकुष्ठ नामका रोगले ग्रस्त भएका व्यक्तिहरूलाई रङ्ग प्रदान गर ।

**किलासं च पलितं च निरितो नाशया पृषत् । आ त्वा स्वो विशतां वर्णः परा शुक्लानि पातय ॥२॥**

हे औषधिहरू हो ! तिमीहरू कुष्ठ, श्वेतकुष्ठ र दाग आदिलाई नष्ट गराओ । त्यसो भएपछि यी रोग लागेका मानिसहरूका शरीरमा पहिलेको जस्तै लालिमा प्रवेश गरोस् । तिमीहरू सेता दाग हटाएर यी रोगीहरूलाई आआफ्नो रङ्ग प्रदान गर ।

**असितं ते प्रलयनमास्थानमसितं तव । असिक्न्यस्योषधे निरितो नाशया पृषत् ॥३॥**

हे नीलो रङ्गका औषधिहरू हो ! तिमीहरू उत्पन्न हुने स्थान नीलो वर्णको छ र जुन पात्रमा तिमीहरू स्थित छौ, त्यो पनि नीलो वा कालो रङ्गको छ । हे औषधिहरू हो ! तिमीहरू स्वयं पनि काला वर्णका हुनाले लेपन आदिका माध्यमबाट यी रोगीका कुष्ठ आदि रोगका दाग मेटाइदेओ ।

**अस्थिजस्य किलासस्य तनूजस्य च यत् त्वचि । दूष्या कृतस्य ब्रह्मणा लक्ष्म श्वेतमनीनशम् ॥४॥**

शरीरमा रहेका हड्डी र छालाका बीचको भागमा तथा छालामा रहेका श्वेतकुष्ठ रोगका दागहरूलाई हामीले ब्रह्मज्ञान र मन्त्रको प्रयोग गरेर मेटाइदिएका छौं ।

## २४. श्वेतकुष्ठ नाशन सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– आसुरी वनस्पति । **छन्द**– अनुष्टुप् निचृत् पथ्या पङ्क्ति ।

**सुपर्णो जातः प्रथमस्तस्य त्वं पित्तमासिथ । तदासुरी युधा जिता रूपं चक्रे वनस्पतीन् ॥१॥**

हे औषधिहरू हो ! सर्वप्रथम तिमीहरू सुपर्ण नामका सूर्य वा गरुडको पित्तका रूपमा थियौ । आसुरी सुपर्णसँगको युद्ध जितेर त्यस पित्तलाई औषधिको रूप प्रदान गरेका हौं । त्यही नै रूप नील आदि औषधिहरूमा प्रवेश गरेको छ ।

**आसुरी चक्रे प्रथमेदं किलासभेषजमिदं किलासनाशनम् । अनीनशत् किलासं सरूपामकरत् त्वचम् ॥२॥**

त्यस आसुरी मायाले नै नील आदि औषधिहरूलाई कुष्ठ निवारक औषधिका रूपमा परिणत गरायो । त्यस्ता औषधिले कुष्ठरोगलाई नष्ट गराउन सक्छ । प्रयोग गर्दाखेरि नै यसले कुष्ठरोगलाई मेटाइदियो । यसले दूषित त्वचालाई रोगमुक्त त्वचाको जस्तै रङ्गको बनाइदियो ।

**सरूपा नाम ते माता सरूपो नाम ते पिता । सरूपकृत् त्वमोषधे सा सरूपमिदं कृधि ॥३॥**

हे औषधि ! तिम्री आमाको वर्ण तिम्रै जस्तो छ, बाबुको पनि वर्ण तिम्रै जस्तो छ र तिम्रो पनि वर्ण उनीहरूको जस्तै छ । त्यसो हुँदा तिमीहरू सबै नै समान वर्णका बनाउन सक्ने खालका छौ । त्यसो हुनाले हे नीलो वर्णका औषधिहरू हो ! तिमीहरू यी कुष्ठरोगले दूषित गराएका अङ्गका रङ्गलाई आफ्नै जस्तो रङ्गरूप प्रदान गर ।

**श्यामा सरूपङ्करणी पृथिव्या अध्युद्‌भृता । इदमू षु प्र साधय पुना रूपाणि कल्पय ॥४॥**

हे कालो रङ्गका औषधिहरू हो ! तिमीहरू पनि एक समान रङ्ग बनाउने शक्ति भएका छौ । आसुरी मायाले तिमीहरूलाई धर्तीका माथिल्ला सतहमा उत्पन्न गराएको हो । तिमीहरू यस्ता कुष्ठरोगले ग्रस्त भएका अङ्गलाई राम्ररी रोगमुक्त गराएर पहिलेको जस्तै रूपरङ्गका बनाओ ।

## २५. ज्वर नाशन सूक्त

**ऋषि**— भृग्वङ्गिरा । **देवता**— यक्ष्मनाशन अग्नि । **छन्द**— त्रिष्टुप् अनुष्टुप् ।

**यदग्निरापो अदहत् प्रविश्य यत्राकृण्वन् धर्मधृतो नमांसि । तत्र त आहुः परमं जनित्रं स नः संविद्वान् परि वृङ्ग्धि तक्मन् ॥१॥**

जुन ठाउँमा धर्मको आचरण गर्ने सदाचारी मानिसहरूले नमस्कार गर्दछन्, जुन ठाउँमा पसेर अग्निदेवताले प्राणधारक जलतत्त्वलाई जलाउँछन्, त्यसै ठाउँमा ज्वर नामका तिम्रो वास्तविक जन्म भएको हो भनेर तिम्रा विषयमा भन्ने गरिन्छ । हे कष्टदायक ज्वर ! यस्ता खालका सबै कुराहरू जानेर हामीलाई तिमी रोगमुक्त गराऊ ।

**यद्यर्चिर्यदि वासि शोचिः शकल्येषि यदि वा ते जनित्रम् । ह्रूडुर्नामासि हरितस्य देवत स नः संविद्वान् परि विृङ्ग्धि तक्मन् ॥२॥**

हे जीवनलाई कष्टमय बनाउने ज्वर ! यदि तिमी पोल्ने खालका गुणले सम्पन्न छौ र शरीरलाई ... छौ, यदि तिम्रो जन्म दाउराका चोइटाको कामना गर्ने अग्निबाट भएको हो भनेदेखि तिम्रो नाम ह्रूडु नै हुनुपर्दछ । हे पहेँलो रङ्ग उत्पन्न गराउने ज्वर ! तिमी आफ्नो कारणका रूपमा रहेका अग्निदेवतालाई चिन र हामीलाई मुक्त गराऊ ।

**यदि शोको यदि वाभिशोको यदि वा राज्ञो वरुणास्यासि पुत्रः । ह्रूडुर्नानामासि हरितस्य देव स नः स संविद्वान् परि विृङ्ग्धि तक्मन् ॥३॥**

हे जीवनलाई दुःखदायी बनाउने ज्वर ! यदि तिमी शरीरलाई कष्ट दिने खालका हौ भनेदेखि अथवा सबै ठाउँमा दुखाउने खालका छौ भनेदेखि अथवा दुराचारीहरूलाई दण्ड दिने वरुणदेवताका पुत्र हौ भने पनि तिम्रो नाम ह्रूडु नै हो । तिमी आफ्नो जन्मका कारण अग्निलाई चिन र हामी सबैलाई मुक्त गराऊ ।

**नमः शीताय तक्मने नमो रूराय शोचिषे कृणोमि । यो अन्येद्युरुभयद्युरभ्येति तृतीयकाय नमो अस्तु तक्मने ॥४॥**

जाडो उत्पन्न गराउने शीतज्वरलाई हामी नमस्कार गर्दछौँ र रुखो ताप उत्पन्न गराउने ज्वरलाई हामी नमस्कार गर्दछौँ । दोस्रो दिन आउने र तेस्रो दिन आउने शीतज्वरलाई पनि हामी नमस्कार गर्दछौँ ।

## २६. शर्म प्राप्ति सूक्त

**ऋषि**— ब्रह्मा । **देवता**— देवा इन्द्र भग सविता मरुतगण । **छन्द**— गायत्री त्रिष्टुप् ।

**आरेऽसावस्मदस्तु हेतिर्देवासो असत् । आरे अश्मा यमस्यथ ॥१॥**

हे देवताहरू हो ! शत्रुले प्रहार गरेका यी हतियारहरू हाम्रा छेउमा नआऊन् र तिमीहरूले मन्त्र

गरेर हानेका ढुङ्गाहरू पनि हाम्रा नजिक नआऊन् ।

**सखासावस्मभ्यमस्तु रातिः सखेन्द्रो भगः सविता चित्रराधाः ॥२॥**

दान दिने खालका, ऐश्वर्यले सम्पन्न सवितादेवता, विचित्र धनले सम्पन्न इन्द्रदेवता र भगदेवता हाम्रा सहायक होऊन् ।

**यूयं नः प्रवतो नपान्मरुतः सूर्यत्वचसः । शर्म यच्छाथ सप्रथाः ॥३॥**

आफ्नो सुरक्षा आफैं गर्ने, सूर्यजस्तै तेजस्वी तथा नखस्ने हे मरुत्‌देवताहरू हो ! हाम्रा लागि तिमीहरू सबैले प्रशस्त सुख प्रदान गर ।

**सुषूदात मृडत मृडया नस्तनूभ्यो मयस्तोकेभ्यस्कृधि ॥४॥**

इन्द्र आदि देवताले हामीलाई आश्रय प्रदान गरून् र हामीलाई हर्षित गराऊन् । उनीहरूले हाम्रा शरीरलाई आरोग्य प्रदान गरून् र हाम्रा बालबच्चालाई आनन्दित गराऊन् ।

## २७. स्वस्त्ययन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– चन्द्रमा इन्द्राणी । **छन्द**– अनुष्टुप् पङ्क्ति ।

**अमूः पारे पृदाक्यस्त्रिषप्ता निर्जरायवः । तासां जरायुभिर्वयमक्ष्या३वपिं व्ययामस्यघायोः परिपन्थिनः ॥१॥**

यी तीन तथा सात गतिशील शक्तिरूपी सेनाका धाराहरू काँचुलीबाट निस्केका सर्पिणीजस्तै छन् । तिनका जालोरूपी काँचुलीले हामी पापीहरूका आँखा छोपिदिऔं ।

**विषुच्येतु कृन्तती पिनाकमिव बिभ्रती । विष्वक् पुनर्भुवा मनोऽसमृद्धा अघायवः ॥२॥**

शिवको पिनाक धनुष लिएका जस्ता हाम्रा शक्तिहरूपी वीर सेनाहरू शत्रुलाई गिँड्दै चारैतिर अगाडि बढिरहून् । त्यसो भएपछि पुनः एकत्रित भएका शत्रुसेनको मन नै भाँडियोस् र तिनका शासक सधैंका लागि निर्धन होऊन् ।

**न बहवः समशकन् नार्भका अभि दाधृषुः । वेणोरद्‌गा इवाभितोऽसमृद्धा अघायवः ॥३॥**

विशाल शत्रुले पनि हामीमाथि विजय पाउन सक्दैनन् र सानातिना शत्रु हाम्रा अगाडि अडिन सक्दैनन् । बाँसको एक्लो तामा असहाय र कमजोर भएझैं पापी मानिस धनहीन होओस् ।

**प्रेतं पादौ प्र स्फुरतं वहतं पृणतो गृहान् इन्द्राण्येतु प्रथमाजीतामुषिता पुरः ॥४॥**

हे दुई गोडाहरू हो ! तिमीहरू तीव्र गतिमा गमन गर्दै अघि बढ र रोजेको फल दिन सक्ने मानिसका घरसम्म हामीलाई पुऱ्याओ । कसैले जित्न नसकेकी, कसैबाट नलुटिएकी र अभिमानी इन्द्राणी हामी सबैका अगाडि लागेर हिँडून् ।

## २८. रक्षोघ्न सूक्त

**ऋषि**– चातन । **देवता**– अग्नि यातुधानी । **छन्द**– अनुष्टुप् विराट् बृहती पङ्क्ति ।

**उप प्रागाद् देवो अग्नी रक्षोहामीवचातनः । दहन्नप द्वयाविनो यातुधानान् किमीदिनः ॥१॥**

रोगहरूलाई विनाश गर्ने र असुरको विनाश गर्ने अग्निदेवता शङ्कालु, लुटाहा र दुई जिब्रे कपटीहरूलाई भस्मीभूत गराउँदै यी दिक्क भएका मानिसका नजिक पुग्दछन् ।

**प्रति दह यातुधानान् प्रति देव किमिदिनः । प्रतीचीः कृष्णवर्तने सं दह यातुधान्यः ॥२॥**

हे अग्निदेवता ! तिमी लुटार तथा सधैंका शङ्कालुहरूलाई भस्मीभूत गराऊ । हे कालो मार्ग लिएका अग्निदेवता ! जीवहरूमाथि प्रतिकूल व्यवहार गर्ने खालका लुटार आइमाईहरूलाई पनि तिमी भस्मसात् गराऊ ।

**या शशाप शपनेन याघं मूरमादधे । या रसस्य हरणाय जातमारेभे तोकमत्तु सा ॥३॥**

शापले अभिशप्त गराउने जुन राक्षसनीहरूसमस्त पापको मूल हिंसारूपी पाप गर्दछन् तथा जो खुनरूपी रसको पान गर्नका लागि जन्मेका पुत्रलाई खान लाग्दछन्, त्यस्ता राक्षसनीहरूले आफ्नै सन्तान र हाम्रा शत्रुका सन्तानलाई खाइरहून् ।

**पुत्रमत्तु यातुधानीः स्वसारमुत नप्त्यम् । अधा मिथो विकेश्यो३ वि घ्नतां यातुधान्यो३ वि तृह्यन्तामराय्यः ॥४॥**

त्यस्ता राक्षसनीले आफ्नै छोरानाति र दिदीबहिनीलाई खाइरहून् । तिनीहरू आपसमै कपाल भुत्ल्याउँदै झगडा गरून् र मरुन् । दानको भावना नभएका त्यस्ता राक्षसनीहरू आपसमा लडाइँ गरेर नै मरिरहून् ।

## २९. राष्ट्र अभिवर्धन, सपत्नक्षयण सूक्त

**ऋषि–** वसिष्ठ । **देवता–** अभीवर्तमणि ब्रह्मणस्पति । **छन्द–** अनुष्टुप् ।

**अभिवर्तेन मणिना येनेन्द्रो अभिवावृधे । तेनास्मान् ब्रह्मणस्पतेऽभि राष्ट्राय वर्धय ॥१॥**

हे ब्रह्मणस्पतिदेवता ! जुन समृद्धिदायक मणिले इन्द्रदेवताको उत्पत्ति भयो, उसै मणिले तिमी राष्ट्रहितका लागि हामीलाई विकसित गराऊ ।

**अभिवृत्व सपत्नानभि या नो अरातयः । अभि पृतन्यन्तं तिष्ठाभि यो नो दुरस्यति ॥२॥**

हे राजन् ! हामीसित युद्ध गर्न खोज्ने, हामीसित द्वेष गर्ने हाम्रा विरोधी हिंस्रक शत्रुका सेनालाई तिमी छेकारो मारेर पराजित गराऊ ।

**अभि त्वा देवः सविताभि सोमो अवीवृधत् । अभि त्वा विश्वा भूतान्यभीवर्तो यथाससि ॥३॥**

हे राजन् ! सवितादेवता, सोमदेवता र समस्त प्राणीसमुदायले तिमीलाई शासन गर्ने आसनमा बस्नका लागि सहयोग गरून् । यी सबैका सहायताले तिमी उचित किसिमको शासन गर ।

**अभिवर्तो अभिभवः सपत्नक्षयणो मणिः । राष्ट्राय मह्यं बध्यतां सपत्नेभ्यः पराभुवे ॥४॥**

यस मणिले शत्रुलाई भेला पारेर तिनलाई पराजित गराउँछ र विरोधीहरूको विनाश गराउँछ । विरोधीहरूलाई पराजित गर्नका लागि र राष्ट्रको उन्नतिका लागि यस मणिलाई हाम्रा शरीरमा बाँध ।

**उदसौ सूर्यो अगादुदिदं मामकं वचः । यथाहं शत्रुहोऽसानयसपत्नः सपत्नहा ॥५॥**

यी सूर्यदेवता उदाएका छन्, हाम्रो वाणीरूपी मन्त्रशक्ति पनि प्रकट भएको छ । अब यिनैका प्रभावले हामी शत्रुनाशक बनेर दुष्टमाथि आघात गर्दै शत्रुहीन हुन सकौँ ।

**सपत्नक्षयणो वृषाभिराष्ट्रो विषासहिः । यथाहमेषां वीराणां विराजानि जनस्य च ॥६॥**

हे मणि ! हामी शत्रुहन्ता, बलवान्, विजयी भएर राष्ट्रको हित गर्ने वीर र प्रजाहरूका लागि हितकारी काम गर्ने होऔँ ।

## ३०. दीर्घायुप्राप्ति सूक्त

**ऋषि–** अथर्वा । **देवता–** विश्वेदेवता । । **छन्द–** त्रिष्टुप् विराट् जगती ।

**विश्वे देवा वसवो रक्षतेममुतादित्या जागृत यूयमस्मिन् । मेमं सनाभिरुत वान्यनाभिर्मेमं प्रापत् पौरुषेयो वधो यः ॥१॥**

हे समस्त देवताहरू हो ! हे वसुहरू हो ! आयुको कामना गर्ने यी मानिसहरूलाई तिमीहरू सबैले सुरक्षा गर । हे आदित्यहरू हो ! तिमीहरू पनि सबै जना यस विषयमा सावधान होओ । यी मानिसको विनाश गर्नका लागि यिनका आफन्त बन्धुहरू वा अन्य कुनै शत्रु यिनका नजिक आउन नसकून् । यिनलाई कसैले पनि मार्न नसकून् ।

**ये वो देवाः पितरो ये च पुत्राः सचेतसो मे शृणुतेदमुक्तम् । सर्वेभ्यो वः परि ददाम्येतं स्वस्त्ये नं जरसे वहाथ ॥२॥**

हे देवताहरू हो ! तिमीहरूका पिता वा पुत्र जो छन्, तिनीहरू सबैले आयुको कामना गर्ने व्यक्तिका विषयमा मैले गरेको प्रार्थना सावधान भएर सुनून् । हामी यी व्यक्तिहरू तिमीहरूकै

जिम्मा लगाउँछौं । यिनीहरूलाई सङ्कटबाट सुरक्षा गर्दै तिमीहरू पूरा आयुसम्म हर्षपूर्वक लैजाओ ।

**ये देवा दिविष्ठ ये पृथिव्यां ये अन्तरिक्ष ओषधीषु पशुष्वप्स्वप्न्तः । ते कृणुत जरसामायुरस्मै शतमन्यान् परि वृणक्तु मृत्यून् ॥३॥**

हे सम्पूर्ण देवताहरू हो ! तिमीहरू संसारको कल्याणका लागि द्युलोकमा निवास गर्दछौ । हे अग्नि आदि देवताहरू हो ! तिमीहरू पृथ्वीमा निवास गर्दछौ । हे वायुदेवता ! तिमी अन्तरिक्षमा निवास गर्दछौ । हे औषधि, वनस्पति तथा गाईहरूमा निवास गर्ने देवताहरू हो ! यी आयुको कामना गर्ने मानिसहरूलाई तिमीहरू लामो आयु प्रदान गर । तिमीहरूका कृपाले यी व्यक्तिहरू मृत्युलाई निम्त्याउने सयौँ खालका ज्वर आदि रोगबाट सुरक्षित रहून् ।

**येषां प्रयाजा उत वानुयाजा हुतभागा अहुतादश्च देवाः । येषां वः पञ्च प्रदिशो विभक्तास्तान् वो अस्मै सत्रसदः कृणोमि ॥४॥**

जुन अग्निदेवताका लागि पाँच किसिमका यज्ञ गरिन्छन्, जुन इन्द्र आदि देवताका लागि यज्ञ गरिन्छ र अग्निमा होमिएको आहुति जसका भागमा पर्छ, अग्निभन्दा बाहिर हालेको आहुति सेवन गर्ने बलिहरण आदि देवताहरूका साथै पाँचै दिशाहरू जसका नियन्त्रणमा रहन्छन्, ती सबै देवताहरूलाई हामी आयुको कामना गर्ने व्यक्तिको आयु बढाउनका लागि उत्तरदायी बनाउँछौं ।

## ३१. पाशमोचन सूक्त

**ऋषि**—ब्रह्मा । **देवता**—आशापालक वास्तोष्पतिगण । **छन्द**—अनुष्टुप् विराट् त्रिष्टुप् ।

**आशानामाशापालेभ्यश्चतुर्भ्यो अमृतेभ्यः । इदं भूतस्याध्यक्षेभ्यो विधेम हविषा वयम् ॥१॥**

समस्त प्राणीका अधिपति र अमरताले सम्पन्न इन्द्र आदि चार दिक्पालहरूका निमित्त हामी सबैले हवि समर्पित गरेका छौं ।

**य आशानामाशापालाश्चत्वार स्थन देवाः । ते नो निर्ऋत्याः पाशेभ्यो मुञ्चतांहसो अंहसः ॥२॥**

हे देवताहरू हो ! तिमीहरू चारै दिशाका चार दिक्पालहरू हौ । तिमीहरू हामीलाई हरेक किसिमका पापबाट जोगाओ र पतनतर्फ लैजाने पाशहरूबाट मुक्त गराओ ।

**अस्रामस्त्वा हविषा यजाम्यश्लोणस्त्वा घृतेन जुहोमि । य आशानामाशापालस्तुरीयो देवः स नः सुभूतमेह वक्षात् ॥३॥**

हे कुबेर ! हामी मन लागेको ऐश्वर्य प्राप्त गर्नका लागि निरन्तर लगनशील भएर तिमीलाई आहुति समर्पित गर्दछौं । हामी श्लोण नामको लङ्गडो बनाउने रोगबाट जोगिएर तिमीलाई घिउको आहुति समर्पित गर्दछौं । हामीले पहिले भनेका चारै दिक्पालले हामीलाई सुन आदि सम्पत्ति प्रदान गरून् र हाम्रा आहुतिले उनीहरू प्रसन्न होऊन् ।

**स्वस्ति मात्र उत पित्रे नो अस्तु स्वस्ति गोभ्यो जगते पुरुषेभ्यः । विश्वं सुभूतं सुविदत्रं नो अस्तु ज्योगेव दृशेम सूर्यम् ॥४॥**

हाम्री आमा र हाम्रा बाबु कुशलतापूर्वक रहून् । हाम्रा गाई, हाम्रा आफन्तहरूका साथै सम्पूर्ण संसार कुशल रहोस् । हामी सबै श्रेष्ठ ऐश्वर्य र श्रेष्ठ ज्ञानले सम्पन्न रहँदै सयौँ वर्षसम्म सूर्य देख्न पाउने गरी दीर्घजीवी रहन पाऔं ।

## ३२. महद्ब्रह्म सूक्त

**ऋषि**— ब्रह्मा । **देवता**— द्यावापृथिवी । **छन्द**— अनुष्टुप् ।

**इदं जनासो विदथ महद् ब्रह्म वदिष्यति । न तत् पृथिव्यां नो दिवि येन प्राणन्ति वीरुधः ॥१॥**

हे जिज्ञासुहरू हो ! तिमीहरू औषधिलाई प्राण प्राप्त गराउने ब्रह्म केवल धर्ती अथवा द्युलोकमा मात्रै निवास गरेका छैनन् भन्ने विषयमा ज्ञान प्राप्त गर ।

अन्तरिक्ष आसां स्थाम श्रान्तसदामिव । आस्थानमस्य भूतस्य विदुष्टद् वेधसो न वा ॥२॥

यी औषधिहरूको स्थान अन्तरिक्ष हो । थाकेको मानिस विश्राम गरेझैँ यी औषधिहरू अन्तरिक्षमा निवास गर्दछन् । यस किसिमले वनेका स्थानका विषयमा विधाता अथवा मनुले जानेका छन् कि छैनन् त ?

यद् रोदसी रेजमाने भूमिश्च निरतक्षतम् । आर्द्रं तदद्य सर्वदा समुद्रस्येव स्रोत्याः ॥३॥

हे द्यावापृथिवी ! तिमीहरू र धर्तीले उत्पन्न गरेका जेजति कुराहरू छन्, ती सबै उसै किसिमले निरन्तर नयाँ रहन्छन्, जसरी सरोवरबाट निस्कने पानीको स्रोत अक्षय रूपमा निस्किइरहेको हुन्छ ।

विश्वमन्यामभीवार तदन्यस्यामधिश्रितम् । दिवे च विश्ववेदसे पृथिव्यै चाकरं नमः ॥४॥

यस जगत्को आवरणका रूपमा यहाँ अन्तरिक्ष रहेको छ । धर्तीका आश्रयमा रहने गरेका यस विश्वले आकाशबाट वर्षा प्राप्त गर्नका लागि प्रार्थना गर्दछ । त्यस्ता खालको द्युलोक र समस्त ऐश्वर्यले सम्पन्न पृथ्वीलाई हाम्रो नमस्कार छ ।

## ३३. आपः सूक्त

**ऋषि**– शन्ताति । **देवता**– चन्द्रमा आपः । **छन्द**– त्रिष्टुप् ।

**हिरण्यवर्णाः शुचयः पावका यासु जातः सविता यास्वग्निः । या अग्निं गर्भं दधिरे सुवर्णास्ता न आपः शं स्योना भवन्तु ॥१॥**

सुनको जस्तै रङ्गले शोभायमान, अत्यधिक मनोहर, शुद्धता प्रदान गर्ने जललाई सविता र अग्निदेवताले उत्पन्न गरेका हुन् । त्यस्तो राम्रो रङ्गको अग्निलाई गर्भमा राखेका जलले हाम्रा रोगव्याध हटाएर हामी सबैलाई सुख र शान्ति प्रदान गरोस् ।

**यासां राजा वरुणो याति मध्ये सत्यानृते अवपश्यञ्जनानाम् । या अग्निं गर्भं दधिरे सुवर्णास्ता न आपः शं स्योना भवन्तु ॥२॥**

जलमा नै रहेर राजा वरुणले सत्य र असत्यको निरीक्षण गरिरहेका हुन्छन् । त्यस्तो राम्रो रङ्गको अग्निलाई गर्भमा राखेका जलले हाम्रा रोगव्याध हटाएर हामी सबैलाई सुख र शान्ति प्रदान गरोस् ।

**यासां देवा दिवि कृण्वन्ति भक्षं या अन्तरिक्षे बहुधा भवन्ति । या अग्निं गर्भं दधिरे सुवर्णास्ता न आपः शं स्योना भवन्तु ॥३॥**

जलकै सारतत्त्वका रूपमा रहेको सोमरसलाई इन्द्र आदि देवताहरूले द्युलोकमा सेवन गर्दछन् । त्यस्तो राम्रो रङ्गको अग्निलाई गर्भमा राखेका जलले हाम्रा रोगव्याध हटाएर हामी सबैलाई सुख र शान्ति प्रदान गरोस् ।

**शिवेन मा चक्षुषा पश्यतापः शिवया तन्वोप स्पृशत त्वचं मे । घृतश्चुतः शुचयो याः पावकास्ता न आपः शं स्योना भवन्तु ॥४॥**

हे जलाका अधिष्ठाता देवता ! तिमी आफ्ना कल्याणकारी नेत्रले हामीलाई हेर र तिमी आफ्ना हितकारी शरीरले हाम्रा शरीरको त्वचालाई स्पर्श गर र हामीलाई सुखशान्ति प्रदान गर ।

## ३४. मधुविद्या सूक्त

**ऋषि**– अथर्वा । **देवता**– मधुवनस्पति । **छन्द**– अनुष्टुप् ।

इयं वीरुन्मधुजाता मधुना त्वा खनामसि । मधोरधि प्रजातासि सा नो मधुमतस्कृधि ॥१॥

अगाडि देखिएको, लहरिने मधुक नामको लहरो रहर लाग्दो गरी उम्रिएको छ । हामी यसलाई उसै रमाइलोसित खन्दछौँ । हे वीरुत् ! तिमी स्वभावले नै मधुरतायुक्त छौ । त्यसैले हामीलाई तिमी पनि मधुरता नै प्रदान गर ।

जिह्वाया अग्रे मधु मे जिह्वामूले मधूलकम् । ममेदह क्रतावसो मम चित्तमुपायसि ॥२॥

हाम्रा जिब्राको अघिल्लो भागमा र जिब्राका मूल भागमा मधुरता रहोस् । हे मधुलक नामका लहरा ! तिमी हाम्रो शरीर, मन र कर्ममा विद्यमान भएर रहिदेऊ ।

**मधुमन्मे निक्रमणं मधुमन्मे परायणम् । वाचा वदामि मधुमद् भूयासं मधुसन्दृशः ॥३॥**

हे मधुक ! तिमीलाई ग्रहण गरेर हाम्रो निकटताको गमन मधुर होस् र टाढाको यात्रा पनि मधुर होस् । हाम्रो वाणी पनि मधुरतायुक्त होस्, त्यसो भएर नै हामी सबैका लागि प्रियपात्र बन्न सकौँ ।

**मधोरस्मि मधुतरो मदुघान्मधुमत्तरः । मामित् किल त्वं वनाः शाखां मधुमतीमिव ॥४॥**

हे मधुक नामका लहरा ! तिम्रो निकटता पाएर हामी महभन्दा अधिक मिठासपूर्ण हुन सकौँ र मधुर पदार्थभन्दा पनि बढी मधुर होऔँ । तिमीले हाम्रै सेवन गर । मिठा फलले लादिएका हाँगालाई चराचुरुङ्गीले माया गरेझैँ सबै मानिसले हामीलाई माया गरून् ।

**परि त्वा परितत्नुनेक्षुणागामविद्विषे । यथा मां कामिन्यसो यथा मन्नापगा असः ॥५॥**

सबै तिरबाट घेरिएको, उखुजस्तै गुलियो, एकका लागि अर्को प्रिय र मिठासयुक्त भएर रहनका लागि नै हे पत्नी ! हामी एकापसमा प्राप्त भएका छौँ । मलाई नै तिमीले खोजेकी हौ र त्यागेर अर्कातिर नजाऊ भनेर नै म तिम्रा नजिकमा आएको छु ।

## ३५. दीर्घायुप्राप्ति सूक्त

**ऋषि**– अथर्वा । **देवता**– हिरण्य, इन्द्राग्नी, विश्वेदेवा । **छन्द**– जगती, अनुष्टुप्गर्भा चतुष्पदा त्रिष्टुप् ।

**यदाबध्नन् दाक्षायणा हिरण्यं शतानीकाय सुमनस्यमानाः । तत् ते बध्नाम्यायुषे वर्चसे बलाय दीर्घायुत्वाय शतशारदाय ॥१॥**

आयुको कामना गर्ने हे मानिसहरू हो ! श्रेष्ठ विचार भएका दक्ष गोत्रका महर्षिहरूले शतानिक नामका राजालाई हर्षप्रदायक सुवर्ण बाँधिदिएका थिए । हामी उही सुवर्ण आयु वृद्धि गर्नका लागि, तेज तथा सामर्थ्य प्राप्त गर्नका लागि तथा सय वर्षसम्मको लामो आयु प्राप्त गर्नका लागि तिमीलाई पनि बाँधिदिन्छौँ ।

**नैनं रक्षांसि न पिशाचाः सहन्ते देवानामोजः प्रथमजं ह्येऽतत् । यो बिभर्ति दाक्षायणं हिरण्यं स जीवेषु कृणुते दीर्घमायुः ॥२॥**

सुवर्ण धारण गरेका मानिसलाई ज्वरो आदि रोगले दुःख दिँदैनन् । मांस भक्षण गर्ने राक्षसले पनि उसलाई सताउन सक्दैनन्, किनभने यो हिरण्य नाम भएको सुवर्ण इन्द्र आदि देवताभन्दा पनि पहिले नै उत्पन्न भएको हो । दाक्षायण नामको सुवर्ण जुन व्यक्तिले धारण गर्दछन्, उनीहरू सबै नै दीर्घायु प्राप्त गर्दछन् ।

**अपां तेजो ज्योतिरोजो बलं च वनस्पतीनामुत वीर्याणि । इन्द्रइवेन्द्रियाण्यधि धारयामो अस्मिन् तद् दक्षमाणो विभरद्धिरण्यम् ॥३॥**

हामी यी मानिसहरूमा जलको ओज, तेज, शक्ति, सामर्थ्य तथा वनस्पतिको वीर्य स्थापित गराउँछौँ । इन्द्रसित सम्बन्धित बल इन्द्रभित्रै रहेझैँ हामी ती उल्लेखित गुणहरू मानिसमा स्थापित गराउँछौँ । त्यसैले बल वृद्धि गर्ने कामना भएका मानिसहरूले स्वर्ण धारण गरून् ।

**समानां मासामृतुभिष्ट्वा वयं संवत्सरस्य पयसा पिपर्मि । इन्द्राग्नी विश्वे देवास्तेऽनु मन्यन्तामहृणीयमानाः ॥४॥**

हे सबै किसिमका धनको कामना गर्ने मानिसहरू हो ! तिमीहरूका लागि हामी समान महिना भएका ऋतुहरू र संवत्सरपर्यन्त रहने खालका दुधालु गाईले परिपूर्ण गराउँछौँ । इन्द्र, अग्नि र अन्य समस्त देवताहरूले तिम्रो भुलमा क्रोधित नभएर स्वर्ण धारण गर्नाले प्राप्त हुने फल उपलब्ध गर्ने अनुमति प्रदान गरून् ।

## ॥इति प्रथमं काण्डं॥

पहिलो काण्ड सकियो ।

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

अथर्ववेद – संहिता

# ॥अथ द्वितीयं काण्डम् ॥

## १. परमधाम सूक्त

**ऋषि–** वेन । **देवता–** ब्रह्मात्मा । **छन्द–** त्रिष्टुप्, जगती ।

**वेनस्तत् पश्यत् परमं गुहा यद् यत्र विश्वं भवत्येकरूपम् । इदं पृश्निरदुहज्जायमानाः स्वर्विदो अभ्यनुषत व्राः ॥१॥**

अनुभूतिलाई धारण गर्ने गुफारूपी अन्तःकरणमा रहेका सत्य, ज्ञान आदि लक्षणले युक्त ब्रह्ममा समस्त जगत् विलीन हुन्छ । उसै श्रेष्ठ परमात्मालाई ज्ञानरूपी प्रकाशले सम्पन्न सूर्यजस्ता वेनले देखे । उसै ब्रह्मलाई दोहन गरेर प्रकृतिले नामरूपले सम्पन्न भएको भौतिक जगत् उत्पन्न गरेको छ । आत्मज्ञानी मानिसले उसै परब्रह्मको स्तुति गर्दछन् ।

**प्र तद् वोचेदमृतस्य विद्वान् गन्धर्वो धाम परमं गुहा यत् । त्रीणि पदानि निहिता गुहास्य यस्तानि वेद स पितुष्पितासत् ॥२॥**

वाणीरूपी किरणले युक्त विद्वान्‌रूपी सूर्यजस्ता गन्धर्वका विषयमा उपदेश गरौँ । यिनै ब्रह्म हुन् र यिनका तीन पद हृदयका गुफामा विद्यमान छन् । यस विषयमा ज्ञान पाइसकेको मानिस नै पिताका पनि पितारूपी सर्वज्ञ एवं उत्पत्तिकर्ता ब्रह्मका विषयमा जान्ने हुन्छ ।

**स नः पिता जनिता स उत बन्धुर्धामानि वेद भुवनानि विश्वा । यो देवानां नामध एक एव तं संप्रश्नं भवना यन्ति सर्वा ॥३॥**

उनै ब्रह्म हाम्रा पिता, जन्मदाता र भाइबन्धु हुन् । उनैले समस्त लोक र स्थानका विषयमा जानेका छन् । उनले एक्लै नै समस्त देवताहरूको नाम धारण गरेका छन् । समस्त लोकहरू नै उनै ब्रह्मका विषयमा जान्नका लागि जानकारहरूकहाँ जाने गर्दछन् ।

**परि द्यावापृथिवी सद्य आयमुपातिष्ठे प्रथमजामृतस्य । वाचमिव वक्तरि भुवनेष्ठा धास्युरेष नन्वे३षो अग्निः ॥४॥**

मैले तत्त्व दृष्टिले चाँडै नै समस्त द्यावापृथिवीका विषयमा जानेको छु, त्यसैले ऋत नामका परम सत्यको म उपासना गर्दछु भन्ने कुरो ब्रह्मज्ञानीले गर्दछन् । वक्ताका अन्तःकरणमा वाणी विद्यमान रहेझैँ समस्त लोकभरि नै त्यो ब्रह्म विद्यमान रहेको हुन्छ र उसैले समस्त प्राणीलाई धारण तथा पोषण गर्दछ । अग्नि पनि निश्चित रूपमा उनै हुन् ।

**परि विश्वा भुवनान्यायमृतस्य तन्तुं विततं दृशे कम् । यत्र देवा अमृतमानशानाः समाने योनावध्यैरयन्त ॥५॥**

अमृत सेवन गर्ने, समान आधार भएका देवगण या देवत्व प्राप्त गरेका पुरुषहरू जहाँ विचरण गर्दछन्, उसै ऋतरूपी परम सत्यका कार्यकलापहरू मैले अनेकौँ पटक देखेको छु ।

## २. भुवनपति सूक्त

**ऋषि–** मातृनामा । **देवता–** गन्धर्व, अप्सरा समूह । **छन्द–** त्रिष्टुप्, विराट् जगती, विराट् गायत्री, भुरिगनुष्टुप् ।

**दिव्यो गन्धर्वो भुवनस्य यस्पतिरेक एव नमस्यो विक्ष्वीड्यः । तं त्वा यौमि ब्रह्मणा दिव्य देव नमस्ते अस्तु दिवि ते सधस्थम् ॥१॥**

दिव्य गन्धर्वका रूपमा पृथ्वी आदि लोकहरूलाई धारण गर्नेस्वामी जो हुन्, यस संसारमा एक मात्र उनी नै नमस्कार गर्न योग्य छन् । हे परमात्मा ! तिम्रो निवास द्युलोकमा छ । तिमीलाई हामी नमस्कार गर्दछौँ र उपासनाद्वारा तिमीलाई भेट्दछौँ ।

दिवि स्पृष्टो यजतः सूर्यत्वगवयाता हरसो दैव्यस्य । मृडाद् गन्धर्वो भुवनस्य यस्पतिरेक एव नमस्यः सुशेवाः ॥२॥

समस्त लोकका एक मात्र अधिपतिका रूपमा रहेका, गाईरूपी पृथ्वीलाई धारण गर्ने यी गन्धर्व द्युलोकमा रहने, दैवी आपद्हरूलाई निवारण गर्ने र सूर्यका आवरणका रूपमा रहेका छन् । उनी सबैबाट नमस्कार र प्रार्थना प्राप्त गर्न योग्य छन् । सबैलाई सुख प्रदान गर्ने उनै परमात्माले हामीलाई पनि सुख प्रदान गरून् ।

अनवद्याभिः समु जग्म आभिरप्सरास्वपि गन्धर्व आसीत् । समुद्र आसां सदनं म आहुर्यतः सद्य आ च परा च यन्ति ॥३॥

प्रशंसनीय अप्सराका रूपमा रहेका किरणरूपी प्राणधारासित उनै परमात्मारूपी गन्धर्व एकाकार भएका छन् । अप्सराहरूको स्थान अन्तरिक्ष हो र उनीहरू त्यहाँबाट आएर प्रकट हुन्छन् अनि त्यसपछि उतै फर्केर जान्छन् भन्ने हामीलाई बताइएको छ ।

अभ्रिये दिद्युन्नक्षत्रिये या विश्वावसुं गन्धर्वं सचध्वे । ताभ्यो वो देवीर्नम इत् कृणोमि ॥४॥

हे अप्सरा देवीहरू हो ! तिमीहरू मेघको विद्युत् अथवा नक्षत्रका आलोकमा संसारलाई पालनपोषण गर्ने गन्धर्व देवसित एकाकार हुने गरेका छौ । त्यसो भएकैले हामी तिमीहरूलाई नमस्कार गर्दछौँ ।

याः क्लन्दास्तमिषीचयोऽक्षकामा मनोमुहः । ताभ्यो गन्धर्वपत्नीभ्योऽप्सराभ्योऽकरं नमः ॥५॥

प्रेरणा प्रदान गर्ने, ग्लानी हटाउने, आँखाको रहर पूरा गराउने र मनलाई अस्थिर गराउने अप्सरा गन्धर्वका पत्नी हुन् । हामी उनीहरूलाई नमस्कार गर्दछौँ ।

## ३. आस्रावभेषज सूक्त

**ऋषि–** अङ्गिरा । **देवता–** भैषज्य, आयु, धन्वन्तरि । **छन्द–** अनुष्टुप्, त्रिपात् स्वराट् उपरिष्टात् महाबृहती ।

**अदो यदवधावत्यवत्कमधि पर्वतात् । तत्ते कृणोमि भेषजं सुभेषजं यथाससि ॥१॥**

मुञ्जवान् पर्वतका माथिल्ला भागबाट सोमलाई रक्षक प्रवाहका रूपमा तलतिर ल्याइएको छ । त्यसको पहिलो भाग वनस्पति हो । त्यस वनस्पतिलाई हामी श्रेष्ठ औषधिका रूपमा तयार गर्दछौँ ।

**आदङ्गा कुविदङ्गा शतं या भेषजानि ते । तेषामसि त्वमुत्तममनास्रावमरोगणम् ॥२॥**

हे दिव्य प्रवाह ! तिमीबाट उत्पन्न हुने असीम औषधिहरू झाडापखाला, मूत्ररोग तथा नसा नाडीका चोटपटक आदि जस्ता रोगहरूलाई विनाश गर्नका लागि पूर्ण रूपमा सक्षम होऊन् ।

**नीचैः खनन्त्यसुरा अरुस्राणमिदं महत् । तदास्रावस्य भेषजं तदु रोगमनीनशत् ॥३॥**

प्राणलाई विनाश गर्ने र शरीरलाई ढलाउने खालका असुररूपी रोगले चोट आदिका मुख भित्रैदेखि फुटाउँछन्, तर त्यो मुँज नामको औषधि घाउका लागि सबैभन्दा राम्रो औषधि हो । त्यसले अनेकौँ किसिमका रोगव्याधलाई नाश गर्दछ ।

**उपजीका उद्भरन्ति समुद्रादधि भेषजम् । तदास्रावस्य भेषजं तदु रोगमशीशमत् ॥४॥**

धर्तीमुनि रहेको जलराशिका कारणले व्याधि नष्ट गर्ने औषधिहरू धमिराका ढिस्काबाट माटो माथि आएझैँ उम्रेर आउने गर्दछन् । त्यस्तो धमिराको माटो पनि आस्राव नामका रोगको औषधि नै हो । यसले झाडापखाला आदि रोगलाई पनि शान्त गर्दछ ।

**अरुस्राणमिदं महत् पृथिव्या अध्युद्भृतम् । तदास्रावस्य भेषजं तदु रोगमनीनशत् ॥५॥**

खेतबाट झिकेर ल्याएको औषधिरूपी माटाले पिलो आदि घाउहरू पकाउने र झाडापखाला निको पार्ने काममा रामबाणजस्तिकै हुन्छ र त्यसले ती रोग समूल नष्ट गराउँछ ।

शं नो भवन्त्वप ओषधयः शिवाः इन्द्रस्य वज्रो अप हन्तु रक्षस आराद् विसृष्ट्य इषवः पतन्तु रक्षसाम् ॥६॥

औषधिका लागि प्रयोग गरिएको जल हर्षप्रदायक भएर हाम्रा व्याधिहरूलाई शमन गर्ने खालको होस् । रोग निम्त्याउने असुरलाई इन्द्रदेवताका वज्रले विनाश गरोस् । असुरले मानिसलाई ताकेका व्याधिरूपी बाणहरू हामीभन्दा पर पुगेर खसून् ।

## ४. दीर्घायुप्राप्ति सूक्त

**ऋषि–** अथर्वा । **देवता–** चन्द्रमा जङ्गिड । **छन्द–** अनुष्टुप्, विराट् प्रस्तारपङ्क्ति ।

**दीर्घायुत्वाय बृहते रणायारिष्यन्तो दक्षमाणाः सदैव । मणिं विष्कन्धदूषणं जङ्गिडं बिभृमो वयम् ॥१॥**

दीर्घायु प्राप्त गर्नका लागि र आरोग्यको प्रचुर आनन्द अनुभव गर्नका लागि हामी आफ्ना शरीरमा जङ्गिड मणि धारण गर्दछौँ । यस्तो जङ्गिड मणि रोगनाशक हुन्छ र दुर्बलता हटाएर सामर्थ्य बढाउने खालको हुन्छ ।

**जङ्गिडो जम्भाद् विशराद् विष्कन्धादभिशोचनात् । मणिः सहस्रवीर्यः परि णः पातु विश्वतः ॥२॥**

यस्तो जङ्गिड मणि सहस्र किसिमका बलले सम्पन्न भएकाले हाई काड्ने, दुर्बलता बढाउने, शरीर सुकाउने र विनाकारण आँखाबाट आँसु आउने रोगबाट हामीलाई रक्षा गर्दछ ।

**अयं विष्कन्धं सहतेऽयं बाधते अत्त्रिणः । अयं नो विश्वभेषजो जङ्गिडः पात्वंहसः ॥३॥**

यस जङ्गिड मणिले सुकाउने रोगबाट हामीलाई रक्षा गर्दछ र भक्षण गर्ने कृत्या आदिको विनाश गर्दछ । हाम्रा सबै खालका रोगहरूलाई निवारण गर्ने हुनाले यो सबै किसिमका रोगको औषधिका रूपमा रहेको छ, यसले हाम्रो रक्षा गरोस् ।

**देवैर्दत्तेन मणिना जङ्गिडेन मयोभुवा । विष्कन्धं सर्वा रक्षांसि व्यायामे सहामहे ॥४॥**

देवताहरूले प्रदान गरेको, सुखदायक यो जङ्गिड मणिले हामी सुकाउने रोगका साथै अरू सबै खालका रोगका कीटाणुहरूलाई सङ्घर्ष गरेर दमन गर्न सक्दछौँ ।

**शणश्च मा जङ्गिडश्च विष्कन्धादभि रक्षताम् । अरण्यादन्य आभृतः कृष्या अन्यो रसेभ्यः ॥५॥**

बाँध्नका लागि प्रयोग गरिएको सनपाटको डोरी र जङ्गिड मणिका बन्धनले हामीलाई रक्षा गरून् । यिनीहरूमध्ये एउटाको आपूर्ति वनबाट गरिन्छ भने अर्काको आपूर्ति कृषिकार्यबाट उत्पादित रसबाट हुने गर्दछ ।

**कृत्यादूषिरयं मणिरथो अरातिदूषिः । अथो सहस्वाञ्जङ्गिगडः प्र ण आयूंषिता रिषत् ॥६॥**

यो जङ्गिड मणि कृत्या आदिबाट सुरक्षा गर्ने किसिमको छ र शत्रुरूपी व्याधिलाई पर हटाउँछ । यस शक्तिशाली जङ्गिड मणिले हाम्रो आयु वृद्धि गरोस् ।

## ५. इन्द्रशौर्य सूक्त

**ऋषि–** भृगु आथर्वण । **देवता–** इन्द्र । **छन्द–** त्रिष्टुप्, निचृत् उपरिष्टात् बृहती, विराट् उपरिष्टात् बृहती, विराट् पथ्या बृहती, पुरोविराट् जगती ।

**इन्द्र जुषस्व प्र वहा याहि शूर हरिभ्याम् । पिबा सुतस्य मतेरिह मधोश्चकानश्चारुर्मदाय ॥१॥**

हे शूरवीर इन्द्रदेवता ! तिमी आनन्दित भएर अगाडि बढ । तिमी आफ्ना अश्वले यस यज्ञमा आऊ । सन्तुष्ट र आनन्दित हुनका लागि विद्वान् पुरुषहरूले पेलेर तयार गरेको मधुर सोमरस पान गर ।

**इन्द्र जठरं नव्यो न पृणस्व मधोर्दिवो न । अस्य सुतस्य स्व१र्णोप त्वा मदाः सुवाचो अगुः ॥२॥**

हे शूरवीर इन्द्रदेवता ! तिमी प्रशंसनीय तथा हर्षवर्द्धक मधुर सोमरसले पेटलाई पूरा गराऊ । त्यसपछि त्यो पेलेर तयार गरिएको सोमरस तथा स्तुतिका माध्यमबाट तिमीलाई स्वर्गलोकको

तिमीलाई आनन्द प्राप्त होस् ।

**इन्द्रस्तुराषाण्मित्रो वृत्रं यो जघान यतीर्न । बिभेद वलं भृगुर्न ससहे शत्रून् मदे सोमस्य ॥३॥**

यी इन्द्रदेवता सबै खालका प्राणीहरूका मित्र हुन् । उनी शत्रुमाथि अति चाँडो गतिमा आक्रमण गर्दछन् । उनैले वृत्र नामको अवरोधक मेघको संहार गरेका थिए । भृगु ऋषिको जस्तै उनले अङ्गिराहरूका यज्ञका साधनका रूपमा रहेका गाईहरूलाई अपहरण गर्ने बलासुरलाई संहार गरेका थिए । उनैले सोमपान गरेर हर्षित भएपछि शत्रुलाई पराजित गरेका थिए ।

**आ त्वा विशन्तु सुतास इन्द्र पृणस्व कुक्षी विड्ढि शक्र धियेह्या नः । श्रुधी हवं गिरो मे जुषस्वेन्द्र स्वयुग्भिर्मत्स्वेह महे रणाय ॥४॥**

हे शक्तिशाली इन्द्रदेवता ! तिमीलाई पेलेर तयार पारिएको सोमरस प्राप्त होस् र तिमी त्यस सोमरसले दुवै भुजा र कोखाहरू भरिपूर्ण गराऊ । हे इन्द्रदेवता ! हामीले आह्वान गरेको सुनेर, विवेकपूर्वक हाम्रा नजिकै आऊ र हाम्रा स्तुति वचनहरूलाई स्वीकार गर । विराट् सङ्ग्रामका लागि आफ्ना रक्षण साधनहरू लिएर हर्षका साथ तयार भइराख ।

**इन्द्रस्य नु प्रा वोचं वीर्याणि यानि चकार प्रथमानि वज्री । अहन्नहिमन्वपस्ततर्द प्र वक्षणा अभिनत् पर्वतानाम् ॥५॥**

वज्रधारी इन्द्रदेवताले गरेका पराक्रमपूर्ण कार्यहरूको बयान हामी गर्दछौँ । उनैले वृत्र तथा मेघलाई संहार गरेका थिए । त्यसपछि उनले वृत्रले थुनेर राखेको जललाई प्रवाहित गराए र पर्वतहरूलाई भत्काएर नदीहरूलाई बग्ने बाटो खोलिदिए ।

**अहन्नहिं पर्वते शिश्रियाणं तवष्टास्मै वज्रं स्वर्यं ततक्ष । वाश्रा इव धेनवः स्यन्दमाना अञ्जः समुद्रमव जग्मुरापः ॥६॥**

उनै इन्द्रदेवताले वृत्रलाई संहार गरे र मेघलाई भत्काए । वृत्रका पिता त्वष्टाले इन्द्रदेवताको विरोध गर्नका लागि आफ्नो वज्र तेज गराए । त्यस पछि गाईको जस्तै उँधो मुन्टो लगाएर वेगका साथ बग्ने नदीहरू पनि समुद्रसम्म पुग्न सक्ने भए ।

**वृषायमाणो अवृणीत सोमं त्रिकद्रुकेष्वपिबत् सुतस्य । आ सायकं मघवादत्त वज्रमहन्नेनं प्रथमजामहीनाम् ॥७॥**

साँढेको जस्तै व्यवहार गर्ने इन्द्रदेवताले सोमरूपी अन्नलाई प्रजापतिका लागि ग्रहण गरे र तीन वटा उच्च स्थानमा पेलेर तयार पारिएको सोमरस पान गरे । त्यसैका बलले दरिलो भएर उनले बाणका रूपमा रहेको वज्र धारण गरे र हिंसा गर्ने बानी भएका शत्रुहरूमध्ये पहिले उत्पन्न भएका यस वीर शत्रु वृत्रलाई विनाश गरे ।

## ६. सपत्नहाग्नि सूक्त

**ऋषि–** शौनक । **देवता–** अग्नि । **छन्द–** त्रिष्टुप्, चतुष्पदार्षी पङ्क्ति, विराट् प्रस्तारपङ्क्ति ।

**समास्त्वाग्न ऋतवो वर्धयन्तु संवत्सरा ऋषयो यानि सत्या । सं दिव्येन दीदिहि रोचनेन विश्वा आ भाहि प्रदिशश्चतस्रः ॥१॥**

हे अग्निदेवता ! तिमीलाई महिना, ऋतु, वर्ष, ऋषि तथा सत्य आचरणले समृद्ध गराऊन् । तिमी दैवी तेजले सम्पन्न भएर समस्त दिशाहरूलाई आलोकित गर ।

**सं चेध्यस्वाग्ने प्र च वर्धयेममुच्च तिष्ठ महते सौभगाय । मा ते रिषन्नुपसत्तारो अग्ने ब्रह्माणस्ते यशसः सन्तु मानये ॥२॥**

हे अग्निदेवता ! तिमी उचित किसिमले प्रदीप्त भएर याजकको उन्नति गराऊ र प्रचुर ऐश्वर्य प्रदान गर्नका लागि उत्साहित गर । हे अग्निदेवता ! तिम्रा साधकहरू कहिल्यै नष्ट नहोऊन् । तिम्रा नजिकका विप्रहरू कीर्तिसम्पन्न होऊन् तर अरू यज्ञहीन मानिसहरू कीर्तिवान् नहोऊन् ।

**त्वामग्ने वृणते ब्राह्मणा इमे शिवो अग्ने संवरणे भवा नः । सपत्नहाग्ने अभिमातिजिद् भव स्वे गये जागृह्यप्रयुच्छन् ॥३॥**

हे अग्निदेवता ! यी ब्राह्मण याजकहरूले तिम्रो साधना गर्दछन् । हे अग्निदेवता ! तिमी हाम्रा भुलहरूमा क्रोधित नहोऊ । हे अग्निदेवता ! तिमी हाम्रा शत्रु तथा पापहरूलाई पराजित गरेर आफ्ना घरमा सावधानीसाथ जाग्रत भइराख ।

**क्षत्रेणाग्ने स्वेन सं रभस्व मित्रेणाग्ने मित्रधा यतस्व । सजातानां मध्यमेष्ठा राज्ञामग्ने विहव्यो दीदिहीह ॥४॥**

हे अग्निदेवता ! तिमी क्षत्रिय बलले अत्यन्त सम्पन्न छौ । हे अग्निदेवता ! तिमी आफ्ना मित्रहरूसँग मित्रभावको आचरण गर । हे अग्निदेवता ! तिम्रै जस्तो गरी जन्म भएका विप्रहरूका बीचमा बसेर र राजाका माझमा विशेष रूपले आह्वान गर्न योग्य भएर यस यज्ञमा तिमी आलोकित होऊ ।

**अति निहो अति सृधोऽत्यचित्तीरति द्विषः । विश्वा ह्यग्ने दुरिता तर त्वमथास्मभ्यं सहवीरं रयिं दाः ॥५॥**

हे अग्निदेवता ! तिमी हाम्रा विषयवासनारूपी नीच जन्मतर्फ प्रेरित गर्ने विकृतिहरूलाई हटाऊ । तिमी हाम्रो शरीर सुकाउने रोगव्याध र पापतर्फ प्रेरित गर्ने दुर्बुद्धिलाई पनि हटाइदेऊ । तिमी हाम्रा शत्रुलाई विनाश गरिदेऊ र हामीलाई पराक्रमी सन्तानले युक्त गराएर ऐश्वर्य प्रदान गर ।

## ७. शापमोचन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** भैषज्य, आयु, वनस्पति । **छन्द–** अनुष्टुप्, भुरिगनुष्टुप्, विराडुपरिष्टाद् बृहती ।

**अघद्विष्टा देवजाता वीरुच्छपथयोपनी । आपो मलमिव प्राणैक्षीत् सर्वान् मच्छपथाँ अधि ॥१॥**

पिशाचहरूले गरेका पापलाई हटाउने, ब्राह्मणको शाप विनाश गर्ने र देवताहरूले उत्पन्न गराएको वीरुध नामको दुबो जातिका औषधिले पानीले मैला पखालेझैँ हाम्रो शाप पखालिदिन्छ ।

**यश्च सापत्नः शपथो जाम्याः शपथश्च यः । ब्रह्मा यन्मन्युतः शपात् सर्वं तन्नो अधस्पदम् ॥२॥**

शत्रुको शाप, स्त्रीको शाप र ब्राह्मणले क्रोधपूर्वक दिएको शाप हाम्रा गोडाका मुनि थिचिएर नाश होऊन् ।

**दिवो मूलमवततं पृथिव्या अध्युत्ततम् । तेन सहस्रकाण्डेन परि णः पाहि विश्वतः ॥३॥**

द्युलोकबाट मूल भागका रूपमा आउने र धर्तीका माथिल्ला भागमा फैलिने गरेका हजारौँ गाँठाहरू भएको त्यही दुबो नामको वनस्पतिरूपी हे मणि ! हामीलाई तिमी सबै किसिमका आपद्मा सुरक्षा गर ।

**परि मां परि मे प्रजां परि णः पाहि यद् धनम् । अरातिर्नो मा तारीन्मा नस्तारिषुरभिमातयः ॥४॥**

हे मणि ! हाम्रो र हाम्रा सन्तान, पुत्रपौत्रादिको ऐश्वर्य तिमीले सुरक्षित गर । दान नगर्ने शत्रुहरू हामीलाई जितेर अगाडि नबढून् र हिंसक मानिसले हामीलाई विनाश गर्न नसकून् ।

**शाप्तारमेतु शपथो यः सुहार्त्तेन नः सह । चक्षुर्मन्त्रस्य दुर्हार्दः पृष्टीरपि शृणीमसि ॥५॥**

शाप दिने व्यक्तितिर शाप फर्किएर जाओस् । श्रेष्ठ अन्तःकरण भएका मानिसहरू जेजति छन्, हाम्रो मित्रता उनीहरूसितै स्थापित होस् । हे मणि ! नराम्रा खालका इसारा गर्ने मानिसका आँखालाई आफ्ना आँखाले तिमी छिन्नभिन्न गराऊ ।

## ८. क्षेत्रियरोगनाशन सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** वनस्पति, यक्ष्मनाशन । **छन्द–** अनुष्टुप्, पथ्यापङ्क्ति, विराट् अनुष्टुप्, निचृत् पथ्यापङ्क्ति ।

**उदगातां भगवती विचृतौ नाम तारके । वि क्षेत्रियस्य मुञ्चतामधमं पाशमुत्तमम् ॥१॥**

विचृत नामका दुई किसिमका औषधिहरू दुई तरिकाले उम्रिएका छन् । यिनले कडा अथवा नरम

खालका वंशानुगत रोगको पासो फुकाइदियोस् ।

**अपेयं रात्र्युच्छत्वपोच्छन्त्वभिकृत्वरीः । वीरुत् क्षेत्रियनाशन्यप क्षेत्रियमुच्छतु ॥२॥**

यो रात बितोस्, रोगका हिंस्रक कीटाणुहरू पनि जाऊन् । वंशानुगत रोगको औषधिले त्यस्ता रोगबाट मुक्ति प्रदान गरोस् ।

**बभ्रोरर्जुनकाण्डस्य यवस्य ते पलाल्या तिलस्य तिलपिञ्ज्या । वीरुत् क्षेत्रियनाशन्यप क्षेत्रियमुच्छतु ॥३॥**

खैरो र सेतो रङ्गका अर्जुन नामका काठका दाउरा, जौका भुस र तिलसहित तिलका मञ्जरीले रोगव्याध नाश गरून् । वंशानुगत रोगलाई विनाश गर्ने यस्ता वनस्पतिले यी रोगबाट मुक्ति प्रदान गरून् ।

**नमस्ते लाङ्गलेभ्यो नम ईषायुगेभ्यः । वीरुत् क्षेत्रियनाशन्यप क्षेत्रियमुच्छतु ॥४॥**

रोगको रोकथामका लागि औषधि उत्पादन गर्नमा सक्षम हलोमा नारिएका गोरु र हलाका काठलाई हामी नमस्कार गर्दछौँ । वंशानुगत रोग नाश गर्ने खालका औषधिहरूले तिम्रा खेतमा भएका रोगहरूलाई नाश गरून् ।

**नमः सनिस्रसाक्षेभ्यो नमः संदेश्येभ्यो नमः क्षेत्रस्य पतये । वीरुत् क्षेत्रियनाशन्यप क्षेत्रियमुच्छतु ॥५॥**

औषधि उत्पादन गर्नका लागि सहयोग पुऱ्याउने जल प्रवाहक अक्षलाई हामी नमस्कार गर्दछौँ । सन्देश दिनेहरूलाई हामी नमस्कार गर्दछौँ । औषधि उत्पादन गर्ने खेतका स्वामीलाई नमस्कार गर्दछौँ । क्षेत्रिय रोग निवारण गर्ने औषधिले यस किसिमका रोगहरू निर्मूल पारुन् ।

## ९. दीर्घायुप्राप्ति सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** यक्ष्मनाशन, वनस्पति । **छन्द–** अनुष्टुप्, विराट् प्रस्तारपङ्क्ति ।

**दशवृक्ष मुञ्चेमं रक्षसो ग्राह्या अधि यैनं जग्राह पर्वसु । अथो एनं वनस्पते जीवानां लोकमुन्नय ।1॥**

हे दशवृक्ष नामका औषधि ! यस रोगीलाई राक्षसनीले भैँ अँठ्याएका जोर्नीका रोगहरूबाट तिमी मुक्त गराऊ । हे वनौषधिहरू हो ! रोगले चट्पटाउन नसकेका यी व्यक्तिलाई फेरि पनि समाजमा जान सक्ने बनाओ ।

**आगादुदगादयं जीवानां व्रातमप्यगात् । अभूदु पुत्राणां पिता नृणां च भगवत्तमः ॥२॥**

हे वनस्पतिहरू हो ! तिमीहरूका कृपाले यी व्यक्तिले जीवन प्राप्त गरेर जीवित मानिसका समूहमा पुनः जान सकून् र यिनका पुत्रले पिता पाऊन् । उनीहरू पनि मानिसका बीचमा अत्यन्त सौभाग्यशाली होऊन् ।

**अधीतीरध्यगादयमधि जीवपुरा अगन् । शतं ह्यस्य भिषजः सहस्रमुत वीरुधः ॥३॥**

रोगले छोडेका मानिसले विद्याज्ञान सम्भिऊन् र मानिसको निवासस्थान फेरि चिन्न सकून् । किनभने यस्ता रोगका सयौँ किसिमका वैद्य र हजारौँ किसिमका औषधिहरू हुन्छन् ।

**देवास्ते चीतिमविदन् ब्रह्माण उत वीरुधः । चीतिं ते विश्वे देवा अविदन् भूम्यामधि ॥४॥**

हे औषधिहरू हो ! रोगव्याधका पीडाबाट रोगीलाई मुक्त गराउने र रोगसँग लड्ने तिमीहरूको बल समस्त देवताहरूले जानेका छन् । यसै किसिमले पृथ्वीमाथि तिमीहरूको गुणधर्मलाई देवता, ब्राह्मण र चिकित्साकर्मीहरूले जानेका छन् ।

**यश्चकार स निष्करत् स एव सुभिषक्तमः । स एव तुभ्यं भेषजानि कृणवद् भिषजा शुचिः ॥५॥**

निरन्तर चिकित्सा कार्यमा लागेका वैद्यहरू जति छन्, तिनीहरूले नै कुशलता प्राप्त गर्दछन् र श्रेष्ठ वैद्य पनि उनीहरू नै हुन्छन् । त्यस्ता चिकित्सकहरूले अन्य चिकित्सकसँग परामर्श गरेर

तिमीहरूका रोगको उपचार गर्न सक्दछन् ।

## १०. पाशमोचन सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** द्यावापृथिवी, ब्रह्म, निर्ऋति, आपोदेव, अग्नि, सोम, ओषधि समूह, वात, चार दिशा, वातपत्नी, सूर्य, यक्ष्म, निर्ऋति । **छन्द–** सप्तपदा धृति, त्रिष्टुप्, सप्तपादष्टि सप्तपदा अत्यष्टि ।

**क्षेत्रियात् त्वा निर्ऋत्या जामिशंसाद् द्रुहो मुञ्चामि वरुणस्य पाशात् । अनागसं ब्रह्मणा त्वा कृणोमि शिवे ते द्यावापृथिवी उभे स्ताम् ॥१॥**

हे रोगीहरू हो ! तिमीहरूलाई हामी पुर्ख्यौंली रोगबाट, त्यसका कष्टबाट, द्रोहबाट, सम्बन्धीहरूका रिसडाहबाट र वरुणदेवताका पाशबाट मुक्त गराउँछौं । हामी ब्रह्मज्ञानले तिमीहरूलाई दोषरहित बनाउँछौं र यी द्यावापृथिवी पनि तिमीहरूका लागि हितकारी हुनेछन् ।

**शं ते अग्निः सहाद्भिरस्तु शं सोमः सहौषधीभिः । एवाहं त्वां क्षेत्रियान्निर्ऋत्या जामिशंसाद् द्रुहो मुञ्चामि वरुणस्य पाशात् । अनागसं ब्रह्मणा त्वा कृणोमि शिवे ते द्यावापृथिवी उभे स्ताम् ॥२॥**

हे रोगीहरू हो ! समस्त जलका साथमा अग्निदेवता तिमीहरूका लागि हितकारी होऊन् र टोल छिमेक आदि पनि सोमरस सहितका औषधिले युक्त भएर तिमीहरूका लागि हितकारी होऊन् । तिमीहरूलाई हामी पुर्ख्यौंली तथा स्थानीय रोगबाट, पीडाबाट, दुश्मनीबाट, आफन्तका रिसडाहबाट र वरुणदेवताका पाशबाट मुक्त गराउँछौं र ब्रह्मज्ञानका सहायताले दोषरहित बनाउँछौं । यी द्यावापृथिवी पनि तिमीहरूका लागि हितकारी होऊन् ।

**शं ते वातो अन्तरिक्षे वयो धाच्छ ने भवन्तु प्रदिशश्चतस्रः । एवाहं त्वां क्षेत्रियान्निर्ऋत्या जामिशंसाद् द्रुहो मुञ्चामि वरुणस्य पाशात् । अनागसं ब्रह्मणा त्वा कृणोमि शिवे ते द्यावापृथिवी उभे स्ताम् ॥३॥**

हे रोगीहरू हो ! अन्तरिक्षमा विचरण गर्ने वायुदेवताले तिमीहरूका लागि सामर्थ्य र कल्याण प्रदान गरून् । चारै दिशा तिमीहरूका लागि हितकारी होऊन् । तिमीहरूलाई हामी पुस्तैनी तथा स्थानीय रोगबाट, पीडाबाट, दुश्मनीबाट, आफन्तका रिसडाहबाट र वरुणदेवताका पाशबाट मुक्त गराउँछौं र ब्रह्मज्ञानका सहायताले दोषरहित बनाउँछौं । यी द्यावापृथिवी पनि तिमीहरूका लागि हितकारी होऊन् ।

**इमा या देवीः प्रदिशश्चतस्रो वातपत्नीरभि सूर्यो विचष्टे । एवाहं त्वां क्षेत्रियान्निर्ऋत्या जामिशंसाद् द्रुहो मुञ्चामि वरुणस्य पाशात् । अनागसं ब्रह्मणा त्वा कृणोमि शिवे ते द्यावापृथिवी उभे स्ताम् ॥४॥**

वायुदेवताका पत्नीका रूपमा प्रकाशमयी चारै उपदिशाहरू रहेका छन् । आदित्यदेवताले तिनीहरूलाई चारै तिरबाट देख्दछन् । तिनले तिमीहरूको कल्याण गरून् । हे रोगीहरू हो ! तिमीहरूलाई हामी पुस्तैनी तथा स्थानीय रोगबाट, पीडाबाट, दुश्मनीबाट, आफन्तका रिसडाहबाट र वरुणदेवताका पाशबाट मुक्त गराउँछौं र ब्रह्मज्ञानका सहायताले दोषरहित बनाउँछौं । यी द्यावापृथिवी पनि तिमीहरूका लागि हितकारी होऊन् ।

**तासु त्वान्तर्जरस्या दधामि प्र यक्ष्म एतु निर्ऋतिः पराचैः । एवाहं त्वां क्षेत्रियान्निर्ऋत्या जामिशंसाद् द्रुहो मुञ्चामि वरुणस्य पाशात् । अनागसं ब्रह्मणा त्वा कृणोमि शिवे ते द्यावापृथिवी उभे स्ताम् ॥५॥**

हे रोगीहरू हो ! तिमीहरूलाई रोगबाट मुक्त गराएर वृद्ध अवस्थासम्म जीवित रहनका लागि उनै पूर्व आदि चारै दिशामा स्थापित गराउँछौं । तिमीहरूका नजिकबाट क्षय रोग र सम्पूर्ण कष्टहरू मुन्टो निहुराउँदै पर भागून् । हे रोगीहरू हो ! तिमीहरूलाई हामी पुस्तैनी तथा स्थानीय रोगबाट, पीडाबाट, दुश्मनीबाट, आफन्तका रिसडाहबाट र वरुणदेवताका पाशबाट मुक्त गराउँछौं र

ब्रह्मज्ञानका सहायताले दोषरहित बनाउँछौं । यी द्यावापृथिवी पनि तिमीहरूका लागि हितकारी होऊन् ।

**अमुक्था यक्ष्माद् दुरितादवद्याद् द्रुहः पाशाद् ग्राह्याश्चोदमुक्थाः । एवाहं त्वां क्षेत्रियान्निर्ऋत्या जामिशंसाद् द्रुहो मुञ्चामि वरुणस्य पाशात् । अनागसं ब्रह्मणा त्वा कृणोमि शिवे ते द्यावापृथिवी उभे स्ताम् ॥६॥**

हे रोगीहरू हो ! क्षय रोग, रोगको दोष, निन्दा योग्य कर्म, विद्रोहका बन्धन र दुःखले जेल्ने वात नामका रोगबाट तिमीहरूले निश्चित रूपमा नै अब मुक्ति पाइरहेका हुनेछौ । तिमीहरूलाई हामी पुस्तैनी तथा स्थानीय रोगबाट, पीडाबाट, दुश्मनीबाट, आफन्तका रिसडाहबाट र वरुणदेवताका पाशबाट मुक्त गराउँछौं र ब्रह्मज्ञानका सहायताले दोषरहित बनाउँछौं । यी द्यावापृथिवी पनि तिमीहरूका लागि हितकारी होऊन् ।

**अहा अरातिमविदः स्योनमप्यमूर्भद्रे सुकृतस्य लोके । एवाहं त्वां क्षेत्रियान्निर्ऋत्या जामिशंसाद् द्रुहो मुञ्चामि वरुणस्य पाशात् । अनागसं ब्रह्मणा त्वा कृणोमि शिवे ते द्यावापृथिवी उभे स्ताम् ॥७॥**

हे रोगले सताइएका मानिसहरू हो ! तिमीहरू शत्रुजस्ता बाधक रोगबाट मुक्त भएका छौ र अब तिमीहरू खुर्सीको जीवन प्राप्त गर्दै छौ । तिमीहरू आआफ्नो पुण्यको परिणामस्वरूप यस किसिमका कल्याणकारी लोकमा आएका छौ । तिमीहरूलाई हामी पुस्तैनी तथा स्थानीय रोगबाट, पीडाबाट, दुश्मनीबाट, आफन्तका रिसडाहबाट र वरुणदेवताका पाशबाट मुक्त गराउँछौं र ब्रह्मज्ञानका सहायताले दोषरहित बनाउँछौं । यी द्यावापृथिवी पनि तिमीहरूका लागि हितकारी होऊन् ।

**सूर्यमृतं तमसो ग्राह्या अधि देवा मुञ्चन्तो असृजन्निरेणसः । एवाहं त्वां क्षेत्रियान्निर्ऋत्या जामिशंसाद् द्रुहो मुञ्चामि वरुणस्य पाशात् । अनागसं ब्रह्मणा त्वा कृणोमि शिवे ते द्यावापृथिवी उभे स्ताम् ॥८॥**

देवताहरूले सत्यका स्वरूप सूर्यलाई दुःख दिने राहु नामका ग्रहबाट मुक्त गराएझैं हामी पनि तिमीहरूलाई पुस्तैनी तथा स्थानीय रोगबाट, पीडाबाट, दुश्मनीबाट, आफन्तका रिसडाहबाट र वरुणदेवताका पाशबाट मुक्त गराउँछौं र ब्रह्मज्ञानका सहायताले दोषरहित बनाउँछौं । यी द्यावापृथिवी पनि तिमीहरूका लागि हितकारी होऊन् ।

## ११. श्रेय प्राप्ति सूक्त

**ऋषि**– शुक्र । **देवता**– कृत्यादूषण । **छन्द**– त्रिपदा परोष्णिक्, चतुष्पदा विराट गायत्री, पिपीलिकामध्या निचृत् गायत्री ।

**दूष्या दूषिरसि हेत्या हेतिरसि मेन्या मेनिरसि । आप्नुहि श्रेयांसमति समं क्राम ॥१॥**

हे जीवनसत्ताका रूपमा रहेका तिलकमणि ! तिमी दोषहरूलाई पनि निर्मूल पार्न सक्दछौ । तिमी अनिष्टकारी हतियारका लागि पनि विनाशक हतियार नै हौ । तिमी वज्रका लागि वज्र नै हौ । त्यसो हुनाले तिमी श्रेयस्कर बन र दोषरूपी शत्रुका तुलनामा अगाडि जान समर्थ सिद्ध होऊ ।

**स्रक्त्योऽसि प्रतिसरोऽसि प्रत्यभिचरणोऽसि । आप्नुहि श्रेयांसमति समं क्राम ॥२॥**

तिमी स्रक्त्य नामको वृक्षबाट उत्पन्न तथा गतिशील छौ । तिमी आघातलाई उल्टाइदिन सक्ने हुनाले तिमीलाई प्रतिसर भनिन्छ । तिमी प्रत्याक्रमणका लागि अत्यन्त समर्थ छौ । त्यसैले तिमी श्रेयस्कर बन र दोषरूपी शत्रुका तुलनामा अगाडि जान समर्थ सिद्ध होऊ ।

**प्रति तमभि चर योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः । आप्नुहि श्रेयांसमति समं क्राम ॥३॥**

हामीसित द्वेष गरेर हाम्रो उन्नतिमा बाधा हाल्ने जति शत्रुहरू छन्, अथवा जोसित हामी द्वेष गर्दछौं र तिनलाई निवारण गर्ने हाम्रो रहर हुन्छ, तिनीहरूलाई तिमी प्रत्याक्रमण गर । त्यसैका लागि तिमी श्रेयस्कर बन र दोषरूपी शत्रुका तुलनामा अगाडि जान समर्थ सिद्ध होऊ ।

**सूरिरसि वर्चोधा असि तनूपानोऽसि । आप्नुहि श्रेयांसमति समं क्राम ॥४॥**

आवश्यकताअनुसार तिमी ज्ञानले सम्पन्न छौ, तिमी तेजस्विता धारण गर्नमा समर्थ छौ र शरीरको रक्षा गर्ने पनि तिमी नै हौ । त्यसैले तिमी श्रेयस्कर बन र दोषरूपी शत्रुका तुलनामा अगाडि जान समर्थ सिद्ध होऊ ।

**शुक्रोऽसि भ्राजोऽसि स्वरसि ज्योतिरसि । आप्नुहि श्रेयांसमति समं क्राम ॥५॥**

तिमी उज्ज्वल र पराक्रमले सम्पन्न हुनाले शुक्र हौ, तेजस्वी छौ, आत्मसत्ताले सम्पन्न छौ र ज्योतिका रूपमा स्वयं नै प्रकाशित हुन्छौ । त्यसैले तिमी श्रेयस्कर बन र दोषरूपी शत्रुका तुलनामा अगाडि जान समर्थ सिद्ध होऊ ।

## १२. शत्रुनाशन सूक्त

**ऋषि–** भरद्वाज । **देवता–** द्यावापृथिवी, अन्तरिक्ष, देवगण, इन्द्र, आदित्यगण, वसुगण पितर अङ्गिरस, पितर सौम्य, मरुद्गण, ब्रहमद्विट्, यमसादन, ब्रह्म, अग्नि । **छन्द–** त्रिष्टुप्, जगती, अनुष्टुप् ।

**द्यावापृथिवी उर्वन्तरिक्षं क्षेत्रस्य पत्न्युरुगायोऽद्भुतः । उतान्तरिक्षमुरु वातगोपं त इह तप्यन्तां मयि तप्यमाने ॥१॥**

द्यावापृथिवी, विस्तृत अन्तरिक्ष, समस्त क्षेत्रकी पत्नीरूपा प्रकृति, अद्भुत सूर्यदेवता, वायुलाई स्थान दिने विशाल अन्तरिक्ष आदि सबै नै हामी सन्तप्त भएका बेलामा हाम्रो दुःख हटाउनका लागि सन्तप्त होऊन् ।

**इदं देवाः शृणुत ये यज्ञिया स्थ भरद्वाजो मह्यमुक्थानि शंसति । पाशे स बद्धो दुरिते नि युज्यतां यो अस्काम मन इदं हिनस्ति ॥२॥**

हे यजनीय देवताहरू हो ! भरद्वाज ऋषिले हामीलाई मन्त्र आदि उक्थहरू प्रदान गरिरहेका छन् त्यो हाम्रो निवेदन तिमीहरू सुन । सत्कर्ममा एकाग्र भएर लागेका हाम्रा मनलाई जुन शत्रुले दुःखी बनाउँछन्, त्यस्ता खालका पापलाई पाशले बाँधेर उचित स्थानमा लगेर थन्क्याइदेओ ।

**इदमिन्द्र शृणुहि सोमप यत् त्वा हृदा शोचता जोहवीमि । वृश्चामि तं कुलिशेनेव वृक्षं यो अस्माकं मन इदं हिनस्ति ॥३॥**

हे इन्द्रदेवता ! तिमी सोमरस पान गरेर आनन्दित भएका मनले हाम्रो भनाइ सुन । शत्रुहरूले दुष्कर्म गरेका कारण हामी तिमीलाई बारम्बार पुकार्दछौँ । हाम्रा मनलाई दुःख दिने गरेका शत्रुहरूलाई हामी फर्साले रुख काटेझैँ काट्नेछौँ ।

**अशीतिभिस्तिसृभिः सामगेभिरादित्येभिर्वसुभिरङ्गिरोभिः । इष्टापूर्तमवतु नः पितृणामामुं ददे हरसा दैव्येन ॥४॥**

तीन वटा छन्दविद्या एवं असी मन्त्रसहितको सामगान गर्नेहरूका साथमा वसु, अङ्गिरारूपी रुद्र तथा आदित्यरूपी पितृहरूसहित हाम्रा पुर्खाले गरेका यज्ञ आदि इष्टकार्य तथा सेवासहयोग आदिका आपूर्तिका कर्महरूले हाम्रो रक्षा गरून् । हामी दिव्य सामर्थ्य एवं आक्रोशपूर्व फलाना नाम या शत्रुलाई आफ्ना अधिकारमा लिन्छौँ ।

**द्यावापृथिवी अनु मा दीधीथां विश्वे देवासो अनु मा रभध्वम् । अङ्गिरसः पितरः सोम्यासः पापमार्छत्वपकामस्य कर्ता ॥५॥**

हे द्यावापृथिवी ! हाम्रा लागि अनुकूल भएर तिमीहरू तेजले सम्पन्न होओ । हे समस्त देवताहरू हो ! हाम्रा लागि अनुकूल भएर तिमीहरू कार्यको थालनी गर । हे अङ्गिरा तथा सोमयज्ञ सम्पन्न गर्ने पितृहरू हो ! हाम्रो अहित गर्न खोज्ने पाप दमन गर्न सहभागी होओ ।

**अतीव यो मरुतो मन्यते नो ब्रह्म वा यो निन्दिषत् क्रियमाणम् । तपूंषि तस्मै वृजिनानि सन्तु ब्रह्मद्विषं दौरभिसंतपाति ॥६॥**

हे मरुत्गण ! ब्रह्मज्ञान र त्यसअनुसार गरिएका कार्यको अतिवादी भएर जसले निन्दा गर्दछन्

उनले गरेका सबै खालका प्रयासले उनीहरूलाई नै सन्ताप दिऊन् । द्युलोकले त्यस्ता ब्रह्मदोषीलाई पीडित गरोस् ।

**सप्त प्राणानष्टौ मनयस्तांस्ते वृश्चामि ब्रह्मणा । अया यमस्य सादनमग्निदूतो अरङ्कृतः ॥७॥**

हे रोगरूपी शत्रुहरू हो ! तिमीहरूका सात किसिमका प्राण र आठ किसिमका नाडीलाई हामी ब्रह्मज्ञानका शक्तिले बाँध्दछौँ । तिमीहरू अग्निलाई दूत बनाएर यमराजका घरको शोभा बढाउन जाओ ।

**आ दधामि ते पदं समिद्धे जातवेदसि । अग्निः शरीरं वेवेष्ट्वसुं वागपि गच्छतु ॥८॥**

तिमीहरूका पदलाई हामी दन्कँदो अग्निमा हालिदिन्छौँ । यो अग्नि तिम्रा शरीरमा प्रवेश गरोस् र तिम्रा वाणी तथा प्राणमा संव्याप्त होस् ।

## १३. दीर्घायुप्राप्ति सूक्त

**ऋषि–** अथर्वा । **देवता–** अग्नि, बृहस्पति, आयु, विश्वदेवा । **छन्द–** त्रिष्टुप, अनुष्टुप, विराट् जगती,।

**आयुर्दा अग्ने जरसं वृणानो घृतप्रतीको घृतपृष्ठो अग्ने । घृतं पीत्वा मधु चारु गव्यं पितेव पुत्रानभि रक्षतादिमम् ॥१॥**

हे तेजस्वी अग्निदेवता ! तिमी जीवन प्रदान गर्ने र स्तुति ग्रहण गर्ने हौ । तिमी घिउजस्तै ओजस्वी र घिउ नै सेवन गर्ने हौ । तिमी गाईरूपी प्रकृतिबाट उत्पन्न मधुर गव्य पदार्थ सेवन गरेर यस बालकरूपी प्राणीलाई सबै किसिमले पिताले पुत्रको रक्षा गरेझैँ रक्षा गर ।

**परि धत्त धत्त नो वर्चसेमं जरामृत्युं कृणुत दीर्घमायुः । बृहस्पतिः प्रायच्छद् वास एतत् सोमाय राज्ञे परिधातवा उ ॥२॥**

हे देवताहरू हो ! यस बालकरूपी प्राणीलाई तिमीहरू वस्त्ररूपी कायाको आच्छादन प्रदान गर र तेजस्विता धारण गराओ । तिमीहरू यसलाई दीर्घ जीवन प्रदान गरेर वृद्ध भएपछि मात्रै मर्ने गराओ । यस किसिमले आच्छादन बृहस्पतिदेवताले राजा सोमलाई कृपापूर्वक प्रदान गरेका थिए ।

**परीदं वासो अधिथाः स्वस्तयेऽभूर्गृष्टीनामभिशस्तिपा उ । शतं च जीव शरदः पुरूची रायश्च पोषमुपसंव्ययस्व ॥३॥**

हे बालकरूपी जीव ! तिमी आफ्नो कल्याणका लागि यो वस्त्र धारण गर । तिमी गाईरूपी इन्द्रियलाई विनाश हुनबाट जोगाउनकै लागि हौ । तिमी सय वर्षको दीर्घ आयु प्राप्त गर र ऐश्वर्य तथा पोषण लिनेदिने खालका उपक्रम गरिराख ।

**एह्यश्मानमा तिष्ठाश्मा भवतु ते तनूः । कृण्वन्तु विश्वे देवा आयुष्टे शरदः शतम् ॥४॥**

हे बालकरूपी साधक ! आऊ साधना गर्नका लागि दृढ आधारका रूपमा रहेका यस ढुङ्गामा अडिएर बस । यसो भएर तिम्रो काया अथवा आस्था ढुङ्गोजस्तै बलियो हुनेछ । देवशक्तिले तिम्रो आयु सय वर्षको गराउनेछन् ।

**यस्य ते वासः प्रथमवास्यं१ हरामस्तं त्वा विश्वेऽवन्तु देवाः । तं त्वा भ्रातरः सुवृधा वर्धमानमनु जायन्तां बहवः सुजातम् ॥५॥**

हे बालकरूपी जीव ! तिम्रो अस्तित्त्वका लागि नै यो पहिलो आच्छादन प्रदान गरिएको छ । त्यसको सुरक्षा सबै देवताहरूले गर्नेछन् । यसो भएपछि नै उत्तम किसिमको जन्म पाएका, असल किसिमले हुर्केबढेका र विकासको गतिमा लागेका अरू धेरै तिम्रा भाइहरू हुनेछन् ।

## १४. दस्युनाशन सूक्त

**ऋषि–** चातन । **देवता–** शालाग्नि । **छन्द–** अनुष्टुप, भुरिक्, अनुष्टुप, उपरिष्टाद् विराट्, बृहती ।

**निः सालां धृष्णुं धिषणमेकवाद्यां जिघत्स्वम् । सर्वाश्चण्डस्य नप्त्यो नाशयामः सदान्वाः ॥१॥**

निस्कासित गर्ने निःसाला, भयानक धृष्णु, एकाग्र गराउने धिषण, हठपूर्वक एकोहोरो जिद्दी गर्ने

एकबाद्या, बोलाउने सम्बोधन, खाइदिने, चिच्याउने, कठोर क्रोध गर्ने चण्ड आदिका सन्तानलाई हामी नाश गर्दछौं ।

**निर्वो गोष्ठादजामसि निरक्षान्निरुपानसात् । निर्वो मगुन्द्या दुहितरो गृहेभ्यश्चातयामहे ॥२॥**

हे पापबाट उत्पन्न मगुन्दी नामका राक्षसीका पुत्रीहरू हो ! तिमीहरूलाई हामी आफ्ना गाईका गोठबाट बाहिर निकालिन्छौं । तिमीहरूलाई हामी अन्नले भरिएका भण्डार र आफ्ना वाहन आदिबाट बाहिर निकालेर नष्ट गराउँछौं ।

**असौ यो अधराद् गृहस्तत्र सन्तवराय्यः । तत्र सेदिर्न्युच्यतु सर्वाश्च यातुधान्यः ॥३॥**

हामीले त्यसरी निकालिसकेपछि ती आसुरी शक्तिहरू दरिद्रताका विपत्तिले भरिएको अरायि नामका र महामारीका कष्टले भरिएका सेदि नामका तल्लो लोकमा रहेका घरहरू खोजून् र तिनैमा गएर बसून् ।

**भूतपतिर्निरजत्विन्द्रश्चेतः सदान्वाः । गृहस्य बुध्न आसीनास्ता इन्द्रो वज्रेणाधि तिष्ठतु ॥४॥**

प्राणीहरूको पालनकर्ता सोमपान गर्ने इन्द्रदेवताले सधैं रिसाउने गरेका यस्ता पिशाचनीहरूलाई हाम्रा घरबाट बाहिर निकालिदिऊन् र आफ्ना वज्रले यिनीहरूलाई दमन गरून् ।

**यदि स्थ क्षेत्रियाणां यदि वा पुरुषेषिताः । यदि स्थ दस्युभयो जाता नश्यतेतः सदान्वाः ॥५॥**

हे राक्षसनीहरू हो ! तिमीहरू कुष्ठ, सङ्ग्रहणी आदि पुर्ख्यौली रोगका कारण हौ । तिमीहरूलाई शत्रुले प्रेरित गरेको हो र क्षति गर्नका लागि भनेर तिमीहरू उत्पन्न भएका हौ । त्यसैले तिमीहरू हाम्रा घरबाट बाहिर निस्क र विनाश भइहाल ।

**परि धामान्यासामाशुर्गाष्ठामिवासरन् । अजैषं सर्वानाजीन् वो नश्यतेतः सदान्वाः ॥६॥**

द्रुतगामी अश्वहरू आक्रमण गर्नका लागि आफ्ना लक्ष्यमा पहिले पुग्दछन् र त्यसपछि मात्रै उभिन्छन् । उसै गरी यी राक्षसनीहरूका घरमा हामीले आक्रमण गरिसकेका छौं । हे पिशाचनीहरू हो ! युद्धमा तिमीहरू पराजित भइसकेका छौ र हामीले तिमीहरूका निवासस्थानमा नियन्त्रण गरिसकेका छौं । त्यसैले तिमीहरू निराश्रित भएका छौ, अब विनाश होओ ।

## १५. अभयप्राप्ति सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– प्राण, अपान, आयु । **छन्द**– त्रिपाद्, गायत्री ।

**यथा द्यौश्च पृथिवी च न बिभीतो न रिष्यतः । एवा मे प्राण मा बिभेः ॥१॥**

द्युलोक र पृथिवी नष्ट पनि हुँदैनन् र डराउँदैनन् । उसै गरी हे प्राण ! तिमी पनि नष्ट हुने विषयमा नडराऊ ।

**यथाहश्च रात्री च न बिभीतो न रिष्यतः । एवा मे प्राण मा बिभेः ॥२॥**

रात र दिन नष्ट पनि हुँदैनन् र डराउँदैनन् । उसै गरी हे प्राण ! तिमी पनि नष्ट हुने विषयमा नडराऊ ।

**यथा सूर्यश्च चन्द्रश्च न बिभीतो न रिष्यतः । एवा मे प्राण मा बिभेः ॥३॥**

चन्द्र र सूर्य नष्ट पनि हुँदैनन् र डराउँदैनन् । उसै गरी हे प्राण ! तिमी पनि नष्ट हुने विषयमा नडराऊ ।

**यथा ब्रह्म च क्षत्रं च न बिभीतो न रिष्यतः । एवा मे प्राण मा बिभेः ॥४॥**

ब्राह्मण र क्षत्रिय नष्ट पनि हुँदैनन् र डराउँदैनन् । उसै गरी हे प्राण ! तिमी पनि नष्ट हुने विषयमा नडराऊ ।

**यथा सत्यं चानृतं च न बिभीतो न रिष्यतः । एवा मे प्राण मा बिभेः ॥५॥**

सत्य र असत्य नष्ट पनि हुँदैनन् र डराउँदैनन् । उसै गरी हे प्राण ! तिमी पनि नष्ट हुने विषयमा नडराऊ ।

**यथा भूतं च भव्यं च न बिभीतो न रिष्यतः । एवा मे प्राण मा बिभेः ॥६॥**

भूत र भविष्य नष्ट पनि हुँदैनन् र डराउँदैनन् । उसै गरी हे प्राण ! तिमी पनि नष्ट हुने विषयमा

नडराऊ ।

## १६. सुरक्षा सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** प्राण, अपान, आयु । **छन्द–** एकपदासुरी त्रिष्टुप्, एकपदासुरी उष्णिक्, द्विपदासुरी, गायत्री ।

**प्राणापानौ मृत्योर्मा पातं स्वाहा ॥१॥**

हे प्राण र अपान ! तिमीहरू दुवैले मृत्युबाट हामीलाई सुरक्षा गर र हामीले प्रदान गरेको आहुति स्वीकार गर ।

**द्यावापृथिवी उपश्रुत्या मा पातं स्वाहा ॥२॥**

हे द्यावापृथिवी ! तिमीहरू दुवैले मृत्युबाट हामीलाई सुरक्षा गर र हामीले प्रदान गरेको आहुति स्वीकार गर ।

**सूर्य चक्षुषा मा पाहि स्वाहा ॥३॥**

हे सूर्यदेवता ! तिमी देख्ने शक्ति दिएर हामीलाई मृत्युबाट सुरक्षा गर र हामीले प्रदान गरेको आहुति स्वीकार गर ।

**अग्ने वैश्वानर विश्वैर्मा देवैः पाहि स्वाहा ॥४॥**

हे वैश्वानर अग्निदेवता ! तिमी समस्त देवताहरूका साथमा हामीलाई मृत्युबाट सुरक्षा गर र हामीले प्रदान गरेको आहुति स्वीकार गर ।

**विश्वम्भर विश्वेन मा भरसा पाहि स्वाहा ॥५॥**

हे विश्वको भरणपोषण गर्ने विश्वम्भरदेवता ! तिमी आफ्ना भरणपोषणका शक्तिले हामीलाई मृत्युबाट सुरक्षा गर र हामीले प्रदान गरेको आहुति स्वीकार गर ।

## १७. बलप्राप्ति सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** प्राण, अपान, आयु । **छन्द–** एकपदासुरी त्रिष्टुप्, आसुरी उष्णिक् ।

**ओजोऽस्योजो मे दाः स्वाहा ॥१॥**

हे अग्निदेवता ! तिमी ओजस्वी छौ, हामीलाई ओज प्रदान गर । तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

**सहोऽसि सहो मे दाः स्वाहा ॥२॥**

हे अग्निदेवता ! तिमी साहसी र शौर्यसम्पन्न छौ, हामीलाई शौर्य प्रदान गर । तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

**बलमसि बलं मे दाः स्वाहा ॥३॥**

हे अग्निदेवता ! तिमी बलले सम्पन्न छौ, हामीलाई बल प्रदान गर । तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

**आयुरस्यायुर्मे दाः स्वाहा ॥४॥**

हे अग्निदेवता ! तिमी जीवनदायी शक्तिले सम्पन्न छौ, हामीलाई जीवनशक्ति प्रदान गर तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

**श्रोत्रमसि श्रोत्रं मे दाः स्वाहा ॥५॥**

हे अग्निदेवता ! तिमी श्रवणशक्तिले सम्पन्न छौ, हामीलाई सुन्ने शक्ति प्रदान गर । तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

**चक्षुरसि चक्षुर्मे दाः स्वाहा ॥६॥**

हे अग्निदेवता ! तिमी आँखाका शक्तिले सम्पन्न छौ, हामीलाई आँखाको शक्ति प्रदान गर । तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

परिपाणमसि परिपाणं मे दाः स्वाहा ॥७॥

हे अग्निदेवता ! तिमी परिपालन गर्ने शक्तिले सम्पन्न छौ, हामीलाई पालन गर्ने शक्ति प्रदान गर । तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

## १८. शत्रुनाशन सूक्त

**ऋषि–** चातन । **देवता–** अग्नि । **छन्द–** द्विपदा साम्नी बृहती ।

**भ्रातृव्यक्षयणमसि भ्रातृव्यचातनं मे दाः स्वाहा ॥१॥**

हे अग्निदेवता ! तिमी शत्रुविनाश गर्ने शक्तिले सम्पन्न छौ, हामीलाई शत्रु नाश गर्ने शक्ति प्रदान गर । तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

**सपत्नक्षयणमसि सपत्नचातनं मे दाः स्वाहा ॥२॥**

हे अग्निदेवता ! तिमी प्रत्यक्ष प्रतिद्वन्द्वी विनाश गर्ने शक्तिले सम्पन्न छौ, हामीलाई विपक्षी पराजित गर्ने शक्ति प्रदान गर । तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

**अरायक्षयणमस्यरायचातनं मे दाः स्वाहा ॥३॥**

हे अग्निदेवता ! तिमी निर्धनता नाश गर्ने शक्तिले सम्पन्न छौ, हामीलाई दरिद्रता विनाश गर्ने शक्ति प्रदान गर । तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

**पिशाचक्षयणमसि पिशाचचातनं मे दाः स्वाहा ॥४॥**

हे अग्निदेवता ! तिमी पिशाचहरूलाई नाश गर्ने शक्तिले सम्पन्न छौ, हामीलाई पिशाच विनाश गर्ने शक्ति प्रदान गर । तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

**सदान्वाक्षयणमसि सदान्वाचातनं मे दाः स्वाहा ॥५॥**

हे अग्निदेवता ! तिमी आसुरी वृत्ति नाश गर्ने शक्तिले सम्पन्न छौ, हामीलाई असुर नाश गर्ने शक्ति प्रदान गर । तिमीलाई हामी आहुति प्रदान गर्दछौँ ।

## १९. शत्रुनाशन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** अग्नि । **छन्द–** एकावसाना निचृत् विषमा त्रिपदा गायत्री, एकावसाना भुरिक् विषमा त्रिपदा गायत्री ।

**अग्ने यत् ते तपस्तेन तं प्रति तप योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥१॥**

हे अग्निदेवता ! तिमीभित्र जुन ताप रहेको छ, त्यसका शक्तिले शत्रुलाई तप्त गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**अग्ने यत् ते हरस्तेन तं प्रति हर योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥२॥**

हे अग्निदेवता ! तिमीभित्र जुन हरण गर्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुको शक्ति हरण गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**अग्ने यत् ते ऽर्चिस्तेन तं प्रत्यर्च योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥३॥**

हे अग्निदेवता ! तिमीभित्र जुन दीप्ति रहेको छ, त्यसका शक्तिले शत्रुलाई जलाइदेऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**अग्ने यत् ते शोचिस्तेन तं प्रति शोच योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥४॥**

हे अग्निदेवता ! तिमीभित्र जुन शोकाकुल गर्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुलाई शोकाकुल गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**अग्ने यत् ते तेजस्तेन तमतेजसं कृणु योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥५॥**

हे अग्निदेवता ! तिमीभित्र जुन अर्कालाई निस्तेज पार्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुलाई तेजहीन गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

## २०. शत्रुनाशन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** वायु । **छन्द–** एकावसाना निचृत् विषमा त्रिपदा गायत्री, भुरिक् विषमा त्रिपदा गायत्री ।

**वायो यत् ते तपस्तेन तं प्रति तप योऽस्मान् यं वयं द्विष्मः ॥१॥**

हे वायुदेवता ! तिमीभित्र जुन ताप रहेको छ, त्यसका शक्तिले शत्रुलाई तप्त गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**वायो यत् ते हरस्तेन तं प्रति हर योऽस्मान् यं वयं द्विष्मः ॥२॥**

हे वायुदेवता ! तिमीभित्र जुन हरण गर्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुको शक्ति हरण गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**वायो यत् तेऽर्चिस्तेन तं प्रत्यर्च योऽस्मान् यं वयं द्विष्मः ॥३॥**

हे वायुदेवता ! तिमीभित्र जुन दीप्ति रहेको छ, त्यसका शक्तिले शत्रुलाई जलाइदेऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**वायो यत् ते शोचिस्तेन तं प्रति शोच योऽस्मान् यं वयं द्विष्मः ॥४॥**

हे वायुदेवता ! तिमीभित्र जुन शोकाकुल गर्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुलाई शोकाकुल गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**वायो यत् ते तेजस्तेन तमतेजसं कृणु योऽस्मान् यं वयं द्विष्मः ॥५॥**

हे वायुदेवता ! तिमीभित्र जुन अर्कालाई निस्तेज पार्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुलाई हाम्रा तेजहीन गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

## २१. शत्रुनाशन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** सूर्य । **छन्द–** एकावसाना निचृत् विषमा त्रिपदा गायत्री, भुरिक् विषमा त्रिपदा गायत्री ।

**सूर्य यत् ते तपस्तेन तं प्रति तप योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥१॥**

हे सूर्यदेवता ! तिमीभित्र जुन ताप रहेको छ, त्यसका शक्तिले शत्रुलाई तप्त गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**सूर्य यत् ते हरस्तेन तं प्रति हर योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥२॥**

हे सूर्यदेवता ! तिमीभित्र जुन हरण गर्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुको शक्ति हरण गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**सूर्य यत् तेऽर्चिस्तेन तं प्रत्यर्च योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥३॥**

हे सूर्यदेवता ! तिमीभित्र जुन दीप्ति रहेको छ, त्यसका शक्तिले शत्रुलाई जलाइदेऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**सूर्य यत् ते शोचिस्तेन तं प्रति शोच योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥४॥**

हे सूर्यदेवता ! तिमीभित्र जुन शोकाकुल गर्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुलाई शोकाकुल गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**सूर्य यत् ते तेजस्तेन तमतेजसं कृणु योऽस्मान् द्वेष्टि यं वय द्विष्मः ॥५॥**

हे सूर्यदेवता ! तिमीभित्र जुन अर्कालाई निस्तेज पार्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुलाई हाम्रा तेजहीन गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी

सन्तप्त गराऊ ।

## २२. शत्रुनाशन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** चन्द्र । **छन्द–** एकावसाना निचृत् विषमा त्रिपदा गायत्री, भुरिक् विषमा त्रिपदा गायत्री ।

**चन्द्र यत् ते तपस्तेन तं प्रति तप योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥१॥**

हे चन्द्रदेवता ! तिमीभित्र जुन ताप रहेको छ, त्यसका शक्तिले शत्रुलाई तप्त गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**चन्द्र यत् ते हरस्तेन तं प्रति हर योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥२॥**

हे चन्द्रदेवता ! तिमीभित्र जुन हरण गर्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुको शक्ति हरण गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**चन्द्र यत् तेऽर्चिस्तेन तं प्रत्यर्च योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥३॥**

हे चन्द्रदेवता ! तिमीभित्र जुन दीप्ति रहेको छ, त्यसका शक्तिले शत्रुलाई जलाइदेऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**चन्द्र यत् ते शोचिस्तेन तं प्रति शोच योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥४॥**

हे चन्द्रदेवता ! तिमीभित्र जुन शोकाकुल गर्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुलाई शोकाकुल गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**चन्द्र यत् ते तेजस्तेन तमतेजसं कृणु योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥५॥**

हे चन्द्रदेवता ! तिमीभित्र जुन अर्कालाई निस्तेज पार्ने शक्ति रहेको छ, त्यस शक्तिले हाम्रा शत्रुलाई तिमी तेजहीन गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

## २३. शत्रुनाशन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** आपः । **छन्द–** एकावसाना समविषमा त्रिपदा गायत्री, स्वराट् विषमा त्रिपदा गायत्री ।

**आपो यद् वस्तपस्तेन तं प्रति तपत योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥१॥**

हे जलदेवता ! तिमीभित्र जुन ताप रहेको छ, त्यसका शक्तिले शत्रुलाई तप्त गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**आपो यद् वो हरस्तेन तं प्रति हरत योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥२॥**

हे जलदेवता ! तिमीभित्र जुन हरण गर्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुको शक्ति हरण गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**आपो यद् वोऽर्चिस्तेन तं प्रत्यर्चत योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥३॥**

हे जलदेवता ! तिमीभित्र जुन दीप्ति रहेको छ, त्यसका शक्तिले शत्रुलाई जलाइदेऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**आपो यद् वः शोचिस्तेन तं प्रति शोचत योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥४॥**

हे जलदेवता ! तिमीभित्र जुन शोकाकुल गर्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुलाई शोकाकुल गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

**आपो यद् वस्तेजस्तेन तमतेजसं कृणुत योऽस्मान् द्वेष्टि यं वयं द्विष्मः ॥५॥**

हे जलदेवता ! तिमीभित्र जुन अर्कालाई निस्तेज पार्ने शक्ति रहेको छ, त्यस शक्तिले शत्रुलाई

हान्रा तेजर्हान गराऊ । जुन शत्रुले हाम्रो रिस गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ, ती शत्रुलाई तिमी सन्तप्त गराऊ ।

## २४. शत्रुनाशन सूक्त

**ऋषि**— ब्रह्मा । **देवता**— आयु । **छन्द**— वैराजपरा पञ्चपदा पथ्यापङ्क्ति, भुरिक् पुर उष्णिक्, निचृत् पुरोदेवत्या पङ्क्ति, चतुष्पदा बृहती, चतुष्पदा भुरिक् बृहती ।

**शेरभक शेरभ पुनर्वो यन्तु यातवः पुनर्हेतिः किमीदिनः । यस्य स्थ तमत्त यो वः प्राहैत् तमत्त स्वा मांसान्यत्त ॥१॥**

हे हत्यारा र लुटाहाहरू हो ! तिमीहरूले हामीतिर पठाएका प्रहार र यातनाहरू तिमीहरूतिरै फिर्ता जाऊन् । तिमीहरू आफ्नै साथीहरूलाई खाओ, जसले तिमीहरूलाई यहाँ पठाएको हो, उसैलाई खाओ र तिमीहरू आफ्नै मासु आफैँले खाओ ।

**शेवृधक शेवृध पुनर्वो यन्तु यातवः पुनर्हेतिः किमीदिनः । यस्य स्थ तमत्त यो वः प्राहैत् तमत्त स्वा मांसान्यत्त ॥२॥**

हे आफ्ना आश्रितजनलाई सुख दिनका लागि लुट्ने र तिनका अनुचर शेवृधकहरू हो ! तिमीहरूले हामीतिर पठाएका प्रहार र यातनाहरू तिमीहरूतिरै फिर्ता जाऊन् । तिमीहरू आफ्नै साथीहरूलाई खाओ, जसले तिमीहरूलाई यहाँ पठाएको हो, उसैलाई खाओ र तिमीहरू आफ्नै मासु आफैँले खाओ ।

**म्रोकानुम्रोक पुनर्वो यन्तु यातवः पुनर्हेतिः किमीदिनः । यस्य स्थ तमत्त यो वः प्राहैत् तमत्त स्वा मांसान्यत्त ॥३॥**

हे चोर र चोरका मतियार लुटारहरू हो ! तिमीहरूले हामीतिर पठाएका प्रहार र यातनाहरू तिमीहरूतिरै फिर्ता जाऊन् । तिमीहरू आफ्नै साथीहरूलाई खाओ, जसले तिमीहरूलाई यहाँ पठाएको हो, उसैलाई खाओ र तिमीहरू आफ्नै मासु आफैँले खाओ ।

**सर्पानुसर्प पुनर्वो यन्तु यातवः पुनर्हेतिः किमीदिनः । यस्य स्थ तमत्त यो वः प्राहैत् तमत्त स्वा मांसान्यत्त ॥४॥**

हे सर्प तथा सर्पका पछि लागेका अनुचरहरू हो ! तिमीहरूले हामीतिर पठाएका प्रहार र यातनाहरू तिमीहरूतिरै फिर्ता जाऊन् । तिमीहरू आफ्नै साथीहरूलाई खाओ, जसले तिमीहरूलाई यहाँ पठाएको हो, उसैलाई खाओ र तिमीहरू आफ्नै मासु आफैँले खाओ ।

**जूर्णि पुनर्वो यन्तु यातवः पुनर्हेतिः किमीदिनीः । यस्य स्थ तमत्त यो वः प्राहैत् तमत्त स्वा मांसान्यत्त ॥५॥**

हे शरीरलाई जीर्ण बनाउने जूणी नामकी राक्षसी र त्यसका अनुचर लुटानीहरू हो ! तिमीहरूले हामीतिर पठाएका प्रहार र यातनाहरू तिमीहरूतिरै फिर्ता जाऊन् । तिमीहरू आफ्नै साथीहरूलाई खाओ, जसले तिमीहरूलाई यहाँ पठाएको हो, उसैलाई खाओ र तिमीहरू आफ्नै मासु आफैँले खाओ ।

**उपब्दे पुनर्वो यन्तु यातवः पुनर्हेतिः किमीदिनीः । यस्य स्थ तमत्त यो वः प्राहैत् तमत्त स्वा मांसान्यत्त ॥६॥**

हे चिच्याउने, कराउने र लुट्नमा लागेका उपाब्द नामका राक्षसनीहरू हो ! तिमीहरूले हामीतिर पठाएका प्रहार र यातनाहरू तिमीहरूतिरै फिर्ता जाऊन् । तिमीहरू आफ्नै साथीहरूलाई खाओ, जसले तिमीहरूलाई यहाँ पठाएको हो, उसैलाई खाओ र तिमीहरू आफ्नै मासु आफैँले खाओ ।

**अर्जुनि पुनर्वो यन्तु यातवः पुनर्हेतिः किमीदिनीः । यस्य स्थ तमत्त यो वः प्राहैत् तमत्त स्वा मांसान्यत्त ॥७॥**

हे अर्जुनी नामकी राक्षसनीहरू हो ! तिमीहरूले हामीतिर पठाएका प्रहार र यातनाहरू तिमीहरूतिरै फिर्ता जाऊन् । तिमीहरू आफ्नै साथीहरूलाई खाओ, जसले तिमीहरूलाई यहाँ पठाएको हो,

उसैलाई खाओ र तिमीहरू आफ्नै मासु आफैँले खाओ ।

**भरूजि पुनर्वो यन्तु यातवः पुनर्हेतिः किमीदिनीः । यस्य स्थ तमत्त यो वः प्राहैत् तमत्त स्वा मांसान्यत्त ॥८॥**

हे नीच प्रकृति भएकी भरूजी नामकी राक्षसनी र लुटार्नीहरू हो ! तिमीहरूले हामीतिर पठाएका प्रहार र यातनाहरू तिमीहरूतिरै फिर्ता जाऊन् । तिमीहरू आफ्नै साथीहरूलाई खाओ, जसले तिमीहरूलाई यहाँ पठाएको हो, उसैलाई खाओ र तिमीहरू आफ्नै मासु आफैँले खाओ ।

## २५. पृश्निपर्णी सूक्त

**ऋषि–** चातन । **देवता–** वनस्पति पृश्निपर्णी । **छन्द–** अनुष्टुप, भुरिक् अनुष्टुप् ।

**शं नो देवी पृश्निपर्ण्यशं निर्ऋत्या अकः । उग्रा हि कण्वजम्भनी तामभक्षि सहस्वतीम् ॥१॥**

झर्झराउँदो यस पृश्निपर्णी नामका औषधिले हाम्रो रोग हटाएर हामीलाई सुख प्रदान गरोस् । यसले विकराल रोगहरूलाई समूल नष्ट गराउँछ । त्यसैले हामी यस शक्तिशाली औषधिको सेवन गर्दछौं ।

**सहमानेयं प्रथमा पृश्निपर्ण्यजायत । तयाहं दुर्णाम्नां शिरो वृश्चामि शकुनेरिव ॥२॥**

रोगहरूमाथि विजय प्राप्त गर्ने औषधिहरूमा यो पृश्निपर्णी सबैभन्दा पहिले उत्पन्न भएको हो । यस पृश्निपर्णी नामका औषधिका सहायताले हामी नराम्रा नाम भएका रोगलाई दुष्ट राक्षसको टाउको कुच्याएझैं कुच्याउँछौं ।

**अरायमसृक्पावानं यश्च स्फातिं जिहीर्षति । गर्भादं कण्वं नाशय पृश्निपर्णि सहस्व च ॥३॥**

हे पृश्निपर्णी ! तिमी शरीरलाई वृद्धि हुनमा बाधा गर्ने रोगहरूलाई नष्ट गर । हे पृश्निपर्णी तिमी रगत खाने र गर्भ नाश गराउने रोगरूपी शत्रुलाई विनाश गर ।

**गिरिमेनाँ आ वेशय कण्वाञ्जीवितयोपनान् । तांस्त्वं देवि पृश्निपर्ण्यग्निरिवानुदहन्निहि ॥४॥**

हे पृश्निपर्णी देवी ! जीवनशक्तिलाई विनाश गर्ने दोष र रोगहरूलाई तिमी पर्वतमा लिएर जाऊ र त्यहाँ लाग्ने डढेलोमा तिनलाई भस्मीभूत पारिदेऊ ।

**पराच एनान् प्र णुद कण्वाञ्जीवितयोपनान् । तमांसि यत्र गच्छन्ति तत् क्रव्यादो अजीगमम् ॥५॥**

हे पृश्निपर्णी ! जीवनशक्तिलाई नाश गराउने रोगहरूलाई तिमी उँधो मुन्टो पारेर घँच्याटिदेऊ । सूर्योदय हुँदा पनि जुन ठाउँमा अन्धकार नै रहन्छ, त्यस किसिमका ठाउँमा बसेर शरीरको धातु खाने दुष्ट रोगहरूलाई तिम्रा सहयोगले हामी भगाउँछौं ।

## २६. पशुसंवर्धन सूक्त

**ऋषि–** सविता । **देवता–** पशु समूह । **छन्द–** त्रिष्टुप, उपरिष्टात् विराट् बृहती, भुरिक् अनुष्टुप् , अनुष्टुप ।

**एह यन्तु पशवो ये परेयुर्वायुर्येषां सहचारं जुजोष । तवष्ट्य येषां रूपधेयानि वेदास्मिन् तान् गोष्ठे सविता नि यच्छतु ॥१॥**

यस ठाउँबाट बहकिएर हराउँदै अर्को ठाउँमा पुगेका पशुहरू गोठको थलो सम्झेर फेरि यहीँ आऊन् । ती पशुहरूको सुरक्षा गर्न वायुदेवताले सहयोग गर्दछन् र तिनको नाम तथा रूपका विषयमा त्वष्टादेवताले जानेका छन् । हे सवितादेवता ! त्यस्ता पशुहरूलाई तिमी गोठमा स्थिर गराऊ ।

**इमं गोष्ठं पशवः सं स्रवन्तु बृहस्पतिरा नयतु प्रजानन् । सिनीवाली नयत्वाग्रमेषामाजग्मुषो अनुमते नि यच्छ ॥२॥**

गाई आदि पशुहरू आआफ्ना गोठमा आऊन् । बृहस्पतिदेवताले तिनलाई ल्याउने तरिका जानेका

हुनाले उनैले तिनलाई ल्याइदिऊन् । सिनीवालीले यी पशुहरूलाई उनका थान्कामा ल्याइदिऊन् । हे अनुमति ! अब आउने पशुहरूलाई तिमी नियममा राख ।

**सं सं स्रवन्तु पशवः समश्वाः समु पूरुषाः । सं धान्यस्य या स्फातिः संस्राव्येण हविषा जुहोमि ॥३॥**

गाई आदि पशु, अश्व र मानिसहरू आपसमा मिलेर रहने बस्ने गरून् । हामीकहाँ धान आदि खाद्यान्न राम्ररी सप्रियोस् । त्यस्तै खालका कुराहरू प्राप्त गर्नका लागि हामी घिउको आहुति प्रदान गर्दछौँ ।

**सं सिञ्चामि गवां क्षीरं समाज्येन बलं रसम् । संसिक्ता अस्माकं वीरा ध्रुवा गावो मयि गोपतौ ॥४॥**

हामी गाईका दुधका लागि सिँचाइ गर्दछौँ र शक्तिवर्द्धक रसलाई घिउमा मिसाउँछौँ । हाम्रा वीर पुत्रहरू घिउले सिञ्चित होऊन् र हामीजस्ता गाईका धनीसँग धेरै गाई होऊन् ।

**आ हरामि गवां क्षीरमाहार्षं धान्यं१ रसम् । आहृता अस्माकं वीरा आ पत्नीरिदमस्तकम् ॥५॥**

हामी आआफ्ना घरमा गाईको दुध, धान्य आदि खाद्यान्न र रस ल्याउँछौँ । हामी आफ्ना वीर पुत्र र पत्नीहरूलाई पनि घरमा ल्याउँछौँ ।

## २७. शत्रुपराजय सूक्त

**ऋषि—** कपिञ्जल । **देवता—** ओषधि, रुद्र, इन्द्रआयु । **छन्द—** अनुष्टुप् ।

**नेच्छत्रुः प्राशं जयाति सहमानाभिभूरसि । प्राशं प्रतिप्राशो जह्यरसान् कृण्वोषधे ॥१॥**

हे औषधि ! तिमीलाई सेवन गर्ने हामी मानिसहरूलाई प्रतिवादी शत्रुले कहिल्यै जित्न नसकून्, किनभने तिमी शत्रुसित जुझेर उनलाई वशीभूत गर्ने खालका छौ । हामीले ग्रहण गर्ने र नगर्ने विषयमा सोधखोज गरेमा ग्रहण गर्नुपर्ने पक्षलाई विजयी र नगर्नुपर्ने पक्षलाई परास्त गर । हे औषधि तिमीलाई ग्रहण नगर्नुपर्ने प्रतिवादीहरूको कण्ठ सुकाइदिएर बोल्न नसक्ने गराऊ ।

**सुपर्णस्त्वान्वविन्दत् सूकरस्त्वाखनन्नसा । प्राशं प्रतिप्राशो जह्यरसान् कृण्वोषधे ॥२॥**

हे औषधि ! विष नाश गर्नका लागि तिमीलाई गरूडले फेला पारेका हुन् । सुँगुरका थुतुनाले तिमीलाई खनेर निकालेका हुन् । हामीले ग्रहण गर्ने र नगर्ने विषयमा सोधखोज गरेमा ग्रहण गर्नुपर्ने पक्षलाई विजयी र नगर्नुपर्ने पक्षलाई परास्त गर । हे औषधि तिमीलाई ग्रहण नगर्नुपर्ने प्रतिवादीहरूको कण्ठ सुकाइदिएर बोल्न नसक्ने गराऊ ।

**इन्द्रो ह चक्रे त्वा बाहावसुरेभ्य स्तरीतवे । प्राशं प्रतिप्राशो जह्यरसान् कृण्वोषधे ॥३॥**

हे औषधि ! राक्षसहरूबाट आफ्नो सुरक्षाका लागि इन्द्रदेवताले तिमीलाई आफ्ना बाहुमा धारण गरेका थिए । हामीले ग्रहण गर्ने र नगर्ने विषयमा सोधखोज गरेमा ग्रहण गर्नुपर्ने पक्षलाई विजयी र नगर्नुपर्ने पक्षलाई परास्त गर । हे औषधि तिमीलाई ग्रहण नगर्नुपर्ने प्रतिवादीहरूको कण्ठ सुकाइदिएर बोल्न नसक्ने गराऊ ।

**पाटामिन्द्रो व्याश्नादसुरेभ्य स्तरीतवे । प्राशं प्रतिप्राशो जह्यरसान् कृण्वोषधे ॥४॥**

हे पाटा नामका औषधि ! राक्षसहरूबाट आफ्नो सुरक्षाका लागि इन्द्रदेवताले तिमीलाई सेवन गरेका थिए । हामीले ग्रहण गर्ने र नगर्ने विषयमा सोधखोज गरेमा ग्रहण गर्नुपर्ने पक्षलाई विजयी र नगर्नुपर्ने पक्षलाई परास्त गर । हे औषधि तिमीलाई ग्रहण नगर्नुपर्ने प्रतिवादीहरूको कण्ठ सुकाइदिएर बोल्न नसक्ने गराऊ ।

**तयाहं शत्रून्त्साक्ष इन्द्रः सालावृकाँ इव । प्राशं प्रतिप्राशो जह्यरसान् कृण्वोषधे ॥५॥**

इन्द्रदेवताले जसरी जङ्गली कुकुरहरूलाई निरुत्तर बनाएका थिए, उसै गरी हे औषधि ! तिमीलाई सेवन गरेर हामी प्रतिवादी शत्रुहरूलाई निरुत्तर गराउँछौँ । हामीले ग्रहण गर्ने र नगर्ने विषयमा सोधखोज गरेमा ग्रहण गर्नुपर्ने पक्षलाई विजयी र नगर्नुपर्ने पक्षलाई परास्त गर । हे औषधि

तिमीलाई ग्रहण नगर्नुपर्ने प्रतिवादीहरूको कण्ठ सुकाइदिएर बोल्न नसक्ने गराऊ ।

**रुद्र जलाषभेषज नीलशिखण्ड कर्मकृत् । प्राशं प्रतिप्राशो जह्यरसान् कृण्वोषधे ॥६॥**

हे रुद्र ! तिमी जलचिकित्सा गर्ने हौ र नीलो वर्णको शिखा भएका छौ । तिमी नै सृष्टि, स्थिति, संहार, प्रलय र अनुग्रह यी पाँच किसिमका कृत्यहरूलाई सम्पन्न गर्दछौ । हामीले सेवन गर्ने औषधिलाई प्रतिवादी परास्त गर्नमा तिमी नै समर्थ गराऊ । हे औषधि ! हामीले ग्रहण गर्ने र नगर्ने विषयमा सोधखोज गरेमा ग्रहण गर्नुपर्ने पक्षलाई विजयी र नगर्नुपर्ने पक्षलाई परास्त गर । हे औषधि तिमीलाई ग्रहण नगर्नुपर्ने प्रतिवादीहरूको कण्ठ सुकाइदिएर बोल्न नसक्ने गराऊ ।

**तस्य प्राशं त्वं जहि यो न इन्द्राभिदासति । अधि नो ब्रूहि शक्तिभिः प्राशि मामुत्तरं कृधि ॥७॥**

हे इन्द्रदेवता ! जुन प्रतिवादीहरू आफ्ना जुक्तिले हामीलाई कमजोर बनाउन खोज्दछन्, तिनका प्रश्नहरूलाई तिमी बदर गरिदेऊ र आफ्ना सामर्थ्यले हामीलाई नै सर्वश्रेष्ठ बनाइदेऊ ।

## २८. दीर्घायु प्राप्ति सूक्त

**ऋषि–** शम्भु । **देवता–** जरिमा, आयु, मित्रावरुण, द्यावापृथिवी । **छन्द–** जगती, त्रिष्टुप्, भुरिक त्रिष्टुप् ।

**तुभ्यमेव जरिमन् वर्धतामयं मेममन्ये मृत्यवो हिंसिषुः शतं ये । मातेव पुत्रं प्रमना उपस्थे मित्र एनं मित्रियात् पात्वंहसः ॥१॥**

हे वृद्ध अवस्था ! तिम्रा लागि नै यो बालक हुर्केर बढेर सयौँ किसिमका मृत्युका कारणहरूसँग जुध्दै आएको छ । यसलाई तिमीले हिंसित नगर । हे हर्षित मन भएका मित्रदेवता ! माताले आफ्ना बालकलाई माया गरेर काखमा लिएझैँ तिमी पनि यस बालकलाई मित्रद्रोहका पापबाट मुक्त गराऊ ।

**मित्र एनं वरुणो वा रिशादा जरामृत्युं कृणुतां संविदानौ । तदग्निर्होता वयुनानि विद्वान् विश्वा देवानां जनिमा विवक्ति ॥२॥**

मित्रदेवता र शत्रुलाई विनाश गर्ने वरुणदेवता दुवैले सँगै भएर यस बालकलाई वृद्ध अवस्थासम्म पुगेर मर्ने बनाऊन् । दान गर्ने र समस्त कर्महरूलाई नियमपूर्वक गर्न जान्ने अग्निदेवताले यसका लागि दीर्घायुको प्रार्थना गरून् ।

**त्वमीशिषे पशूनां पार्थिवानां ये जाता उत वा ये जनित्राः । मेमं प्राणो हासीन्मो अपानो मेमं मित्रा वधिषुर्मो अमित्राः ॥३॥**

हे अग्निदेवता ! धर्तीमा उत्पन्न भएका र पछि उत्पन्न हुने प्राणीहरूका तिमी नै स्वामी हौ । यस बालकले तिम्रा कृपाले प्राण र अपान परित्याग नगरोस् । यसलाई मित्र वा शत्रु कसैले पनि नमारुन् ।

**द्यौष्ट्वा पिता पृथिवी माता जरामृत्युं कृणुतां संविदाने । यथा जीवा अदितेरुपस्थे प्राणापानाभ्यां गुपितः शतं हिमाः ॥४॥**

हे बालक ! तिमी धर्तीका काखमा प्राण र अपान संरक्षित गर्दै सयौँ वर्षसम्म जीवित रहिराख । द्युलोकले पिताका रूपमा र पृथ्वीले माताका रूपमा तिमीलाई वृद्ध अवस्था पार गरेपछि मात्र मर्ने बनाऊन् ।

**इममग्न आयुषे वर्चसे नय प्रियं रेतो वरुण मित्रराजन् । मातेवास्मा अदिते शर्म यच्छ विश्वे देवा जरदष्टिर्यथासात् ॥५॥**

हे अग्निदेवता ! तिमी यस बालकलाई सय वर्षको आयु र तेज प्रदान गर । हे मित्रावरुणदेवता हो ! तिमीहरू यस बालकलाई सन्तान उत्पादन गर्नमा समर्थ बनाओ । हे अदितिदेवी ! तिमी यस बालकलाई माताझैँ भएर हर्ष प्रदान गर । हे विश्वेदेवताहरू हो ! तिमीहरू यस बालकलाई सबै खालका गुणले सम्पन्न बनाओ र दीर्घायु प्रदान गर ।

## २९. दीर्घायुष्य सूक्त

**ऋषि–** अथर्वा । **देवता–** वैश्वदेवी, अग्नि, सूर्य, बृहस्पति, आयु, जातवेदस्, प्रजा, त्वष्टा, सविता, धन, शतायु, इन्द्र, सौप्रजा, द्यावापृथिवी, विश्वदेवा,मरुदगण, आपोदेव, अश्विनीकुमार । **छन्द–** त्रिष्टुप्, अनुष्टुप्, पराबृहती निचृत् प्रस्तारपङ्क्ति ।

**पार्थिवस्य रसे देवा भगस्य तन्वो३ बले । आयुष्यमस्मा अग्निः सूर्यो वर्च आ धाद् बृहस्पतिः ॥१॥**

पृथ्वीका शरीरबाट उत्पन्न हुनाले पार्थिव नामकरण भएको रस पान गर्ने व्यक्तिलाई सबै देवताहरूले भगदेवताजस्तै बलशाली बनाऊन् । अग्निदेवताले उसलाई सय वर्षको आयु प्रदान गरून्, आदित्यदेवताले उसलाई तेज प्रदान गरून् र बृहस्पतिदेवताले उसलाई वेदको अध्ययन गर्ने ब्रह्मज्ञानले युक्त कान्ति प्रदान गरून् ।

**आयुरस्मै धेहि जातवेदः प्रजां त्वष्टरधिनिधेह्यस्मै । रायस्पोषं सवितरा सुवास्मै शतं जीवाति शरदस्तवायम् ॥२॥**

हे जातवेद अग्निदेवता ! तिमी यिनलाई सय वर्षको आयु प्रदान गर । हे त्वष्टादेवता ! तिमी यिनलाई पुत्रपौत्रादि प्रदान गर । हे सवितादेवता ! तिमी यिनलाई ऐश्वर्य र पुष्टि प्रदान गर । तिमीहरूको कृपा प्राप्त गरेर यी मानिसहरू सयौँ वर्षसम्म जीवित रहून् ।

**आशीर्ण ऊर्जमुत सौप्रजास्त्वं दक्षं धत्तं द्रविणं सचेतसौ । जयं क्षेत्राणि सहसायमिन्द्र कृण्वानो अनयानधरान्त्सपत्नान् ॥३॥**

हे द्यावापृथिवी ! हामीलाई तिमीहरू आशीर्वाद प्रदान गर । तिमीहरू हामीलाई श्रेष्ठ सन्तान, सामर्थ्य, कुशलता र ऐश्वर्य प्रदान गर । हे इन्द्रदेवता ! तिम्रा कृपाले यी व्यक्तिहरू आफ्ना सामर्थ्यद्वारा शत्रुमाथि विजयी गराऊ र उनीहरूको स्थान आफ्ना नियन्त्रणमा लेऊ ।

**इन्द्रेण दत्तो वरुणेन शिष्टो मरुद्भिरुग्रः प्रहितो न आगन् । एष वां द्यावापृथिवी उपस्थे मा क्षुधन्मा तृषत् ॥४॥**

इन्द्रदेवताबाट आयु पाएर, वरुणदेवताबाट अनुशासित भएर र मरुत्‌हरूबाट प्रेरणा पाएर यी व्यक्तिहरू हाम्रा नजिक आएका छन् । हे द्यावापृथिवी ! तिमीहरूका काखमा रहने यी व्यक्तिहरू भोकतिर्खाले कहिल्यै दुःखी नहोऊन् ।

**ऊर्जमस्मा ऊर्जस्वती धत्तं पयो अस्मै पयस्वती धत्तम् । ऊर्जमस्मै द्यावापृथिवी अधातां विश्वे देवा मरुत ऊर्जमापः ॥५॥**

हे बलशाली द्यावापृथिवी ! तिमीहरू यी व्यक्तिहरूलाई अन्न र जल प्रदान गर । हे द्यावापृथिवी ! तिमीहरूले यी व्यक्तिहरूलाई अन्नबल प्रदान गरेका छौ र विश्वेदेवा, मरुत्‌गण तथा जलदेवताले पनि यिनीहरूलाई शक्ति प्रदान गरेका छन् ।

**शिवाभिष्टे हृदयं तर्पयाम्यनमीवो मोदिषीष्ठाः सुवर्चाः । सवासिनौ पिबतां मन्थमेतमश्विनो रूपं परिधाय मायाम् ॥६॥**

हे तिर्खाएका मानिसहरू हो ! तिमीहरूका सुकेका आँतलाई हामी कल्याणकारी जलले सन्तुष्ट गराउँछौँ । तिमीहरू निरोगी तथा श्रेष्ठ तेजले युक्त भएर खुसी होओ । एकसरो वस्त्र धारण गर्ने यी रोगीहरू अश्विनीकुमारको कुशल माया ग्रहण गरेर यो रस पान गरून् ।

**इन्द्र एतां ससृजे विद्धो अग्र ऊर्जां स्वधामजरां सा त एषा । तया त्वं जीव शरदः सुवर्चा मा त आ सुस्रोद् भिषजस्ते अक्रन् ॥७॥**

यो रस इन्द्रदेवताले तिर्खाबाट छुटकारा पाउनका लागि बनाउन लगाएका थिए । हे रोगीहरू हो ! तिमीहरूलाई जुन रस प्रदान गरिएको छ, त्यसका प्रभावले तिमीहरू शक्ति र तेजले सम्पन्न भएर सय वर्षसम्म जीवित होओ । यो रस तिमीहरूका शरीरबाट नछुटोस् । तिमीहरूका लागि वैद्यले असल खालको औषधि बनाएका छन् ।

## ३०. कामिनीमनोऽभिमुखीकरण सूक्त

**ऋषि**– प्रजापति । **देवता**– मन, अश्विनीकुमार, ओषधि, दम्पती । **छन्द**– अनुष्टुप्, पथ्यापङ्क्ति, भुरिक् अनुष्टुप् ।

**यथेदं भूम्या अधि तृणं वातो मथायति । एवा मथ्नामि ते मनो यथा मां कामिन्यसो यथा मन्नापगा असः ॥१॥**

हे स्त्री ! जुन किसिमले भूमिमा विद्यमान तृणलाई वायुले घुमाउँछ, उसै गरी हामी तिम्रा हृदयलाई मन्थन गर्दछौं ।

**सं चेन्नयाथो अश्विना कामिना सं च वक्षथः । सं वां भगासो अग्मत सं चित्तानि समु व्रता ॥२॥**

हे अश्विनीकुमारहरू हो ! हामी जुन वस्तुको कामना गर्दछौं, त्यो हाम्रा नजिक तिमीहरू पुऱ्याओ । तिमीहरू दुवै भाग्य, चित्त र व्रत हामीसित संयुक्त होऊन् ।

**यत् सुपर्णा विवक्षवो अनमीवा विवक्षवः । तत्र मे गच्छताद्धवं शल्य इव कुल्मलं यथा ॥३॥**

सुन्दर पक्षीको आकर्षक बोली र निरोगी मानिसको प्रभावशाली वचनजस्तै हाम्रो पुकार बाणझैं कल्पना पुगोस् ।

**यदन्तरं तद् बाह्यं यद् बाह्यं तदन्तम् । कनयानां विश्वपाणां मनो गृभायौषधे ॥४॥**

हे औषधि ! भित्री र बाहिरी विचार एकै किसिमको भएकी, दोषरहित कन्याको पवित्र मन तिमी ग्रहण गर ।

**एयमगन् पतिकामा जनिकामोऽहमागमम् । अश्वः कनिक्रदद् यथा भगेनाहं सहागमम् ॥५॥**

यो स्त्री पतिको कामना गर्दै मेरा नजिक आएकी छ र म यस स्त्रीको अभिलाषा गर्दै उसका नजिक पुगेको छु । हिल्लिँदै कुदेको घोडाझैं ऐश्वर्यका साथ म उसका नजिक पुगेको छु ।

## ३१. कृमिजम्भन सूक्त

**ऋषि**– काण्व । **देवता**– मही, चन्द्रमा । **छन्द**– अनुष्टुप्, उपरिष्टात् विराट् बृहती, आर्षी त्रिष्टुप् ।

**इन्द्रस्य या मही दृषत् क्रिमेर्विश्वस्य तर्हणी । तया पिनष्मि सं क्रिमीन् दृषदा खल्वाँ इव ॥१॥**

इन्द्रदेवताको विशाल शिलाले समस्त कीटाणुहरूलाई विनाश गर्दछ । त्यस शिलाले हामी जाँतोमा चना पिसेझैं सबै खालका कीटाणुहरू पिस्दछौं ।

**दृष्टमदृष्टमतृहमथो कुरूरुमतृहम् । अल्गण्डून्त्सर्वाञ्छलुनान् क्रिमीन् वचसा जम्भयामसि ॥२॥**

आँखाले देखिने र नदेखिने सबै खालका कीटाणुलाई हामी विनाश गर्दछौं । जमिनमा रहने, बिछ्यौना आदिमा रहने र द्रुत गतिले जताततै कुद्ने, घुम्ने सबै खालका किराहरूलाई हामी वाचा भन्ने जस्ता वाणीका मन्त्रशक्तिले वा बोजोबाट बनेका औषधिले विनाश गर्दछौं ।

**अल्गण्डून् हन्मि महता वधेन दूना अदूना अरसा अभूवन् । शिष्टानशिष्टान् नि तिरामि वाचा यथा क्रिमीणां नकिरुच्छिषातै ॥३॥**

अनेकौं स्थानमा रहने कीटाणुहरूलाई हामी बृहत् साधनरूपी मन्त्रले विनाश गर्दछौं । हिँड्ने खालका, नहिँड्ने खालका सबै कीटाणुहरू सुकेर विनाश होऊन् । जिउँदै रहेका वा जिउँदो नरहेका सबै कीटाणुहरूलाई हामी वाचा भन्ने जस्ता वाणीका मन्त्रशक्तिले वा बोजोबाट बनेका औषधिले विनाश गर्दछौं ।

**अन्वान्त्र्यं शीर्षण्य१मथो पार्ष्टेयं क्रिमीन् । अवस्कवंव्यध्वरं क्रिमीन् वचसा जम्भयामसि ॥४॥**

आन्द्रामा, शिरमा, मांसपेशीमा रहने गरेका कीटाणुहरूलाई हामी विनाश गर्दछौं । घस्रिने र विभिन्न

किसिमको बाटो बनाएर हिँड्ने कीटाणुहरूलाई हामी वाचा भन्ने जस्ता वाणीका मन्त्रशक्तिले वा बोजोबाट बनेका औषधिले विनाश गर्दछौं ।

**ये क्रिमयः पर्वतेषु वनेष्वोषधीषु पशुष्वप्स्व१न्तः । ये अस्माकं तन्वमाविविशुः सर्वं तद्धन्मि जनिम क्रिमीणाम् ॥५॥**

वनमा, पहाडमा, औषधिहरूमा र पशुमा रहने गरेका कीटाणुहरू र हाम्रा शरीरमा प्रवेश गर्ने सबै खालका कीटाणुको उत्पत्तिलाई नै हामी विनाश गर्दछौं ।

## ३२. कृमिनाशन सूक्त

**ऋषि**— काण्व । **देवता**— आदित्यगण । **छन्द**— अनुष्टुप्, त्रिपात् भुरिक् गायत्री, चतुष्पाद् निचृत् उष्णिक् ।

**उद्यन्नादित्यः क्रिमीन् हन्तु निम्रोचन् हन्तु रश्मिभिः । ये अन्तः क्रिमयो गवि ॥१॥**

धर्तीमा जेजति कीटाणुहरू हुन्छन्, ती सबैलाई उदाउँदै गरेका र अस्ताउँदै गरेका सूर्यदेवताले विनाश गरिदिऊन् ।

**विश्वरूपं चतुरक्षं क्रिमिं सारङ्गमर्जुनम् । शृणाम्यस्य पृष्टीरपि वृश्चामि यच्छिरः ॥२॥**

विभिन्न किसिमका रूप भएका, चार अक्ष भएका, घम्निने र सेतो रङ्ग भएका कीटाणुहरूका हड्डी र शिर हामी भाँच्दछौं ।

**अत्रिवद् वः क्रिमयो हन्मि कण्ववज्जमदग्निवत् । अगस्त्यस्य ब्रह्मणा सं पिनष्म्यहं क्रिमीन् ॥३॥**

हे कीटाणुहरू हो ! हामी अत्रि, कण्व र जमदग्नि आदि ऋषिहरूले भैं मन्त्रका शक्तिले तिमीहरूलाई मार्दछौं अनि अगस्त्य ऋषिका मन्त्रशक्तिले तिमीहरूलाई पिस्दछौं ।

**हतो राजा क्रिमीणामुतैषां स्थपतिर्हतः । हतो हतमाता क्रिमिर्हतभ्राता हतस्वसा ॥४॥**

हामीले औषधि प्रयोग गर्दाखेरि कीटाणुहरूको राजा तर त्यसका मन्त्रीहरू मरे । ऊ स्वयं पनि उसका आमाबाबु र भाइबहिनीहरूका साथमा मारियो ।

**हतासो अस्य वेशसो हतासः परिवेशसः । अथो ये क्षुल्लका इव सर्वे ते क्रिमयो हताः ॥५॥**

यी कीटाणुरुको बस्ने स्थान र नजिकको घर विनाश भएको छ र बीजका रूपमा रहेको मुस्किलसित मात्रै देखिने खालको दुर्लक्षित सानासाना कीटाणुहरू पनि नाश भइसकेका छन् ।

**प्र ते शृणामि शृङ्गे याभ्यां वितुदायसि । भिनद्मि ते कुषुम्भं यस्ते विषधानः ॥६॥**

हे कीटाणुहरू हो ! हामी तिमीहरूका ती सिङ फुकाल्दछौं, जसले तिमीहरू दुःख दिने गर्दछौ । हामी कुषुम्भ नामको तिमीहरूको विष ग्रन्थि पनि फुटाउँछौं, जसमा तिमीहरूको विष रहने गर्दछ ।

## ३३. यक्ष्मविबर्हण सूक्त

**ऋषि**— ब्रह्मा । **देवता**— यक्षविबर्हण चन्द्रमा, आयुष्य । **छन्द**— अनुष्टुप्, ककुम्मती अनुष्टुप्, चतुष्पद् भुरिक् उष्णिक, उपरिष्टात् बृहती, उष्णिक्, गर्भा ।निचृत्अनुष्टुप्, पथ्यापङ्क्ति ।

**अक्षीभ्यां ते नासिकाभ्यां कर्णाभ्यां छुबुकादधि । यक्ष्मं शीर्षण्यं मस्तिष्काज्जिह्वाया वि वृहामि ते ॥१॥**

हे रोगी ! हामी तिम्रा दुवै आँखा, दुवै कान, नाकका दुवै प्वाल, चिउँडो, टाउको, निधार र जिब्रो आदिबाट यक्ष्मा रोगलाई पर हटाउँछौं ।

**ग्रीवाभ्यस्त उष्णिहाभ्यः कीकसाभ्यो अनूक्यात् । यक्ष्मं दोषण्य१ मंसाभ्यां बाहुभ्यां वि वृहामि ते ॥२॥**

हे रोग लागेका मानिस ! तिम्रा गर्धनको नाडी, माथिल्ला नसा, हड्डीका जोर्नी भाग काँध पाखुरा

र अन्तर्भागबाट हामी यक्ष्मा नामको रोगलाई विनाश गर्दछौं ।

**हृदयात् ते परि क्लोम्नो हलीक्ष्णात् पाशर्वाभ्याम् । यक्ष्मं मतस्नाभ्यां प्लीह्नो यक्नस्ते वि वृहामसि ॥३॥**

हे रोग लागेका मानिस ! हामी तिम्रो हृदय, फोक्सो, पित्तथैली, दुवै पिँडौला, मिर्गौला आदि जिउका जुनसुकै भागबाट यक्ष्मा रोगलाई हटाइदिन्छौं ।

**आन्त्रेभ्यस्ते गुदाभ्यो वनिष्ठोरुदरादधि । यक्ष्मं कुक्षिभ्यां प्लाशेर्नाभ्या वि वृहामि ते ॥४॥**

तिम्रो आँत, गुदा, नाडी, हृदयस्थान, मूत्राशय, यकृत र अन्यान्य पाचनतन्त्रका अवयवहरूबाट पनि हामी यक्ष्मा रोग निवारण गर्दछौं ।

**ऊरुभ्यां ते अष्ठीवद्भ्यां पार्ष्णिभ्यां प्रपदाभ्याम् । यक्ष्मं भसद्यं श्रोणिभ्यां भासदं भंससो वि वृहामि ते ॥५॥**

हे रोगी ! तिम्रा दुवै जाँघ, घुँडा, कुर्कुच्चा, हत्केला, नितम्बभाग, कम्मर र गुदद्वारबाट हामी यक्ष्मारोग हटाउँछौं ।

**अस्थिभ्यस्ते मज्जभ्यः स्नावभ्यो धमनिभ्यः । यक्ष्मं पाणिभ्यामङ्गुलिभ्यो नखेभ्यो वि वृहामि ते ॥६॥**

हड्डी, मज्जा, स्नायु, धमनी, पृष्ठभाग, हात, औँला र नङबाट पनि यक्ष्मा रोग हटाउँछौं ।

**अङ्गेअङ्गे लोम्निलोम्नि यस्ते पर्वणिपर्वणि । यक्ष्मं त्वचस्यं ते वयं कश्यपस्य वीवर्हेण विष्वञ्चं वि वृहामसि ॥७॥**

प्रत्येक अङ्ग, प्रत्येक रौं र शरीरका प्रत्येक जोर्नीभागका जुनसुकै ठाउँमा बसेको भए पनि हामी यक्ष्मा रोगलाई त्यहाँबाट निकालेर पर पुऱ्याउँछौं ।

## ३४. पशुगण सूक्त

**ऋषि–** अथर्वा । **देवता–** पशुपति, देवगण, अग्नि, विश्वकर्मा, वायु, प्रजापति, आशीर्वचन । **छन्द–** त्रिष्टुप् ।

**य ईशे पशुपतिः पशूनां चतुष्पदामुत यो द्विपदाम् । निष्क्रीतः स यज्ञियं भागमेतु रायस्पोषा यजमानं सचन्ताम् ॥१॥**

दुई खुट्टे मानिस र चार खुट्टे पशुहरूका स्वामी भनेर जुन पशुपति वा शिवलाई मानिएको छ, उनले सम्पूर्ण रूपले ग्रहण गरिएका यज्ञको भाग प्राप्त गरून् र म यजमानलाई ऐश्वर्य तथा पुष्टि प्रदान गरून् ।

**पमुञ्चन्तो भुवनस्य रेतो गातुं धत्त यजमानाय देवाः । उपाकृतं शशमानं यदस्थात् प्रियं देवानामप्येतु पाथः ॥२॥**

हे देवताहरू हो ! तिमीहरू यस यजमानलाई रेतस् नामको विश्वको उत्पादक रस प्रदान गरेर सन्मार्गमा लाग्न प्रेरित गर । त्यसपछि सन्मार्गमा लैजाऊ र देवताको प्रिय तथा सुसंस्कृत सोमरूपी अन्न हामीलाई प्रदान गर ।

**ये बध्यमानमनु दीध्याना अन्वैक्षन्त मनसा चक्षुषा च । अग्निष्यनग्रे प्र मुमोक्तु देवो विश्वकर्मा प्रजया संरराणः ॥३॥**

आलोकमान जुन जीवले यस बद्ध जीवलाई मन तथा चक्षुले हेर्दछन्, उनलाई विश्वकर्मादेवताले सबैभन्दा पहिले विमुक्त गराउँछन् ।

**ये ग्राम्यः पशवो विश्वरूपा विरूपाः सन्तो बहुधैकरूपाः । वायुष्यनग्रे प्र मुमोक्तु देवः प्रजापतिः प्रजया संरराणः ॥४॥**

गाउँमा रहने गरेका अनेकौं रूपरङ्गका पशुहरू रूपको अनेकता भए तापनि एकै जस्ता देखिन्छन्, उनीहरूलाई पनि प्रजाहरूका साथमा रहने प्रजापालक प्राणदेवताले सबैभन्दा पहिले मुक्त गरून् ।

**प्रजानन्तः प्रति गृह्णन्तु पूर्वे प्राणमङ्गेभ्यः पर्याचरन्तम् । दिवं गच्छ प्रति तिष्ठा शरीरैः स्वर्गं**

**याहि पथिभिर्देवयानैः ॥५॥**

विशेषज्ञ विद्वान्हरूले चारैतिर विचरण गर्ने गरेका प्राणलाई समस्त अङ्गमा एकत्र गरेर स्वस्थ जीवनयापन गर्दछन् । त्यसपछि देवताहरूको गमनमार्गबाट स्वर्गलोकमा जान्छन् र आलोकमान स्थानमा पुग्ने गर्दछन् ।

## ३५. विश्वकर्मा सूक्त

**ऋषि**— अङ्गिरा । **देवता**— विश्वकर्मा । **छन्द**— त्रिष्टुप्, बृहतीगर्भा त्रिष्टुप्, भुरिक् त्रिष्टुप् ।

**ये भक्षयन्तो न वसून्यानृधुर्यानग्नयो अन्वतप्यन्त धिष्ण्याः । या तेषामवया दुरिष्टिः स्विष्टिं नस्तां कृणवद् विश्वकर्मा ॥१॥**

यज्ञ गर्नका लागि धन खर्च नगर्ने, खानका लागि मात्रै धन खर्च गर्ने भएकाले हामी समृद्ध भएनौं । यसरी नै हामी यज्ञ नगर्ने र अनुचित किसिमको यज्ञ गर्ने भएका छौं । त्यसैले श्रेष्ठ यज्ञ गर्ने हाम्रो अभिलाषा विश्वकर्मा देवताले पूर्ण गरून् ।

**यज्ञपतिमृषय एनसाहुर्निर्भक्तं प्रजा अनुतप्यमानम् । मथव्यान्त्स्तोकानप यान् रराध सं नष्टेभिः सृजतु विश्वकर्मा ॥२॥**

प्रजाका विषयमा पछुतो वा विलाप गर्ने यज्ञपतिलाई ऋषिहरूले पापभन्दा फरक हुन् भनेका छन् । जुन विश्वकर्माले सोमरसका थोपाहरूलाई आत्मसात् गरेका छन्, उनै विश्वकर्मादेवताले ती थोपाहरूद्वारा नै हामीलाई यज्ञसित सम्बन्धित गराऊन् ।

**अदान्यान्त्सोमपान् मन्यमानो यज्ञस्य विद्वान्त्समये न धीरः । यदेनश्चकृवान् बद्ध एष तं विश्वकर्मन् प्र मुञ्चा स्वस्तये ॥३॥**

जुन व्यक्ति दान नगरीकन मनपरि तरिकाले सोमपान गर्दछ, उसले न त यज्ञलाई नै जानेको हुन्छ, न धैर्यशाली नै हुन्छ, त्यस्तो व्यक्ति पाप गर्नमा नै आबद्ध रहेको हुन्छ । हे विश्वकर्मा देवता ! पापका बन्धनबाट तिमी मुक्त गराएर त्यसलाई तिमीले कल्याण गर ।

**घोरा ऋषयो नमो अस्त्वेभ्यश्चक्षुर्यदेषां मनसश्च सत्यम् । बृहस्पतये महिष द्युमन्नमो विश्वकर्मन् नमस्ते पाह्य१स्मान् ॥४॥**

ऋषिहरू अत्यन्त तेजस्वी हुने गर्दछन् । किनभने उनीहरूका आँखा र मनमा सत्य प्रकाशित हुन्छ । यस्तो ऋषिहरूलाई हामी प्रणाम गर्दछौं र देवताहरूलाई पालन गर्ने बृहस्पतिदेवतालाई पनि प्रणाम गर्दछौं । हे महान् विश्वकर्मा देवता ! तिमीलाई हामी प्रणाम गर्दछौं र तिमी हामीलाई सुरक्षा गर ।

**यज्ञस्य चक्षुः प्रभृतिर्मुखं च वाचा श्रोत्रेण मनसा जुहोमि । इमं यज्ञं विततं विश्वकर्मणा देवा यन्तु सुमनस्यमानाः ॥५॥**

यज्ञको नेत्रझैं र पोषणकर्ता मुखझैं बनेका जुन यज्ञदेवता छन्, तिनलाई हामी मन, कान र वचनले हव्य समर्पित गर्दछौं । विश्वकर्मा देवताले सम्पन्न गर्न लागेको यस यज्ञका लागि श्रेष्ठ मन भएका देवताहरू आइदिऊन् ।

## ३६. पतिवेदन सूक्त

**ऋषि**— पतिवेदन । **देवता**— अग्नि, सोम, अर्यमा, धाता, अग्नीषोम, इन्द्र, सूर्य, धनपति, हिरण्य, भग, ओषधि । **छन्द**— अनुष्टुप्, भुरिक् अनुष्टुप्, त्रिष्टुप्, निचृत् पुर उष्णिक् ।

**आ नो अग्ने सुमतिं संभलो गमेदिमां कुमारीं सह नो भगेन । जुष्टा वरेषु समनेषु वल्गुरोषं पत्या सौभगमस्त्वस्यै ॥१॥**

हे अग्निदेवता ! हाम्री यस बुद्धिमती कन्यालाई ऐश्वर्यका साथै सर्वगुणसम्पन्न वर प्राप्त होस् । हाम्री कन्या ठूलाहरूका लागि प्रिय र समान विचार भएकाहरूका लागि मनोरम छे । यसलाई

पतिका साथमा रहने सौभाग्य प्राप्त होस् ।

**सोमजुष्टं ब्रह्मजुष्टमर्यम्णा संभृतं भगम् । धातुर्देवस्य सत्येन कृणोमि पतिवेदनम् ॥२॥**

सोमदेवता र गन्धर्वदेवताद्वारा सेवा गरिएको र अर्यमा नामका अग्निद्वारा स्वीकार गरिएको कन्यारूपी धनलाई हामी सत्य वचनले पतिले प्राप्त गर्न योग्य बनाउँछौँ ।

**इयमग्ने नारी पतिं विदेष्ट सोमो हि राजा सुभगां कृणोति । सुवाना पुत्रान् महिषी भवाति गत्वा पतिं सुभगा वि राजतु ॥३॥**

हे अग्निदेवता ! यो कन्या आफ्ना पतिलाई प्राप्त होस् र राजा सोमले यसलाई सौभाग्यवती बनाऊन् । यो कन्या आफ्ना पतिलाई प्राप्त गरेर सुशोभित होस् र वीर पुत्रहरू जन्माउँदै घरकी रानी बनोस् ।

**यथाखरो मघवश्चारुरेष प्रियो मृगाणां सुषदा बभूव । एवा भगस्य जुष्टेयमस्तु नारी सम्प्रिया पत्याविराधयन्ती ॥४॥**

हे इन्द्रदेवता ! जसरी मृगका लागि गुफाको स्थान प्रिय हुने गर्दछ, उसै गरी यो स्त्री आफ्ना पतिकी विरोधी नभई समस्त भोग्य वस्तुको सेवन गर्दै आफ्ना पतिको प्रीति प्राप्त गरोस् ।

**भगस्य नावमा रोह पूर्णामनुपदस्वतीम् । तयोपप्रतारय यो वरः प्रतिकाम्यः ॥५॥**

हे कन्या ! तिमी इच्छा गरेको र अविनाशी ऐश्वर्यले परिपूर्ण भएको नौकामा चढेझैँ त्यसै ऐश्वर्यले आफूले रुचाएका पति भएका ठाउँमा पुग ।

**आ क्रन्दय धनपते वरमामनसं कृणु । सर्वं प्रदक्षिणं कृणु यो वरः प्रतिकाम्यः ॥६॥**

हे धनका अधिपति वरुणदेवता ! तिमी यस वरलाई यो कन्या मेरी पत्नी हुनेछ भन्ने उद्घोष गराऊ । तिमी यस वरलाई यस कन्याका अगाडि बोलाएर उसको मन कन्यातर्फ प्रेरित गर र त्यसै अनुसारको व्यवहार गर्ने बनाऊ ।

**इदं हिरण्यं गुल्गुल्वयमौक्षो अथो भगः । एते पतिभ्यस्त्वामदुः प्रतिकामाय वेत्तवे ॥७॥**

हे कन्या ! यी सुनौला आभूषण, सिँगारपटारको रङ्ग, धुप आदि सुगन्धी वस्तु आदि सबै वस्तुहरू अलङ्कारका स्वामी भगदेवताले तिम्रो पति खोज्ने कामना पूरा गर्नका लागि तिम्रा पतिलाई प्रदान गरेका हुन् ।

**आ ते नयतु सविता नयतु पतिर्यः प्रतिकाम्यः । त्वमस्यै धेह्योषधे ॥८॥**

हे औषधि ! तिमी यस कन्यालाई पति प्रदान गर । हे कन्या ! सवितादेवताले यस वरलाई तिम्रो नजिक ल्याऊन् । तिमीले रुचाएको पति तिमीसित विवाह गरेर तिमीलाई आफ्नो घर लैजाओस् ।

## ॥इति द्वितीयं काण्डम् ॥

दोस्रो काण्ड सकियो ।

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

अथर्ववेद – संहिता

# ॥अथ तृतीयं काण्डम् ॥

## १. शत्रुसेनासम्मोहन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** सेनामोहन, अग्नि, मरुद्‌गण, इन्द्र । **छन्द–** त्रिष्टुप्, विराट्गर्भाभुरिक् त्रिष्टुप्, अनुष्टुप्, विराट् पुरउष्णिक् ।

**अग्निर्नः शत्रून् प्रत्येतु विद्वान् प्रतिदहन्नभिशस्तिमरातिम् । स सेनां मोहयतु परेषां निर्हस्तांश्च कृणवज्जातवेदाः ॥१॥**

अगुवा वीरजस्ता ज्ञानी अग्निदेवताले विनाशका लागि तयार भएर आएका शत्रुका सेनाको चित्तलाई भ्रमित गराएर उनीहरूका हातलाई हतियाररहित गराइदिऊन् । शत्रुको अङ्ग जलाएर नष्ट गराउँदै उनी अघि बढून् ।

**यूयमुग्रा मरुत ईदृशे स्थाभि प्रेत मृणत सहध्वम् । अमीमृणन् वसवो नाथिता इमे अग्निर्ह्येषां दूतः प्रत्येतु विद्वान् ॥२॥**

हे मरुत्‌हरू हो ! तिमीहरू यस्ता सङ्ग्राममा उग्र भएर हाम्रा नजिकै रहिराख । तिमीहरू अघि बढ, शत्रुको प्रहारलाई जित । वसुगण पनि शत्रुविनाशक नै हुन् । यिनीहरूका सन्देशवाहक विद्वान् अग्निदेवता पनि शत्रुहरू भएतर्फ अग्रगामी होऊन् ।

**अमित्रसेनां मघवन्नस्माञ्छत्रूयतीमभि । युवं तानिन्द्र वृत्रहन्नग्निश्च दहतं प्रति ॥३॥**

हे ऐश्वर्यवान् इन्द्रदेवता ! तिमी वृत्रलाई संहार गर्ने हौ । तिमी र अग्निदेवता दुवै मिलेर हामीसित शत्रुता गर्ने शत्रुका सेनालाई परास्त गर्दै तिनलाई भस्म गराओ ।

**प्रसूत इन्द्र प्रवता हरिभ्यां प्र ते वज्रः प्रमृणन्नेतु शत्रून् । जहि प्रतीचो अनूचः पराचो विष्वक् सत्यं कृणुहि चित्तमेषाम् ॥४॥**

हे इन्द्रदेवता ! हरि नामका अश्वले गतिमान भएको तिम्रो रथ वेगपूर्वक ओरालो लागेर शत्रुको सेनातर्फ बढोस् । तिमी आफ्ना प्रचण्ड वज्रले शत्रुमाथि प्रहार गर । तिमी अगाडिबाट आउँदै गरेका र मुख फर्काएर भाग्दै गरेका सबै शत्रुमाथि प्रहार गर । युद्धमा खटिएका शत्रुको चित्तलाई तिमी विचलित गराइदेऊ ।

**इन्द्र सेनां मोहयामित्राणाम् । अग्नेर्वातस्य ध्राज्या तान् विषूचो वि नाशय ॥५॥**

हे इन्द्रदेवता ! तिमी शत्रुका सेनालाई अल्मल्याइदेऊ । त्यसपछि अग्नि र वायुका प्रचण्ड वेगले उनीहरूलाई चारै तिरबाट लखेटेर विनाश गर ।

**इन्द्रः सेनां मोहयतु मरुतो घ्नन्त्वोजसा । चक्षूंष्यग्निरा दत्तां पुनरेतु पराजिता ॥६॥**

हे इन्द्रदेवता ! तिमी शत्रुको सेनालाई लट्याइदेऊ र मरुत्‌गणले बलपूर्वक तिनको विनाश गरून् । अग्निदेवताले उनका आँखाको ज्योति हरण गरून् । यसै किसिमले परास्त भएर शत्रुको सेना फिर्ता भएर जाओस् ।

## २. शत्रुसेनासम्मोहन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** सेनामोहन, अग्नि, इन्द्र, द्यौ, मरुद्‌गण । **छन्द–** त्रिष्टुप्, अनुष्टुप् ।

**अग्निर्नो दूतः प्रत्येतु विद्वान् प्रतिदहन्नभिशस्तिमरातिम् । स चित्तानि मोहयतु परेषां निर्हस्तांश्च कृणवज्जातवेदाः ॥१॥**

देवदूतजस्ता अग्रणी तथा विद्वान् अग्निदेवताले हाम्रा शत्रुलाई डढाउँदै उनीहरूतर्फ बढून् । उनले शत्रुको चित्त भ्रमित गरून् र उनका हातलाई हतियारविनाका गराऊन् ।

**अयमग्निरमूमुहद् यानि चित्तानि वो हृदि । वि वो धमत्वोकसः प्र वो धमतु सर्वतः ॥२॥**

हे शत्रुहरू हो ! तिमीहरूको हृदयमा जुन विचारको समूह छ, त्यसलाई अग्निदेवताले सम्मोहित गरिदिऊन् र तिमीहरूलाई निवास स्थानबाट पर हटाइदिऊन् ।

**इन्द्र चित्तानि मोहयन्नर्वाङाकूत्या चर । अग्नेर्वातस्य ध्राज्या तान् विषूचो वि नाशय ॥३॥**

हे इन्द्रदेवता ! तिमी शत्रुका मनलाई सम्मोहित गराउँदै शुभसङ्कल्पका साथ हाम्रा नजिकमा आऊ । त्यसपछि अग्निदेवता र वायुदेवताले प्रचण्ड वेगले ती शत्रुका सेनालाई चारै दिशाबाट विनाश गरून् ।

**व्याकूतय एषामिताथो चित्तानि मुह्यत । अथो यदद्यैषां हृदि तदेषां परि निर्जहि ॥४॥**

हे विरोधी विचारहरू हो ! तिमीहरू शत्रुका मनमा गमन गर । हे शत्रुका मन ! तिमी मोहग्रस्त होऊ । हे इन्द्रदेवता ! युद्धका लागि तयार भएका शत्रुको अठोटलाई तिमी पूरै रूपमा विनाश गरिदेऊ ।

**अमीषां चित्तानि प्रतिमोहयन्ती गृहाणाङ्गान्यप्वे परेहि । अभि प्रेहि निर्दह हृत्सु शोकैर्ग्राह्यामित्रांस्तमसा विध्य शत्रून् ॥५॥**

हे अप्वे नाम भएका पापवृत्तिरूपी व्याधी ! तिमी शत्रुलाई सम्मोहित गराउँदै उनका शरीरमा व्याप्त भएर बस । हे अप्वे ! तिमी अघि सर र उनका हृदयलाई शोकले डढाऊ । उनीहरूलाई गाँजेर पीडित गराउँदै विनष्ट गराइछाड ।

**असौ या सेना मरुतः परेषामस्मानैत्यभ्योजसा स्पर्धमाना । तां विध्यत तमसापव्रतेन यथैषामन्यो अन्यं न जानात् ॥६॥**

हे मरुतहरू हो ! जुन शत्रुको सेना आफ्नो सामर्थ्यका मदमा स्पर्धापूर्वक हामीतर्फ आइरहेको छ, त्यस्ता सेनालाई तिमी आफ्ना कर्महीन गराउने अन्धकारले सम्मोहित गराऊ; जसले गर्दा यी शत्रुहरूमध्ये एकापसमा कसैले पनि चिन्न नसकून् ।

## ३. स्वराजपुनः स्थापन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** अग्नि, इन्द्र, द्यौ, वरुण, सोम, श्येन, अश्विनीकुमार, इन्द्राग्नी,विश्वेदेवा । **छन्द–** त्रिष्टुप्, चतुष्पदा भुरिक् पङ्क्ति,अनुष्टुप् ।

**अचिक्रदत् स्वपा इह भुवदग्ने व्यचस्व रोदसी उरूची । युञ्जन्तु त्वा मरुतो विश्ववेदस आमुं नय नमसा रातहव्यम् ॥१॥**

हे अग्निदेवता ! यो जीव या पदको लालचा गर्ने व्यक्तिका रूपमा रहेका राजा स्वयं नै पालन र रक्षण गर्नमा सक्षम होस् भन्ने खालको घोषणा गरिसकिएको छ । तिमी सम्पूर्ण द्यावापृथिवीमा व्याप्त होऊ । मरुत्गण र विश्वेदेवा तिमीसित संयुक्त होऊन् । तिमी नम्रतापूर्वक हविदातालाई यहाँ लिएर आऊ र स्थापित गर ।

**दूरे चित् सन्तमरुषास इन्द्रमा च्यावयन्तु सख्याय विप्रम् । यद् गायत्रीं बृहतीमर्कमस्मै सौत्रामण्या दधृषन्त देवाः ॥२॥**

हे तेजस्वी ! तिमी यस तेजस्वीको मित्रताका लागि अति पर रहेका इन्द्रदेवतालाई यहाँ लिएर आऊ । समस्त देवताहरूले गायत्री छन्द, बृहती छन्द र सौत्रामणी यज्ञका माध्यमबाट यसलाई धारण गरेका छन् ।

**अद्भ्यस्त्वा राजा वरुणो ह्वयतु सोमस्त्वा ह्वयतु पर्वतेभ्यः । इन्द्रस्त्वा ह्वयतु विड्भ्य आभ्यः श्येनो भूत्वा विश आ पतेमाः ॥३॥**

हे तेजस्वी ! वरुणदेवता जलका लागि, सोमदेवता पर्वतका लागि र इन्द्रदेवता प्रजा तथा सन्तानका लागि तिमीलाई बोलाउँछन् । तिमी बाजपक्षीको समान गतिले यस विशिष्ट स्थानमा आऊ ।

**श्येनो हव्यं नयत्वा परस्मादन्यक्षेत्रे अपरुद्धं चरन्तम् । अश्विना पन्थां कृणुतां सुगं त इमं सजाता अभिसंविशध्वम् ॥४॥**

स्वर्गमा निवास गर्ने देवता, अन्य क्षेत्रमा विचरण गर्ने हव्यलाई श्येनको जस्तै द्रुतगतिले आफ्ना देशमा लिएर आऊन् । हे तेजस्वी ! तिम्रो मार्गलाई दुवै अश्विनीकुमार सुखले आउन योग्य बनाऊ । सजातीय व्यक्ति वा तत्त्वले यसलाई उपयुक्त स्थलमा प्रविष्ट गराऊन् ।

**ह्वयन्तु त्वा प्रतिजनाः प्रति मित्रा अवृषत । इन्द्राग्नी विश्वे देवास्ते विशि क्षेममदीधरन् ॥५॥**

हे तेजस्वी ! प्रतिकूल विचार भएकाले पनि तिम्रो महत्त्व बुझेपछि तिमीलाई बोलाऊन् । मित्रजनले तिमीलाई संवर्द्धित गराऊन् । इन्द्राग्नि र विश्वेदेवाले तिमीभित्र क्षेमरूपी पालन तथा संरक्षणको क्षमता धारण गराऊन् ।

**यस्ते हवं विवदत् सजातो यश्च निष्ट्यः । अपाञ्चमिन्द्र तं कृत्वाथेममिहाव गमय ॥६॥**

हे इन्द्रदेवता ! सबै विजातीय र सजातीय जनले तिम्रो आह्वनीय पक्षलाई समीक्षा गरून् । त्यसमा भएको अवाञ्छनीय पक्षलाई बहिष्कार गरेर वाञ्छनीय यस पक्षलाई यहाँ लिएर आऊन् ।

## ४. राजासंवरण सूक्त

**ऋषि**— अथर्वा । **देवता**— इन्द्र । **छन्द**— त्रिष्टुप्, जगती, भुरिक् त्रिष्टुप् ।

**आ त्वा गन् राष्ट्रं सह वर्चसोदिहि प्राङ् विशां पतिरेकराट् त्वं वि राज । सर्वास्त्वा राजन् प्रदिशो ह्वयन्तूपसद्यो नमस्यो भवेह ॥१॥**

हे तेजसम्पन्न राजा ! प्रकाशवान् अधिकारक्षेत्रका रूपमा रहेको यो राष्ट्र फेरि पनि तिमीलाई नै प्राप्त भएको छ । तिमी पराक्रमपूर्वक उन्नति गर्दै जाऊ । तिमी प्रजाका स्वामी हौ र एक मात्र अधिपतिका रूपमा सुशोभित होऊ । समस्त दिशा तथा उपदिशाहरूले तिमीलाई नै पुकारुन् । तिमी आफ्ना यस क्षेत्रमा सबैका लागि वन्दनीय बन ।

**त्वां विशो वृणतां राज्याय त्वामिमाः प्रदिशः पञ्च देवीः । वर्ष्मन् राष्ट्रस्य ककुदि श्रयस्व ततो न उग्रो वि भजा वसूनि ॥२॥**

हे तेजस्वी ! यी प्रजाहरूले तिमीलाई नै शासन सञ्चालनका लागि स्वीकार गरून् र पाँचै दिव्य दिशाहरूले तिम्रो सेवा गरून् । तिमी राष्ट्रका श्रेष्ठ पदमा आसीन होऊ र उग्र वीर भएर हामीलाई योग्यताअनुसार ऐश्वर्य प्रदान गर ।

**अच्छ त्वा यन्तु हविनः सजाता अग्निर्दूतो अजिरः सं चरातै । जायाः पुत्राः सुमनसो भवन्तु बहुं बलिं प्रति पश्यासा उग्रः ॥३॥**

हे तेजस्वी ! हवन गर्ने या बोलाउने सजातीयहरू तिम्रा लागि अनुकूल होऊन् । दूतका रूपमा अग्निदेवता तीव्र रूपमा सञ्चालित होऊन् । स्त्री तथा बालबालिकाहरू उच्च मनोबलका होऊन् । तिमी उग्र वीर भएर विभिन्न किसिमका उपहार प्राप्त गर ।

**अश्विना त्वाग्रे मित्रावरुणोभा विश्वे देवा मरुतस्त्वा ह्वयन्तु । अधा मनो वसुदेयाय कृणुष्व ततो न उग्रो वि भजा वसूनि ॥४॥**

हे तेजस्वी ! मित्रावरुण, अश्विनीकुमार, विश्वेदेवा तथा मरुत्‌गणले तिमीलाई बोलाऊन् । तिमी आफ्नो मनलाई धनदान गर्नमा लगाऊ र प्रचण्ड वीर भएर हामीलाई योग्यताअनुसारको ऐश्वर्य प्रदान गर ।

**आ प्र द्रव परमस्याः परावतः शिवे ते द्यावापृथिवी उभे स्ताम् । तदयं राजा वरुणस्तथाह स त्वायमह्वत् स उपेदमेहि ॥५॥**

हे तेजस्वी ! तिमी दूरदेशमा भए पनि द्रुत गतिले यहाँ आऊ । द्यावापृथिवी तिम्रा लागि कल्याणकारी होऊन् । राजा वरुणले पनि तिमीलाई आह्वान गर्दछन्, त्यसैले तिमी यहाँ आऊ र यसलाई प्राप्त गर ।

इन्द्रेन्द्र मनुष्या३ः परेहि सं ह्यज्ञास्था वरुणैः संविदानः । स त्वायमह्वत् स्वे सधस्थे स देवान् यक्षत् स उ कल्पयाद् विशः ॥६॥

हे शासकहरूका शासक इन्द्रदेवता ! तिमी मानिसहरूका नजिकै आऊ । वरुणदेवतासित संयुक्त भएर तिमी चिनिएका छौ । त्यसैले यी प्रत्येक धारणकर्ताहरूले तिमीलाई आआफ्ना स्थानमा बोलाएका छन् । तिमी यस्तै खालका हुनाले देवताहरूलाई यजन गर्दै प्रजाहरूलाई आआफ्ना कर्तव्यमा नियोजित गराऊ ।

पथ्या रेवतीर्बहुधा विरूपाः सर्वाः सङ्गत्य वरीयस्ते अक्रन् । तास्त्वा सर्वाः संविदाना ह्वयन्तु दशमीमुग्रः सुमना वशेह ॥७॥

हे तेजस्वी ! विभूतिसम्पन्न, लक्षित मार्गतर्फ गतिमान, विविध रूपले युक्त प्रजाहरूले एकीकृत रूपमा तिमीलाई यस वरणीय पदमा स्थापित गरेका छन् । उनीहरू सबैले तिमीलाई एक मत भएर बोलाऊन् । तिमी उग्र वीर एवं श्रेष्ठ मनका भएर दसौं अथवा अन्तिम अवस्थालाई आफ्ना अधीनमा गराऊ ।

## ५. राजा र राजकृत सूक्त

**ऋषि**– अथर्वा । **देवता**– सोम, पर्णमणि । **छन्द**– अनुष्टुप्, पुरोऽनुष्टुपत्रिष्टुप्, त्रिष्टुप्, विराट्उरोबृहती ।

आयमगन् पर्णमणिर्बली बलेन प्रमृणन्त्सपत्नान् । आजो देवानां पय ओषधीनां वर्चसा मा जिन्वत्वप्रयावन् ॥१॥

यो बलशाली पर्णमणि आफ्नै बलबुताले शत्रुलाई विनाश गर्न सक्ने खालको छ । यो नै देवताहरूको ओज र औषधिहरूको साररूप हो । यसले हामीलाई पराक्रमले युक्त बनाओस् ।

मयि क्षत्रं पर्णमणे मयि धारयताद् रयिम् । अहं राष्ट्रस्याभीवर्गे निजो भूयासमुत्तमः ॥२॥

हे पर्णमणि ! तिमी हाम्रो आन्तरिक शक्ति र ऐश्वर्यलाई स्थापित गराऊ, त्यसैबाट हामी राष्ट्रको विशिष्ट वर्गमा रहेर सबैका लागि उत्तम तथा आत्मीय बन्न सकौं ।

यं निदधुर्वनस्पतौ गुह्यं देवाः प्रियं मणिम् । तमस्मभ्यं सहायुषा देवा ददतु भर्तवे ॥३॥

जुन गुप्त तथा प्रिय मणिलाई देवताहरूले वनस्पतिहरूमा स्थापित गराएका छन्, त्यस मणिलाई देवताहरूले नै पोषण तथा आयु वृद्धि गराउनका लागि हामीलाई प्रदान गरून् ।

सोमस्य पर्णः सह उग्रमागन्निन्द्रेण दत्तो वरुणेन शिष्टः । तं प्रियासं बहु रोचमानो दीर्घायुत्वाय शतशारदाय ॥४॥

इन्द्रदेवताले प्रदान गरेको र वरुणदेवताले उचित किसिमले संस्कारित गरेको यो सोमपर्णमणि प्रचण्ड बलले सम्पन्न भएर हामीलाई प्राप्त होस् । त्यस तेजस्वी मणिले हामीलाई दीर्घायु तथा सय वर्षको आयु प्राप्त गराउने हुनाले हामी प्रिय मान्दछौं ।

आ मारुक्षत् पर्णमणिर्मह्या अरिष्टतातये । यथाहमुत्तरोऽसान्यर्यम्ण उत संविदः ॥५॥

यो पर्णमणि चिरकालसम्म हाम्रा समीपमा रहँदै हाम्रा लागि कल्याणकारी होस् । हामी अर्यमादेवताको कृपाले यसलाई धारण गरेर समान बल भएकाहरूका बीचमा पनि महान् बन्न सकौं ।

ये धीवानो रथकाराः कर्मारा ये मनीषिणः । उपस्तीन् पर्ण मह्यं त्वं सर्वान् कृण्वभितो जनान् ॥६॥

हे पर्णमणि ! नदीमा काम गर्ने माझी, रथ हाँक्ने सारथी, फलामको काम गर्ने आदि मनीषीहरू जोजो छन्, ती सबैलाई हाम्रा चारैतिर सेवाका लागि तिमी उपस्थित गराऊ ।

ये राजानो राजकृतः सूता ग्रामण्यश्च ये । उपस्तीन् पर्ण मह्यं त्वं सर्वान् कृण्वभितो जनान् ॥७॥

हे मणि ! जो विभिन्न देशका राजा र राजालाई अभिषेक गर्नेहरू हुन्छन् तथा जो गाउँ एवं क्षेत्रका नायक छन्, ती सबैलाई हाम्रा चारैतिर उपस्थित गराऊ ।

**पर्णोऽसि तनूपानः सयोनिर्वीरो वीरेण मया । संवत्सरस्य तेजसा तेन बध्नामि त्वा मणे ॥८॥**

हे सोमपर्णमा उत्पन्न भएका मणि ! तिमी शरीररक्षक हौ । तिमी वीर छौ र हामीसँगै जन्मिएका हौ । तिमी सवितादेवताका तेजले परिपूर्ण छौ, त्यसैले तिम्रो तेज ग्रहण गर्नका लागि हामी तिमीलाई धारण गर्दछौँ ।

## ६. शत्रुनाशन सूक्त

**ऋषि–** जगद्बीज पुरुष । **देवता–** अश्वत्थ, वनस्पति । **छन्द–** अनुष्टुप् ।

**पुमान् पुंसः परिजातोऽश्वत्थः खदिरादधि । स हन्तु शत्रून् मामकान् यानहं द्वेष्मि ये च माम् ॥१॥**

पराक्रमी वीर्यवान्बाटै पराक्रमी वीर्यवान् उत्पन्न हुन्छन् । उसै गरी खदिर अर्थात् खयरको वृक्षबाट अश्वत्थ अर्थात् पिपल वा आकाशबाट नै आपूर्ति गर्ने चक्र उत्पन्न हुने गर्दछ । त्यो तेजस्वी अश्वत्थ नै ती शत्रुहरूलाई विनाश गर्दछ, जसले हामीसित द्वेष गर्दछन् र हामी जोसित द्वेष गर्दछौँ ।

**तानश्वत्थ निः शृणीहि शत्रून् वैबाधदोधतः । इन्द्रेण वृत्रघ्ना मेदी मित्रेण वरुणेन च ॥२॥**

अश्वजस्तै दिव्य जीवनतत्त्वले सम्पन्न हे अश्वत्थ ! तिमी विभिन्न किसिमका बाधाहरू उत्पन्न गर्ने द्रोहीहरूलाई नष्ट गर्ने प्रयोजनका लागि नै वृत्रहन्ता इन्द्र, मित्र र वरुणदेवताको स्नेही बन ।

**यथाश्वत्थ निरभनोऽन्तर्महत्यर्णवे । एवा तान्त्सर्वान्निर्भङ्ग्धि यानहं द्वेष्मि ये च माम् ॥३॥**

हे अश्वत्थ ! जसरी तिमी अन्तरिक्षरूपी अर्णवलाई भेदन गरेर उत्पन्न भएका छौ, उसै गरी तिमी हाम्रा ती शत्रुलाई पूर्ण रूपले नष्ट गर, जोसित हामी विद्वेष गर्दछौँ र जो हामीसित विद्वेष गर्दछन् ।

**यः सहमानश्चरसि सासहान इव ऋषभः । तेनाश्वत्थ त्वया वयं सपत्नान्त्सहिषीमहि ॥४॥**

हे अश्वत्थ ! जसरी तिमी शत्रुलाई पेल्न साँढेजस्तो भएर अघि बढ्दछौ, उसै गरी तिम्रा सहयोगले हामी मानिसहरू आफ्ना शत्रुलाई विनाश गर्नमा समर्थ होऔँ ।

**सिनात्वेनान् निर्ऋतिर्मृत्योः पाशैरमोक्यैः । अश्वत्थ शत्रून् मामकान् यानहं द्वेष्मि ये च माम् ॥५॥**

हे अश्वत्थ ! जोसित हामी विद्वेष गर्दछौँ र जो हामीसित विद्वेष गर्दछन्, विपत्तिका देवता निर्ऋतिले ती शत्रुलाई कहिल्यै नछिन्ने खालका मृत्युका पासोले बाँधून् ।

**यथाश्वत्थ वानस्पत्यानारोहन् कृणुषेऽधरान् । एवा मे शत्रोर्मूर्धानं विष्वग् भिन्द्धि सहस्व च ॥६॥**

हे अश्वत्थ ! जसरी तिमी माथि रहेर वनस्पतिहरूलाई तल स्थापित गर्दछौ, उसै गरी तिमी हाम्रा शत्रुलाई टाउकोतर्फबाट चिर्दै विनाश गराऊ ।

**तेऽधराञ्चः प्र प्लवन्तां छिन्ना नौरिव बन्धनात् । न वैबाधप्रणुत्तानां पुनरस्ति निवर्तनम् ॥७॥**

जसरी बन्धनबाट नौका छुटेपछि नदीका धारमा ओरालोतर्फ बग्ने गर्दछ, उसै गरी हाम्रा शत्रुहरू पनि नदीका धारमा बगून् । विभिन्न किसिमका बाधा उत्पन्न गराउने तिनीहरूका लागि फेरि फिर्ता आउन सम्भव नहोस् ।

**प्रैणान् नुदे मनसा प्र चित्तेनोत ब्रह्मणा । प्रैणान् वृक्षस्य शाखयाश्वत्थस्य नुदामहे ॥८॥**

हामी यी विकृतिरूपी शत्रुलाई ब्रह्मज्ञानद्वारा मन तथा चित्तबाट पर हटाउँछौँ । उनीहरूलाई हामी जीवनरूपी अश्वत्थवृक्षका शाखाजस्ता प्राणधाराले पर हटाउँछौँ ।

## ७. यक्ष्मनाशन सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** यक्ष्मनाशन, हरिण, तारागण, आपः । **छन्द–** अनुष्टुप्, भुरिक् अनुष्टुप् ।

**हरिणस्य रघुष्यदोऽधि शीर्षणि भेषजम् । स क्षेत्रियं विषाणया विषूचीनमनीनशत् ॥१॥**

द्रुत गतिले दौडने सूर्यरूपी हरिणका शिररूपी किरण वा सर्वोच्च भागमा रोगहरूलाई विनाश गर्ने

विशिष्ट औषधि रहेको छ । उसले आफ्ना सिङरूपी प्रभावले त्यस क्षेत्रका रोगहरूलाई विनाश गरोस् ।

**अनु त्वा हरिणो वृषा पद्भिश्चतुर्भिरक्रमीत् । विषाणे वि ष्य गुष्पितं यदस्य क्षेत्रियं हृदि ॥२॥**

यस्तो बलशाली हरिणरूपी सूर्य आफ्ना चारै पदले तिम्रो अनुकूल भएर आक्रमण गर्दछ । हे सिङरूपी विषका विनाशक ! तिमी यस पीडित व्यक्तिका हृदयक्षेत्रमा रहेको गोप्य किसिमले रहेका रोगहरू विनाश गर ।

**अदो यदवरोचते चतुष्पक्षमिवच्छदिः । तेना ते सर्वं क्षेत्रियमङ्गेभ्यो नाशयामसि ॥३॥**

यो चार कुने आकार वा विशेषताले युक्त छतजस्तो भएर बसेको सुन्दर मृगको छाला वा आकाश छ, हामी त्यसैले तिम्रा जुनसुकै अङ्गक्षेत्रमा रहेका रोगहरूलाई विनाश गर्दछौँ ।

**अमू ये दिवि सुभगे विचृतौ नाम तारके । वि क्षेत्रियस्य मुञ्चतामधमं पाशमुत्तमम् ॥४॥**

अन्तरिक्षमा रहेको विचृत नामको जुन सौभाग्यशाली तारा छ, त्यसले समस्त क्षेत्रीय रोगहरूलाई शरीरका माथिल्ला वा तल्ला अङ्गहरूबाट छुटाइदियोस् ।

**आप इद् वा उ भेषजीरापो अमीवचातनीः । आपो विश्वस्य भेषजीस्तास्त्वा मुञ्चन्तु क्षेत्रियात् ॥५॥**

सबै रोगहरूको औषधि नै जल हो । स्नान र पानका कारणले यस जलले नै औषधिका रूपमा रहेर सबै खालका रोगहरूलाई हटाउने गर्दछ । अरू औषधिको जस्तो एउटा रोगलाई मात्रै होइन, अरु सबै खालका रोगहरूको नै यो औषधि हो । हे रोगी ! यस्ता जलले नै तिम्रा सबै खालका रोगहरू हटून् ।

**यदासुतेः क्रियमाणायाः क्षेत्रियं त्वा व्यानशे । वेदाहं तस्य भेषजं क्षेत्रियं नाशयामि त्वत् ॥६॥**

हे रोगी ! बिग्रेर चुहिएको रसले तिमीभित्र जुन क्षेत्रीय रोग व्याप्त भएको छ, त्यसको औषधि हामीले जानेका छौँ । हामी त्यसै औषधिले क्षेत्रीय रोग निवारण गर्दछौँ ।

**अपवासे नक्षत्राणामपवास उषसामुत । अपास्मत् सर्वं दुर्भूतमप क्षेत्रियमुच्छतु ॥७॥**

...कालमा नक्षत्रहरू पर भएपछि र उषाकाल बितेपछि दिउँसोका समयमा सबै खालका अनिष्टहरू हामीबाट हटून् । क्षेत्रीय रोगहरू पनि यसै क्रममा हटिरहून् ।

## ८. राष्ट्रधारण सूक्त

**ऋषि–** अथर्वा । **देवता–** मित्र, पृथिवी, वरुण, वायु, अग्नि, धाता, सविता इन्द्र, त्वष्टा, अदिति, सोम, सविता, आदित्य, विश्वदेवा, मन । **छन्द–** त्रिष्टुप्, जगती, चतुष्पदा विराट् बृहतीगर्भा त्रिष्टुप्, अनुष्टुप् ।

**आ यातु मित्र ऋतुभिः कल्पमानः संवेशयन् पृथिवीमुस्रियाभिः । अथास्मभ्यं वरुणो वायुरग्निर्बृहद् राष्ट्रं संवेश्यं दधातु ॥१॥**

आफ्ना रश्मिद्वारा पृथ्वीमा व्याप्त हुँदै हामीलाई दीर्घजीवी बनाउन सक्षम हुँदै सूर्यरूपी मित्रदेवता आऊन् । त्यसपछि वरुणदेवता, वायुदेवता र अग्निदेवताले हाम्रा निम्ति शान्तिदायक राष्ट्रलाई स्थिर गराऊन् ।

**धाता रातिः सवितेदं जुषन्तामिन्द्रस्त्वष्टा प्रति हर्यन्तु मे वचः । हुवे देवीमदितिं शूरपुत्रां सजातानां मध्यमेष्ठा यथासानि ॥२॥**

सबैलाई धारण गर्ने धातादेवता, दानशील स्वभावका अर्यमादेवता र सबैलाई प्रेरणा प्रदान गर्ने सवितादेवताले हाम्रो आहुति स्वीकार गरून् । इन्द्रदेवता र त्वष्टादेवताले हाम्रो स्तुति सुनून् । शूर पुत्रकी माता अदितिदेवीलाई हामी आह्वान गर्दछौँ; त्यसैबाट हामी आफ्ना सजातीयहरूका बीचमा सम्माननीय हुन सकौँ ।

**हुवे सोमं सवितारं नमोभिर्विश्वानादित्याँ अहमुत्तरत्वे । अयमग्निर्दीदायद् दीर्घमेव सजातैरिद्धोऽप्रतिब्रुवद्भिः ॥३॥**

उचित किसिमका यज्ञ गर्ने याजकलाई अत्यधिक श्रेष्ठता प्रदान गर्नका लागि हामी सोमदेवता, सवितादेवता र समस्त आदित्यहरूलाई नमस्कारपूर्वक बोलाउने गर्दछौँ । हविको आधार मानिएका अग्निदेवता प्रज्ज्वलित होऊन्; त्यसैबाट हामी सजातीयहरूका साथमा लामो आयु प्राप्त गरेर उन्नति गर्न सकौँ ।

**इहेदसाथ न परो गमाथेर्यो गोपाः पुष्टपतिर्व आजत् । अस्मै कामायोप कामिनीर्विश्वे वो देवा उपसंयन्तु ॥४॥**

हे राष्ट्ररूपी शरीरमा रहने प्रजारूपी शक्तिहरू हो ! तिमीहरू यतै बस, पर नजाओ । अन्न या विद्याले युक्त गाई, पृथ्वी अथवा इन्द्रियका रक्षक, पुष्टि प्रदाताले तिमीहरूलाई सुरक्षित राखून् । कामनायुक्त तिमीहरू प्रजाको यो कामना पूरा गराउनका लागि एकसाथ उनलाई सङ्गठित गराओ ।

**सं वो मनांसि सं व्रता समाकूतीर्नमामसि । अमी ये विव्रता स्थन तान् वः सं नमयामसि ॥५॥**

हे मानिसहरू हो ! तिमीहरूको विचार, कर्म र सङ्कल्पलाई हामी एकै भावले सङ्गठित गर्दछौँ । तिमीहरूले उहिले जुन विपरीत कर्म गरेका थियौ, ती सबैलाई हामी श्रेष्ठ विचारका माध्यमबाट अनुकूल बनाउँछौँ ।

**अहं गृभ्णामि मनसा मनांसि मम चित्तमनु चित्तेभिरेत । मम वशेषु हृदयानि वः कृणोमि मम यातमनुवर्त्मान एत ॥६॥**

हामी आफ्ना मनमा तिम्रो मनलाई एकीकृत गरेर धारण गर्दछौँ । तिमी पनि हाम्रै मनको अनुकूल मन बनाएर आऊ । तिम्रो हृदयलाई हामी आफ्नो वशमा गर्दछौँ । तिमी हाम्रै अनुकूल व्यवहार गर्ने भएर आऊ ।

## ९. दुःखनाशन सूक्त

**ऋषि–** वामदेव । **देवता–** द्यावापृथिवी, विश्वेदेवा । **छन्द–** अनुष्टुप्, चतुष्पदा निचृत् बृहती, भुरिक् अनुष्टुप् ।

**कर्शफस्य विशफस्य द्यौष्पिता पृथिवी माता । यथाभिचक्र देवास्तथाप कृणुता पुनः ॥१॥**

निर्गतिला खुर भएका प्राणी र खुर नभएका प्राणीलाई पालनपोषण गर्ने मातापिताका रूपमा पृथ्वी र द्युलोक रहेका छन् । हे देवताहरू हो ! जसरी तिमीहरूले यी बाधाविघ्नका कारणलाई हाम्रा अगाडि प्रस्तुत गरेका छौ, उसै गरी यी बाधाहरूलाई हामीदेखि पर पुऱ्याओ ।

**अश्रेष्माणो अधारयन् तथा तन्मनुना कृतम् । कृणोमि वध्रि विष्कन्धं मुष्काबर्हो गवामिव ॥२॥**

नथाक्नेले नै मणितुल्य यस निरोधक शक्तिलाई धारण गरेको हुन्छ । मनुले पनि यसै गरेका थिए । हामी विष्कन्ध आदि रोगलाई उसै किसिमले निर्बल गराउँछौँ, जसरी सुमर्नेले बहरलाई आफ्ना नियन्त्रणमा राखेको हुन्छ ।

**पिशङ्गे सूत्रे खृगलं तदा बध्नन्ति वेधसः । श्रवस्युं शुष्मं काबवं वध्रिं कृण्वन्तु बन्धुरः ॥३॥**

पिङ्गल सूत्रले त्यस खृगललाई हामी बाँध्दछौँ । यस किसिमले बाँध्ने मानिसहरू बलिया र शोषक रोगलाई निर्बल गराउँछन् ।

**येना श्रवस्यवश्चरथ देवा इवासुरमायया । शुनां कपिरिव दूषणो बन्धुरा काबवस्य च ॥४॥**

हे यशस्वीहरू हो ! तिमीहरू जसरी प्रबल मायाका कारण देवताहरूको जस्तै आचरण गर्दछौ, उसै गरी मणि बाँधेको जस्तै गरी अनुशासनका बन्धनमा बसेको व्यक्ति दूषण नामको रोग र

व्यवहारका दोषबाट कुकुरका डरबाट बाँदर मुक्त भएझैं मुक्त रहेको हुन्छ ।

**दुष्ट्यै हि त्वा भत्स्यामि दूषयिष्यामि काबवम् । उदाशवो रथा इव शपथेभिः सरिष्यथ ॥५॥**

हे मणि वा रोगनाशक शक्ति ! अर्कालै उपस्थित गराएका विघ्नलाई असफल गराउनका लागि तिमीलाई हामी धारण गर्दछौं । तिमीबाटै हामी विघ्नहरूको निवारण गराउँछौं । हे मानिसहरू हो ! द्रुतगामी रथझैं तिमीहरू विघ्नबाट पर भएर आआफ्ना कार्यमा जुट ।

**एकशतं विष्कन्धानि विष्ठिता पृथिवीमनु । तेषां त्वामग्र उज्जहरुर्मणिं विष्कन्धदूषणम् ॥६॥**

धर्तीमा एक सय किसिमका विघ्नहरू रहेका छन् । हे मणि ! ती विघ्नहरूको निवारणका लागि देवताहरूले तिमीलाई उच्च स्थानमा उठाएर विशिष्ट स्थान दिएका छन् ।

## १०. रायस्पोषप्राप्ति सूक्त

**ऋषि–** अथर्वा । **देवता–** अष्टका, धेनु, रात्रि, एकाष्टका, जातवेदा, पशुसमूह, रात्रि, यज्ञ, संवत्सर, ऋतुएँ, धाता, विधाता, देवगण, इन्द्र, प्रजापति । **छन्द–** अनुष्टुप्, त्रिष्टुप्, त्र्यवसाना षट्पदा विराट् गर्भातिजगती ।

**प्रथमा हव्यु वास सा धेनुरभवद् यमे । सा नः पयस्वती दुहामुत्तरामुत्तरां समाम् ॥१॥**

प्रथम पटक उदाएको एकाष्टका नै नियमित स्वभाव भएको धारणपोषणको क्षमताले सम्पन्न गाईका रूपमा सिद्ध भयो । त्यही पथनिर्माण गर्ने दिव्य धेनु हाम्रा लागि उत्तरोत्तर पथप्रदर्शक भइरहोस् ।

**यां देवाः प्रतिनन्दन्ति रात्रिं धेनुमुपायतीम् । संवत्सरस्य या पत्नी सा नो अस्तु सुमङ्गली ॥२॥**

आउँदो एकाष्टकासम्बन्धी जुन रात्रिरूपी गाईलाई देखेर देवताहरू आनन्दित हुने गर्दछन् त्यही नै संवत्सरका रूपमा काल वा समयकी पत्नी पनि हो । हाम्रा निम्ति त्यो मङ्गलमय होस् ।

**संवत्सरस्य प्रतिमां यां त्वा रात्र्युपास्महे । सा न आयुष्मतीं प्रजां रायस्पोषेण सं सृज ॥३॥**

हे रात्रि ! हामी तिमीलाई संवत्सरकै प्रतिमा मानेर उपासना गर्दछौं । हाम्रा सन्तानहरूलाई तिमी दीर्घायु प्रदान गर र हामीलाई गाई आदि पशुधनले सम्पन्न गराऊ ।

**इयमेव सा या प्रथमा व्यौच्छदास्वितरासु चरति प्रविष्टा । महान्तो अस्यां महिमानो अन्तर्वधूर्जिगाय नवगज्जनित्री ॥४॥**

यो त्यही एकाष्टका हो, जुन सृष्टिको प्रारम्भमा नै उत्पन्न भएको थियो र समयका अन्य घटकहरूसित समाहित भएर जाँदो छ । यसैभित्र अनेकौं महानताहरू छन् । यो नववधूझैं प्रजननशील र विजयशील भएर चल्ने गर्दछ ।

**वानस्पत्या ग्रावाणो घोषमक्रत हविष्कृण्वन्तः परिवत्सरीणम् । एकाष्टके सुप्रजसः सुवीरा वयं स्याम पतयो रयीणाम् ॥५॥**

संवत्सरमा चल्ने गरेका यज्ञका लागि हवि तयार गर्ने क्रममा वनस्पति र ग्रावाहरूले ध्वनि गरिरहेका हुन्छन् । हे एकाष्टका ! तिम्रो अनुग्रहले हामी श्रेष्ठ सन्तान तथा वीरले युक्त भएर प्रचुर धनका स्वामी हुन सकौं ।

**इडायास्पदं घृतवत् सरीसृपं जातवेदः प्रति हव्या गृभाय । ये ग्रम्याः पशवो विश्वरूपास्तेषां सप्तानां मयि रन्तिरस्तु ॥६॥**

भूमिमा गतिशील रहेका हे जातवेद अग्निदेवता ! गाईको घिउसहितको हामीले दिएको आहुति तिमी ग्रहण गरेर हर्षित होऊ । गाउँघरमा रहने गरेका जेजति पशुहरू हुन्छन्, ती गाई, अश्व, भेडा, बाख्रा, पुरुष, गधा, उँट आदि सातै किसिमका प्राणीहरूमा हाम्रो स्नेह रहिरहोस् ।

**आ मा पुष्टे च पोषे च रात्रि देवानां सुमतौ स्याम । पूर्णा दर्वे परा पत सुपूर्णा पुनरा पत । सर्वान् यज्ञान्त्संभुञ्जतीषमूर्जं न आ भर ॥७॥**

हे रात्रि ! हामीलाई तिमी ऐश्वर्य तथा पुत्रपौत्रादिले परिपूर्ण गराऊ । तिम्रो कृपाले हामीप्रति देवताको सुमति रहिरहोस् । यज्ञका साधनका रूपमा रहेका हे दर्वी ! आहुतिले सम्पन्न भएर तिमी देवताहरूलाई प्राप्त होऊ । हामीलाई इच्छित फल प्रदान गर्दै तिमी हाम्रो नजिकै बस । त्यसपछि आहुतिले तृप्ति प्राप्त गरेर हामीलाई अन्न र बल प्रदान गर ।

**आयमगन्त्संवत्सरः पतिरेकाष्टके तव । सा न आयुष्मतीं प्रजां रायस्पोषेण सं सृज ॥८॥**

हे एकाष्टका ! यो संवत्सर तिम्रो पति बनेर यहाँ आएको छ । तिमी हाम्रा सन्तानलाई आयु र ऐश्वर्यले सम्पन्न बनाऊ ।

**ऋतून् यज ऋतुपतीनार्तवानुत हायनान् । समाः संवत्सरान् मासान् भूतस्य पतये यजे ॥९॥**

हामी ऋतुहरू र उनका अधिष्ठाता देवताहरूलाई हवि प्रदान गरेर पूजा गर्दछौँ । संवत्सरका अङ्गका रूपमा रहेका दिनरातहरूलाई हामी हवि प्रदान गरेर यजन गर्दछौँ । ऋतुको अवयवका रूपमा रहेका कला, काष्ठा, चौबीस पक्ष, संवत्सरका बाह्र महिना र प्राणीका स्वामी काललाई हविले यजन गर्दछौँ ।

**ऋतुभ्यष्ट्वार्तवेभ्यो माद्भ्यः संवत्सरेभ्यः । धात्रे विधात्रे समृधे भूतस्य पतये यजे ॥१०॥**

हे एकाष्टका ! महिना, ऋतु, ऋतुसित सम्बन्धित रातदिन र वर्ष धाता, विधाता तथा समृद्ध देवता तथा जगत्का स्वामीको प्रसन्नताका लागि हामी तिमीलाई यजन गर्दछौँ ।

**इडया जुह्वतो वयं देवान् घृतवता यजे । गृहानलुभ्यतो वयं सं विशेमोप गोमतः ॥११॥**

हामी गाईको घिउले युक्त हविले समस्त देवताहरूलाई यजन गर्दछौँ । उनै देवताहरूको अनुकम्पाले हामी असीम गाईले युक्त घर प्राप्त गर्दै समस्त कामनाहरूलाई पूर्ति गर्ने खालको लाभ प्राप्त गर्न सकौँ ।

**एकाष्टका तपसा तप्यमाना जजान गर्भं महिमानमिन्द्रम् । तेन देवा व्यसहन्त शत्रून् हन्ता दस्यूनामभवच्छचीपतिः ॥१२॥**

यस एकाष्टकाले तपस्याद्वारा स्वयंलाई तपाएर महिमावान् इन्द्रदेवतालाई प्रकट गरेको हो । उनै इन्द्रदेवताको सामर्थ्यले देवताहरूले असुरलाई जिते; किनभने उनै शचीपति इन्द्रदेवताले नै शत्रुलाई विनाश गर्दछन् ।

**इन्द्रपुत्रे सोमपुत्रे दुहितासि प्रजापतेः । कामानस्माकं पूरय प्रति गृह्णाहि नो हविः ॥१३॥**

हे एकाष्टका ! हे इन्द्रजस्तो पुत्र हुने ! हे सोमजस्तो पुत्र हुने ! तिमी प्रजापतिकी पुत्री हौ । तिमी हाम्रो आहुति ग्रहण गर र हाम्रा सबै अभिलाषाहरू पूरा गर ।

## ११. दीर्घायुप्राप्ति सूक्त

**ऋषि–** ब्रह्मा, भृग्वङ्गिरा । **देवता–** इन्द्राग्नी, आयु, यक्ष्मनाशन । **छन्द–** त्रिष्टुप्, शक्वरीगर्भा जगती, अनुष्टुप्, उष्णिक् बृहतीगर्भा पथ्यापङ्क्ति, त्र्यवसाना षदपदा बृहतीगर्भा जगती ।

**मुञ्चामि त्वा हविषा जीवनाय कमज्ञातयक्ष्मादुत राजयक्ष्मात् । ग्राहिर्जग्राह यद्येतदेनं तस्या इन्द्राग्नी प्र मुमुक्तमेनम् ॥१॥**

हे रोगी ! तिम्रा शरीरमा भएका यक्ष्मा आदि रोगहरूलाई हविद्वारा हामी मुक्त गराउँछौँ । हे इन्द्रदेवता ! हे अग्निदेवता ! पीडाले अह्र्याउने यस व्याधिबाट यस रोगीलाई मुक्त गराऊ ।

**यदि क्षितायुर्यदि वा परेतो यदि मृत्योरन्तिकं नीत एव । तमा हरामि निर्ऋतेरुपस्थादस्पार्शमेनं शतशारदाय ॥२॥**

रोगले थलिएको यो पुरुष यदि मर्ने नै हो अथवा यसको आयु सकिँदै गएको हो भने पनि म यसलाई विनाशका नजिकबाट फिर्ता ल्याउँछु । यसलाई सय वर्षको आयुका लागि सुरक्षित राख्दछु ।

**सहस्राक्षेण शतवीर्येण शतायुषा हविषाहार्षमेनम् । इन्द्रो यथैनं शरदो नयात्यति विश्वस्य दुरितस्य पारम् ॥३॥**

हजारौं आँखा र सयौं किसिमका पुरुषार्थ एवं सय वर्षको आयु भएका हविष्यले मैले यसलाई आरोग्य बनाएको छु । त्यसो भएर यो संसारका सबै खालका दुष्कर्म वा पापहरूबाट पार हुन सकोस् । इन्द्रदेवताले यसलाई सय वर्षभन्दा बढी लामो आयु प्रदान गरून् ।

**शतं जीव शरदो वर्धमानः शतं हेमन्ताञ्छतमु वसन्तान् । शतं त इन्द्रो अग्निः सविता बृहस्पतिः शतायुषा शविषाहार्षमेनम् ॥४॥**

हे प्राणी ! दीर्घायु प्रदान गर्ने यस हविका प्रभावले मैले तिमीलाई निरोगी स्थितिमा फिर्ता ल्याएको छु । अब तिमी निरन्तर उन्नति गर्दै सय वसन्त, सय हेमन्त र सय शरद् ऋतुसम्म जीवित रहनेछौ । सर्वप्रेरक सवितादेवता, इन्द्रदेवता, अग्निदेवता र बृहस्पतिदेवताले तिमीलाई सय वर्षको आयु प्रदान गरून् ।

**प्र विशतं प्राणापानावनड्वाहाविव व्रजम् । व्य१न्ये यन्तु मृत्यवो यानाहुरितराञ्छतम् ॥५॥**

हे प्राण र अपान ! भारी बोक्ने गोरु जसरी आफ्नो थलामा प्रवेश गर्दछ उसै गरी तिमीहरू पनि क्षयग्रस्त रोगीका शरीरमा प्रवेश गर । मानिहरू मृत्युको कारणरूप जुन सयौं किसिमका रोगको वर्णन गर्दछन्, ती सबै पर जाऊन् ।

**इहैव स्तं प्राणापानौ माप गातमितो युवम् । शरीरमस्याङ्गानि जरसे वहतं पुनः ॥६॥**

हे प्राण र अपान ! तिमीहरू दुवै यस शरीरमा विद्यमान होओ । असमयमै तिमीहरू यस शरीरलाई छोडेर नजाओ । यस रोगीका शरीर तथा उसका अवयवहरूलाई वृद्ध अवस्थासम्म धारण गरिराख ।

**जरायै त्वा परि ददामि जरायै नि धुवामि त्वा । जरा त्वा भद्रा नेष्ट व्य१न्ये यन्तु मृत्यवो यानाहुरितराञ्छतम् ॥७॥**

हे मानिस ! तिमीलाई हामी वृद्ध अवस्थासम्म जीवित रहनका लागि योग्य बनाउँछौं र वृद्ध अवस्थासम्म नै रोगबाट तिमीलाई सुरक्षा गर्दछौं । वृद्ध अवस्था तिम्रा लागि कल्याणकारी होस् । ज्ञानी मानिस मृत्युका कारणका रूपमा रहेका रोगका विषयमा कुरा गर्दछन् तर ती सबै खालका रोगहरू तिमीबाट पर होऊन् ।

**अभि त्वां जरिमाहित गामुक्षणमिव रज्ज्वा । यस्त्वा मृत्युरभ्यधत्त जायमानं सुपाशया । तं ते सत्यस्य हस्ताभ्यामुदमुञ्चद् बृहस्पतिः ॥८॥**

जसरी गाईगोरुलाई डोरीले बाँधिन्छ, उसै गरी वृद्ध अवस्थाले तिमीलाई बाँधेको छ । जुन मृत्युले तिमीलाई उत्पन्न हुँदैखेरि आफ्ना पासोले बाँधेर राखेको छ, त्यस पासोलाई बृहस्पतिदेवताले सत्यको आग्रहले मुक्त गराऊन् ।

## १२. शालानिर्माण सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– शाला, बास्तोष्पति । **छन्द**– त्रिष्टुप्, विराट् जगती, बृहती, शक्वरीगर्भा जगती, आर्षी अनुष्टुप, भुरिक् त्रिष्टुप, अनुष्टुप ।

**इहैव ध्रुवां नि मिनोमि शालां क्षेमे तिष्ठाति घृतमुक्षमाणा । तां त्वा शाले सर्ववीराः सुवीरा अरिष्टवीरा उप सं चरेम ॥१॥**

हामी यसै स्थानमा घर निर्माण गर्दछौं । घिउ आदि सार तत्त्वको चिन्तन गर्दै यो घर हाम्रा लागि कल्याणकारी होस् । हे शाला ! हामी सबै वीरहरू अनिष्टबाट मुक्त भएर तिम्रा चारैतिर श्रेष्ठ सन्तानले सम्पन्न हुँदै रहन सकौं ।

**इहैव ध्रुवा प्रति तिष्ठ शालेऽश्वावती गोमती सूनृतावती । ऊर्जस्वती घृतवती पयस्वत्युच्छ्रयस्व महते सौभगाय ॥२॥**

तिमी यहाँ घोडारूपी शक्तिले सम्पन्न अश्ववती भएर, गाईरूपी पोषण सामर्थ्यले युक्त गोमती भएर र श्रेष्ठा वाणीले युक्त भएर दृढतापूर्वक बस । ऊर्जा या अन्नले युक्त, घिउले युक्त तथा पयले युक्त

सबै पोषक तत्त्वले युक्त भएर महान् सौभाग्य प्रदान गर्नका लागि उच्च स्थानमा स्थिर होऊ ।

**धरुण्यसि शाले बृहच्छन्दाः पूतिधान्या । आ त्वा वत्सो गमेदा कुमार आ धेनवः सायमास्पन्दमानाः ॥३॥**

हे घर ! तिमी भोगसाधनले सम्पन्न र विशाल छहारीले युक्त छौ । तिमी पवित्र खाद्यान्नको अक्षय भण्डारले सम्पन्न छौ । तिमीभित्र बालबच्चा र बाछाहरू आऊन् र दुध प्रदान गर्ने गाईहरू पनि साँझपख दौडँदै आउने गरून् ।

**इमां शालां सविता वायुरिन्द्रो बृहस्पतिर्नि मिनोतु प्रजानन् । उक्षन्तूद्ना मरुतो घृतेन भगो नो राजा नि कृषिं तनोतु ॥४॥**

निर्माण गर्ने विधि जानेका सवितादेवता, वायुदेवता, इन्द्रदेवता तथा बृहस्पतिदेवताले यस घरलाई बनाऊन् । मरुत्गणले पनि जल र घिउले यसलाई सेचन गरून् । त्यसपछि भगदेवताले यसलाई कृषि आदि क्रियाले सुव्यवस्थित बनाऊन् ।

**मानस्य पत्नि शरणा स्योना देवी देवेभिर्निमितास्यग्रे । तृणं वसाना सुमना असस्त्वमथास्मभ्यं सहवीरं रयिं दाः ॥५॥**

सम्माननीय वास्तुपतिकी पत्नीका रूपमा रहेकी हे शाला ! तिमी खाद्यान्न फलाउने र बढाउने हौ । सृष्टिका आरम्भमा प्राणीहरूलाई हर्ष प्रदान गर्न, उनीहरूलाई सुरक्षा गर्न र उनले उपभोग गर्नका लागि देवताहरूले तिमीलाई सृष्टि गरेका हुन् । तिमी तृणको वस्त्र धारण गर्ने र श्रेष्ठ मन भएकी हौ । हामीलाई तिमी पुत्रसहित ऐश्वर्यले सम्पन्न बनाऊ ।

**ऋतेन स्थूणामधि रोह वंशोग्रो विराजन्नप वृङ्क्ष्व शत्रून् । मा ते रिषन्नुपसत्तारो गृहाणां शाले शतं जीवेम शरदः सर्ववीराः ॥६॥**

हे वंश अथवा बाँस ! यस शालाभित्र तिमी खम्बाका रूपमा रहेर उग्र रूप बन्दै प्रकाशित रहँदै शत्रुलाई पर हटाऊ । हे शाला ! तिमीभित्र रहने गरेका कोही पनि हिंसित नहोऊन् र इच्छाअनुसार सन्तानले सम्पन्न हुँदै सय वर्षको आयु प्राप्त गरून् ।

**एमां कुमारस्तरुण आ वत्सो जगता सह । एमां परिस्रुतः कुम्भ आ दध्नः कलशैरगुः ॥७॥**

यस घरमा तरुण, बालक र गमनशील गाईहरूसँग बाछा पनि आइरहून् । यसमा मधुर रसले परिपूर्ण घडा र दहीले भरिएका कलशहरू पनि आऊन् ।

**पूर्णं नारि प्र भर कुम्भमेतं घृतस्य धाराममृतेन संभृताम् । इमां पातॄनमृतेना समङ्ग्धीष्टापूर्तमभि रक्षात्येनाम् ॥८॥**

हे स्त्रीरूपी प्रकृति ! तिमी यस घडालाई अमृतमय मधुर रस तथा घिउले उचित किसिमले भरिपूर्ण गराऊ । पिउनेहरूलाई अमृतले सन्तुष्ट गराऊ । इच्छापूर्ति गर्ने इष्टापूर्तले यस घरलाई सुरक्षित राख्दछ ।

**इमा आपः प्र भराम्ययक्ष्मा यक्ष्मनाशनीः । गृहानुप प्र सीदाम्यमृतेन सहाग्निना ॥९॥**

हामी आफू पनि रोगरहित हुँदै रोगविनाशक जललाई अविनाशी अग्निदेवताका साथै घरमा स्थित गराउँछौँ ।

## १३. आपो देवता सूक्त

**ऋषि**—भृगु । **देवता**— वरुण, सिन्धु आपः, इन्द्र । **छन्द**— अनुष्टुप्, निचृत् अनुष्टुप्, विराट् जगती, निचृत् त्रिष्टुप् ।

**यददः संप्रयतीरहावनदता हते । तस्मादा नद्यो३ नाम स्था ता वो नामानि सिन्धवः ॥१॥**

हे सरिताहरू हो ! तिमीहरू उचित किसिमले सधैँ प्रवाहमान अवस्थामा रहिराख । मेघ गर्जिएर वर्सिएपछि तिमीहरू बग्दा कलकल नाद गरिरहेका हुन्छौ, त्यसैले तिमीहरूको नाम नै नदी भएको हो । त्यो नाम तिमीहरूका लागि सुहाउँदो छ ।

**यत् प्रेषिता वरुणेनाच्छीभं समवल्गत । तदाप्नोदिन्द्रो वो यतीस्तस्मादापो अनु ष्ठन ॥२॥**

जब तिमीहरू वरुणदेवताबाट प्रेरित भएर शीघ्र नै एकापसमा मिसिँदै नाच्दै बग्न थाल्दथ्यौ त्यस बेला इन्द्रदेवताले तिमीहरूलाई प्राप्त गर्दथे । यसरी प्राप्त गर्ने र प्राप्त हुने क्रियाले नै आप भन्ने तिमीहरूलाई सुहाउँदो नाम प्राप्त भएको छ ।

**अपकामं स्यन्दमाना अवीवरत वो हि कम् । इन्द्रो वः शक्तिभिर्देवीस्तस्माद् वार्नाम वो हितम् ॥३॥**

तिमीहरू कुनै विशेष प्रयास नगरीकनै सहज रूपमा प्रवाहित हुने गर्दछौ । इन्द्रदेवताले तिमीहरूलाई आफ्नै बलले वरण गरेका हुन् । त्यसैले हे देवनशील जल तिमीहरूको नाम वारि भन्ने नाम प्राप्त भएको छ ।

**एको वो देवोऽप्यतिष्ठत् स्यन्दमाना यथावशम् । उदानिषुर्महीरिति तस्मादुदकमुच्यते ॥४॥**

हे आफूखुसी बगिरहने जल ! एउटै श्रेष्ठ देवता तिमीहरूका अधिष्ठाता भएका छन् । देवताको संयोग हुनाले महान् उर्ध्वश्वास लिएर्भैं ऊर्ध्वगतिमा लागेका हुनाले तिमीहरूको उचित नाम उदक भएको हो ।

**आपो भद्रा घृतमिदाप आसन्नग्नीषोमौ बिभ्रत्याप इत् ताः । तीव्रो रसो मधुपृचामरंगम आ मा प्राणेन सह वर्चसा गमेत् ॥५॥**

जल निश्चित रूपले नै कल्याणकारी हुन्छ र घिउको जस्तै तेज प्रदायक पनि हुन्छ । त्यसलाई अग्नि र सोमले परिपुष्ट गराउँछन् । त्यही जल मधुरताले पूर्ण र तृप्तिदायक तीव्र रसका रूपमा हामीलाई प्राण र ओजका साथ प्राप्त होस् ।

**आदित् पश्याम्युत वा शृणोम्या मा घोषो गच्छति वाङ् मासाम् । मन्ये भेजानो अमृतस्य तर्हि हिरण्यवर्णा अतृपं यदा वः ॥६॥**

ती जलप्रवाहले उच्चारण गरेको शब्द हाम्रा कानमा आइरहेको कुरो निश्चित रूपमा हामीले अनुभव गरेका छौं । हे चम्किलो रङ्ग भएका जल ! तिमीहरू सेवन गरिसकेपछि, अमृतमय भोजनले जस्तै हामीलाई सन्तुष्टि प्रदान गर्दछौ ।

**इदं व आपो हृदयमयं वत्स ऋतावरीः । इहेत्थमेत शक्वरीर्यत्रेदं वेशयामि वः ॥७॥**

हे जलका प्रवाहहरू हो ! यो सन्तुष्टिदायक प्रभाव तिमीहरूको हृदय हो । हे सत्य प्रवाहले सम्पन्न धाराहरू हो ! यो ऋत नामको सत्य नै तिमीहरूको पुत्र हो । हे शक्तिप्रदायक धाराहरू हो ! तिमीहरूभित्र यी विशेषताहरू सधैं प्रविष्ट हुन सक्ने गरी यहाँ आओ ।

## १४. गोष्ठ सूक्त

**ऋषि**—ब्रह्मा । **देवता**— गोष्ठ, अह, अर्यमा, पूषा, बृहस्पति, इन्द्र, गौ, गोष्ठ । **छन्द**— अनुष्टुप्, आर्षी त्रिष्टुप्।

**सं वो गोष्ठेन सुषदा सं रय्या सं सुभूत्या । अहर्जातस्य यन्नाम तेना वः सं सृजामसि ॥१॥**

हे गाईहरू हो ! तिमीहरूलाई हामी सुखसुविधाले बस्न पाउने खालको गोठ प्रदान गर्दछौं । तिमीहरूलाई हामी जल, समृद्धि र सन्तानले सम्पन्न बनाउँछौं ।

**सं वः सृजत्वर्यमा सं पूषा सं बृहस्पतिः । समिन्द्रो यो धनञ्जयो मयि पुष्यत यद् वसु ॥२॥**

हे गाईहरू हो ! अर्यमा, पूषा र बृहस्पतिदेवताले तिमीहरूलाई उत्पन्न गरून् र शत्रुको धन जित्ने इन्द्रदेवताले पनि तिमीहरूलाई उत्पन्न गरून् । तिमीहरूसित दुध, घिउ आदिका रूपमा जुन ऐश्वर्य रहेको छ, त्यसबाट हामी साधकहरूलाई पुष्टि प्रदान गर ।

**संजग्माना अबिभ्युषीरस्मिन् गोष्ठे करीषिणीः । बिभ्रतीः सोम्यं मध्वनमीवा उपेतन ॥३॥**

हे गाईहरू हो ! तिमीहरू हाम्रा यस गोठमा निर्भय हुँदै पुत्रपौत्रादिले सम्पन्न भएर लामो समयसम्म जीवित रहिराख । तिमीहरू गोबर उत्पन्न गर्दै र निरोग रहेर मधुर र सौम्य दुध धारण गर्दै हाम्रा नजिकै बस ।

**इहैव गाव एतनेहो शकेव पुष्यत । इहैवोत प्र जायध्वं मयि संज्ञानमस्तु वः ॥४॥**

हे गाईहरू हो ! तिमीहरू हाम्रै गोठमा आओ । जसरी भिँगाले अलिकति समयमा नै मनग्गे रूपमा आफ्नो सङ्ख्या विस्तार गर्दछ, उसै गरी तिमीहरू पनि आफ्नो वंश विस्तार गर । तिमीहरू यस गोठमा बाछाले सम्पन्न भएर हामी साधकहरूलाई माया गर । हामीलाई छोडेर कहिल्यै अन्त नजाओ ।

**शिवो वो गोष्ठो भवतु शारिशावेव पुष्यत । इहैवोत प्र जायध्वं मया वः सं सृजामसि ॥५॥**

हे गाईहरू हो ! यो गोठ तिमीहरूका लागि कल्याणकारी होस् । शारिशाक नामको प्राणीजस्तो परिवारलाई असीमित रूपमा विस्तार गर्दै समृद्ध होऊ र यहाँ रहेर पुत्रपौत्रादि उत्पन्न गर । हामी तिमीहरूको स्याहार गर्दछौं ।

**मया गावो गोपतिना सचध्वमयं वो गोष्ठ इह पोषयिष्णुः । रायस्पोषेण बहुला भवन्तीर्जीवा जीवन्तीरुप वः सदेम ॥६॥**

हे गाईहरू हो ! मजस्ता गाईधनीका साथमा सँगै बस्ने गर । यस गोठले तिमीहरूलाई पोषण गरोस् । धेरै सङ्ख्यामा बढ्दै तिमीहरू चिरकालसम्म जीवित रहन सक । तिमीहरूसँगै हामीले पनि दीर्घायु प्राप्त गरौं ।

## १५. वाणिज्य सूक्त

**ऋषि**—अथर्वा । **देवता**— विश्वदेवा, इन्द्राग्नी, इन्द्र, पथ, अग्नि, प्रपण, विक्रय, देवगण, धन, प्रजापति, सविता, सोम धनरुचि, वैश्वानर, जातवेदा । **छन्द**— त्रिष्टुप्, भुरिक् त्रिष्टुप, त्र्यवसाना षट्पदा बृहतीगर्भा विराट्अतयष्टि, विराट् जगती, अनुष्टुप्, निचृत् त्रिष्टुप् ।

**इन्द्रमहं वणिजं चोदयामि स न ऐतु पुरएता नो अस्तु । नुदन्नरातिं परिपन्थिनं मृगं स ईशानो धनदा अस्तु मह्यम् ॥१॥**

हामी व्यवसायमा कुशल होऔं र इन्द्रदेवतालाई प्रेरित गरौं । उनी हाम्रा अगुवा होऊन् । हाम्रो जीवनपथका अवरोध, दुःख दिने व्यक्तिहरू र भूमिमा चर्ने जुनसुकै दुःखदायीलाई विनाश गर्दै उनले हामीलाई ऐश्वर्य प्रदान गरिरहून् ।

**ये पन्थानो बहवो देवयाना अन्तरा द्यावापृथिवी संचरन्ति । ते मा जुषन्तां पयसा घृतेन यथा क्रीत्वा धनमाहराणि ॥२॥**

द्यावापृथिवीका बीचमा रहेको देवताहरूको अनुरूप मार्गहरू सबै नै घिउ र दुधले युक्त भएर सन्तुष्टिदायक होऊन् । त्यही व्यापार गरेर हामी प्रचुर धनऐश्वर्य प्राप्त गर्न सकौं ।

**इध्मेनाग्न इच्छमानो घृतेन जुहोमि हव्यं तरसे बलाय । यावदीशे ब्रह्मणा वन्दमान इमां धियं शतसेयाय देवीम् ॥३॥**

हे इन्द्ररूपी अग्नि ! सङ्कटबाट जोगिनका लागि र बल प्राप्त गर्ने कामनाले हामी इन्धन र घिउसहितको हव्य प्रदान गर्दछौं । हामी ब्रह्माले प्रदान गर्ने दिव्य बुद्धि प्राप्त गर्ने सिद्धि प्राप्त नगरून्जेल सयौं वर्षसम्म पनि प्रदान गरिरहन्छौं ।

**इमामग्ने शरणिं मीमृषो नो यमध्वानमगाम दूरम् । शुनं नो अस्तु प्रपणो विक्रयश्च प्रतिपणः फलिनं मा कृणोतु । इदं हव्यं संविदानौ जुषेथां शुनं नो अस्तु चरितमुत्थितं च ॥४॥**

हे अग्निदेवता ! हामीबाट भएका त्रुटिहरूका लागि हामी क्षमा माग्दछौं । हामी टाढादेखि जुन मार्गबाट आएका छौं, त्यसमा वस्तुको क्रयविक्रय गर्नाले हामीलाई शुभ होस् । हाम्रो जुनसुकै व्यवहार हामीलाई लाभ दिने किसिमको होस् । हामीले समर्पण गरेको हवि तिमी स्वीकार गर । तिम्रो कृपाले हाम्रो आचरण उन्नति र सुख प्रदान गर्ने खालको होस् ।

**येन धनेन प्रपणं चरामि धनेन देवा धनमिच्छमानः । तन्मे भूयो भवतु मा कनीयोऽग्ने सातघ्नो देवान् हविषा नि षेध ॥५॥**

हे देवताहरू हो ! तिमीलाई लाभमा बाधा पार्ने देवताहरूलाई यसै आहुतिले सन्तुष्ट गराएर फिर्ता

गराओ । हे देवताहरू हो ! लाभको कामना गर्दै हामी जुन धनको व्यापार गर्दछौँ, तिमीहरूका कृपाले त्यो धन कहिल्यै नघटोस्, सधैँ बढिरहोस् ।

**येन धनेन प्रपणं चरामि धनेन देवा धनमिच्छमानः । तस्मिन् म इन्द्रो रुचिमा दधातु प्रजापतिः सविता सोमो अग्निः ॥६॥**

धनबाटै धन प्राप्त गर्ने कामना गर्दै हामी जुन धनले व्यापार गर्न खोज्छौँ, त्यसमा इन्द्रदेवता, सवितादेवता, प्रजापतिदेवता, सोमदेवता र अग्निदेवताले हाम्रो रुचि बढाइदिऊन् ।

**उप त्वा नमसा वयं होतर्वैश्वानर स्तुमः । स नः प्रजास्वात्मसु गोषु प्राणेषु जागृहि ॥७॥**

होताका रूपमा रहेका हे वैश्वानर अग्निदेवता ! हामी हवि समर्पित गर्दै तिमीलाई प्रार्थना गर्दछौँ । तिमी हाम्रो आत्मा, प्राण र गाईको सुरक्षा गर्नका लागि जागरूक होऊ ।

**विश्वाहा ते सदमिद्भरेमाश्वायेव तिष्ठते जातवेदः । रायस्पोषेण समिषा मदन्तो मा ते अग्ने प्रतिवेशा रिषाम ॥८॥**

हे जातवेदा अग्निदेवता ! आफ्ना थलामा बाँधिएको घोडालाई जसरी अन्न प्रदान गरिन्छ, हामी उसरी नै तिमीलाई प्रत्येक दिन हवि प्रदान गर्दछौँ । तिम्रो सम्पर्कमा रहँदै र सेवा गर्दै हामी धनधान्यले समृद्ध होऔँ; हामीलाई कहिल्यै कष्ट नहोस् ।

## १६. कल्याणार्थप्रार्थना सूक्त

**ऋषि**—अथर्वा । **देवता**— अग्नि, इन्द्र, मित्रावरुण, अश्विनीकुमार, भग, पूषा, ब्रह्मणस्पति, सोम, रुद्र, गभ, आदित्य, दधिक्रावा, अश्वसमूह, उषा । **छन्द**— त्रिष्टुप्, आर्षी जगती, भुरिक् पङ्क्ति ।

**प्रातरग्निं प्रातरिन्द्रं हवामहे प्रातर्मित्रावरुणा प्रातरश्विना । प्रातर्भगं पूषणं ब्रह्मणस्पतिं प्रातः सोममुत रुद्रं हवामहे ॥१॥**

प्रातःकालमा हामी अग्निदेवतालाई आह्वान गर्दछौँ । प्रातःकालमा नै इन्द्रदेवता, मित्रावरुण, अश्विनीकुमारहरू, भग, पूषा, ब्रह्मणस्पति, सोम र रुद्रदेवतालाई आह्वान गर्दछौँ ।

**प्रातर्जितं भगमुग्रं हवामहे वयं पुत्रमदितेर्यो विधर्ता । आध्रश्चिद् यं मनयमानस्तुरश्चिद् राजा चिद् यं भगं भक्षीत्याह ॥२॥**

भगदेवता संसारलाई धारण गर्ने, उग्र वीर र विजयशील छन् । उनी अदितिका पुत्र हुन् र उनको स्तुति गर्नाले दरिद्रलाई धन प्राप्त हुन्छ । राजाले पनि उनैसँग धनको याचना गर्दछन्, हामी उनै भगदेवतालाई प्रातःकालमा आह्वान गर्दछौँ ।

**भग प्रणेतर्भग सत्यराधो भगेमां धियमुदवा ददन्नः । भग प्र णो जनय गोभिरश्वैर्भग प्र नृभिर्नृवन्तः स्याम ॥३॥**

हे भगदेवता ! तिमी वास्तवमा धन नै हौ । शाश्वत सत्य नै धन हो । हे भगदेवता ! हाम्रो स्तुतिबाट तिमी प्रसन्न भएर इच्छित धन प्रदान गर । हे देवता ! हामीलाई गाई, घोडा, पुत्र आदि प्रदान गरेर मानवसमाजमा श्रेष्ठ बनाऊ ।

**उतेदानीं भगवन्तः स्यामोत प्रपित्व उत मध्ये अह्नाम् । उतोदितौ मघवन्त्सूर्यस्य वयं देवानां सुमतौ स्याम ॥४॥**

हे देवता ! तिम्रो कृपाले हामी भाग्यवान् बनौँ । दिनको आरम्भमा र मध्य दिनमा पनि हामी भाग्यवान् नै होऔँ । हे धनवान् भगदेवता ! हामी सूर्योदयका समयमा समस्त देवताहरूको अनुग्रह प्राप्त गरौँ ।

**भग एव भगवाँ अस्तु देवस्तेना वयं भगवन्तः स्याम । तं त्वा भग सर्व इज्जोहवीमि स नो भग पुरएता भवेह ॥५॥**

भगदेवता नै समृद्ध होऊन् । उनीबाट हामी ऐश्वर्ययुक्त बनौँ । हे भगदेवता ! यस्ता तिमीलाई हामी बारम्बार स्मरण गर्दछौँ, तिमी नै हाम्रो अगुवा बन ।

**समध्वरायोषसो नमन्त दधिक्रावेव शुचये पदाय । अर्वाचीनं वसुविदं भगं मे रथमिवाश्वा वाजिन आ वहन्तु ॥६॥**

उषाहरू यज्ञका लागि उचित किसिमले उन्मुख होओ । जब अश्वले रथ हिँडाउँछ, त्यस बेला हामीलाई पवित्र पद प्रदान गर्नका लागि दधिक्रा नामका धारण गर्ने देवताको जस्तै नयाँ शक्तिशाली, धनका विषयमा जान्ने भगदेवतालाई लिएर आओ ।

**अश्वावतीर्गोमतीर्न उषासो वीरवतीः सदमुच्छन्तु भद्राः । घृतं दुहाना विश्वतः प्रपीता यूयं पात स्वस्तिभिः सदा नः ॥७॥**

सबै खालका गुणले युक्त अश्व, गाई, वीरहरूसहितको, घिउले सेचन गर्ने कल्याणकारी उषाले हाम्रो घरलाई प्रकाशित गरून् । हामीलाई सधैँ पालनपोषण गर्दै तिमीले कल्याण गर ।

## १७. कृषि सूक्त

**ऋषि**–विश्वामित्र । **देवता**– सीता । **छन्द**– त्रिष्टुप्, आर्षी गायत्री, पथ्यापङ्क्ति, अनुष्टुप्, विराट् पुर उष्णिक्, निचृत् अनुष्टुप् ।

**सीरा युञ्जन्ति कवयो युगा वि तन्वते पृथक् । धीरा देवेषु सुम्नयौ ॥१॥**

दूरदर्शी, धीर कविहरू कृषिमा देवताहरूलाई प्रसन्न गराउनका लागि हलो जोत्नेजस्ता कठिन कामको चाँजो मिलाउँछन् र जुवारूपी युगको विशेषतालाई विस्तृत गराउँछन् ।

**युनक्त सीरा वि युगा तनोत कृते योनौ वपतेह बीजम् । विराजः श्नुष्टिः सभरा असन्नो नेदीय इत् सृण्यः पक्वमा यवन् ॥२॥**

हे कृषकहरू हो ! हलो प्रयोग गर, जुवा वा युगको विस्तार गर । यस किसिमले तयार गरिएका उत्पादनशील क्षेत्रमा बीज छर्ने कामहरू गर । हाम्रा लागि मनग्गे उब्जनी होस् । त्यो परिपक्व भएपछि काट्ने उपकरणका माध्यमबाट हाम्रा निकट आऊन् ।

**लाङ्गलं पवीरवत् सुशीमं सोमसत्सरु । उदिद् वपतु गामविं प्रस्थावद् रथवाहनं पीबरीं च प्रफर्व्यम् ॥३॥**

वज्रझैँ कडा, गतिलो फालीले युक्त, सजिलोसित चल्ने हलोलाई गोप्य वा सुरक्षित तरिकाले चलाएर त्यसबाट हामीलाई सोमरूपी दिव्य अन्नका रूपमा परिपुष्ट गाई, भूमि, इन्द्रिय शक्ति, रक्षण सामर्थ्य, भेडा आदिका साथै रथलाई लिएर चाँडो कुद्ने अश्वशक्तिका र नारीरूपी चेतन शक्ति प्राप्त हुनेछ ।

**इन्द्रः सीतां नि गृह्णातु तां पूषाभि रक्षतु । सा नः पयस्वती दुहामुत्तरामुत्तरां समाम् ॥४॥**

इन्द्रदेवताले कृषियोग्य भूमिको व्यवस्थापन गरून् । पूषादेवताले त्यसको रेखदेख गरून् । त्यसपछि त्यो धर्ती उचित किसिमको खाद्यान्न र जलले परिपूर्ण भएर हाम्रा निम्ति अनेकौँ पोषणहरूको दोहन गर्ने बनोस् ।

**शुनं सुफाला वि तुदन्तु भूमिं शुनं कीनाशा अनु यन्तु वाहान् । शुनासीरा हविषा तोशमाना सुपिप्पला ओषधीः कर्तमस्मै ॥५॥**

हलोका टुँडोमा जडिएको फलामको गतिलो किसिमको फालीले खेतलाई राम्ररी जोतोस् र किसानहरू गोरुका पछि लागेर सजिलोसित हिँडून् । हे वायु र सूर्यदेवता ! तिमीहरू दुवै हविष्यले प्रसन्न भएर पृथ्वीलाई जलले सेचन गर र यी औषधिहरूलाई राम्रा फलले सम्पन्न बनाओ ।

**शुन वाहाः शुन नरः शुनं कृषतु लाङ्गलम् । शुनं वरत्रा बध्यन्तां शुनमष्ट्रामुदिङ्गय ॥६॥**

किसानहरू खुसी हुँदै खेत जोतून् । गोरुले उनलाई दुःख नदिई सुविधा दिऊन् र सुखपूर्वक कृषिको काम चलोस् । डोरीहरू सजिलोसितले बाँधिऊन् । हे शुन नामका देवता ! तिमी सजिलोका लागि मात्रै चाबुक चलाऊ ।

**शुनासीरेह स्म मे जुषेथाम् । यद् दिवि चक्रथुः पयस्तेनेमामुप सिञ्चतम् ॥७॥**

हे वायु र सूर्यदेवता ! तिमीहरू हाम्रो हवि सेवन गर । आकाशमा निवास गर्ने जलका देवताले

वर्षा गराएर यस भूमिलाई सेचन गरून् ।

**सीते वन्दामहे त्वार्वाची सुभगे भव यथा नः सुमना असो यथा नः सुफला भुवः ॥८॥**

हे हलाको सियोले जोतिएका भूमि ! तिमीलाई हामी प्रणाम गर्दछौं । हे ऐश्वर्यशालिनी भूमि हाम्रा लागि तिमी श्रेष्ठ मनकारी होऊ र श्रेष्ठ किसिमको फल प्रदान गर्ने भएर हाम्रे अनुकूल भइराख ।

**घृतेन सीता मधुना समक्ता विश्वैर्देवैरनुमता मरुद्भिः । सा नः सीते पयसाभ्याव-वृत्स्वोर्जस्वती घृतवत् पिन्वमाना ॥९॥**

घिउ र महले सेचन भएका हे हलाको सियोले जोतिएका भूमि ! तिमी देवताहरू र मरुत्हरूबाट स्वीकृत होऊ र घिउले सेचन भएझैं नै पोषक रसका साथमा हामीतर्फ उन्मुख होऊ ।

## १८. वनस्पति सूक्त

**ऋषि**–अथर्वा । **देवता**– वनस्पति, बाणपर्णी ओषधि । **छन्द**– अनुष्टुप्, अनुष्टुप्गर्भाचतुष्पाद् उष्णिक्, उष्णिक्गर्भापथ्यापङ्क्ति ।

**इमां खनाम्योषधिं वीरुधां बलवत्तमाम् । यया सपत्नीं बाधते यया संविन्दते पतिम् ॥१॥**

हामी यस बलशाली औषधिलाई खनेर निकाल्दछौं । यसले सौतेलोजस्तो दुर्बुद्धिलाई बाधा पुऱ्याउँछ र स्वामीलाई असाधारण प्रेम उपलब्ध गराउँछ ।

**उत्तानपर्णे सुभगे देवजूते सहस्वति । सपत्नीं मे परा णुद पतिं मे केवलं कृधि ॥२॥**

माथितिर पात फर्कने खालका हे उत्तानपर्णी नामका औषधि ! तिमी ज्यादै हितकारी र बल प्रदान गर्ने हुनाले तिमीलाई देवताहरूले सेवन गर्दछन् । हामीसित सौतेलो सम्बन्ध राख्नेजस्तो अविद्यालाई तिमी हटाइदेऊ । स्वामीलाई केवल हाम्रै लागि मात्र प्रीतियुक्त बनाइदेऊ ।

**नहि ते नाम जग्राह नो अस्मिन् रमसे पतौ । परामेव परावतं सपत्नीं गमयामसि ॥३॥**

हे सौताका रूपमा रहकी दुर्बुद्धि हामी तिम्रो नाम पनि लिन मन पराउँदैनौं । तिमीले पनि जीवात्मा र परमात्माका रूपमा रहेका पतिको आनन्द अनुभव गर्न पाउनेछैनौ । हामी यस्ता सौतालाई ज्यादै टाढा पुऱ्याउन खोज्दछौं ।

**उत्तराहमुत्तर उत्तरेदुत्तराभ्यः । अधः सपत्नी या ममाधरा साधराभ्यः ॥४॥**

हे अत्यन्त गतिला औषधि ! हामी श्रेष्ठ होऔं, श्रेष्ठहरूमा पनि श्रेष्ठ हुन सकौं । अविद्यारूपी हाम्रो सपत्नी अधम छ, त्यसले अधमभन्दा पनि अधम गति नै पाओस् ।

**अहमस्मि सहमानाथो त्वमसि सासहिः । उभे सहस्वती भूत्वा सपत्नीं मे सहावहै ॥५॥**

हे औषधि हामी तिम्रा सहयोगले सौताजस्तो अविद्यालाई पराजित गर्न रुचाउँछौं । तिमी पनि यस्तो काम गर्नमा समर्थ छौ । हामी दुवै शक्तिले सम्पन्न होऔं र सपत्नीलाई शक्तिहीन पारौं ।

**अभि तेऽधां सहमानामुप तेऽधां सहीयसीम् । मामनु प्र ते मनो वत्सं गौरिव धावतु पथा वारिव धावतु ॥६॥**

हे पतिदेव ! म तिम्रा नजिक, तिम्रै वरिपरि यस विजयदायिनी औषधिलाई स्थापित गर्दछु । यस औषधिका प्रभावले तिम्रो मन हामीतिर उसै किसिमले आकर्षित होस्, जसरी बाछातिर गाईहरू कुदेर आउने गर्दछन् वा ओरालोतिर पानी बग्ने गर्दछ ।

## १९.अजरक्षत्र सूक्त

**ऋषि**–वसिष्ठ । **देवता**– विश्वेदेवा, चन्द्रमा, इन्द्र । **छन्द**– अनुष्टुप्, पथ्याबृहती, भुरिक् बृहती, त्रिष्टुप्, त्र्यवसाना षट्पदा त्रिष्टुप् ककुम्मती गर्भातिजगती, विराट् आस्तार पङ्क्ति, पथ्यापङ्क्ति ।

**संशितं म इदं ब्रह्म संशितं वीर्यं१ बलम् । संशितं क्षत्रमजरमस्तु जिष्णुर्येषामस्मि पुरोहितः ॥१॥**

हामीलाई अघि बढ्ने रहर छ । हाम्रो ब्राह्मणत्व तीक्ष्ण होस् र उच्चारण गरेका मन्त्रहरू ते...

होऊन् । तिनै मन्त्रका प्रभावले हाम्रो बल र पराक्रममा तेजस्विता आओस् । हामी जसका विजयी पुरोहित हौं तिनको क्षत्रियत्व पनि वृद्धि होस् ।

**समहमेषां राष्ट्रं स्यामि समोजो वीर्यं१ बलम् । वृश्चामि शत्रूणां बाहूननेन हविषाहम् ॥२॥**

हामी आहुतिले यस राष्ट्रलाई तेजस्वी र समृद्ध गराउँछौं । हामी यसको बल, पराक्रम र सैन्यशक्तिलाई पनि तेजस्वी बनाउँछौं । त्यसका शत्रुका पाखुरा डुँडा बनाउँछौं र ती पाखुराको सामर्थ्य निमिट्यान्न गराउँछौं ।

**नीचैः पद्यन्तामधरे भवन्तु ये नः सूरिं मघवानं पृतन्यान् । क्षिणामि ब्रह्मणामित्रानुन्नयामि स्वानहम् ॥३॥**

हाम्रा धनले सम्पन्न विद्वान्हरूमाथि जसले सैन्यशक्तिले आक्रमण गर्दछन्, ती शत्रुहरू पतित होऊन् र अधोगतिमा जाऊन् । हामी मन्त्रशक्तिका प्रभावले शत्रुको सेनालाई क्षीण गराएर आफ्ना मानिसहरूको उन्नति गराउँछौं ।

**तीक्ष्णीयांसः परशोरग्नेस्तीक्ष्णतरा उत । इन्द्रस्य वज्रात् तीक्ष्णीयांसो येषामस्मि पुरोहितः ॥४॥**

हामी जसका पुरोहित हौं, तिनीहरू धारिलो फर्साभन्दा तेजस्वी होऊन् र अग्निभन्दा पनि बढी तेजस्वी होऊन् । उनीहरूका हतियार इन्द्रदेवताको वज्रभन्दा पनि बढी प्रभावशाली होऊन् ।

**एषामहमायुधा सं स्याम्येषां राष्ट्रं सुवीरं वर्धयामि । एषां क्षत्रमजरमस्तु जिष्ण्वेश्षां चित्तं विश्वेऽवन्तु देवाः ॥५॥**

हामी आफ्नो राष्ट्रलाई श्रेष्ठ वीरहरूले सम्पन्न बनाएर समृद्ध गराउँछौं । यिनीहरूको अस्त्र तेजस्वी बनाउँछौं । क्षत्रिय बल क्षयरहित र विजयशील होस् । समस्त देवताहरूले यिनको मनोबल र उत्साह बढाऊन् ।

**उद्धर्षन्तां मघवन् वाजिनान्युद् वीराणां जयतामेतु घोषः । पृथग् घोषा उलुलयः घोषा केतुमन्त उदीरताम् । देवा इन्द्रज्येष्ठा मरुतो यन्तु सेनया ॥६॥**

हे ऐश्वर्यसम्पन्न इन्द्रदेवता ! हाम्रो बलशाली दलको उत्साह बढोस् र विजयी वीरहरूले सिंहनाद गरून् । झन्डा लिएर आक्रमण गर्ने वीरहरूको जयघोष चारैतिर होस् र फैलियोस् । इन्द्रदेवताको नेतृत्वमा मरुत्गण हाम्रो सेनाका साथमा हिंडून् ।

**प्रेता जयता नर उग्रा वः सन्तु बाहवः । तीक्ष्णेषवोऽबलधन्वनो हतोग्रायुधा अबलानुग्रबाहवः ॥७॥**

हे वीरहरू हो ! युद्धभूमितर्फ अघि सर । तिमीहरूका बलिया पाखुराले शत्रुसेनातर्फ तीक्ष्ण आयुध प्रहार गरून् । शक्तिशाली आयुध धारण गर्नाले बलशाली भएका भुजाहरूले तिमीहरू बलहीन आयुध लिएका कमजोर शत्रुलाई नष्ट गराओ । युद्धमा तिमीहरूको सहायताका लागि मरुत्गण सँगै रहून् । देवताहरूका कृपाले तिमीहरू युद्धमा विजयी होओ ।

**अवसृष्ट्या परा पत शरव्ये ब्रह्मसंशिते । जयामित्रान् प्र पद्यस्व जह्येषां वरंवरं मामीषां मोचि कश्चन ॥८॥**

हे बाण ! मन्त्रको प्रयोगले तीक्ष्ण गराइएका तिमी हाम्रा धनुषबाट छोडिंदाखेरि शत्रुका सेनालाई विनाश गर । शत्रुको सेनामा प्रवेश गरेर उनीहरूमा रहेका श्रेष्ठतम वीर, हात्ती, घोडा आदिलाई नष्ट गराओ । परै बसेका भए पनि शत्रुका कुनै पनि वीर जोगिन नपाऊन् ।

## २० . रयिसंवर्धन सूक्त

**ऋषि**—वसिष्ठ । **देवता**— अग्नि, अर्यमा, भग, बृहस्पति, देवी, सोम, आदित्य, विष्णु, ब्रह्मा, इन्द्रवायु, इन्द्र, वात, सरस्वती, सविता, वाजी, विश्वाभुवनानि, पञ्च प्रदिश, वायु,

त्वष्टा । **छन्द–** अनुष्टुप्, पथ्यापङ्क्ति, विराट् जगती ।

**अयं ते योनिॠर्त्वियो यतो जातो अरोचथाः । तं जानन्नग्न आ रोहाधा नो वर्धया *रयिम्* ॥१॥**

हे अग्निदेवता ! यो अरणी या यज्ञवेदी नै तिम्रा उत्पत्तिको कारण हो । यसैका कारणले तिमी प्रकट भएर शोभायमान भएका छौ । आफ्नो त्यो मूल थलोलाई चिनेर तिमी त्यसैमा प्रतिष्ठित होऊ र हाम्रो धनवैभव बढाऊ ।

**अग्ने अच्छा वदेह नः प्रत्यङ् नः सुमना भव । प्र णो यच्छ विशां पते धनदा असि नस्त्वम् ॥२॥**

हे अग्निदेवता ! हामीप्रति तिमी श्रेष्ठ भाव राखेर यस यज्ञमा उपस्थित होऊ र हाम्रा लागि हितकारी शिक्षा प्रदान गर । हे प्रजापालक अग्निदेवता ! तिमी ऐश्वर्यप्रदाता हौ, त्यसैले हामीलाई पनि धनधान्यले परिपूर्ण गराऊ ।

**प्र णो यच्छत्वर्यमा प्र भगः प्र बृहस्पतिः । प्र देवीः प्रोत सूनृता रयिं देवी दधातु मे ॥३॥**

अर्यमा, भग र बृहस्पतिदेवताले हामीलाई ऐश्वर्यद्वारा परिपूर्ण गराऊन् । समस्त देवताहरू र वाणीकी अधिष्ठात्री, सत्यप्रिय देवी सरस्वतीले हामीलाई परिपूर्ण हुने गरी सम्पदा प्रदान गरून् ।

**सोमं राजानमवसेऽग्निं गीर्भिर्हवामहे । आदित्यं विष्णुं सूर्यं ब्रह्माणं च बृहस्पतिम् ॥४॥**

हामी आफूलाई संरक्षण र पालन गर्ने राजा सोम, अग्निदेवता, आदित्यगण, विष्णुदेवता, सूर्यदेवता, प्रजापति ब्रह्मा र बृहस्पतिदेवतालाई स्तोत्रले आमन्त्रित गरेका छौँ ।

**त्वं नो अग्ने अग्निभिर्ब्रह्म यज्ञं च वर्धय । त्वं नो देव दातवे रयिं दानाय चोदय ॥५॥**

हे अग्निदेवता ! तिमी अन्य सबै अग्निहरूका साथमा आएर हाम्रो स्तोत्र एवं यज्ञको अभिवृद्धि गर । तिमी धनवैभव प्रदान गर्नका लागि यजमान एवं दाताहरूलाई पनि प्रेरित गर ।

**इन्द्रवायू उभाविह सुहवेह हवामहे । यथा नः सर्व इज्जनः संगत्यां सुमना असद् दानकामश्च नो भुवत् ॥६॥**

हे प्रशंसनीय इन्द्रदेवता र वायुदेवता ! दुवैलाई हामी यस यज्ञीय कर्ममा आदरपूर्वक आमन्त्रित गर्दछौँ । सबै देवताहरू हामीप्रति अनुकूल विचार राख्दै हर्षित होऊन् । सबै मानिसहरू दानका भावनाले अभिप्रेरित होऊन् भनेर नै हामी तिमीहरूलाई आह्वान गर्दछौँ ।

**अर्यमणं बृहस्पतिमिन्द्रं दानाय चोदय । वातं विष्णुं सरस्वतीं सवितारं च वाजिनम् ॥७॥**

हे स्तोताहरू हो ! तिमीहरू जब अर्यमा, बृहस्पति, इन्द्र, वायु, विष्णु, सरस्वती, अन्न र बलप्रदायक सवितादेवतालाई आह्वान गर । सबै देवताहरू हामीलाई ऐश्वर्य प्रदान गर्नका लागि आऊन् ।

**वाजस्य नु प्रसवे सं बभूविमेमा च विश्वा भुवनान्यन्तः । उतादित्सन्तं दापयतु प्रजानन् रयिं च नः सर्ववीरं नि यच्छ ॥८॥**

अन्नको उत्पत्तिका कारणका रूपमा रहेको कर्मलाई हामी चाँडै प्राप्त गरौँ । वर्षाले अन्न उत्पन्न गराउने वाज प्रसवदेवताका मध्यमा सबै खालका देखिने जीवहरू निवास गर्दछन् । यिनले कृपण व्यक्तिहरूलाई दान दिनका लागि प्रेरित गरून् र हामीलाई वीर पुत्रले युक्त महान् ऐश्वर्य प्रदान गरून् ।

**दुह्रां मे पञ्च प्रदिशो दुह्रामुर्वीर्यथाबलम् । प्रापेयं सर्वा आकूतीर्मनसा हृदयेन च ॥९॥**

यो विस्तृत धर्ती र पाँचै वटा महादिशाहरूले हामीलाई खोजेको जस्तै फल प्रदान गरून् । यिनीहरूका अनुग्रहले हामी आफ्ना मन र अन्तःकरणका समस्त सङ्कल्प पूरा गर्न सकौँ ।

**गोसनिं वाचमुदेयं वर्चसा माभ्युदिहि । आ रुन्धां सर्वतो वायुस्त्वष्टा पोषं दधातु मे ॥१०॥**

गाई आदि समस्त प्रकारका ऐश्वर्य प्रदान गर्ने वाणीलाई हामी उच्चारण गर्दछौँ । हे वाणीदेवता ! तिमी आफ्नो तेजले हामीलाई प्रकाशित गर । वायुदेवताले सबै तिरबाट आएर हामीलाई आवृत्त

गरून् र त्वष्टादेवताले हाम्रो शरीर पुष्ट गराऊन् ।

## २१. शान्ति सूक्त

**ऋषि**–वसिष्ठ । **देवता**– अग्नि । **छन्द**– भुरिक् त्रिष्टुप्, पुरोऽनुष्टुप, त्रिष्टुप्, जगती, उपरिष्टात् विराट् बृहती, विराट्गर्भा त्रिष्टुप्, निचृत् अनुष्टुप्, अनुष्टुप् ।

**ये अग्नयो अप्स्वन्तर्ये वृत्रे ये पुरुषे ये अश्मसु । य आविवेशौषधीर्यो वनस्पतींस्तेभ्यो अग्निभ्यो हुतमस्त्वेतत् ॥१॥**

मेघ, मानिस, मणि, औषधि, वृक्षवनस्पति र जलमा जुनजुन अग्नि विद्यमान छन् ती सबै अग्निलाई यो हवि प्राप्त होस् ।

**यः सोमे अन्तर्यो गोष्वन्तर्य आविष्टो वयःसु यो मृगेषु । य आविवेश द्विपदो यश्चतुष्पदस्तेभ्यो अग्निभ्यो हुतमस्त्वेतत् ॥२॥**

जुन अग्नि सोमलता, गाई, पक्षी, हरिण, दुई खुट्टे र चार खुट्टे प्राणीभित्र विद्यमान छन्, ती सबै अग्निका लागि यो हवि प्राप्त होस् ।

**य इन्द्रेण सरथं याति देवो वैश्वानर उत विश्वदाव्यः । यं जोहवीमि पृतनासु सासहिं तेभ्यो अग्निभ्यो हुतमस्त्वेतत् ॥३॥**

जुन अग्निदेवता इन्द्रका साथमा एकै रथमा आरूढ भएर गमन गर्दछन्, जो सबैलाई जलाउने दावाग्निका रूपमा रहेका छन्, जो सबैका हितकारी छन् र युद्धमा विजय प्रदान गर्दछन्, उनै अग्निदेवतालाई यो आहुति प्राप्त होस् ।

**यो देवो विश्वाद् यमु काममाहुर्यं दातारं प्रतिगृह्णन्तमाहुः । यो धीरः शक्रः परिभूरदाभ्यस्तेभ्यो अग्निभ्यो हुतमस्त्वेतत् ॥४॥**

जुन अग्निदेवता समस्त विश्वका भक्षक हुन्, जसले इच्छा लागेको फल प्रदान गर्दछन् भन्ने विश्वास गरिन्छ, जसलाई दिने र ग्रहण गर्ने भनिन्छ, जो विवेकवान्, शत्रुलाई दमन गर्ने र स्वयं कसैका दमनमा नपर्ने खालका छन् भनिएको छ, उनै अग्निदेवतालाई यो आहुति प्राप्त होस् ।

**यं त्वा होतारं मनसाभि संविदुस्त्रयोदश भौवनां पञ्च मानवाः । वर्चोधसे यशसे सूनृतावते तेभ्यो अग्निभ्यो हुतमस्त्वेतत् ॥५॥**

हे अग्निदेवता ! तेह्र **भौवन** अथवा वर्षका तेह्र महिनाहरू पाँच ऋतुहरू अथवा भुवन ऋषिका विश्वकर्मा आदि तेह्र पुत्रहरू र पाँचै वर्णका मानिसहरूले तिमीलाई मनैदेखि यज्ञ सम्पादक भन्ने गर्दछन् । हे वर्चस्वी, सत्यभाषी र कीर्तिवान् अग्निदेवता ! यो आहुति तिमीलाई प्राप्त होस् ।

**उक्षान्नाय वशान्नाय सोमपृष्ठाय वेधसे । वैश्वानरज्येष्ठेभ्यस्तेभ्यो अग्निभ्यो हुतमस्त्वेतत् ॥६॥**

जसले गाईगोरुलाई अन्न प्रदान गर्दछन् र जो आफूमाथि सोम आदि औषधिहरूलाई धारण गर्दछन्, उनै विद्वान् तथा समस्त मानिसका कल्याणकारी महान् अग्निदेवतालाई यो हवि प्राप्त होस् ।

**दिवं पृथिवीमन्वन्तरिक्षं ये विद्युतमनुसंचरन्ति । ये दिक्ष्वन्तर्ये वाते अन्तस्तेभ्यो अग्निभ्यो हुतमस्त्वेतत् ॥७॥**

जुन अग्नि द्युलोक, पृथ्वीलोक र अन्तरिक्षमा व्याप्त छन्; जो विद्युत्का रूपमा सर्वत्र विचरण गर्दछन्, जो सबै दिशाहरूमा र वायुभित्र प्रवेश गरेर विचरण गर्दछन्, उनै अग्निलाई यो हवि प्राप्त होस् ।

**हिरण्यपाणिं सवितारमिन्द्रं बृहस्पतिं वरुणं मित्रमग्निम् । विश्वान् देवानङ्गिरसो हवामह इमं क्रव्यादं शमयन्त्वग्निम् ॥८॥**

स्तोताहरूमाथि दानका सहयोगको वर्षा गराउने, सुनौला किरण भएका, सर्वप्रेरक सवितादेवता, इन्द्रदेवता, मित्रावरुणदेवता, अग्निदेवता र विश्वेदेवताहरूलाई हामी अङ्गिराका वंशज ऋषिहरू आह्वान गर्दछौँ । ती सबै देवताहरूले मांस भक्षण गर्ने क्रव्याद अग्निलाई शान्त गराऊन् ।

**शान्तो अग्निः क्रव्याच्छान्तः पुरुषरेषणः । अथो यो विश्वदाव्य१स्तं क्रव्यादमशीशमम् ॥९॥**

देवताहरूका कृपाले मांस भक्षण गर्ने क्रव्याद अग्निदेवता शान्त भएका छन् । मानिसलाई हिंसित गर्ने अग्निदेवता पनि शान्त होऊन् । सबैलाई जलाउने, मांसभोजी अग्निदेवतालाई हामीले शान्त गराएका छौँ ।

**ये पर्वताः सोमपृष्ठा आप उत्तानशीवरीः । वातः पर्जन्य आदग्निस्ते क्रव्यादमशीशमन् ॥१०॥**

योग आदिलाई धारण गर्ने पर्वतहरू, जो माथितर्फ नै गमन गर्दछन्, तिनीहरू र वायु, मेघ आदि सबैले यी मांसभक्षक अग्निदेवतालाई शान्त गराएका हुन्छन् ।

## २२. वर्चः प्राप्ति सूक्त

**ऋषि**—वसिष्ठ । **देवता**— बृहस्पति, विश्वेदेवा, वर्चस् । **छन्द**— अनुष्टुप्, विराट् त्रिष्टुप्, पञ्चपदा परानुष्टुप् विराट् अतिजगती, त्र्यवसाना षट्पदा जगती ।

**हस्तिवर्चसं प्रथतां बृहद् यशो अदित्या यत् तन्वः संबभूव । तत् सर्वे समदुर्मह्यमेतद् विश्वे देवा अदितिः सजोषाः ॥१॥**

हात्तीको जस्तै तेजिलो शक्ति हामीलाई प्राप्त होस् । देवमाता अदितिका शरीरबाट उत्पन्न भएको तेज नै सबै देवताहरू र देवमाता अदितिले हामीलाई प्रसन्नतापूर्वक प्रदान गरून् ।

**मित्रश्च वरुणश्चेन्द्रो रुद्रश्च चेततु । देवासो विश्वधायसस्ते माञ्जन्तु वर्चसा ॥२॥**

मित्रावरुण, इन्द्र तथा रुद्रदेवताले हामीलाई उत्साह प्रदान गरून् । विश्वलाई धारण गरेका सूर्य, इन्द्र आदि देवताले आफ्नो तेजद्वारा हामीलाई सुसमृद्ध गराऊन् ।

**येन हस्ती वर्चसा संबभूव येन राजा मनुष्येष्वप्स्व१न्तः । येन देवा देवतामग्र आयन् तेन मामद्य वर्चसाग्ने वर्चस्विनं कृणु ॥३॥**

जुन तेजले हात्ती बलियो भएको हुन्छ, मानिसहरूमा राजा तेजस्वी भएका हुन्छन्, जलचर प्राणीहरू शक्तिसम्पन्न हुन्छन् र जसका कारण देवताहरूले सर्वप्रथम देवत्व प्राप्त गरेका थिए, उसै तेजद्वारा हामीलाई तिमी तेजस्वी र पराक्रमी बनाऊ ।

**यत् ते वर्चो जातवेदो बृहद् भवत्याहुतेः । यावत् सूर्यस्य वर्च आसुरस्य च हस्तिनः । तावन्मे अश्विना वर्च आ धत्तां पुष्करस्रजा ॥४॥**

उत्पन्न भएका प्राणीहरूका विषयमा जान्ने र हविद्वारा आह्वान गरिने हे अग्निदेवता ! तिमीभित्र र सूर्यभित्र जुन प्रखर तेज रहेको छ, त्यस तेजलाई कमल फूलको माला धारण गर्ने अश्विनीकुमारले हामीभित्र स्थापित गराऊन् ।

**यावच्चतस्रः प्रदिशश्चक्षुर्यावत् समश्नुते । तावत् समैत्विन्द्रियं मयि तद्धस्तिवर्चसम् ॥५॥**

चार दिशाहरूले जति ठाउँलाई ओगटेका हुन्छन् र नक्षत्रमण्डलले जति ठाउँ देख्न सकेको हुन्छ, परम ऐश्वर्यसम्पन्न इन्द्रदेवताको उति नै ठूलो चिह्न हामीलाई प्राप्त होस् र हात्तीको जस्तै पराक्रम पनि हामीलाई नै प्राप्त होस् ।

**हस्ती मृगाणां सुषदामतिष्ठावान् बभूव हि । तस्य भगेन वर्चसाऽभि षिञ्चामि मामहम् ॥६॥**

वनमा चर्ने मृग आदि पशुहरूमा हात्तीले विशेष प्रतिष्ठा जसरी पाएको हुन्छ, उसै गरी श्रेष्ठतम तेज र ऐश्वर्यद्वारा हामी आफैँले आफूलाई अभिषिक्त गर्दछौँ ।

## २३. वीरप्रसूति सूक्त

**ऋषि**—ब्रह्मा । **देवता**— चन्द्रमा, योनि । **छन्द**— अनुष्टुप्, उपरिष्टात् भुरिक् बृहती, स्कन्धोग्रीवी बृहती ।

**येन वेहद् बभूविथ नाशयामसि तत् त्वत् । इदं तदन्यत्र त्वदप दूरे नि दध्मसि ॥१॥**

हे स्त्री ! जुन पाप वा पापबाट उत्पन्न रोगका कारण तिमी बाँझी भएकी छ्यौ, त्यस रोगलाई

तिमीबाट हामी छुटाइदिन्छौँ । यस्तो रोग फेरि उत्पन्न नहोस् भनेर यसलाई तिमीदेखि पर पर्याँकिदिन्छौँ ।

**आ ते योनिं गर्भ एतु पुमान् बाण इवेषुधिम् । आ वीरोऽत्र आयतां पुत्रस्ते दशमास्यः ॥२॥**

हे स्त्री ! जसरी ठोक्रामा सजिलैसित बाण प्रवेश गर्दछ, उसै गरी पुरुषत्वले तिम्रा गर्भाशयमा गर्भ स्थापित गराउँछौँ । तिम्रो त्यो गर्भ दस महिनासम्म गर्भाशयमा रहेपछि वीर पुत्रका रूपमा उत्पन्न होस् ।

**पुमांसं पुत्रं जनय तं पुमाननु जायताम् । भवासि पुत्राणां माता जातानां जनयाश्च यान् ॥३॥**

हे स्त्री ! तिमी पुरुषका लक्षणले युक्त पुत्र उत्पन्न गर र त्यसभन्दा पछि पनि पुत्र नै उत्पन्न भइरहून् । जुन पुत्र तिमीले जन्मायौ वा यसपछि जन्माउँछ्यौ, ती सबै पुत्रकी माता तिमी हौ ।

**यानि भद्राणि बीजान्यृषभा जनयन्ति च । तैस्त्वं पुत्रं विन्दस्व सा प्रसूर्धेनुका भव ॥४॥**

हे स्त्री ! जुन अमोघ वीर्यले साँढेले गाईभित्र गर्भको स्थापना गरेर बाछो उत्पन्न गर्दछ, उस्तै खालको अमोघ वीर्यले तिमी पनि पुत्र उत्पन्न गर । यसरी नै तिमी गाईले झैँ पुत्र जन्माउँदै उन्नति गरिराख ।

**कृणोमि ते प्राजापत्यमा योनिं गर्भ एतु ते । विन्दस्व त्वं पुत्रं नारि यस्तुभ्यं शमसच्छमु तस्मै त्वं भव ॥५॥**

हे स्त्री ! हामी तिम्रा लागि प्रजापतिले निर्धारित गरेको संस्कार पूरा गराउँछौँ । यसैका कारण तिम्रा गर्भाशयमा गर्भको स्थापना होस् । तिमी यस्तो पुत्र उत्पन्न गर, जसले तिमीलाई सुख प्रदान गरोस् र जसलाई तिमीले सुख प्रदान गर ।

**यासां द्यौष्पिता पृथिवी माता समुद्रो मूलं वीरुधां बभूव । तास्त्वा पुत्रविद्याय दैवीः प्रावन्त्वोषधयः ॥६॥**

जुन औषधिका पिता द्युलोक हुन्, माता पृथ्वी हुन् र जसको वृद्धिका मूल कारण समुद्र वा जल हो, ती दिव्य औषधिहरूले पुत्रलाभका लागि तिमीलाई विशेष रूपले रक्षा गरून् ।

## २४. समृद्धिप्राप्ति सूक्त

**ऋषि–**भृगु । **देवता–** वनस्पति, प्रजापति । **छन्द–** अनुष्टुप्, निचृत् पथ्यापङ्क्ति ।

**पयस्वतीरोषधयः पयस्वन्मामकं वचः । अथो पयस्वतीनामा भरेऽहं सहस्रशः ॥१॥**

सबै औषधिहरू नै आआफ्ना रसको सारतत्त्वले परिपूर्ण होऊन् । हाम्रा मन्त्र आदि वचन पनि मधु रसले समन्वित होऊन् र सबैले ग्रहण गर्न योग्य होऊन् । त्यस्ता सारपूर्ण औषधि आदि कुराहरूलाई हामी हजारौँ किसिमले प्राप्त गरौँ ।

**वेदाहं पयस्वन्तं चकार धान्यं बहु । सम्भृत्वा नाम यो देवस्तं वय हवामहे यो यो अयज्वनो गृहे ॥२॥**

औषधिहरूमा रसरूपी जीवनतत्त्वलाई स्थापना गर्ने देवताहरूलाई हामीले राम्रोसित जानेका छौँ । उनीहरू धान्य आदि बढाउने गर्दछन् । यज्ञ नगर्ने जो अयाज्ञिक कृपणहरूका घरमा हुने सम्भृत्वा नामका हराएको खसेको धन बटुल्ने देवतालाई हामी आह्वान गर्दछौँ ।

**इमा याः पञ्च प्रदिशो मानवीः पञ्च कृष्टयः । वृष्टे शापं नदीरिवेह स्फातिं समावहान् ॥३॥**

पूर्व आदि पाँचै दिशाहरू र मन आदिबाट उत्पन्न हुने पाँच वर्णका मानिसहरूले यस स्थानलाई उसै किसिमले समृद्ध गराऊन्, जसरी वर्षाकालमा उर्लेका नदीहरूले पानीलाई एक ठाउँबाट अर्को ठाउँसम्म पुर्‍याएर समृद्ध गर्दछन् ।

**उदुत्सं शतधारं सहस्रधारमक्षितम् । एवास्माकेदं धान्यं सहस्रधारमक्षितम् ॥४॥**

सयौँ वा हजारौँ धारामा बगे पनि जसरी पानीको स्रोत अक्षय बनेर रहन्छ, उसै गरी हाम्रो धनधान्य पनि अनेकौँ धारामा खर्च गरे पनि अक्षय बनेर रहोस् ।

**शतहस्त समाहर सहस्रहस्त सं किर । कृतस्य कार्यस्य चेह स्फातिं समावह ॥५॥**

हे मानिसहरू हो ! तिमीहरू सयौँ हातले सम्पन्न भएर धन कमाओ र हजारौँ हातले सम्पन्न भएर त्यस धनलाई वितरण गर । यसो गरेर नै तिमीहरू आफूले गरेका वा गर्नुपर्ने कामहरूलाई निरन्तर रूपमा वृद्धि गरिराख ।

**तिस्रो मात्रा गन्धर्वाणां चतस्रो गृहपत्न्याः । तासां या स्फातिमत्तमा तया त्वाभि मृशामसि ॥६॥**

गन्धर्वको सुखसमृद्धि जुटाउने आधारका रूपमा तीन कलाहरू हुन्छन् र गन्धर्वपत्नीहरूको समृद्धिका आधार चार कलाहरू छन् । ती कलाहरूमा जुनचाहिँ सर्वश्रेष्ठ र परम समृद्धि प्रदान गर्न सक्ने खालको हुन्छ, त्यसै कलाले हामी धनधान्यलाई उचित किसिमले प्रबन्ध गर्दछौँ । हे धान्य ! यस्तै कलाका प्रभावले तिमी निरन्तर वृद्धि होऊ ।

**उपोहश्च समूहश्च क्षत्तारौ ते प्रजापते । ताविहा वहतां स्फातिं बहूं भूमानमक्षितम् ॥७॥**

हे प्रजापति ! धान्यलाई नजिक ल्याउने उपोह नामका देवता तथा प्राप्त गरेको धनलाई वृद्धि गराउने समूह नामका देवता नै तिम्रा सारथी हुन् । ती दुवै देवतालाई अक्षय धन प्राप्तिका लागि तिमी यहाँ बोलाऊ ।

## २५. कामबाण सूक्त

**ऋषि**– भृगु । **देवता**– मित्रावरुण, काम बाण । **छन्द**– अनुष्टुप् ।

**उत्तुदस्त्वोत् तुदतु मा धृथाः शयने स्वे । इषुः कामस्य या भीमा तया विध्यामि त्वा हृदि ॥१॥**

हे स्त्री ! उत्कृष्ट भए पनि दुःख दिने खालका उत्तुद नामका मनलाई बहकाउने देवताले तिमीलाई व्यथित गराऊन् । तिखो कामबाणले हामी तिम्रो हृदय छेडिदिन्छौँ । त्यसबाट पीडित भएपछि तिमी आफ्ना ओछ्यानमा सुखको निद्रा सुत्न सक्दिनौ ।

**आधीपर्णां कामशल्यामिषुं सङ्कल्पकुल्मलाम् । तां सुसन्नतां कृत्वा कामो विध्यतु त्वा हृदि ॥२॥**

जुन बाणमा मानसिक पीडारूपी प्वाँख लागेका छन्, रमण गर्ने रहर नै जसको अघिल्लो टुँडो बनेको छ र जसमा भोगविषयक सङ्कल्परूपी दण्ड जडिएको छ, त्यसलाई धनुषमा चढाएर कामदेवले तिम्रो हृदयमा भेदन गरून् ।

**या प्लीहानं शोषयति कामस्येषुः सुसन्नता । प्राचीनपक्षा व्योषा तया विध्यामि त्वा हृदि ॥३॥**

हे स्त्री ! कामदेवले उचित किसिमले निसान लगाएको त्यो बाण सोझो गतिमा जाने गर्दछ । अत्यधिक दहन गर्ने, हृदयमा प्रवेश गर्ने, मनलाई शोषण गर्ने त्यस बाणले हामी तिम्रो हृदयलाई विदीर्ण गराउँछौँ ।

**शुचा विद्धा व्योषया शुष्कास्याभि सर्प मा । मृदुर्निमन्युः केवली प्रियवादिन्यनुव्रता ॥४॥**

हे स्त्री ! यस दुःखदायी, शोकवर्द्धक बाणका प्रभावले मुख खिन्न गराएर हाम्रा नजिक आऊ । कामका कारण उत्पन्न क्रोधलाई छोडेर तिमी मिठो बोल्ने हुँदै हामीले चाहेको जस्तै कर्म गर्दै हामीलाई प्राप्त होऊ ।

**आजामि त्वाजन्या परि मातुरथो पितुः । यथा मम क्रतावसो मम चित्तमुपायसि ॥५॥**

हे स्त्री ! कामले पीडित भएकी तिमीलाई हामी तिम्रै मातापिताका सामु लैजान्छौँ । त्यहाँ पुगेपछि कर्म र विचारले हाम्रो अनुकूल भएर नै हामीलाई प्राप्त होऊ ।

**व्यस्यै मित्रावरुणौ हृदश्चित्तान्यस्यतम् । अथैनामक्रतुं कृत्वा ममैव कृणुतं वशे ॥६॥**

हे मित्र र वरुणदेवता ! तिमीहरू यी स्त्रीको हृदय र चित्तलाई विशेष रूपले प्रभावित गराओ र पहिलेदेखि अभ्यास गरेका सबै कार्य बिर्साएर यिनलाई हाम्रो अनुकूल आचरण गर्ने बनाओ ।

## २६. दिक्षु आत्मरक्षा सूक्त

**ऋषि**–अथर्वा । **देवता**– रुद्र, प्राचीदिशा साग्नि, दक्षिणदिशा सकामाअविष्यव, प्रतीचीदिशा वैराज, उदीची दिशा सवातप्रविध्य, सौषधिकानिलिम्पा, बृहस्पति युक्त अवस्वान् । **छन्द**– जगती, त्रिष्टुप्, भुरिक् त्रिष्टुप् ।

**येऽस्यां स्थ प्राच्यां दिशि हेतयो नाम देवास्तेषां वो अग्निरिषवः । ते नो मृडत ते नोऽधि ब्रूत तेभ्यो वो नमस्तेभ्यो वः स्वाहा ॥१॥**

हे देवताहरू हो ! तिमीहरू पूर्व दिशामा शत्रुनाशक वज्र नामले परिचित भएर निवास गर्दछौ । तेजस्वी अग्नि तिमीहरूका बाण हुन् । तिमीहरू हाम्रो सुरक्षा गर्नका लागि समर्थ भएर हामीलाई सुख प्रदान गर हाम्रा लागि आफ्नोपन दर्साउने शब्दहरू उच्चारण गर । तिमीहरूलाई नमस्कार गर्दै हामी हवि समर्पित गर्दछौँ ।

**येऽस्यां स्थ दक्षिणायां दिश्यविष्यवो नाम देवास्तेषां वः काम इषवः । ते नो मृडत ते नोऽधि ब्रूत तेभ्यो वो नमस्तेभ्यो वः स्वाहा ॥२॥**

हे देवताहरू हो ! तिमीहरू दक्षिण दिशामा अवस्यव नामले रक्षकको रूप भएर निवास गर्दछौ । आवश्यक वस्तुको इच्छा नै तिमीहरूका बाण हुन् । तिमीहरू हामीलाई सुख प्रदान गर हाम्रा लागि आफ्नोपन दर्साउने शब्दहरू उच्चारण गर । तिमीहरूलाई नमस्कार गर्दै हामी हवि समर्पित गर्दछौँ ।

**येऽस्यां स्थ प्रतीच्यां दिशि वैराजा नाम देवास्तेषां व आप इषवः । ते नो मृडत ते नोऽधि ब्रूत तेभ्यो वो नमस्तेभ्यो वः स्वाहा ॥३॥**

हे देवताहरू हो ! तिमीहरू पश्चिम दिशामा विशेष क्षमतासम्पन्न वैराज नामका भएर निवास गर्दछौ । वर्षाको जल नै तिमीहरूको बाण हो । तिमीहरू हामीलाई सुख प्रदान गर हाम्रा लागि आफ्नोपन दर्साउने शब्दहरू उच्चारण गर । तिमीहरूलाई नमस्कार गर्दै हवि समर्पित गर्दछौँ ।

**येऽस्यां स्थोदीच्यां दिशि प्रविध्यन्तो नाम देवास्तेषां वो वात इषवः । ते नो मृडत ते नोऽधि ब्रूत तेभ्यो वो नमस्तेभ्यो वः स्वाहा ॥४॥**

हे देवताहरू हो ! तिमीहरू उत्तर दिशामा भेदन शक्तिले सम्पन्न प्रविध्यन्त नामका भएर निवास गर्दछौ । द्रुतगामी वायु नै तिमीहरूको बाण हो । तिमीहरू हामीलाई सुख प्रदान गर हाम्रा लागि आफ्नोपन दर्साउने शब्दहरू उच्चारण गर । तिमीहरूलाई नमस्कार गर्दै हवि समर्पित गर्दछौँ ।

**येऽस्यां स्थ ध्रुवायां दिशि निलिम्पा नाम देवास्तेषां व ओषधीरिषवः । ते नो मृडत ते नोऽधि ब्रूत तेभ्यो वो नमस्तेभ्यो वः स्वाहा ॥५॥**

हे देवताहरू हो ! तिमीहरू ओरालो दिशामा लेपन गर्ने शक्तिले सम्पन्न निलिम्पा नामका भएर निवास गर्दछौ । औषधि नै तिमीहरूको बाण हो । तिमीहरू हामीलाई सुख प्रदान गर हाम्रा लागि आफ्नोपन दर्साउने शब्दहरू उच्चारण गर । तिमीहरूलाई नमस्कार गर्दै हामी हवि समर्पित गर्दछौँ ।

**येऽस्यां स्थोर्ध्वायां दिश्यवस्वन्तो नाम देवास्तेषां वो बृहस्पतिरिषवः । ते नो मृडत ते नोऽधि ब्रूत तेभ्यो वो नमस्तेभ्यो वः स्वाहा ॥६॥**

हे देवताहरू हो ! तिमीहरू उकालो दिशामा सुरक्षाधिकारीका रूपमा अवस्वन्त नामका भएर निवास गर्दछौ । बृहस्पतिदेवता नै तिमीहरूको बाण हुन् । तिमीहरू हामीलाई सुख प्रदान गर हाम्रा लागि आफ्नोपन दर्साउने शब्दहरू उच्चारण गर । तिमीहरूलाई नमस्कार गर्दै हामी हवि समर्पित गर्दछौँ ।

## २७. शत्रुनिवारण सूक्त

**ऋषि**–अथर्वा । **देवता**– रुद्र, प्राची दिशा, अग्नि, असित, आदित्यगण, दक्षिण दिशा, इन्द्र, तिरश्चिराजी, पितरगण, प्रतीची दिशा, वरुण, पृदाकु, अन्न, उदीची दिशा, सोम,

स्वज, अशनि, ध्रुव दिशा, विष्णु, कल्माषग्रीव, वीरुध, ऊर्ध्व दिशा, बृहस्पति, श्वित्र, वर्षा । **छन्द–** पञ्चपदा ककुम्मती गर्भाष्टि, पञ्चपदा ककुम्मती गर्भा अत्यष्टि, पञ्चपदा ककुम्मती गर्भा भुरिक् अष्टि ।

**प्राची दिगग्निरधिपतिरसितो रक्षितादित्या इषवः । तेभ्यो नमोऽधिपतिभ्यो नमो रक्षितृभ्यो नम इषुभ्यो नम एभ्यो अस्तु । योऽस्मान् द्वेष्टि यं वयं द्विष्मस्तं वो जम्भे दध्मः ॥१॥**

पूर्व दिशाले हामीमाथि कृपा गरोस् । त्यस दिशाका अधिपति अग्निदेवता हुन् । त्यसका रक्षक बन्धनरहित असित नामका देवता हुन् र आदित्य त्यसका बाण हुन् । यसका अधिपति, रक्षक र बाण यी सबैलाई हामी नमस्कार गर्दछौँ । यस्ता सबैका हितैषिहरूलाई हाम्रो नमस्कार छ । हाम्रो रिसडाह गर्ने र हामीले रिसडाह गर्ने शत्रुलाई दण्डित गर्न तिम्रो अधीनमा गराउँछौँ ।

**दक्षिणा दिगिन्द्रोऽधिपतिस्तिरश्चिराजी रीक्षिता पितर इषवः । तेभ्यो नमोऽधिपतिभ्यो नमो रक्षितृभ्यो नम इषुभ्यो नम एभ्यो अस्तु । योऽस्मान् द्वेष्टि यं वयं द्विष्मस्तं वो जम्भे दध्मः ॥२॥**

दक्षिण दिशाले हामीमाथि कृपा गरोस् । त्यस दिशाका अधिपति इन्द्रदेवता हुन् । त्यसका रक्षक मर्यादा रक्षक तिरश्चिराजी नामका देवता हुन् र पितृहरू त्यसका बाण हुन् । यी अधिपति, रक्षक र बाण सबैलाई हामी नमस्कार गर्दछौँ । यस्ता सबैका हितैषिहरूलाई हाम्रो नमस्कार छ । हाम्रो रिसडाह गर्ने र हामीले रिसडाह गर्ने शत्रुलाई दण्डित गर्न तिम्रो अधीनमा गराउँछौँ ।

**प्रतीची दिग् वरुणोऽधिपतिः पृदाकू रक्षितान्नमिषवः । तेभ्यो नमोऽधिपतिभ्यो नमो रक्षितृभ्यो नम इषुभ्यो नम एभ्यो अस्तु । योऽस्मान् द्वेष्टि यं वयं द्विष्मस्तं वो जम्भे दध्मः ॥३॥**

पश्चिम दिशाले हामीमाथि कृपा गरोस् । त्यस दिशाका अधिपति वरुणदेवता हुन् । त्यसका रक्षक पृदाकु नामका सर्प आदि देवता हुन् र अन्न त्यसको बाण हो । यी अधिपति, रक्षक र बाण सबैलाई हामी नमस्कार गर्दछौँ । यस्ता सबैका हितैषिहरूलाई हाम्रो नमस्कार छ । हाम्रो रिसडाह गर्ने र हामीले रिसडाह गर्ने शत्रुलाई दण्डित गर्न तिम्रो अधीनमा गराउँछौँ ।

**उदीची दिक् सोमोऽधिपतिः स्वजो रक्षिताशनिरिषवः । तेभ्यो नमोऽधिपतिभ्यो नमो रक्षितृभ्यो नम इषुभ्यो नम एभ्यो अस्तु । योऽस्मान् द्वेष्टि यं वयं द्विष्मस्तं वो जम्भे दध्मः ॥४॥**

उत्तर दिशाले हामीमाथि कृपा गरोस् । त्यस दिशाका अधिपति सोमदेवता हुन् । त्यसका रक्षक स्वज नामका आफैँ जन्मेका देवता हुन् र अशनी नामका देवता त्यसका बाण हुन् । अधिपति, रक्षक र बाण यी सबैलाई हामी नमस्कार गर्दछौँ । हाम्रो रिसडाह गर्ने र हामीले रिसडाह गर्ने शत्रुलाई दण्डित गर्न तिम्रो अधीनमा गराउँछौँ ।

**ध्रुवा दिग् विष्णुरधिपतिः कल्माषग्रीवो रक्षिता वीरुध इषवः । तेभ्यो नमोऽधिपतिभ्यो नमो रक्षितृभ्यो नम इषुभ्यो नम एभ्यो अस्तु । योऽस्मान् द्वेष्टि यं वयं द्विष्मस्तं वो जम्भे दध्मः ॥५॥**

ओरालो दिशाले हामीमाथि कृपा गरोस् । त्यस दिशाका अधिपति विष्णुदेवता हुन् । त्यसका रक्षक छिर्के रङ्ग भएका कल्माषग्रीव नामका देवता हुन् र औषधिहरू त्यसका बाण हुन् । अधिपति, रक्षक र बाण यी सबैलाई हामी नमस्कार गर्दछौँ । हाम्रो रिसडाह गर्ने र हामीले रिसडाह गर्ने शत्रुलाई दण्डित गर्न तिम्रो अधीनमा गराउँछौँ ।

**ऊर्ध्वा दिग् बृहस्पतिरधिपतिः श्वित्रो रक्षिता वर्षमिषवः । तेभ्यो नमोऽधिपतिभ्यो नमो रक्षितृभ्यो नम इषुभ्यो नम एभ्यो अस्तु । योऽस्मान् द्वेष्टि यं वयं द्विष्मस्तं वो जम्भे दध्मः ॥६॥**

उकालो दिशाले हामीमाथि कृपा गरोस् । त्यस दिशाका अधिपति बृहस्पतिदेवता हुन् । त्यसका

रक्षक श्वित्र नामका पवित्रताका देवता हुन् र शत्रुको विनाश गर्ने वर्षाको जल नै त्यसका बाण हुन् । अधिपति, रक्षक र बाण यी सबैलाई हामी नमस्कार गर्दछौं । हाम्रो रिसडाह गर्ने र हामीले रिसडाह गर्ने शत्रुलाई दण्डित गर्न तिम्रो अधीनमा गराउँछौं ।

## २८. पशुपोषण सूक्त

**ऋषि**–ब्रह्मा । **देवता**– यमिनी । **छन्द**– अनुष्टुप्, अतिशक्वरीगर्भा चतुष्पदा अतिजगती, यवमध्या विराट् ककुप्, त्रिष्टुप्, विराट् गर्भा प्रस्तारपङ्क्ति ।

**एकैकयैषा सृष्ट्या सं बभूव यत्र गा असृजन्त भूतकृतो विश्वरूपाः । यत्र विजायते यमिन्यपर्तुः सा पशून् क्षिणाति रिफती रुशती ॥१॥**

एउटाएउटा गरीकन जहाँ सृष्टि निर्माण भएको छ, त्यहाँ पदार्थका स्रष्टाले विविध रूपले सम्पन्न विश्वरूपा गाईरूपी पृथ्वीलाई सृष्टि गरे । यसै भूतलमा जब यमिनी नामक नियामक प्रकृतिले विभिन्न ऋतुअनुसार भिन्नभिन्न परिणाम उत्पन्न गर्न थाल्यो, त्यही बेलादेखि नै उसै प्रकृतिले पीडा पनि उत्पन्न गर्‍यो र कष्टका साथ पशुको विनाश पनि गरायो ।

**एषा पशून्त्सं क्षिणाति क्रव्याद् भूत्वा व्यद्वरी । उतैनां ब्रह्मणे ददात् तथा स्योना शिवा स्यात् ॥२॥**

यस किसिमको मांसभक्षी क्रूर यामिनीले पशुप्राणीको विनाश गर्ने कार्य गर्न थाल्यो । त्यस्तो यमिनीको स्वभाव ब्रह्म वा ज्ञानसम्पन्न ब्राह्मणलाई जिम्मा लगाउनुपर्दछ । त्यसो भएपछि त्यो कल्याणकारी होस् ।

**शिवा भव पुरुषेभ्यो गोभ्यो अश्वेभ्यः शिवा । शिवास्मै सर्वस्मै क्षेत्राय शिवा न इहैधि ॥३॥**

हे यमिनी ! तिमी मानिसहरूका लागि सुखदायिनी हौ र गाई तथा अश्वका लागि पनि कल्याणकारिणी हौ । तिमी समस्त भूमिका लागि कल्याणकारिणी भएर हाम्रा लागि सुखदायक हौ ।

**इह पुष्टिरिह रस इह सहस्रसातमा भव । पशून् यमिनि पोषय ॥४॥**

यहाँ यस क्षेत्रमा पुष्टि र रसको वृद्धि होस् । हे यमिनी ! तिमी यस क्षेत्रका पशुहरूलाई पोषण गर र यस क्षेत्रलाई हजारौं किसिमका धन प्रदान गर ।

**यत्रा सुहार्दः सुकृतो मदन्ति विहाय रोगं तन्व१ः स्वायाः । तं लोकं यमिन्यभिसंबभूव सा नो मा हिंसीत् पुरुषान् पशूंश्च ॥५॥**

जुन देशमा श्रेष्ठ हृदयका र श्रेष्ठ कर्मका मानिसले आआफ्ना शरीरको रोगलाई त्यागेर आनन्दित हुन्छन्, त्यस देशमा यमिनीले पुरुषलाई र पशुलाई हिंसित नगरून् ।

**यत्रा सुहार्दां सुकृतामग्निहोत्रहुतां यत्र लोकः । तं लोकं यमिन्यभिसंबभूव सा नो मा हिंसीत् पुरुषान् पशूंश्च ॥६॥**

जुन देशमा श्रेष्ठ हृदय र श्रेष्ठ कर्मका मानिसहरूले अग्निहोत्र, हवन आदिमा हवि प्रदान गर्नका लागि खटिएका हुन्छन् त्यस देशमा यमिनीले मानिस र पशुको हिंसा नगरून् ।

## २९. अवि सूक्त

**ऋषि**– उद्दालक । **देवता**– शितिपात् अवि, काम, भूमि । **छन्द**– अनुष्टुप्, पथ्यापङ्क्ति, त्र्यवसाना षट्पदा उपरिष्यात् दैवीबृहती ककुम्मतीगर्भा विराट् जगती, उपरिष्टात् बृहती ।

**यद् राजानो विभजन्त इष्टापूर्तस्य षोडशं यमस्यामी सभासदः । अविस्तस्मात् प्र मुञ्चति दत्तः शितिपात् स्वधा ॥१॥**

राजा यमका सभासद्हरूले जब मानिसले गरेका पाप र पुण्यकर्मको विभाजन गर्दछन्, त्यस बेला अर्जनको सोह्रौं अंशका रूपमा प्रदान गरिएको इष्टापूर्त्त यज्ञका रूपमा शितिपाद् अवि नामका पदार्थले कालो उज्यालो चरणको रक्षा गर्दछन् र भयबाट मुक्त गराउँछन् अनि सन्तुष्टि प्रदान

गर्दछन् ।

**सर्वान् कामन् पूरयत्याभवन् प्रभवन् भवन् । आकूतिप्रोऽविर्दत्तः शितिपान्नोप दस्यति ॥२॥**

इष्टापूर्त्तमा प्रदान गरिएको शितिपाद् अविले सङ्कल्पहरूलाई पूरा गराउँछ, सत्कर्मलाई प्रभावशाली बनाउँछ, सबै खालका कामना पूरा गराउन र यो कहिल्यै पनि नष्ट नहुने गरी रहेको हुन्छ ।

**यो ददाति शितिपादमविं लोकेन संमितम् । स नाकमभ्यारोहति यत्र शुल्को न क्रियते अबलेन बलीयसे ॥३॥**

जुन व्यक्तिले लोकसम्मत यस इष्टापूर्त्तको भागका रूपमा शितिपात् अवि दान गर्दछ, उसले स्वर्ग प्राप्त गर्दछ । त्यसो भएपछि निर्बलसित बलपूर्वक शुल्क असुल गर्ने काम हुँदैन ।

**पञ्चापूपं शितिपादमविं लोकेन संमितम् । प्रदातोप जीवति पितॄणां लोकेऽक्षितम् ॥४॥**

पाँचै किसिमका तत्त्व वा प्राणीहरूलाई कुहिएर बिग्रिनबाट जोगाउने भनेर सबैले विश्वास गरेको यो शितिपाद् अविलाई इष्टापूर्त्त भागका रूपमा दान गर्ने व्यक्तिले श्रेष्ठ पितृलोकमा अक्षय जीवन प्राप्त गर्दछ ।

**पञ्चापूपं शितिपादमविं लोकेन संमितम् । प्रदातोप जीवति सूर्यामासयोरषितम् ॥५॥**

पाँचै किसिमका तत्त्व वा प्राणीहरूलाई कुहिएर बिग्रिनबाट जोगाउने भनेर सबैले विश्वास गरेको यो शितिपाद् अविलाई इष्टापूर्त्त भागका रूपमा दान गर्ने साधकले सूर्य र चन्द्रको जस्तै अक्षय जीवन प्राप्त गर्दछ ।

**इरेव नोप दस्यति समुद्र इव पयो महत् । देवौ सवासिनाविव शितिपान्नोप दस्यति ॥६॥**

यो शितिपाद् अवि अनिष्ट निवारण गर्ने र संरक्षक हो । यो महान् पृथ्वी र समुद्रको जलजस्तै अनि सँगै रहने गरेका अश्विनीकुमारहरूजस्तै कहिल्यै क्षीण नहुने किसिमको छ ।

**क इदं कस्मा अदात् कामः कामायादात् । कामो दाता कामः प्रतिग्रहीता कामः समुद्रमा विवेश । कामेन त्वा प्रति गृह्णामि कामैतत् ते ॥७॥**

यो दान कसले दियो ? कसलाई दियो ? भन्ने प्रश्नको उत्तरमा कामनाले नै दिएको हो र कामनालाई नै दिएको हो भनिएको छ । मनको इच्छाले नै दान दिएको हो र मनको इच्छाले नै दान प्राप्त गरेको हो । कामनाले नै दान दिन्छु र कामनाले नै दान स्वीकार गर्दछु । हे कामना ! यो सबै तिम्रै हो ।

**भूमिष्ट्वा प्रति गृह्णात्वन्तरिक्षमिदं महत् । माहं प्राणेन मात्मना मा प्रजया प्रतिगृह्य वि राधिषि ॥८॥**

हे श्रेष्ठ दान ! यो भूमि र महान् अन्तरिक्षले तिमीलाई प्राप्त गरून् । म यसलाई प्राप्त गरेर प्राण, आत्मबल र समाजबाट पर नजाऊँ ।

## ३०. सांमनस्य सूक्त

**ऋषि–** अथर्वा । **देवता–** चन्द्रमा, सांमनस्य । **छन्द–** अनुष्टुप्, विराट् जगती, प्रस्तारपङ्क्ति, त्रिष्टुप् ।

**सहृदयं सांमनस्यमविद्वेषं कृणोमि वः । अन्यो अन्यमभि हर्यत वत्सं जातमिवाघ्न्या ॥१॥**

हे मानिसहरू हो ! तिमीहरूका लागि हामी आफ्नो हृदयलाई प्रेमपूर्ण बनाउने र सौमनस्य बढाउने खालका काम गर्दछौँ । तिमीहरू आपसमा त्यस किसिमको व्यवहार गर, जस्तो व्यवहार गाईले बाछासित गर्दछ ।

**अनुव्रतः पितुः पुत्रो मात्रा भवतु संमनाः । जाया पत्ये मधुमतीं वाचं वदतु शन्तिवाम् ॥२॥**

पुत्रले आफ्ना पिताको अनुकूल कार्य गरोस् र आफ्नी आमासित उसको विचार मिलोस् । पत्नीले आफ्ना पतिसित मधुरता तथा सुखयुक्त वाणी बोलोस् ।

**मा भ्राता भ्रातरं द्विक्षन्मा स्वसारमुत स्वसा । सम्यञ्चः सव्रता भूत्वा वाचं वदत भद्रया ॥३॥**

दाजुभाइले आपसमा द्रोह नगरून्, दिदीबहिनी आपसमा झगडा नगरून् । तिनीहरू सबै एकआपसमा एकै खालको भावना र कर्म भएका होऊन् अनि परस्परमा हितकारी कुराकानी गरून् ।

**येन देवा न वियन्ति नो च विद्विषते मिथः । तद् कृण्मो ब्रह्म वो गृहे संज्ञानं पुरुषेभ्यः ॥४॥**

जसका शक्तिले देवगणको विचार विपरीत हुँदैन र आपसमा विद्वेष पनि गर्दैनन्, त्यही एकै खालको विचार बनाउने ज्ञान हामी तिम्रा घरका मानिसहरूमा जागृत गराउँछौँ ।

**ज्यायस्वन्तश्चित्तिनो मा वि यौष्ट संराधयन्तः सधुराश्चरन्तः । अन्यो अन्यस्मै वल्गु वदन्त एत सध्रीचीनान् वः संमनसस्कृणोमि ॥५॥**

सानाठूलाको ख्याल राखेर व्यवहार गर्दै समान विचार बनाउँदै र समान कार्य गर; पृथक् नहोओ । तिमीहरू एकापसमा प्रेमपूर्वक कुराकानी गर । हे मानिसहरू हो ! हामी पनि तिमीहरूका जस्तै कार्यमा लाग्नेछौँ ।

**समानी प्रपा सह वोऽन्नभागः समाने योक्त्रे सह वो युनज्मि । सम्यञ्चोऽग्निं सपर्यतारा नाभिमिवाभितः ॥६॥**

हे समानताको कामना गर्ने मानिसहरू हो ! तिमीहरूको पानी खाने ठाउँ एउटै होस् र अन्नको भाग सँगै होस् । तिमीहरूलाई हामी एउटै प्रेमपाशमा आबद्ध गराउँछौँ । जसरी पाङ्ग्राका अरहरू एउटै धुरामा आश्रित भएका हुन्छन्, उसै गरी तिमीहरू पनि एउटै खालका फलका कामना गरेर अग्निदेवताको उपासना गर ।

**सध्रीचीनान् वः संमनसस्कृणोम्येकश्नुष्टीन्त्संवननेन सर्वान् । देवा इवामृतं रक्षमाणाः सायंप्रातः सौमनसो वो अस्तु ॥७॥**

तिमीहरूका मनलाई एकै किसिमको बनाएर हामी एउटै खालका काममा प्रवृत्त गराउँछौँ । तिमीहरूलाई हामी एकै किसिमको अन्न ग्रहण गर्ने बनाउँछौँ । यस्तै खालका कर्मले तिमीहरूलाई हामी वशमा बनाउँछौँ । अमृतको सुरक्षा गर्ने देवताहरूको जस्तै हामी तिमीहरूका मनलाई पनि साँझबिहान सुखी बनाउँछौँ ।

## ३१. यक्ष्मनाशन सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** पाप्महा, अग्नि, शक्र, पशु समूह, द्यावापृथिवी, त्वष्टा, इन्द्र, देवगण, सूर्य आयु पर्जन्य । **छन्द–** अनुष्टुप्, भुरिक् अनुष्टुप्, विराट् प्रस्तारपङ्क्ति ।

**वि देवा जरसावृतन् वि त्वमग्ने अरात्या । व्य१हं सर्वेण पाप्मना वि यक्ष्मेण समायुषा ॥१॥**

देवताहरू बुढ्यौलीको प्रभावमा नपरीकन रहन्छन् । हे अग्निदेवता ! तिमी कृपणता र शत्रुताबाट सबैलाई पर राख । हामी कष्टदायक पापबाट र यक्ष्मा आदि रोगबाट मुक्त रहन सकौँ अनि दीर्घायु प्राप्त गरौँ ।

**व्यार्त्या पवमानो वि शक्रः पापकृत्यया । व्य१हं सर्वेण पाप्मना वि यक्ष्मेण समायुषा ॥२॥**

पवित्र बनाउने पवमान वायुदेवताले पीडाबाट मुक्त राखून् । समर्थ इन्द्रदेवताले पापकर्मबाट जोगाऊन् । हामी कष्टदायक पापबाट र यक्ष्मा आदि रोगबाट मुक्त रहन सकौँ अनि दीर्घायु प्राप्त गरौँ ।

**सप ग्राम्याः पशव आरण्यैर्व्यापस्तृष्णयासरन् । व्य१हं सर्वेण पाप्मना वि यक्ष्मेण समायुषा ॥३॥**

घरपालुवा पशु जङ्गली पशुबाट छुट्टै रहन्छन् र तिर्खाएको मानिसबाट जल छुट्टै रहेको हुन्छ । उसै

गरी हामी कष्टदायक पापबाट र यक्ष्मा आदि रोगबाट मुक्त रहन सकौं अनि दीर्घायु प्राप्त गरौं ।

**वीइमे द्यावापृथिवी इतो वि पन्थानो दिशंदिशम् । व्य१हं सर्वेण पाप्मना वि यक्ष्मेण समायुषा ॥४॥**

जसरी द्यावापृथिवी अलगअलग रहेका छन् र प्रत्येक दिशामा जाने बाटाहरू अलगअलग हुने गर्दछन् उसै गरी हामी कष्टदायक पापबाट र यक्ष्मा आदि रोगबाट मुक्त रहन सकौं अनि दीर्घायु प्राप्त गरौं ।

**त्वष्टा दुहित्रे वहतुं युनक्तीतीदं विश्वं भुवनं वि याति । व्य१हं सर्वेण पाप्मना वि यक्ष्मेण समायुषा ॥५॥**

जसरी सृष्टिका देवता त्वष्टाले बिहा गरेर जाने बेलामा छोरीलाई मनग्गे धन दाइजो दिएर बिदा गर्दछन् र सबै मानिसहरूको बसोबास अलगअलग हुन्छ, उसै गरी हामी कष्टदायक पापबाट र यक्ष्मा आदि रोगबाट मुक्त रहन सकौं अनि दीर्घायु प्राप्त गरौं ।

**अग्निः प्राणान्त्सं दधाति चन्द्रः प्राणेन संहितः । व्य१हं सर्वेण पाप्मना वि यक्ष्मेण समायुषा ॥६॥**

अग्निदेवता प्राणलाई जागृत गराउँछन् । चन्द्रदेवता पनि प्राणसँग सँगै रहेका हुन्छन् । हामी कष्टदायक पापबाट र यक्ष्मा आदि रोगबाट मुक्त रहन सकौं अनि दीर्घायु प्राप्त गरौं ।

**प्राणेन विश्वतोवीर्यं देवाः सूर्यं समैरयन् । व्य१हं सर्वेण पाप्मना वि यक्ष्मेण समायुषा ॥७॥**

देवताहरूले समस्त सामर्थ्यले युक्त सूर्यदेवतालाई जगत्का प्राणका रूपमा सम्बन्धित गराएका छन् । हामी कष्टदायक पापबाट र यक्ष्मा आदि रोगबाट मुक्त रहेर दीर्घायु प्राप्त गरौं ।

**आयुष्मतामायुष्कृतां प्राणेन जीव मा मृथाः । व्य१हं सर्वेण पाप्मना वि यक्ष्मेण समायुषा ॥८॥**

हे बालक ! आयुले सम्पन्न व्यक्तिहरूसँगै दीर्घायुका साथ बलशाली भएर बाँच, नमर । हामी तिमीलाई कष्टदायक पापबाट र यक्ष्मा आदि रोगबाट मुक्त र दीर्घायु प्राप्त गराउँछौं ।

**प्राणेन प्राणतां प्राणेहैव भव मा मृथाः । व्य१हं सर्वेण पाप्मना वि यक्ष्मेण समायुषा ॥९॥**

श्वास लिने समस्त जीवित प्राणीका प्राणका साथमा तिमी बाँच र आफ्नो प्राणत्याग नगर । हामी तिमीलाई कष्टदायक पापबाट र यक्ष्मा आदि रोगबाट मुक्त र दीर्घायु प्राप्त गराउँछौं ।

**उदायुषा समायुषोदोषधीनां रसेन । व्य१हं सर्वेण पाप्मना वि यक्ष्मेण समायुषा ॥१०॥**

आयुले सम्पन्न होऊ, आयुले नै उन्नति गर, औषधिका रसले उत्कर्ष प्राप्त गर । हामी तिमीलाई कष्टदायक पापबाट र यक्ष्मा आदि रोगबाट मुक्त र दीर्घायु प्राप्त गराउँछौं ।

**आ पर्जन्यस्य वृष्ट्योदस्थामामृता वयम् ॥ व्य१हं सर्वेण पाप्मना वि यक्ष्मेण समायुषा ॥११॥**

हामी पर्जन्यदेवताका पर्जन्य वर्षाले अमरत्व प्राप्त गर्दछौं र उन्नति प्राप्त गर्दछौं । हामी कष्टदायक पापबाट र यक्ष्मा आदि रोगबाट मुक्त रहन सकौं अनि दीर्घायु प्राप्त गरौं ।

## ॥इति तृतीयं काण्डम् ॥

तेस्रो काण्ड सकियो ।

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

अथर्ववेद – संहिता

# ॥अथ चतुर्थ काण्डम् ॥

## १. ब्रह्मविद्या सूक्त

**ऋषि–** वेन । **देवता–** बृहस्पति, आदित्या । **छन्द–** त्रिष्टुप्, भुरिक् त्रिष्टुप् ।

**ब्रह्म जज्ञानं प्रथमं पुरस्ताद् वि सीमतः सुरुचो वेन आवः । स बुध्न्या उपमा अस्य विष्ठाः सतश्च योनिमसतश्च वि वः ॥१॥**

ब्रह्मको उत्पत्ति उहिले नै भएको थियो । वेन नामका उनै तेजस्वी सूर्यरूपी ब्रह्मले बीचमा रहेर अत्यन्त उत्कृष्ट रूपमा प्रकासित विभिन्न पिण्डहरूलाई वरिपरि फिँजाए । उसैले हाल आकाशका विभिन्न विशिष्ट रुथामा रहेका पदार्थ र सत् एवं असत्को उत्पत्तिको स्रोत स्थापना गरेको हो ।

**इयं पित्र्या राष्ट्रयेत्वग्रे प्रथमाय जनुषे भुवनेष्ठाः । तस्मा एतं सुरुचं ह्वारमह्यं घर्मं श्रीणन्तु प्रथमाय धास्यवे ॥२॥**

परमपिता परमात्माबाट प्राप्त, विश्वमा रहेको उत्पादनशील शक्ति नै सर्वप्रथम राष्ट्रशक्तिका रूपमा अगाडि आयो । उस सर्वप्रथम सर्वोच्च सत्तालाई समर्पित गर्नका लागि यो सुप्रकाशित, अनिष्टनिवारक तथा प्राप्त गर्न योग्य यज्ञलाई परिपक्व गराऔँ ।

**प्र यो जज्ञे विद्वानस्य बन्धुर्विश्वा देवानां जनिमा विवक्ति । ब्रह्म ब्रह्मण उज्जभार मध्यान्नीचैरुच्चैः स्वधा अभि प्र तस्थौ ॥३॥**

जुन ज्ञानी यस दिव्य सत्तासित सम्बन्धित हुन्छ, उसैले समस्त देवशक्तिका जन्मको रहस्य भन्न सक्दछ । ब्रह्मबाट नै ब्रह्मका रूपमा रहेको यज्ञ तथा वेदका ज्ञानको उत्पत्ति भएको हो । त्यसका तल रहेको मध्यवर्ती र उच्च भागबाट प्राणीलाई तृप्त गराउने खालका शक्तिहरूको उदय र विस्तार भएको हो ।

**स हि दिवः स पृथिव्या ऋतस्था मही क्षेमं रोदसी अस्कभायत् । महान् मही अस्कभायद् वि जातो द्यां सद्म पार्थिवं च रजः ॥४॥**

उनै परमात्माले नै द्युलोक र पृथ्वीलोकलाई संव्याप्त गरेका छन् र उनैले शाश्वत सत्यका नियमले द्यावापृथिवीभित्र आफूलाई स्थापित गर्दछन् । उनी त्यस बीचमा सूर्यका रूपमा उत्पन्न भएर द्युलोक र पृथ्वीलोकरूपी घरलाई आफ्ना तेजले व्याप्त गराउँछन् ।

**स बुध्न्यादाष्ट्र जनुषोऽभ्यग्रं बृहस्पतिर्देवता तस्य सम्राट् । अहर्यच्छुक्रं ज्योतिषो जनिष्टाथ द्युमन्तो वि वसन्तु विप्राः ॥५॥**

बृहस्पतिदेवता यस लोकका अधिपति हुन् । जब आलोकवान् सूर्यबाट दिनहरू प्रकट हुन्छन्, त्यसपछि उसै दिनका सहायताबाट ज्ञानी ऋत्विक्ले आआफ्नो काम गर्नमा आफूलाई संलग्न गराउँदै आहुतिद्वारा देवताहरूको सेवा गरून् ।

**नूनं तदस्य काव्यो हिनोति महो देवस्य पूर्व्यस्य धाम । एष जज्ञे बहुभिः साकमित्था पूर्वे अर्धे विषिते ससन् नु ॥६॥**

ऋत्विक्हरूसँग सम्बन्धित देवताहरूमा सर्वप्रथम उत्पन्न भएका सूर्यदेवता हुन् र उनको महान् धाम उदयाचल हो । ती सूर्यदेवता पूर्व दिशाका सबै प्रदेशमा हवि र अन्नको लक्ष्य गरेर शीघ्र नै उदाउने गर्दछन् ।

**योऽथर्वाणं पितरं देवबन्धुं बृहस्पतिं नमसाव च गच्छात् । त्वं विश्वेषां जनिता यथासः कविर्देवो न दभायत् स्वधावान् ॥७॥**

देवताहरूका दाजुभाइजस्तो बृहस्पतिदेवता र प्रजापति अथर्वालाई हामी नमस्कार गर्दछौँ । जसरी

उनी समस्त जीवलाई उत्पन्न गराउँछन्, उसै गरी उनी अन्नले पनि सम्पन्न छन् । उनै क्रान्तदर्शी बृहस्पतिदेवता हवि र अन्नले युक्त भएर हिंसा नगर्दै सबैमाथि कृपा बर्साउँछन् ।

## २. आत्मविद्या सूक्त

**ऋषि–** वेन । **देवता–** आत्मा । **छन्द–** त्रिष्टुप्, पुरोऽनुष्टुप्, उपरिष्टात् ज्योति त्रिष्टुप् ।

**य आत्मदा बलदा यस्य विश्व उपासते प्रशिषं यस्य देवाः । योऽस्येशे द्विपदो यश्चतुष्पदः कस्मै देवाय हविषा विधेम ॥१॥**

आत्मा वा आफ्नो विषयमा जानकारी गराउने, बल प्रदान गर्ने, अनुशासित र अरू सबै देवशक्तिलाई अनुशासनमा प्रेरित गर्ने, दुई खुट्टे र चार खुट्टे आदि सबैका अधिपति क नामका देवता छन्; उनैलाई हवि प्रदान गरेर अर्चना गरौँ अथवा यस किसिमका पूज्य देवता को हुन् ?

**यः प्राणतो निमिषतो महित्वैको राजा जगतो बभूव । यस्य च्छायामृतं यस्य मृत्युः कस्मै देवाय हविषा विधेम ॥२॥**

जो आँखाका परेला झिम्क्याउने प्राणीहरू र त्यस्तै परिवर्तनशील पदार्थका अधिपति हुन्, जसका छायामा अमरत्व र मृत्यु दुवै रहेका छन्, उनै क नामका वा कुनै देवतालाई हवि प्रदान गर्दै हामी अर्चना गरौँ ।

**यं क्रन्दसी अवतश्चस्कभाने भियसाने रोदसी अह्वयेथाम् । यस्यासौ पन्था रजसो विमानः कस्मै देवाय हविषा विधेम ॥३॥**

जसका कारणले द्युलोक र पृथिवीलोक सुखदुःखसहित सबैलाई संरक्षण दिनका लागि स्थित छन् र उनीहरू भयभीत भएर जसलाई पुकार्दछन्, जसको प्रकाशयुक्त पथ विशिष्ट सम्मान बढाउने किसिमको छ, उनै क नामका वा कुन देवतालाई हामी हवि प्रदान गरेर पूजा गर्दछौँ ।

**यस्य द्यौरुर्वी पृथिवी च मही यस्याद उर्व१न्तरिक्षम् । यस्यासौ सूरो विततो महित्वा कस्मै देवाय हविषा विधेम ॥४॥**

जसको महत्त्व द्युलोक, विशाल पृथ्वी र अन्तरिक्ष तथा सूर्यसम्म फैलिएको छ, उनै क नामका अथवा कुनै देवतालाई हवि प्रदान गर्दै हामी अर्चना गरौँ ।

**यस्य विश्वे हिमवन्तो महित्वा समुद्रे यस्य रसामिदाहुः । इमाश्च प्रदिशो यस्य बाहू कस्मै देवाय हविषा विधेम ॥५॥**

जसको महिमाको घोषणा गर्ने विश्वका हिउँले ढाकिएका क्षेत्र वा हिमालय, समुद्र, पृथिवी नै छन्, जसका पाखुराका रूपमा दिशाहरू रहेका छन्, उनै क नामका वा कुनै देवतालाई हवि प्रदान गर्दै हामी अर्चना गर्दछौँ ।

**आपो अग्रे विश्वमावन् गर्भं दधाना अमृता ऋतज्ञाः । यासु देवीष्वधि देव आसीत् कस्मै देवाय हविषा विधेम ॥६॥**

जुन अमृतरूपी सत्यको उद्घाटन गर्ने, ऋत नामको सत्यलाई बुझेका सृष्टिको मूल तत्त्वका रूपमा रहेको अप् नामको जलतत्त्वलाई गर्भमा धारण गरेका, विश्वलाई गतिशील गराउने, दिव्यशक्तिलाई आफ्ना वशमा राख्ने जुन देवताको क भन्ने नाम छ, अथवा कुनै त्यस्ता देवता छन्, उनैलाई हवि आदि अर्पित गरेर हामी विशेष ध्यान गर्दछौँ ।

**हिरण्यगर्भः समवर्तताग्रे भूतस्य जातः पतिरेक आसीत् । स दाधार पृथिवीमुत द्यां कस्मै देवाय हविषा विधेम ॥७॥**

सृष्टिका सुरुमा हिरण्यगर्भ नाम भएका, तेज वा सम्पत्तिलाई गर्भमा धारण गरेर विद्यमान रहेका, सबै उत्पन्न भएका र हुनुपर्ने प्राणी वा विषयका अधिपतिका रूपमा रहेका देवता नै द्युलोक र पृथ्वीका आधार हुन् । उनै क नामका अथवा कुनै देवतालाई नै हवि आदि पदार्थ प्रदान गर्दै अर्चना गर्दछौँ ।

**आपो वत्सं जनयन्तीर्गर्भमग्रे समैरयन् । तस्योत जायमानस्योल्ब आसीद्धिरण्ययः कस्मै देवाय हविषा विधेम ॥८॥**

सृष्टि वा आरम्भमा बालक जन्माउने वा सृष्टिको थालनी गर्ने अप् नामको सृष्टिको मूल आधारलाई आफ्ना गर्भबाट प्रकट गर्ने, त्यसरी जन्म भएको बालक वा सिर्जित सृष्टिलाई रक्षा गर्ने, तेजका रूपमा अवस्थित क नामका देवता वा कुनै देवतालाई हामी हवि आदि प्रदान गरेर विशेष ध्यान गर्दछौँ ।

## ३. शत्रुनाशन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– रुद्र, व्याघ्र । **छन्द**– अनुष्टुप्, पथ्यापङ्क्ति, गायत्री, *ककुम्मती गर्भा उपरिष्टात् बृहती ।*

**उदितस्त्रयो अक्रमन् व्याघ्रः पुरुषो वृकः । हिरुग्घि यन्ति सिन्धवो हिरुग् देवो वनस्पतिर्हिरुङ् नमन्तु शत्रवः ॥१॥**

नदीहरू जसरी भिन्नभिन्नै बग्दछन् र जसरी वनौषधिहरूले भिन्नभिन्नै रोगलाई निर्मूल पार्दछन्, उसै गरी बाघ आदि पनि भिन्नभिन्नै भागेर जाऊन् । बाघ, चोर र ब्वाँसाहरू पनि हाम्रा यस स्थानबाट भागून् ।

**परेणैतु पथा वृकः परमेणोत तस्करः । परेण दत्वती रज्जुः परेणाघायुरर्षतु ॥२॥**

ब्वाँसाहरू परपरै भागून् र चोरहरू त्यसभन्दा परबाट भागून् । दाँत भएका डोरीजस्ता सर्प आदि प्राणीहरू अर्कै बाटो हिँडून् र पापीहरू पर पुगून् ।

**अक्ष्यौ च ते मुखं च ते व्याघ्र जम्भयामसि । आत् सर्वान् विंसतिं नखान् ॥३॥**

हे बाघ ! हामी तिम्रा आँखा र मुख बिगारेर बीसै वटा नङ्ग्राहरूको पनि विनाश गर्दछौँ ।

**व्याघ्रं दत्वतां वयं प्रथमं जम्भयामसि । आदु ष्टेनमथो अहिं यातुधानमथो वृकम् ॥४॥**

दाह्रा हुने प्राणीहरूमा हामी सबैभन्दा पहिले बाघलाई नै विनाश गर्दछौँ । त्यसपछि चोरलाई, अनि लुटारलाई, त्यसपछि सर्पलाई र ब्वाँसालाई विनाश गर्दछौँ ।

**यो अद्य स्तेन आयति स संपिष्टो अपायति । पथामपध्वंसेनैत्विन्द्रो वज्रेण हन्तु तम् ॥५॥**

आज जुन चोरहरू आउँदै छन्, तिनीहरू हाम्रो पिटाइ खाएर चुर हुँदै भागेर जाऊन् । तिनीहरू कष्टदायी मार्गबाट भागून् र इन्द्रदेवताले तिनीहरूलाई आफ्ना वज्रले मारिदिऊन् ।

**मूर्णा मृगस्य दन्ता अपिशीर्णा उ पृष्टयः । निम्रुक् ते गोधा भवतु नीचायच्छशयुर्मृगः ॥६॥**

हिंस्रक पशुहरूका दाँत कमजोर होऊन्, टाउकामा भएका सिङ र फिलाका हड्डी फुक्लिऊन् । हे यात्रीहरू हो ! तिमीहरूका दृष्टिमा गोही नपरोस् र घस्रिएर हिँड्ने खालका पशुहरू पनि मुनिबाटै अर्कातिर जाऊन् ।

**यत् संयमो न वि यमो वि यमो यन्न संयमः । इन्द्रजाः सोमजा आथर्वणमसि व्याघ्रजम्भनम् ॥७॥**

बाघ आदि हिंस्रक प्राणी अथवा तिनको जस्तै बानीबेहोरालाई नियन्त्रण गर्नका लागि अथर्वा ऋषिले प्रयोग गरेको र इन्द्रसोमले प्रकट गरेको यो नियम छ । त्यस नियमअनुसार जुन ठाउँमा संयम सफल हुँदैन, त्यहाँ वियम अर्थात् दमन प्रक्रियाको प्रयोग गर्नुपर्दछ र जहाँ वियम प्रक्रिया उपयुक्त हुँदैन, त्यहाँ संयमको प्रयोग गर्नुपर्दछ ।

## ४. वाजीकरण सूक्त

**ऋषि**– अथर्वा । **देवता**– वनस्पति । **छन्द**– अनुष्टुप्, पुर उष्णिक्, भुरिक् अनुष्टुप् ।

**यां त्वा गन्धर्वो अखनद् वरुणाय मृतभ्रजे । तां त्वा वयं खनामस्योषधिं शेपहर्षणीम् ॥१॥**

हे औषधि ! वरण गर्न योग्य मानिस वा वरुणदेवताका लागि गन्धर्वले तिमीलाई खनेका थिए । हामी पनि इन्द्रियशक्ति बढाउनका लागि तिमीलाई खन्दछौँ ।

**उदुषा उदु सूर्य उदिदं ममामकं वचः । उदेजतु प्रजापतिर्वृषा शुष्मेण वाजिना ॥२॥**
औषधिलाई उषादेवीले शक्तिसम्पन्न पराक्रमले समृद्ध गराऊन् । हाम्रा यस महामन्त्रका वचनले पनि औषधिलाई वृद्धि गराओस् । वर्षा गराउने प्रजापतिदेवताले पनि यसलाई बलवीर्यले युक्त गराउँदै वृद्धि गरून् ।

**यथा स्म ते विरोहतोऽभितप्तमिवानति । ततस्ते शुष्मवत्तरमियं कृणोत्वोषधिः ॥३॥**
हे पुरुष ! विशेष सन्दर्भका कर्ममा लागेका अवस्थामा जब शरीरका अङ्गहरू तातिएर गतिशील हुन्छन्, त्यस बेला यस औषधिले तिमीलाई असीम बल र वीर्यले सम्पन्न गरोस् ।

**उच्छुष्मौषधीनां सार ऋषभाणाम् । सं पुंसामिन्द्र वृष्ण्यमस्मिन् धेहि तनूवशिन् ॥४॥**
अन्य वीर्यवर्द्धक औषधिहरूमा यो औषधि विशेष रूपमा श्रेष्ठ सिद्ध होस् । शरीरलाई नियन्त्रणमा गराउने हे इन्द्रदेवता ! तिमी यस औषधिमा पुरुषार्थयुक्त शक्ति स्थापना गर ।

**अपां रसः प्रथमजोऽथो वनस्पतिनाम् । उत सोमस्य भ्रातास्युतार्शमसि वृष्ण्यम् ॥५॥**
हे औषधि ! समुद्रको जल मन्थनका समयमा पहिले उत्पन्न भएको अमृतको जस्तै रसले तिमी सम्पन्न छौ र वनस्पतिहरूको सारका रूपमा पनि तिमी नै छौ । तिमी सोमरसको सहोदर हौ र अङ्गिरा आदि ऋषिहरूका मन्त्रका बलले प्रकट भएको वीर्यका रूप हौ ।

**अद्याग्ने अद्य सवितरद्य देवि सरस्वति । अद्यास्य ब्रह्मणस्पते धनुरिवा तानया पसः ॥६॥**
हे अग्निदेवता ! हे सवितादेवता ! हे सरस्वतीदेवी ! हे ब्रह्मणस्पतिदेवता ! तिमीहरू यी मानिसका इन्द्रियलाई बलवीर्य प्रदान गरेर त्यसलाई धनुषजत्तिकै प्रहार गर्ने खालको बनाओ ।

**आहं तनोमि ते पसो अधि ज्यामिव धन्वनि । क्रमस्वर्श इव रोहितमनवग्लायता सदा ॥७॥**
हे मानिस ! हामी तिम्रा इन्द्रियलाई धनुषमा तन्काएको ताँदोजत्तिकै बलसम्पन्न बनाउँछौं । त्यसो भएपछि तिमी पनि बलशालीकै जस्तो किसिमले आफ्ना कर्म पूरा गर्नतिर लाग ।

**अश्वस्याश्वतरस्याजस्य पेत्वस्य च । अथ ऋषभस्य ये वाजास्तानस्मिन् धेहि तनूवशिन् ॥८॥**
हे औषधि ! घोडा, गोरु, भेडाको थुम्बा आदिमा शरीरलाई वशमा गर्ने खालको जुन ओज हुने गर्दछ, त्यही किसिमको ओज यी मानिसका शरीरमा पनि स्थापित गराऊ ।

## ५. स्वापन सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** वृषभ, स्वापन । **छन्द–** अनुष्टुप्, भुरिक् अनुष्टुप्, पुरस्तात् ज्योति त्रिष्टुप् ।

**सहस्रशृङ्गो वृषभो यः समुद्रादुदाचरत् । तेना सहस्येना वयं नि जनान्त्स्वापयामसि ॥१॥**
हजारौं सिङजस्ता रश्मि भएका साँढेको रूपमा रहेका वर्षा गराउने सूर्यदेवता समुद्रबाट माथि निस्केर आएका छन् । शत्रुलाई पराजित गर्ने उनै सूर्यका बलले हामी स्तोताहरू सबैलाई सुखको निद्रा सुत्ने गराउँछौं ।

**न भूमिं वातो अति वाति नाति पश्यति कश्चन । स्त्रियश्च सर्वाः स्वापय शुनश्चेन्द्रसखा चरन् ॥२॥**
यस बेला धर्तीमा अत्यधिक वायु नचलोस् र कुनै मानिसले माथि पनि नहेरोस् । हे वायुदेवता ! तिमी इन्द्रदेवताका मित्र हौ । त्यसैले तिमी समस्त स्त्री र कुकुरहरूलाई सुत्ने गराऊ ।

**प्रोष्ठेशयास्तल्पेशया नारीर्या वह्यशीवरीः । स्त्रियो याः पुण्यगन्धयस्ताः सर्वाः स्वापयामसि ॥३॥**
जुन स्त्रीहरू घरका आँगनमा सुत्छन्, जो हिँडिरहेका वाहनमा सुत्दछन्, जो साधारण ओछ्यानमा सुत्छन्, जो उत्तम सुगन्धले युक्त श्रेष्ठ शय्यामा सुत्दछन्, उनीहरूको जस्तै सबै स्त्रीहरूलाई हामी सुखपूर्वक सुत्ने अवसर दिन्छौं ।

**एजदेजदजग्रभं चक्षुः प्राणमजग्रभम् । अङ्गान्यजग्रभं सर्वा रात्रीणामतिशर्वरे ॥४॥**
समस्त चेतन प्राणीहरूलाई हामीले सुत्ने अवसर दिएका छौँ र उनका आँखाको देख्ने शक्ति हामीले ग्रहण गरेका छौं । तिनको प्राणसञ्चार हुने स्थानमा रहेको नाकको सुँघ्ने वा सास फेर्ने शक्तिलाई पनि हामीले नै ग्रहण गरेका छौं । रातका अँध्यारामा हामीले उनीहरूका सबै अङ्गलाई नै निद्राका वशमा गराइसकेका छौँ ।

**य आस्ते यश्चरति यश्च तिष्ठन् विपश्यति । तेषां सं दध्मो अक्षीणि यथेदं हर्म्यं तथा ॥५॥**
जो यहाँ रहने गरेका वा आउनेजाने गरेका हुन्छन् र हामीतिर हेर्ने गर्दछन्, उनका दृष्टिलाई हामी राजमहलजस्तै सुदृढ र निश्चल बनाउँछौँ ।

**स्वप्तु माता स्वप्तु पिता स्वप्तु श्वा स्वप्तु विश्पतिः । स्वपन्त्वस्यै ज्ञातयः स्वप्त्वयमभितो जनः ॥६॥**
कुकुरका आमाहरू सुतून्, कुकुरका बाबुहरू सुतून् र कुकुर स्वयं पनि सुतून् । घरमालिक, उनका सबै बन्धुबान्धव र नोकरचाकर सबै नै सुतून् ।

**स्वप्न स्वप्नाभिकरणेन सर्वं नि ष्वापया जनम् । ओत्सूर्यमन्यान्त्स्वापयाव्युषं जागृतादहमिन्द्र इवारिष्टो अक्षितः ॥७॥**
हे स्वप्नका अधिष्ठाता देवता ! स्वप्नका साधनहरूले तिमी सबै मानिसहरूलाई नै सुताइदेऊ र तिनलाई सूर्योदय हुने बेलासम्म निद्रामा राख । यसै किसिमले सबै सुतेर हामी इन्द्रको जस्तै अहिंसित अवस्थामा, सकुशल, क्षयरहित रूपमा प्रातःकालसम्ममा जाग्न सकौँ ।

## ६. विषघ्न सूक्त

**ऋषि–** गरुत्मान् । **देवता–** तक्षक,ब्राह्मण, द्यावपृथिवी, सप्तसिन्धु, सुपर्ण, विष । **छन्द–** अनुष्टुप् ।

**ब्राह्मणो जज्ञे प्रथमो दशशीर्षो दशास्यः । स सोमं प्रथमः पपौ स चकाराग्सं विषम् ॥१॥**
सबैभन्दा पहिले दस टाउका र दस मुख भएका ब्राह्मण उत्पन्न भए, उनैले सोमपान गरे । त्यही सोमपानले नै विषलाई प्रभावहीन र सारहीन बनायो ।

**यावती द्यावापृथिवी वरिम्णा यावत् सप्त सिन्धवो वितष्ठिरे । वाचं विषस्य दूषणीं तामितो निरवादिषम् ॥२॥**
जति विस्तृत रूपमा द्यावापृथिवी फैलिएको छ र सातै सिन्धुहरू जति परिमाणमा फैलिएका छन्, उति नै स्थानसम्मको विष हटाउनका लागि हामी मन्त्रसहितको वाणीलाई प्रयोग गर्दछौँ ।

**सुपर्णस्त्वा गरुत्मान् विष प्रथममावयत् विष प्रथममावयत् । नामीमदो नारूरुप उतास्मा अभवः पितुः ॥३॥**
हे विष ! वेगवान् गरूड पक्षीले तिमीलाई पहिले नै खाइदिएका थिए । उनी न त मातेका थिए न बेहोस नै भए । तिमी उनका लागि अब अन्नजस्तै भइसकेका छौ ।

**यस्त आस्यत् पञ्चाङ्गुरिर्वक्राच्चिदधि धन्वनः । अपस्कम्भस्य शल्यान्निरवोचमहं विषम् ॥४॥**
पाँच औँला भएका हातले तिमीलाई धनुषमा डोरी चढाएझैँ मुखमा हालिसकेको थियो, उसै विष र विषालु हातलाई हामी मन्त्रले फुकेर औषधिका माध्यमबाट प्रभावहीन बनाउँछौँ ।

**शल्याद् विषं निरवोचं प्राञ्जनादुत पर्णधेः । अपाष्ठाच्छृङ्गात् कुल्मलान्निरवोचमहं विषम् ॥५॥**
शल्यक्रिया गरेर, लेप लगाएर, पात या प्वाँखका उपकरणले हामीले विष हटाएका छौँ । सिङजस्तो तिखो उपकरणले कुलाल नामको विशेष औषधि प्रयोग गरेर हामीले विषलाई हटाएका छौँ ।

**अरसस्त इषो शल्योऽथो ते अरसं विषम् । उतारसस्य वृक्षस्य धनुष्टे अरसारसम् ॥६॥**

हे बाण ! तिम्रो विषसहितको पातो विषहीन होस् र तिमीभित्र भएको विष पनि प्रभावहीन होस् । त्यसपछि रसाविनाको सुकेका वृक्षले बनिएको तिम्रो धनुष पनि वीर्य वा प्रभावहीन नै होस् ।

**ये अपीषन् ये अदिहन् य आस्यन् ये अवासृजन् । सर्वे ते वध्रयः कृता वध्रिर्विषगिरिः कृतः ॥७॥**

विषयुक्त औषधि प्रदान गर्ने, मलमहरूमा विषको प्रयोग गर्ने, परबाट विष फ्याँक्ने र नजिकै रहेर अन्नजलमा विष मिसाउने मानिसहरू जोजो छन्, हामीले ती मानिसहरूलाई मन्त्रको बलले प्रभावहीन बनाएका छौं । जुनजुन पर्वतमा विष उम्रने गर्दछ, हामीले तिनलाई पनि प्रभावहीन बनाइदिएका छौं ।

**वध्रयस्ते खनितारो वध्रिस्त्वमस्योषधे । वध्रिः स पर्वतो गिरिर्यतो जातमिदं विषम् ॥८॥**

हे बिखालु औषधिहरू हो ! तिमीहरूलाई खनेर निकाल्ने मानिसहरू प्रभावहीन होऊन् र तिमीहरू स्वयं पनि प्रभावहीन होओ । तिमीहरू जुनजुन पहाडपर्वतमा उत्पन्न हुने गरेका छौ, ती सबै नै प्रभावहीन होऊन् ।

## ७. विषनाशन सूक्त

**ऋषि**– गरुत्मान् । **देवता**– वनस्पति । **छन्द**– अनुष्टुप्, स्वराट् अनुष्टुप् ।

**वारिदं वारयातै वरणावत्यामधि । तत्रामृतस्यासिक्तं तेना ते वारयो विषम् ॥१॥**

वरणावती औषधि अर्थात् पानीरूपी औषधिमा रहेका रसले हाम्रो विष समाप्त गरोस् । यसमा अमृतको स्रोत छ । त्यस अमृतमय जलले नै हामी तिम्रो विष हटाउँछौँ ।

**अरसं प्राच्यं विषमरसं यदुदीच्यम् । अथेदमधराच्यं करम्भेण वि कल्पते ॥२॥**

पूर्व दिशा, उत्तर दिशा र दक्षिण दिशामा भएको विष पराक्रमविहीन होस् । उसै गरी जुनसुकै दिशामा रहेको विष मन्त्रका बलले वीर्यरहित होस् ।

**करम्भं कृत्वा तिर्यं पीबस्पाकमुदारथिम् । क्षुधा किल त्वा दुष्टनो जक्षिवान्त्स न रूरुपः ॥३॥**

हे चोट लागेको शरीर भएका मानिस ! घाउ पकाउने श्रम र आवश्यकताअनुसार खाइएको औषधिले मिलेर बनेको करभ नामको औषधिको मिश्रण रोगनाशक हुन्छ । यसले तिमीलाई विषको प्रभावले बेहोस हुन दिनेछैन ।

**वि ते मदं मदावति शरमिव पातयामसि । प्र त्वा चरुमिव यषन्तं वचसा स्थापयामसि ॥४॥**

हे औषधि ! तिम्रा विषलाई हामी धनुषबाट छुट्ने बाणको जसरी नै शरीरबाट पर फ्याँकिदिनेछौँ । हे विष ! गोप्य रूपमा घुम्ने गरेका गुप्तचरझैँ शरीरका अङ्गहरूमा व्याप्त हुने गरेका तिमीलाई हामी मन्त्रका बलले पर हटाउँछौँ ।

**परि ग्राममिवाचितं वचसा स्थापयामसि । तिष्ठा वृक्ष इव स्थाम्न्यभ्रिखाते न रूरुपः ॥५॥**

जनसमूह भेला भएझैँ जम्मा भएका विषलाई हामी मन्त्रका बलले बाहिर निकाल्दछौँ । कोदालोले खनिएका हे औषधि ! तिमी आफ्ना स्थानमा नै वृक्षझैँ अडिग रहिराख । यस व्यक्तिलाई मूर्च्छित नबनाऊ ।

**पवस्तैस्त्वा पर्यक्रीणन् दूर्शेभिरजिनैरुत । प्रक्रीरसि त्वमोषधेऽभ्रिखाते न रूरुपः ॥६॥**

हे विषयुक्त औषधि ! महर्षिहरूले तिमीलाई किनेर पवित्र गर्नका लागि कुशमाथि ओछ्याएका छन् । तिमी दुष्ट जन्तुहरूका छालाले किनिएका हौ । त्यसैले तिमीभित्रको विष यस स्थानबाट नष्ट होस् । हे कोदालोले खनेर निकालिएका औषधि ! तिमी रोगी व्यक्तिलाई मूर्च्छित नगराऊ ।

**अनाप्ता ये वः प्रथमा यानि कर्माणि चक्रिरे । वीरान् नो अत्र मा दभन् तद् व एतत् पुरो दधे ॥७॥**

हे मानिसहरू हो ! तिमीहरूको प्रतिकूल व्यवहार गर्ने जुन शत्रुहरूले योग आदि प्रमुख कर्म गरेका छन्, ती कर्मद्वारा हाम्रा वीर पुत्रहरू यस देशमा हिंसित नहोऊन् । यस चिकित्सारूपी कर्मलाई हामी तिमीहरूको सुरक्षाका लागि तिमीहरूकै अगाडि प्रस्तुत गर्दछौँ ।

## ८. राज्याभिषेक सूक्त

**ऋषि–** अथर्वाङ्गिरा । **देवता–** चन्द्रमा, आपः, राज्याभिषेक, राजा, देवगण, विश्वरूप, आप । **छन्द–** अनुष्टुप्, भुरिक्, त्रिष्टुप्, त्रिष्टुप्,विराट् प्रस्तार पङ्क्ति ।

**भूतो भूतेषु पय आ दधाति स भूतानामधिपतिर्बभूव । तस्य मृत्युश्चरति राजसूयं स राजा राज्यमनु मन्यतामिदम् ॥१॥**

स्वयं उत्पन्न भएर जसले अरू उत्पन्न भएका जडचेतनलाई पोषक रस प्रदान गर्दछ, उही सर्वभूतको अधिपति हुन्छ । मृत्यु पनि उसैको राजसूय प्रयोग अर्थात् राज्यलाई प्रेरित गर्ने तरिकाका आधारमा चल्ने गर्दछ । त्यस्ता राजालाई राज्यले मान्यता दिएर चल्ने गर्दछ ।

**अभि प्रेहि माप वेन उग्रश्चेत्ता सपत्नहा । आ तिष्ठ मित्रवर्धन तुभ्यं देवा अधि ब्रवन् ॥२॥**

हे उग्र, चेतनालाई सञ्चालन गर्ने तेजस्वी वेन ! शत्रुविनाशक भएर तिमी अघि बढ, पछि नहट । देवताहरूले तिमीलाई मित्रको उन्नति गराउने मानेका छन् । उचित किसिमले तिमी प्रतिष्ठित होऊ ।

**आतिष्ठन्तं परि विश्वे अभूषञ्छ्रियं वसानश्चरति स्वरोचिः । महत् तद् वृष्णो असुरस्य नामा विश्वरूपो अमृतानि तस्थौ ॥३॥**

स्थापित भएपछि, विश्वबाट विभूषित भएर, श्रीरूप वैभवका वस्त्रले ढाकिएर र स्वयंलाई प्रकाशित गराउँदै तिमी विचरण गर्दछौ । त्यस्तो विश्वरूप, प्राणयुक्त, वर्षणशीलको ख्याति ठूलो रहेको छ । त्यो अमृततत्त्वमा आधारित रहेको हुन्छ ।

**व्याघ्रो अधि वैयाघ्रे वि क्रमस्व दिशो महीः । विशस्त्वा सर्वा वाञ्छन्त्वापो दिव्याः पयस्वतीः ॥४॥**

हे बाघ ! तिमी सुँघ्ने शक्ति विशेष भएका छौ र त्यस्तै अजेय हुनाले विशाल दिशाहरूलाई विजय गर । सबै प्रजाहरूले तिमीलाई स्वामीका रूपमा स्वीकार गरून् र बर्सने दिव्य जलले पनि तिम्रो कामना गरोस् ।

**या आपो दिव्याः पयसा मदन्त्यन्तरिक्ष उत वा पृथिव्याम् । तासां त्वा सर्वासामपामभि षिञ्चामि वर्चसा ॥५॥**

अन्तरिक्ष र पृथ्वीमा जुन दिव्य जलले आफ्नो रसका गुणले प्राणीको तिर्खा मेटाउँछ, त्यसै तेजस्वी जलले हामी तिम्रो अभिषेक गर्दछौँ ।

**अभि त्वा वर्चसासिचन्नापो दिव्याः पयस्वतीः । यथासो मित्रवर्धनस्तथा त्वा सविता करत् ॥६॥**

हे तेजस्वी ! दिव्य रसले युक्त जलका तेजले तिमीलाई अभिषेक गरोस् । मित्रलाई तिमी जसरी समृद्ध गराउँछौ, उसै गरी सवितादेवताले तिमीलाई समृद्ध गराऊन् ।

**एना व्याघ्रं परिषस्वजानाः सिंहं हिन्वन्ति महते सौभगाय । समुद्रं न सुभुवस्तस्थिवांसं मर्मृज्यन्ते द्वीपिनमप्स्व१न्तः ॥७॥**

समुद्रका माझको टापुजस्तो सृष्टिको मूल तत्त्व जलले बाघ र सिंहजस्ता पराक्रमीलाई यी दिव्य धाराहरूले महान् सौभाग्य प्राप्तिका लागि प्रेरित गरोस् र विभूषित गरोस् ।

## ९. आञ्जन सूक्त

**ऋषि**– भृगु । **देवता**– त्रैककुदाञ्जन । **छन्द**– अनुष्टुप्, ककुम्मती अनुष्टुप्, पथ्यापङ्क्ति ।

**एहि जीवं त्रायमाणं पर्वतस्यास्यक्ष्यम् । विश्वेभिर्देवैर्दत्तं परिधिर्जीवनाय कम् ॥१॥**

हे अञ्जन मणि ! तिमी प्राणधारीहरूलाई सुरक्षा गर्ने पर्वतका आँखाजस्तै हौ । तिमी देवताहरूले प्रदान गरेको जीवनरक्षक परिधिका रूपमा यहाँ आऊ ।

**परिपाणं पुरुषाणां परिपाणं गवामसि । अश्वानामर्वतां परिपाणाय तस्थिषे ॥२॥**

हे अञ्जनमणि ! तिमी मानिस तथा गाईको सुरक्षा गर्ने हौ । तिमी घोडा र घोडीको सुरक्षा गर्नका लागि पनि स्थित रहन्छौ ।

**उतासिं परिपाणं यातुजम्भनमाञ्जन । उतामृतस्य त्वं वेत्थाथो असि जीवभोजनमथो हरितभेषजम् ॥३॥**

जसले आँखालाई सफा गराउँछ, त्यस्ता हे अञ्जनमणि ! राक्षसले दिएका यातनालाई तिमी समाप्त पार्दछौ र जीवलाई सुरक्षा गर्दछौ । तिमी स्वर्गमा रहेको अमृतलाई जान्दछौ र प्राणीको अनिष्ट हटाएर उसलाई सुरक्षा गर्दछौ । तिमी पाण्डुरोगको औषधि हौ ।

**यस्याञ्जन प्रसर्पस्यङ्गमङ्गं परुष्परुः । ततो यक्ष्मं वि बाधस उग्रो मध्यमशीरिव ॥४॥**

हे अञ्जनमणि ! तिमी जुन मानिसका अङ्ग र जोर्नीमा व्याप्त हुन्छौ, त्यस मानिसका शरीरबाट क्षय आदि रोगहरूलाई मेघले वायुले उडाएझैँ उडाइदिन्छौ ।

**नैनं प्राप्नोति शपथो न कृत्या नाभिशोचनम् । नैनं विष्कन्धमश्नुते यस्त्वा बिभर्त्याञ्जन ॥५॥**

हे अञ्जनमणि ! जुन मानिसले तिमीलाई धारण गर्दछन्, उनलाई अरूले दिएको शाप पनि लाग्दैन र अरूले प्रयास गरेको अभिचाररूपी कृत्याले पार्ने शोक पनि पर्दैन । त्यस्ता मानिसलाई गतिअवरोधक बाधाले रोक्न सक्दैनन् ।

**असन्मन्त्राद् दुष्वप्न्याद् दुष्कृताच्छमलादुत । दुर्हार्दश्चक्षुषो घोरात् तस्मान्नः पाह्याञ्जन ॥६॥**

हे अञ्जनमणि ! अभिचारात्मक विनाशकारी मन्त्रले दिने खालका कष्टहरूबाट, नराम्रा स्वप्नबाट, पापबाट उत्पन्न हुने गरेका सबै खालका दुःखबाट, नराम्रो मनसायबाट र क्रूर आँखाबाट हामीलाई सुरक्षा गर ।

**इदं विद्वानाञ्जन सत्यं वक्ष्यामि नानृतम् । सनेयमश्वं गामहमात्मानं तव पूरुष ॥७॥**

हे अञ्जनमणि ! तिम्रो महिमालाई हामी जान्दछौँ । त्यसो भएकै कारण हामीले भनेको यो कुरो सत्य हो, झुटो होइन । तिम्रो सहायताले हामी गाई, घोडा र अन्य जीवको सेवा गरौँ ।

**त्रयो दासा आञ्जनस्य तक्मा बलास आदहिः । वर्षिष्ठः पर्वतानां त्रिककुन्नाम ते पिता ॥८॥**

जीवनलाई कठिन बनाउने ज्वर, शरीरलाई कमजोर गराउने सन्निपात र सर्पका विषको विकार आदि तीन रोगलाई यस अञ्जनले दासलाई जस्तै आफ्नो नियन्त्रणमा बनाएर राख्दछ । हे अञ्जनमणि ! त्रिककुद नामको सर्वश्रेष्ठ पर्वत तिम्रा पिता हुन् ।

**यदाञ्जनं त्रैककुदं जातं हिमवतस्परि । यातूंश्च सर्वाञ्जम्भयत् सर्वाश्च यातुधान्यः ॥९॥**

हिउँले ढाकिएको त्रिककुद नामको पर्वतमा उत्पन्न हुने अञ्जनले समस्त राक्षस र राक्षसनीलाई विनाश गर्दछ । त्यसो हुँदा त्यस अञ्जनमणिले हाम्रा पनि सबै खालका रोग नष्ट गरोस् ।

**यदि वासि त्रैककुदं यदि यामुनमुच्यसे । उभे ते भद्रे नाम्नी ताभ्यां नः पाह्याञ्जन ॥१०॥**

हे अञ्जनमणि ! तिमी यदि त्रिककुद वा यामुन नामले चिनिन्छौ भनेदेखि तिम्रा यी दुवै नाम कल्याणकारी नै हुनेछन् । त्यसैले तिमी आफ्ना यी दुवै नामले हाम्रो सुरक्षा गर ।

## १०. शङ्खमणि सूक्त

**ऋषि**– अथर्वा । **देवता**– शङ्खमणि, कृशन । **छन्द**– अनुष्टुप्, पथ्यापङ्क्ति, पञ्चपदा परानुष्टुप् शक्वरी ।

**वाताज्जातो अन्तरिक्षाद् विद्युतो ज्योतिषस्परि । स नो हिरण्यजाः शङ्खः कृशनः पात्वंहसः ॥१॥**

वायु, अन्तरिक्ष, विद्युत् र सूर्य आदिका ज्योतिबाट उत्पन्न तथा स्वर्णले बनिएको तेजस्वी शङ्खले हामीलाई पापबाट सुरक्षा गरोस् ।

**यो अग्रतो रोचनानां समुद्रादधि जज्ञिषे । शङ्खेन हत्वा रक्षांस्यत्त्रिणो वि षहामहे ॥२॥**

हे शङ्ख ! तिमी प्रकाशमान नक्षत्रहरूझैँ रहेका समुद्रमा उत्पन्न हुने गर्दछौ । तिम्रा सहायताले हामी असुरलाई विनाश गरेर पिशाचहरूलाई पराजित गराउँछौँ ।

**शङ्खेनामीवाममतिं शङ्खेनोत सदान्वाः । शङ्खो नो विश्वभेषजः कृशनः पात्वंहसः ॥३॥**

शङ्खका सहयोगले हामी सबै खालका रोग तथा विवेकहीनतालाई हटाउँछौँ । यसैका सहायताले हामी सधैँ दुःख दिने गरेको अलच्छिनलाई पनि पराजित गर्दछौँ । विघ्नहरूलाई हटाउने यस तेजस्वी शङ्खले हामीलाई पापबाट जोगाओस् ।

**दिवि जातः समुद्रजः सिन्धुतस्पर्याभृतः । स नो हिरण्यजाः शङ्खआयुष्प्रतरणो मणिः ॥४॥**

पहिले द्युलोकमा उत्पन्न भएपछि समुद्रमा उत्पन्न, नदीहरूले एकत्रित गराएर हिरण्यले बनेका यस दिव्य शङ्खमणिले हाम्रो आयु वृद्धि गराओस् ।

**समुद्राज्जातो मणिर्वृत्राज्जातो दिवाकरः । सो अस्मान्त्सर्वतः पातु हेत्या देवासुरेभ्यः ॥५॥**

समुद्रमा उत्पन्न भएको यो शङ्खमणि मेघमा उत्पन्न सूर्यजस्तै छ । यसले देवता र असुरहरूको अस्त्र लिएर हाम्रो रक्षा गरोस् ।

**हिरण्यानामेकोऽसि सोमात् त्वमधि जज्ञिषे । रथे त्वमसि दर्शत इषुधौ रोचनस्त्वं प्र ण आयूंषि तारिषत् ॥६॥**

हे शङ्खमणि ! तेजस्वीहरूमा तिमी एक छौ । तिमी सोमबाट उत्पन्न भएका हौ । रथमा तिमी हेर्नका लागि योग्य हुने गरेका छौ र बाणको आश्रयस्थानका रूपमा रहेको ठोक्रोमा चम्कँदै देखा पर्दछौ । तिमी यस्ता हुनाले हाम्रो आयु तिमी वृद्धि गर ।

**देवानामस्थि कृशनं बभूव तदात्मन्वच्चरत्यप्स्वन्तः । तत् ते बध्नाम्यायुषे वर्चसे बलाय दीर्घायुत्वाय शतशारदाय कार्शनस्त्वाभि रक्षतु ॥७॥**

देवताको अस्थिका रूपमा यो मोती बनिएको छ । यो आत्मतत्त्वजस्तै भएर जलका बीचमा विचरण गर्दछ । हे व्यक्तिविशेष ! यस्तो खालका त्यस शङ्खमणिको तेजस्विता, बल र सय वर्षको आयुले तिमीलाई बाँध्दछु । यसले सबै किसिमले तिम्रो सुरक्षा गरून् ।

## ११. अनड्वान् सूक्त

**ऋषि**– भृग्वङ्गिरा । **देवता**– इन्द्र, अनड्वान । **छन्द**– त्रिष्टुप्, जगती, भुरिक् त्रिष्टुप्, त्र्यवसाना षटपदा अनुष्टुप्गर्भा उपरिष्टात्जागतानिचृत्शक्वरी, अनुष्टुप् ।

**अनड्वान् दाधार पृथिवीमुत द्यामनड्वान् दाधारोर्वन्तरिक्षम् । अनड्वान् दाधार प्रदिशः षड्उर्वीरनड्वान् विश्वं भुवनमा विवेश ॥१॥**

विश्वरूपी गाडा बोक्ने गोरुरूपी ईश्वरले पृथ्वीलाई धारण गरेका छन् । उनले स्वर्गलोक, अन्तरिक्षलोक र पूर्व आदि छ वटा महादिशा र पृथ्वीलाई पनि धारण गरेका छन् । यस किसिमले ती अनड्वान अर्थात् गाडा तान्ने नाम भएका ईश्वर सबै लोकमा प्रवेश गर्छन् ।

**अनड्वानिन्द्रः स पशुभ्यो वि चष्टे त्रयांञ्छक्रो वि मिमिते अध्वनः । भूतं भविष्यद् भुवना दुहानः सर्वा देवानां चरति व्रतानि ॥२॥**

यिनै अनड्वान् अर्थात् गाडा तान्नेलाई इन्द्र भन्ने गरिन्छ । तिनै शक्र नामका इन्द्रदेवताले तीनै वटा

लोकहरूलाई नापेका छन् र प्राणीको निरीक्षण पनि उनैले गर्दछन् । उनैले भविष्यत् र वर्तमान कालका पदार्थहरूलाई उत्पन्न गर्दछन् र देवताको सबै खालका नियमहरू चलाउँछन् ।

**इन्द्रो जातो मनुष्येष्वन्तर्घर्मस्तप्तश्चरति शोशुचानः । सुप्रजाः सन्त्स उदारे न सर्षद् यो नाश्नीयादनडुहो विजानन् ॥३॥**

उनै इन्द्रदेवता नै जीवात्मका रूपमा सबै मानिसभित्र प्रकट हुने गर्दछन् । तपस्वी सूर्यजस्तै प्रकाशित भएर उनै विचरण गर्दछन् । उनी भोजन गर्दैनन् र सञ्चालकलाई चिनेर उसैका अनुशासनमा श्रेष्ठ ज्ञानले सम्पन्न रहने हुनाले शरीर त्याग गरिसकेपछि पनि विचल्ली हुँदैनन् ।

***अनड्वान् दुहे सुकृतस्य लोक ऐनं प्याययति पवमानः पुरस्तात् । पर्जन्यो धारा मरुत ऊधो अस्य यज्ञः पयो दक्षिणा दोहो अस्य ॥४॥***

सत्कर्म गरिसकेपछि प्राप्त हुने पुण्यलोकमा रहेका यी ईश्वररूपी अनड्वानले इच्छा लागेको फल प्रदान गर्दछन् । उनैका लागि उहिलेदेखि नै पवित्र सोमरसले रस परिपूर्ण गराएको छ । पर्जन्यका यिनैका धारा हुन् । मरुत्गण यिनैका स्तन हुन् र यज्ञ नै यिनको दुध हो । यज्ञमा प्रदान गरिने दक्षिणा नै यी अनड्वानलाई दुहुने कार्य हो ।

**यस्य नेशे यज्ञपतिर्न यज्ञो नास्य दातेशे न प्रतिग्रहीता । यो विश्वजिद् विश्वभृद् विश्वकर्मा घर्मं नो ब्रूत यतमश्चतुष्पात् ॥५॥**

याजकहरू देवताका रूपमा रहेका अनड्वानका स्वामी होइनन् । यज्ञक्रिया, दानदाता, दान ग्रहणकर्ता पनि यिनका स्वामी होइनन् । यिनी समस्त संसारलाई विजय गर्ने र वायुका रूपमा रहेर सबैलाई पालनपोषण गर्ने हुन् । संसारका सबै कर्महरू नै यिनैका हुन् । यी चार चरणयुक्तले हामीलाई आलोकवान् सूर्यका विषयमा उपदेश दिने गर्दछन् ।

**येन देवाः स्वरारुरुहुर्हित्वा शरीरममृतस्य नाभिम् । तेन गेष्म सुकृतस्य लोकं घर्मस्य व्रतेन तपसा यशस्यवः ॥६॥**

देवताका रूपमा रहेका जुन अनड्वानका कारण देवताहरू शरीर त्याग गरिसकेपछि अमृतको केन्द्ररूपी प्रकाशित स्थानमा आरुढ भएका थिए, उनैबाट प्रदीप्त भएर हामी पनि आदित्यदेवताको व्रत गर्दै मोक्षसुखको कामना गर्ने पुण्यफलका रूपमा श्रेष्ठ लोक प्राप्त गरौँ ।

**इन्द्रो रूपेणाग्निर्वहेन प्रजापतिः परमेष्ठी विराट् । विश्वानरे अक्रमत वैश्वानरे अक्रमतानडुह्यक्रमत । सोऽदृंहयत सोऽधारयत ॥७॥**

इन्द्रदेवता आफ्नो स्वरूपकै कारण अग्नि हुन् । उनी सृष्टिकर्ता तथा प्रजापति समस्त विश्वलाई नै दोहन गर्ने भएका कारण विराट् भएका छन् । उनी नै समस्त पुरुष, अग्नि तथा रथ तान्नेका रूपमा व्याप्त भएका छन् । उनैले सबैलाई बल प्रदान गर्दछन् र सबैलाई धारण गरेका छन् ।

**मध्यमेतदनडुहो यत्रैष वह आहितः । एतावदस्य प्राचीनं यावान् प्रत्यङ् समाहितः ॥८॥**

यो यज्ञ उनै विश्वलाई वहन गर्ने संवाहकको भारी उचाल्ने भाग हो । यी गोरुका रूपमा रहेका अनड्वानको अघिल्लो भाग उति नै परिमाणको छ, जति परिमाण पछिल्ला भागको रहेको छ ।

**यो वेदानडुहो दोहान्त्सप्तानुपदस्वतः । प्रजां च लोकं चाप्नोति तथा सप्तऋषयो विदुः ॥९॥**

प्रजापतिका रूपमा रहेका अनड्वानका लोक, समुद्र आदि सात किसिमका दोहनस्रोतलाई जसले जानेका छन्, उनीहरूले नै श्रेष्ठ प्रजा र पुण्यलोक प्राप्त गर्दछन् । यस किसिमको कुरो सप्तर्षिले नै जानेका छन् ।

**पद्भिः सेदिमवक्रामन्निरां जङ्घाभिरुत्खिदन् । श्रमेणानड्वान् कीलालं कीनाशश्चाभि गच्छतः ॥१०॥**

यी प्रजापतिका रूपमा रहेका अनड्वानका चार गोडाले दुःख निम्त्याउने अलच्छिनलाई उँधोमुन्टो पारेर त्यसमाथि उनी आरुढ गर्दछन् । उनी जङ्घाले धर्ती खोतल्दै र आफ्नै श्रमको अनुकूल

आफूलाई चलाउने गरेका किसानलाई अन्न प्रदान गर्दछन् ।

**द्वादश वा एता रात्रीर्व्रत्या आहुः प्रजापतेः । तत्रोप ब्रह्म यो वेद तद् वा हनडुहो व्रतम् ॥११॥**

यी बाह्र रात्रीहरू यज्ञात्मक प्रजापतिका व्रतका लागि योग्य छन् भन्ने कुरो विद्वान्हरू भन्ने गर्दछन् । उसै समयमा साँढेको रूप धारण गरेर आएका प्रजापतिसम्बन्धी ब्रह्मालाई जसले चिन्दछन्, उनीहरू नै यी अनड्वानको नियम पालन गर्न अधिकारप्राप्त हुन्छन् । यो ज्ञान अनडुहका रूपमा रहेका विश्वसञ्चालकका अनुष्ठानको हो ।

**दुहे सायं दुहे प्रातर्दुहे मध्यन्दिनं परि दोहा ये अस्य संयन्ति तान् विद्मानुपदस्वतः ॥१२॥**

यस किसिमको लक्षणले युक्त गोरुको रूपधारण गर्नेलाई हामी बिहान, बेलुका र दिउँसोका समयमा दोहन गर्दछौं । यज्ञको अनुष्ठान गर्नेका फललाई पनि हामी दोहन गर्दछौं । यसै किसिमले जसले यी अनड्वानको दोहन गरेको फल प्राप्त गर्दछन्, त्यस्तो अविनाशी दोहन कर्म गर्नेहरूलाई हामीले चिनेका छौं ॥१२॥

## १२. रोहिणी वनस्पति सूक्त

**ऋषि**— ऋभु । **देवता**— वनस्पति । **छन्द**— अनुष्टुप्, त्रिपदा गायत्री, त्रिपदा यवमध्या भुरिक् गायत्री, बृहती ।

**रोहण्यसि रोहण्यस्थ्नश्छिन्नस्य रोहणी । रोहयेदमरुन्धति ॥१॥**

हे रातो वर्ण भएकी रोहिणी ! तिमी हड्डीहरूलाई पूर्णता प्रदान गर्दछ्यौ । हे अरून्धति ! तिमी उपचारको मार्गमा बाधा नहाल्ने हुनाले तिमी यी घाउहरूलाई निको पारिदेऊ ।

**यत् ते रिष्टं यत् ते द्युत्तमस्ति पेष्ट्रं त आत्मनि । धाता तद् भद्रया पुनः सं दधत् परुषा परुः ॥२॥**

हे घाइते व्यक्ति ! तिम्रा जुनजुन अङ्गमा घाउचोट लागेको छ अथवा जलेका छन्, प्रहारले जुनजुन अङ्ग भाँचिएका, कुच्चिएका छन्, ती सबै अङ्गलाई देवताहरूले यस हितकारी भद्राका माध्यमबाट जोडिदिऊन् र निको पारिदिऊन् ।

**सं ते मज्ज्ञा मज्जा भवतु समु ते परुषा परुः । सं ते मांसस्य विस्रस्तं समस्थ्यपि रोहतु ॥३॥**

हे घाइते व्यक्ति ! तिम्रा शरीरबाट छिनेर टुक्रिएर गएको मासु फेरि पलाओस् र तिम्रा लागि सुखदायक होस् । हाड, नसा, जोर्नी सबै आवश्यकताअनुसार जोडिऊन्, गाँसिऊन् र सबै सग्ला होऊन् ।

**मज्जा मज्ज्ञा सं धीयतां चर्मणा चर्म रोहतु । असृक् ते अस्थि रोहतु मांसं मांसेन रोहतु ॥४॥**

छिन्नभिन्न भएको मज्जा मज्जासितै, मासु मासुसितै र छाला छालासितै जोडिऊन् । रक्त र हड्डीहरू पनि चाहिँदो मात्रामा बढून् ।

**लोम लोम्ना सं कल्पया त्वचा सं कल्पया त्वचम् । असृक् ते अस्थि रोहतु च्छिन्नं सं धेह्योषधे ॥५॥**

हे औषधि ! हतियारले चोट लाग्दा छिनेका रौँलाई रौँसितै, छालालाई छालासितै गाँसेर ठिक गराऊ र तिम्रा सहयोगले हड्डी र रगतले आफ्नो काम गरून् । तिमी टुटफुट भएका अन्य अङ्गहरूलाई पनि जोडिदेऊ ।

**स उत् तिष्ठ प्रेहि प्र द्रव रथः सुचक्रः सुपविः सुनाभिः । प्रति तिष्ठोर्ध्वः ॥६॥**

हे छिन्नभिन्न अङ्ग भएका मानिस ! तिमी मन्त्र र औषधिका बलले स्वस्थ भएर आफ्ना शयनस्थानबाट उठ र वेगपूर्वक गमन गर । जसरी गतिला चक्र भएको, दह्रो नेमी भएको र बलियो नाभी भएको रथ ज्यादा कुदेकैले प्रतिष्ठित हुन्छ, उसै गरी तिमी पनि सबल अङ्गका भएर

कुद्नाले सम्मानित हुनेछौ ।

**यदि कर्तं पतित्वा संशश्रे यदि वाश्मा प्रहृतो जघान । ऋभू रथस्येवाङ्गानि सं दधत् परुषा परुः ॥७॥**

धारिलो हतियारले बनेको घाउ होस् वा ढुङ्गाले किचेर लागेको चोट होस्, जसरी ऋभुदेवता या कुशल शिल्पीले भत्केका रथको अङ्ग जोडेर राम्रो बनाउँछन्, उसै गरी चोटपटक सबै उचित तरिकाले निको होऊन् ॥७॥

## १३. रोग निवारण सूक्त

**ऋषि–** शन्ताति । **देवता–** चन्द्रमा, विश्वेदेवा, देवगण, वात्, मरुद्गण, हस्त । **छन्द–** अनुष्टुप् ।

**उत देवा अवहितं देवा उन्नयथा पुनः । उतागश्चक्रुषं देवा देवा जीवयथा पुनः ॥१॥**

हे देवताहरू हो ! हामी पतितहरूलाई बारम्बार माथि उकास । हे देवताहरू हो ! हामी अपराधीहरूको अपराधकर्मलाई निवारण गर । हे देवताहरू हो ! हाम्रो संरक्षण गर्दै हामीलाई दीर्घायु बनाओ ।

**द्वाविमौ वातौ वात आ सिन्धोरा परावतः । दक्षं ते अन्य आवातु व्य१न्यो वातु यद् रपः ॥२॥**

यी दुई वायुहरूमा एउटा समुद्रसम्म बहन्छन् र अर्कोचाहिँ समुद्रभन्दा धेरै पर प्रवाहित हुन्छन् । ती दुईमध्ये एउटाले तिमीजस्ता स्तोताहरूलाई बल प्रदान गरून् र अर्काले तिमीहरूका पापलाई विनाश गरून् ।

**आ वात वाहि भेषजं वि वात वाहि यद् रपः । त्वं हि विश्वभेषज देवानां दूत ईयसे ॥३॥**

हे वायुदेवता ! तिमी व्याधिहरूलाई निवारण गर्ने कल्याणकारी औषधि लिएर आऊ । अहितकारी पापरूपी मल छ भने त्यसलाई यहाँबाट बगाएर लैजाऊ । तिमी संसारका लागि औषधिको रूप, कल्याणकारी, देवदूत बनेर सर्वत्र सञ्चार गर्दछौ ।

**त्रायन्तामिमं देवास्त्रायन्तां मरतां गणाः । त्रायन्तां विश्वा भूतानि यथायमरपा असत् ॥४॥**

यस लोकमा सबै देवताहरूले हामीलाई संरक्षण प्रदान गरून् । मरुत्हरू र समस्त प्राणीले हाम्रो रक्षा गरून् । उनीहरूले हाम्रा शरीरका रोग र पापहरू निवारण गरिदिऊन् ।

**आ त्वागमं शन्तातिभिरथो अरिष्टतातिभिः । दक्षं त उग्रमाभिरिषं परा यक्ष्मं सुवामि ते ॥५॥**

हे स्तोताहरू हो ! तिमीहरूका लागि सुखशान्तिप्रदायक र अहिंसक संरक्षण साधनका साथमा हाम्रो आगमन भएको छ । तिमीहरूका लागि मङ्गलमय शक्तिलाई पनि हामीले धारण गरेका छौँ । त्यसो हुनाले नै यस बेला हामी तिमीहरूका सबै खालका रोगहरू हामी निवारण गर्दछौँ ।

**अयं मे हस्तो भगवानयं मे भगवत्तरः । अयं मे विश्वभेषजोऽयं शिवाभिमर्शनः ॥६॥**

हाम्रा यी हातहरू सौभाग्ययुक्त छन् । अति सौभाग्यशाली यी हातहरू सबैका सबै रोग निवारण गर्नका लागि नै हुन् । यी हातहरू शुभ र कल्याणकारी छन् ।

**हस्ताभ्यां दशशाखाभ्यां जिह्वा वाचः पुरोगवी । अनामयित्नुभ्यां हस्ताभ्यां ताभ्यां त्वाभि मृशामसि ॥७॥**

मन्त्रको उच्चारण गर्दाखेरि जसरी वाणीका साथसाथै जिब्रो पनि चल्ने गर्दछ, उसै गरी दस औँला भएका दुवै हातले तिमीलाई स्पर्श गर्दै तिमीहरूलाई रोगबाट मुक्त गराउँछौँ ॥७॥

## १४. स्वर्ज्योति प्राप्ति सूक्त

**ऋषि–** भृग । **देवता–** आज्य, अग्नि । **छन्द–** त्रिष्टुप्, अनुष्टुप्, प्रस्तारपङ्क्ति, जगती, पञ्चपदा अतिशक्वरी ।

**अजो ह्य१ग्नेरजनिष्ट शोकात् सो अपश्यज्जनितारमग्रे । तेन देवा देवतामग्र आयन् तेन रोहान् रुरुहुर्मेध्यासः ॥१॥**

अज भनेका यी अग्नि नै हुन् । यी दिव्य तेजले सम्पन्न छन् । यी जन्मरहित अग्निले सबैभन्दा पहिले आफूलाई उत्पन्न गराउनेलाई देखे । आज यिनै अजन्मा अग्निका सहायताले देवताहरूले देवत्व प्राप्त गरेका छन् । यिनैका सहायताले अरू मेधावी ऋषिहरू पनि उच्च लोकमा पुगेका छन् ।

**क्रमध्वमग्निना नाकमुख्यान् हस्तेषु बिभ्रतः । दिवस्पृष्ठं स्वर्गत्वा मिश्रा देवेभिराध्वम् ॥२॥**

हे मानिसहरू हो ! तिमीहरू अन्न हातमा लिएर अग्निका सहायताले यज्ञ गर्दै स्वर्गलोक प्राप्त गर । त्यसपछि द्युलोकका पृष्ठ भागमा उचालिएर रहेको स्वर्गमा पुगेर आत्मिक ज्योति प्राप्त गर र देवताहरूका साथमा मिलेर बस ।

**पृष्ठात् पृथिव्या अहमन्तरिक्षमारुहमन्तरिक्षाद् दिवमारुहम् । दिवो नाकस्य पृष्ठात् स्व१र्ज्योतिरगामहम् ॥३॥**

हामी भूलोकका पृष्ठ भागबाट अन्तरिक्षलोकमा चढ्दछौँ र अन्तरिक्षलोकबाट द्युलोकमा चढ्दछौँ । हामीले सुखमय द्युलोकबाट माथि, स्वज्योतिका रूपमा आत्माको ज्योति प्राप्त गरेका छौँ ।

**स्व१र्यन्तो नापेक्षन्त आ द्यां रोहन्ति रोदसी । यज्ञं ये विश्वतोधारं सुविद्वांसो वितेनिरे ॥४॥**

जुनजुन श्रेष्ठ ज्ञानीहरूले विश्वलाई धारण गर्ने यज्ञको विस्तार गरेका छन्, उनीहरू आत्मज्योतिले सम्पन्न हुन्छन् र द्युलोकको कामना गर्दैनन् । उनीहरू त पृथ्वी, अन्तरिक्ष र द्युलोकभन्दा माथि पुगिसकेका हुन्छन् ।

**अग्ने प्रेहि प्रथमो देवतानां चक्षुर्देवानामुत मानुषाणाम् । इयक्षमाणा भृगुभिः सजोषाः स्वर्यन्तु यजमानाः स्वस्ति ॥५॥**

हे अग्निदेवता ! तिमी देवताहरूमा प्रमुख हौ । त्यसो भएकाले नै तिमी बोलाइएका योग्य स्थानमा पुगिदेऊ । तिमी देवता र मानिसहरूका लागि नेत्रका रूप हौ । तिम्रो सङ्गति खोज्ने याजकहरूले भृगु आदि तपस्वीहरूका साथमा प्रेमपूर्वक रहेर आत्मतत्त्व, स्वतत्त्व वा स्वर्ग एवं स्वस्ति अर्थात् कल्याण प्राप्त गरून् ।

**अजमनज्मि पयसा घृतेन दिव्यं सुपर्णं पयसं बृहन्तम् । तेन गेष्म सुकृतस्य लोकं स्वरारोहन्तो अभि नाकमुत्तमम् ॥६॥**

यस किसिमको दिव्य, गतिशील, वर्द्धमान, सुवर्णझैँ तेजस्वी अजन्मा अग्निदेवतालाई हामी दुध वा रस तथा घिउ आदिको सार अंशले यजन गर्दछौँ । उनै अजका माध्यमबाट आत्मचेतनालाई पुण्यलोकतर्फ उन्मुख गराएर उत्तम लोकका रूपमा रहेको स्वर्ग प्राप्त गर्दछौँ ।

**पञ्चौदनं पञ्चभिरङ्गुलिभिर्दर्व्योद्धर पञ्चधैतमोदनम् । प्राच्यां दिशि शिरो अजस्य धेहि दक्षिणायां दिशि दक्षिणं धेहि पार्श्वम् ॥७॥**

पाँचै किसिमले बाँडिने गरेको अन्न, पाँचै वटा औँलाहरूले पाँचै भागमा विभाजन गरौँ । यी अजन्मा अग्निको शिर पूर्व दिशामा राखौँ र यिनको दाहिने भागलाई दक्षिण दिशातर्फ गराऔँ ।

**प्रतीच्यां दिशि भसदमस्य धेह्युत्तरस्यां दिश्युत्तरं धेहि पार्श्वम् । ऊर्ध्वायां दिश्य१जस्यानूकं धेहि दिशि ध्रुवायां धेहि पाजस्यमन्तरिक्षे मध्यतो मध्यमस्य ॥८॥**

यी अजको कम्मरको भाग पश्चिम दिशातर्फ होस् र उत्तर पार्श्व उत्तर दिशातर्फ स्थापित गरौँ । पिठ्युँको भाग ऊर्ध्व दिशामा स्थापित गरौँ र पेटलाई ध्रुव दिशा अर्थात् उँधोतर्फ स्थापित गरौँ । त्यसपछि यसको मध्य भागलाई मध्य अन्तरिक्षमा स्थापित गरौँ ।

**शृतमजं शृतया प्रोर्णुहि त्वचा सर्वैरङ्गैः सम्भृतं विश्वरूपम् । स उत् तिष्ठेतो अभि नाकमुत्तमं पद्भिश्चतुर्भिः प्रति तिष्ठ दिक्षु ॥९॥**

तिनी आफ्ना समस्त अङ्गले विश्वरूप बनून् । परिपूर्ण ती अजलाई ईश्वरीय आच्छादनले ढाकोस् । हे अज ! यस लोकबाट स्वर्गलोकतिर चारै गोडाले चढेझैँ चारै दिशामा तिमी संव्याप्त होऊ ।

## १५. वृष्टि सूक्त

**ऋषि–** अथर्वा । **देवता–** दिशा, वीरुध, मरुदगण, पर्जन्य, अग्नि, स्तनयित्नु, प्रजापति, वरुण, मण्डूकसमूह, पितरगण, वात । **छन्द–** त्रिष्टुप्, विराट जगती, विराट् पुरस्ताद् बृहती, अनुष्टुप्, पथ्यापङ्क्ति, भुरिक् त्रिष्टुप्, पञ्चपदा अनुष्टुब्गर्भा भुरिक् त्रिष्टुप्, शंकुमती अनुष्टुप् ।

**समुत्पतन्तु प्रदिशो नभस्वतीः समभ्राणि वातजूजानि यन्तु । महऋषभस्य नदतो नभस्वतो वाश्रा आपः पृथिवीं तर्पयन्तु ॥१॥**

वायुसहितका दिशाहरू बादलका साथमा उदाऊन् र वर्षाका निम्ति जल वहन गर्ने बादल, वायुले प्रेरित भएर एकत्र होस् । विशाल साँढेको डुक्राइजस्तै गर्जन गर्ने बादलले जल बर्साएर धर्तीको तिर्खा मेटाओस् ।

**समीक्षयन्तु तविषाः सुदानवोऽपां रसा ओषधीभिः सचन्ताम् । वर्षस्य सर्गा महयन्तु भूमिं पृथग् जायन्तामोषधयो विश्वरूपाः ॥२॥**

श्रेष्ठ दानी मरुत्हरूले हाम्रा लागि जलको वर्षा गराऊन् । जलको रस औषधिमा संयुक्त होस् । वर्षाका ज़लधाराहरूले पृथ्वीलाई समृद्ध गरून् र उनीहरूबाटै विभिन्न खालका औषधिहरू उत्पन्न होऊन् ।

**समीक्षयस्व गायतो नभांस्यपां वेगासः पृथगुद् विजन्ताम् । वर्षस्य सर्गा महयन्तु भूमिं पृथग् जायन्तां वीरुधो विश्वरूपाः ॥३॥**

हे मरुत्हरू हो ! तिमीहरूलाई हामी प्रार्थना गर्दछौँ । त्यसो हुँदा हामीलाई जलले युक्त मेघको दर्शन गराओ । जलको प्रवाह अलगअलग दिशाबाट प्रवाहित होऊन् र वर्षाका धाराले पृथ्वीलाई समृद्ध गराऊन् । विभिन्न रूपका औषधिहरू पृथ्वीमा उत्पन्न होऊन् ।

**गणास्त्वोप गायन्तु मारुताः पर्जन्य घोषिणः पृथक् । सर्गा वर्षस्य वर्षतो वर्षन्तु पृथिवीमनु ॥४॥**

हे पर्जन्यदेवता ! गर्जन गर्ने मरुत्हरूले तिम्रो गुणगान भिन्नाभिन्नै किसिमले गर्दछन् । बर्संदै गरेका मेघका धाराले तिमी पृथ्वीलाई रसिलो बनाऊ ।

**उदीरयत मरुतः समुद्रतस्त्वेषो अर्को नभ उत् पातयाथ । महऋषभस्य नदतो नभस्वतो वाश्रा आपः पृथिवीं तर्पयन्तु ॥५॥**

हे मरुत्देवताहरू हो ! सूर्यका गर्मीले तिमी बादललाई समुद्रभन्दा माथितिर लैजाओ, उडाओ र बलियो साँढे डुक्रिएझैँ ठूलो गर्जन गर्ने जलप्रवाहले भूमिको तिर्खा मेटाओ ।

**अभि क्रन्द स्तनयार्दयोदधिं भूमिं पर्जन्य पयसा समङ्ग्धि । त्वया सृष्टं बहुलमैतु वर्षमाशारैषी कृशगुरेत्वस्तम् ॥६॥**

हे पर्जन्यदेवता ! गडगडाहटको गर्जनले युक्त भएर औषधिरूपी वनस्पतिमा गर्भ स्थापना गर । जल धारण गर्ने रथमा गमन गर । उदकले पूर्ण मेघको मुख तलतिर फर्काऊ र त्यसलाई खाली गराइदेऊ । त्यसले गर्दा उच्च र निम्न प्रदेशहरू सबै समतल हुन सकून् ।

**सं वोऽवन्तु सुदानव उत्सा अजगरा उत । मरुद्भिः प्रच्युता मेघा वर्षन्तु पृथिवीमनु ॥ ७॥**

हे मानिसहरू हो ! श्रेष्ठ दानी मरुत्गणले तिमीहरूलाई सन्तुष्ट गराऊन् । अजिङ्गरजस्तै मोटा जलका प्रवाहहरू प्रकट होऊन् र वायुबाट प्रेरित भएर बादलले पृथ्वीमा वर्षा गरोस् ।

**आशामाशां वि दोततां वाता वान्तु दिशोदिशः । मरुद्भिः प्रच्युता मेघाः सं यन्तु पृथिवीमनु ॥ ८॥**

प्रत्येक दिशामा विद्युत् चम्कियोस् र सबै दिशामा वायु प्रवाहित होस् । त्यसपछि वायुले प्रेरित भएको बादल धर्तीतर्फ अनुकूलताका साथ आओस् ।

**आपो विद्युदभ्रं वर्षं सं वोऽवन्तु सुदानव उत्सा अजगरा उत । मरुद्भिः प्रच्युता मेघाः प्रावन्तु पृथिवीमनु ॥९॥**

हे श्रेष्ठ दानी मरुत्हरू हो ! जल, विद्युत्, मेघ, वर्षा र अजिङ्गरजस्तै आकार भएको जलप्रवाहले संसारलाई सन्तुष्ट गराऊन् । तिमीले प्रेरित गरेका बादलले धर्तीको रक्षा गरोस् ।

**अपामग्निस्तनूभिः संविदानो य ओषधीनामधिपा बभूव । स नो वर्षं वनुतां जातवेदाः प्राणं प्रजाभ्यो अमृतं दविस्परि ॥१०॥**

मेघको शरीरका रूपमा रहेका जलले एकरूप भएको विद्युत्रूपी अग्नि नै उम्रने गरेका वनस्पतिहरूका पालनकर्ता हुन् । ती जातवेदा अग्निदेवताले हामी प्राणीहरूलाई जीवन सञ्चालन गर्ने र स्वर्गको अमृत उपलब्ध गराउने वर्षा प्रदान गरून् ।

**प्रजापतिः सलिलादा समुद्रादाप ईरयन्नुदधिमर्दयाति । प्र प्यायतां वृष्णो अश्वस्य रेतोऽर्वाङेतेन स्तनयित्नुनेहि ॥११॥**

प्रजापालक सूर्यदेवता जलमय समुद्रबाट जललाई प्रेरित गर्दै समुद्रलाई गति प्रदान गरून् । उनैका सहायताले अश्वको जस्तै गति भएको र वर्षा गराउने बादलमा जल वृद्धि होस् । हे पर्जन्यदेवता ! गर्जनकारी मेघका साथमा तिमी हाम्रा सम्मुख आऊ ।

**अपो निषिञ्चन्नसुरः पिता नः श्वसन्तु गर्गरा अपां वरुणाव नीचीरपः सृज । वदन्तु पृश्निबाहवो मण्डूका इरिणानु ॥१२॥**

प्राणीहरूलाई वर्षाको जल प्रदान गर्ने हाम्रा पालक सूर्यदेवता, वर्षाका जललाई तेर्छो किसिमले बर्साऊन् । त्यस बेला जलको गडगड शब्द गर्ने प्रवाह चलोस् । हे वरुणदेवता ! तिमी पनि पृथ्वीमा आउने गरेका जललाई बादलबाट पृथक् गर । त्यसपछि सेतो सफा भुजा भएका भ्यागुताहरू पृथ्वीमा आएर कराउन थालून् ।

**संवत्सरं शशयाना ब्राह्मणा व्रतचारिणः । वाचं पर्जन्यजिन्वितां प्र मण्डूका अवादिषुः ॥१३॥**

वर्षभरि नै लुकेर बसिरहने, ब्राह्मणको जस्तै व्रत पालन गर्ने भ्यागुताहरूले पर्जन्यदेवतालाई खुसी गराउने खालका वाणी बोल्न थालिसकेका छन् ।

**उपप्रवद मण्डूकि वर्षमा वद तादुरि । मध्ये ह्रदस्य प्लवस्व विगृह्य चतुरः पदः ॥१४॥**

हे पोथी भ्यागुताहरू हो ! तिमीहरू खुसी हुँदै वेगपूर्वक कराओ । हे तादुरी ! तिमी वर्षाको जल बोलाऊ र तलाउमा आफ्ना चारै खुट्टा फिँजाउँदै पौडी खेल ।

**खण्वखाऽइ खैमखाऽइ मध्ये तदुरि । वर्षं वनुध्वं पितरो मरुतां मन इच्छत ॥१५॥**

हे खणवख नामका प्वालमा बस्ने भ्यागुता ! हे शान्त रहने गरेका प्राणी ! हे तदुरी नामका साना भ्यागुताहरू हो ! तिमीहरू पानी बर्सँदा आनन्दित छौ ? हे पितृहरू हो ! तिमीहरू मरुत्गणका मनअनुसार आफ्नो इच्छा बनाओ ।

**महान्तं कोशमुदचाभि षिञ्च सविद्युतं भवतु वातु वातः । तन्वतां यज्ञं बहुधा विसृष्टा आनन्दिनीरोषधयो भवन्तु ॥१६॥**

हे पर्जन्यदेवता ! तिमी आफ्नो जलरूपी महान् कोषलाई खोल र त्यसलाई तलतिर बगाऊ । त्यसो भएपछि जलले परिपूर्ण भएका यी नदीहरू निर्बाध रूपमा पूर्वतर्फ बगून् । तिमी जलराशिले द्यावापृथिवीलाई परिपूर्ण गर, त्यसो भएपछि हाम्रा गाईहरूलाई गतिलो पिउने पानी प्राप्त हुनेछ ।

## १६. सत्यानृतसमीक्षक सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– वरुण । **छन्द**– त्रिष्टुप्, अनुष्टुप्, भुरिक् त्रिष्टुप्, जगती,त्रिपात् महाबृहती, त्रिपदा विराट् गायत्री ।

**बृहन्नेषामधिष्ठाता अन्तिकादिव पश्यति । य स्तायन्मन्यते चरन्त्सर्वं देवा इदं विदुः ॥१॥**

महान् अधिष्ठाता वरुणदेवताले सबै वस्तुलाई जानेका छन् । उनी सबै खालका कर्मलाई नजिकैबाट हेर्दछन् र सबैको वृतान्त जान्दछन् ।

**यस्तिष्ठति चरति यश्च वञ्चति यो निलायं चरति यः प्रतङ्कम् । द्वौ संनिषद्य यन्मन्त्रयेते राजा तद् वेद वरुणस्तृतीयः ॥२॥**

जो अडिएको छ, जो चलायमान छ, जो गुप्त रूपमा बलियो भएको छ, जुन खुला अवस्थामा रहेको छ त्यस्ताका विषयमा सबै कुरा वरुणदेवताले जान्दछन् र जब दुई मानिसले गुप्त रूपमा विचारविमर्श गर्दछन्, त्यस बेला उनीहरूभन्दा भिन्न तेस्रो भएर वरुणदेवता उनीहरूका विषयमा पनि जान्दछन् ।

**उतेयं भूमिर्वरुणस्य राज्ञ उतासौ द्यौर्बृहती दूरेअन्ता । उतो समुद्रौ वरुणस्य कुक्षी उतास्मिन्नल्प उदके निलीनः ॥३॥**

यो पृथ्वी र निकै टाढा रहेको विशाल द्युलोक राजा वरुणका वशमा छन् । पूर्वपश्चिमका दुवै समुद्रहरू पनि वरुणदेवताकै दुई कोखाजस्ता हुन् । यसै किसिमले उनी संसारमा व्याप्त रहँदै केही अंश जलमा पनि विद्यमान रहेका छन् ।

**उत यो द्यामतिसर्पात् परस्तान्न स मुच्यातै वरुणस्य राज्ञः । दिव स्पशः प्र चरन्तीदमस्य सहस्राक्षा अति पश्यन्ति भूमिम् ॥४॥**

अनुशासनहीन भएर यदि कोही द्युलोकभन्दा पर जान्छन् भने पनि तिनीहरू राजा वरुणका पाशबाट मुक्त रहन सक्दैनन्, किनभने उनका दिव्य दूतहरू पृथ्वीमा विचरण गर्दछन् र आफ्ना हजारौँ आँखाले भूमिमा निरीक्षण गरिरहेका हुन्छन् ।

**सर्वं तद् राजा वरुणो वि चष्टे यदन्तरा रोदसी यत् परस्तात् । संख्याता अस्य निमिषो जनानामक्षानिव श्वघ्नी नि मिनोति तानि ॥५॥**

द्युलोक र पृथ्वीका बीचमा निवास गर्ने र आफ्ना अगाडि नै निवास गर्ने प्राणीहरूलाई राजा वरुणदेवले विशेष रूपमा हेर्ने गर्दछन् । उनी मानिसका आँखा झिम्क्याइलाई पनि उसै किसिमले गन्ने र नाप्ने गर्दछन्, जसरी जुवाडेले आफ्ना पासाहरूलाई नाप्ने गर्दछ ।

**ये ते पाशा वरुण सप्तसप्त त्रेधा तिष्ठन्ति विषिता रुशन्तः । छिनन्तु सर्वे अनृतं वदन्तं यः सत्यवाद्यति तं सृजन्तु ॥६॥**

हे वरुणदेवता ! पापी मानिसलाई बाँध्नका लागि तिम्रो जुन उत्तम, मध्यम र अधम खालका सातसात पाशहरू छन्, तिनले असत्य बोल्ने शत्रुलाई छिन्नभिन्न गराऊ र सत्यवादी पुण्यात्माहरूलाई तिनबाट मुक्त गराऊ ।

**शतेन पाशैरभि धेहि वरुणैनं मा ते मोच्यनृतवाङ् नृचक्षः । आस्तां जाल्म उदरं श्रंसयित्वा कोश इवाबन्धः परिकृत्यमानः ॥७॥**

हे वरुणदेवता ! तिमी आफ्ना सयौँ खालका पाशले यी शत्रुहरूलाई बाँध । हे मानिसलाई हेर्ने रहेका वरुणदेवता ! झुटो बोल्ने मानिसहरू तिमीसित जोगिन नपाऊन् । दुष्ट मानिसले आफैँ आफ्नो पेटलाई पतित गराएर नबाँधिए पनि उपेक्षित भइरहोस् ।

**यः समाम्यो३ वरुणो यो व्याम्यो३ यः संदेश्यो३ वरुणो यो विदेश्यः । यो दैवो वरुणो यश्च मानुषः ॥८॥**

जो सम छन् वा जो विषम छन्, जो देशको सीमाभित्र छन् वा जो विदेश वा विशिष्ट सीमाभित्र छन्, जो देवताहरूसित सम्बन्धित छन्, वा मानिससित सम्बन्धित छन्, ती सबै वरुणको पाशका

प्रभावले नै त्यसो भएका हुन् ।

**तैस्त्वा सर्वैरभि ष्यामि पाशैरसावामुष्यायणामुष्या पुत्र । तानु ते सर्वाननुसंदिशामि ॥९॥**

हे अमुक मातापिताका पुत्र ! तिमीलाई हामी वरुणदेवताका समस्त पाशमा बाँध्दछौँ । तिम्रा लागि नै ती सबैलाई प्रेरित गर्दछौँ ।

## १७. अपामार्ग सूक्त

**ऋषि**– शुक्र । **देवता**– अपामार्ग वनस्पति । **छन्द**– अनुष्टुप् ।

**ईशानां त्वा भेषजानामुज्जेष आ रभामहे । चक्रे सहस्रवीर्यं सर्वस्मा ओषधे त्वा ॥१॥**

हे औषधि ! रोग निवारण गर्नका लागि औषधिका रूपमा प्रयुक्त हुने अन्य औषधिहरूकी तिमी स्वामिनी हौ । हामी तिम्रो आश्रय ग्रहण गर्दछौँ । हे औषधि ! सबै खालका रोगहरू निवारण गर्नका लागि तिमीलाई हामी हजारौँ किसिमका पराक्रमले सम्पन्न गराउँछौँ ।

**सत्यजितं शपथयावनीं सहमानां पुनःसराम् । सर्वाः समह्वयोषधीरितो नः पारयादिति ॥२॥**

दोषहरूलाई हटाउने सत्यजित, क्रोधलाई विनाश गर्ने शपथयावनी, अभिचारलाई खप्ने सहमाना र बारम्बार रोगहरूलाई विनाश गर्ने वा विरेचन गर्ने पुनः सारा आदि औषधिहरूलाई हामी प्राप्त गर्दछौँ र यिनले हामीलाई रोगहरूबाट पार लगाऊन् ।

**या शशाप शपनेन याघं मूरमादधे । या रसस्य हरणाय जातमारेभे तोकमत्तु सा ॥३॥**

क्रोधित भएर हामीलाई शाप दिने पिशाचिनीहरू जेजति छन् वा मूर्च्छित गराउने पापकर्म जजसले गर्दछन् वा शरीरको रगत सुकाउनका लागि नवजात शिशुहरूलाई पनि पक्रन्छन् ती सबै पिशाचिनीहरूले अभिचार गर्ने शत्रुका सन्तानलाई नै खाऊन् ।

**यां ते चक्रुरामे पात्रे यां चक्रुर्नीललोहिते । आमे मांसे कृत्वां यां चक्रुस्तया कृत्याकृतो जहि ॥४॥**

हे कृत्या ! अभिचार गर्नेहरूले जुन अभिचार प्रयोग गर्न तिम्रा लागि काँचो माटाका जुन भाँडाहरू बनाएका छन्, धुवाँले नीलो र ज्वालाले रातो अग्निस्थान तिम्रा लागि बनाएका छन् र काँचो मासु तयार गरेका छन्, ती सबै कुराले तिमी तिनै अभिचार गर्नेहरूलाई नै नष्ट गराऊ ।

**दौष्वप्न्यं दौर्जीवित्यं रक्षो अभ्वमराय्यः । दुर्णाम्नीः सर्वा दुर्वाचस्ता अस्मन्नाशयामसि ॥५॥**

अरिष्ट दर्शनरूपी खराब स्वप्नलाई, दुःखदायी जीवन बिताउनुपर्ने स्थितिलाई, राक्षसजातिलाई, अभिचार क्रियाले उत्पन्न ठूलो डरलाई, निर्धनता बढाउने अलच्छिनलाई र नराम्रा नाम भएका सबै खालका पिशाचिनीहरूलाई हामी यस पुरुषबाट पर हटाउँछौँ ।

**क्षुधामारं तृष्णामारमगोतामनपत्यताम् । अपामार्ग त्वया वयं सर्वं तदप मृज्महे ॥६॥**

हे अपमार्ग नामका औषधि ! अत्यधिक भोकले मर्ने, अत्यधिक तिर्खाले मर्ने अथवा भोकप्यासले मर्ने, वाणी वा इन्द्रियका दोष तथा सन्तानहीनता आदि दोषहरूलाई हामी तिम्रो सहायताले पर हटाउँछौँ ।

**तृष्णामारं क्षुधामारमथो अक्षपराजयम् । अपामार्ग त्वया वयं सर्वं तदप मृज्महे ॥७॥**

प्यासले मर्ने, भोकले मर्ने र इन्द्रिय नष्ट हुने आदि समस्त दोषहरूलाई हे अपमार्ग नामका औषधि ! तिम्रो सहायताले हामी पर भगाउँछौँ ।

**अपामार्ग ओषधीनां सर्वासामेक इद् वशी । तेन ते मृज्म आस्थितमथ त्वमगदश्चर ॥८॥**

हे अपमार्ग नामका औषधि ! तिमी समस्त औषधिलाई वशीभूत गर्न सक्ने छौ । हे रोगी ! तिम्रा रोगहरूलाई हामी अपमार्ग नामका औषधिले पर हटाउँछौँ ।

## १८. अपामार्ग सूक्त

**ऋषि**– शुक्र । **देवता**– अपामार्ग वनस्पति । **छन्द**– अनुष्टुप्,बृहतीगर्भा अनुष्टुप् ।

**समं ज्योतिः सूर्येणाह्ना रात्री समावती । कृणोमि सत्यमूतयेऽरसाः सन्तु कृत्वरीः ॥१॥**

प्रभा र सूर्यको अथवा दिन र रात्रिको जुन खालको समानता रहेको हुन्छ, उसै गरी हामी पनि सत्यको रक्षा गर्नका लागि प्रयत्न गर्दछौं । त्यसबाट हिंसा गर्ने खालका कृत्याहरू सबै निष्क्रिय होऊन् ।

**यो देवाः कृत्यां कृत्वा हरादविदुषो गृहम् । वत्सो धारुरिव मातरं तं प्रत्यगुप पद्यताम् ॥२॥**

हे देवताहरू हो ! जुन दुष्ट व्यक्तिले अनजान व्यक्तिका घरमा कृत्यालाई प्रेरित गरेको रहेछ भने त्यो कृत्या फिर्ता भएर उसै अभिचारी व्यक्तिसित, जसरी दुध खाने बालक आफ्नी आमासँग टाँसिन्छ त्यसरी नै टाँसियोस् ।

**अमा कृत्वा पाप्मानं यस्तेनान्यं जिघांसति । अश्मानस्तस्यां दग्धायां बहुलाः फट् करिक्रति ॥३॥**

आफ्नीले गोप्य स्थानमा कृत्या प्रयोग गरेर अर्कालाई हिंसा गर्न खोजेको हुँदा कृत्याका अग्निले धेरै खालका ढुङ्गा फुटाएर फट्फट् शब्द धेरै किसिमले गरिरहेको हुन्छ ।

**सहस्रधामन् विशिखान् विग्रीवाञ्छायया त्वम् । प्रति स्म चक्रुषे कृत्यां प्रियां प्रियावते हर ॥४॥**

हे हजारौं स्थानमा उत्पन्न हुने गरेकी सहदेवी नामकी औषधि ! तिमी हाम्रा शत्रुलाई कपाल र गलो काटिएका बनाएर विनाश गर । उनीहरूकी प्रिय कृत्याशक्तिलाई उनीहरूकै नजिक पुऱ्याइदेऊ ।

**अनयाहमोषध्या सर्वाः कृत्या अदूदुषम् । यां क्षेत्रे चक्रुर्यां गोषु यां वा ते पुरुषेषु ॥५॥**

जुन कृत्यालाई बिउ रोप्ने वा छर्ने ठाउँमा गाडिएको छ, जुन कृत्यालाई गाईका बीचमा गाडिएको छ, जसलाई वायु प्रवाहका स्थानमा राखिएको छ र जसलाई मानिसले आवागमन गर्ने स्थानमा गाडिएको छ, ती सबै कृत्याहरूलाई हामी सहदेवी नामका औषधिले प्रभावहीन गराउँछौं ।

**यश्चकार न शशाक कर्तुं शश्रे पादमङ्गुरिम् । चकार भद्रमस्मभ्यमात्मने तपनं तु सः ॥६॥**

जुन शत्रुहरूले कृत्या प्रयोग गर्न खोज्दछन्, गोडाका औंलाहरू भाँच्न खोज्दछन् तर सफल हुँदैनन् उनीहरूकै लागि त्यस कृत्याले पीडा उत्पन्न गरोस् र हाम्रो हित गरोस् ।

**अपामार्गोऽप मार्ष्टु क्षेत्रियं शपथश्च यः । अपाह यातुधानीरप सर्वा अराय्यः ॥७॥**

अपामार्ग नामको औषधिले हाम्रो पुस्तैनी रोग र शत्रुको आक्रोशलाई हामीदेखि पर पुऱ्याइदेओस् । त्यसले पिशाचिनीहरू र सबै खालका अलच्छिनहरूलाई पनि बन्धनग्रस्त गरेर हामीदेखि परै राखोस् ।

**अपमृज्य यातुधानानप सर्वा अराय्यः । अपामार्ग त्वया वयं सर्वं तदप मृज्महे ॥८॥**

हे अपमार्ग नामका औषधि ! तिमी दुःख दिने खालका सबै यक्ष, राक्षस तथा निर्धन बनाउने सबै खालका पापदेवताहरूलाई हामीदेखि पर हटाइदेऊ । तिम्रा साधनहरूले हामी सबै खालका दुःखहरूलाई पर हटाउँछौं ।

## १९. अपामार्ग सूक्त

**ऋषि**– शुक्र । **देवता**– अपामार्ग वनस्पति । **छन्द**– अनुष्टुप्, पथ्यापङ्क्ति ।

**उतो अस्यबन्धुकृदुतो असि नु जामिकृत् । उतो कृत्याकृतः प्रजां नडमिवा च्छिन्धि वार्षिकम् ॥१॥**

हे अपमार्ग नामका औषधि ! तिमी शत्रुलाई विनाश गर्ने हौ । तिमी कृत्या प्रयोग गर्ने शत्रुका वर्षेनी उत्पन्न हुने सन्तानलाई नर्कट नामको घाँस काटेझैं काटेर विनाश गरिदेऊ ।

**ब्राह्मणेन पर्युक्तासि कण्वेन नार्षदेन । सेनेवैषि त्विषीमती न तत्र भयमस्ति यत्र**

**प्राप्नोष्योषधे ॥२॥**

हे सहदेवी ! नृषदका पुत्र कण्व नामका ब्राह्मणले तिम्रा विषयमा वर्णन गरेका छन् । तिमी याजकको सुरक्षाका लागि तेजस्वी सेनाजस्तै भएर जाने गर्दछ्यौ । त्यसैले तिमी जहाँ जान्छ्यौ, त्यहाँ अभिचारबाट उत्पन्न हुने भय नै हुँदैन ।

**अग्रमेष्योषधीनां ज्योतिषेवाभिदीपयन् । उत त्रातासि पाकस्याथो हन्तासि रक्षसः ॥३॥**

प्रकाशद्वारा संसारलाई आलोकित गर्ने सूर्यदेवता ज्योतिहरूमा जसरी सर्वश्रेष्ठ छन्, उसै गरी हे सहदेवी ! तिमी पनि समस्त औषधिहरूमा श्रेष्ठ छ्यौ । हे अपमार्ग औषधि ! तिमी आफ्ना बलले कृत्याका दोषहरूलाई नष्ट गराउँदै दुर्बललाई सुरक्षा गर्दछ्यौ र राक्षसलाई विनाश गर्दछ्यौ ।

**यददो देवा असुरांस्त्वयाग्रे निरकुर्वत । ततस्त्वमध्योषधेऽपामार्गो अजायथाः ॥४॥**

हे औषधि ! उहिले नै इन्द्र आदि देवताहरूले तिम्रै सहायताद्वारा राक्षसहरूलाई तिरस्कृत गरेका थिए । तिमी अन्य औषधिहरूभन्दा माथिल्लो स्थानमा रहेर अपमार्गका रूपमा उत्पन्न भएकी छ्यौ ।

**विभिन्दती शतशाखा विभिन्दन् नाम ते पिता । प्रत्यग् वि भिन्धि त्वं तं यो अस्माँ अभिदासति ॥५॥**

हे अपामार्ग औषधि ! तिमी सयौँ शाखाले सम्पन्न भएर विभिन्दती नाम प्राप्त गर्दछ्यौ । तिम्रा पिता विभिन्दन हुन् । त्यसैले जसले हाम्रो विनाश गर्ने विचार गर्दछन्, ती शत्रुका अगाडि गएर तिमी उनीहरूलाई विनाश गर ।

**असद् भूम्याः समभवत् तद् यामेति महद् व्यचः । तद् वै ततो विधूपायत् प्रत्यक् कर्तारमृच्छतु ॥६॥**

हे औषधि ! तिमी असत् भूमिमा उत्पन्न भएकी छ्यौ तर पनि तिम्रो महानता द्युलोकसम्म व्याप्त भएको छ । तिमी कृत्यालाई अभिचार गर्नेहरूकहाँ नै फिर्ता पठाइदेऊ ।

**प्रत्यङ् हि सम्बभूविथ प्रतीचीनफलस्त्वम् । सर्वान् मच्छपथाँ अधि वरीयो यावया वधम् ॥७॥**

हे अपमार्ग नामका औषधि ! तिमी प्रत्यक्ष फल प्रदान गर्ने रूपमा उत्पन्न भएकी छ्यौ । तिमी शत्रुको रिस र उनका विस्तृत घातक अस्त्रलाई हामीदेखि पर पुर्‍याएर उनीहरूतिरै फिर्ता गरिदेऊ ।

**शतेन मा परि पाहि सहस्रेणाभि रक्ष मा । इन्द्रस्ते वीरुधां पत उग्र ओज्मानमा दधत् ॥८॥**

हे सहदेवी ! रक्षाका सयौँ खालका उपायले तिमी हाम्रो सुरक्षा गर र हजारौँ खालका उपायले कृत्याका दोषबाट हामीलाई जोगाऊ । हे लहराहरूकी अधिपति औषधि ! प्रचण्ड बलशाली इन्द्रदेवताले हामीमा ओजस्विता स्थापित गरून् ।

## २०. पिशाचक्षयण सूक्त

**ऋषि–** मातृनामा । **देवता–** मातृनामौषधि । **छन्द–** अनुष्टुप्, स्वराद्, अनुष्टुप्, भुरिक् अनुष्टुप् ।

**आ पश्यति प्रति पश्यति परा पश्यति पशयति । दिवमन्तरिक्षमाद् भूमिं सर्वं तद् देवि पश्यति ॥१॥**

मातृ नाम गरेकी देवीले दिव्यदृष्टिले परपरसम्म हेर्दछिन्; विशेष कोणले हेर्दछिन्, समग्र रूपले हेर्दछिन् । द्युलोक, अन्तरिक्ष र पृथ्वीका सबैलाई उनै देवीले हेर्दछिन् ।

**तिस्रो दिवस्तिस्रः पृथिवीः षट् चेमाः प्रदिशः पृथक् । त्वयाहं सर्वा भूतानि पश्यानि देव्योषधे ॥२॥**

हे देवी ! तिम्रो प्रभावले हामी तीनै द्युलोक र तीनै पृथ्वीलोकका छ वटै दिशाहरूमा र तिनमा निवास गर्ने समस्त प्राणीहरूलाई प्रत्यक्ष देख्दछौँ ।

दिव्यस्य सुपर्णस्य तस्य हासि कनीनिका । सा भूमिमा रुरोहिथ वह्य श्रान्ता वधूरिव ॥३॥

हे देवी ! स्वर्गमा रहेका त्यस सुन्दर पँखेटाले युक्त गरूडजस्ता सूर्यका नेत्रकी तिमी नानी हौ । थाकेकी स्त्री पाल्कीमा आरुढ जसरी हुन्छन्, उसै गरी पृथ्वीमा तिम्रो आरोहण भएको छ ।

तां मे सहस्राक्षो देवो दक्षिणे हस्त आ दधत् । तयाहं सर्वं पशयामि यश्च शूद्र उतार्यः ॥४॥

हजारौँ नेत्र भएका इन्द्ररूपी सूर्यदेवताले हाम्रा दाहिने हातमा यो राखिदिएका छन् । हे औषधि ! हामी त्यसैका माध्यमले शूद्र र आर्य सबैलाई हेर्दछौँ ।

आविष्कृणुष्व रूपाणि मात्मानमप गूहथाः । अथो सहस्रचक्षो त्वं प्रति पश्याः किमीदिनः ॥५॥

हे देवी ! तिमी राक्षस आदिलाई पर भगाउने आफ्नो स्वरूप प्रकट गर; आफूलाई नलुकाऊ । हे हजारौँ आँखाले हेर्ने देवी ! गुप्त रूपले विचरण गर्ने पिशाचहरूबाट हामीलाई सुरक्षा गर्नका लागि उनीहरूलाई तिमी हेर ।

दर्शय मा यातुधानान् दर्शय यातुधान्यः । पिशाचान्त्सर्वान् दर्शयेति त्वा रभ ओषधे ॥६॥

हे देवी ! तिमी हामीलाई असुरहरू देखाऊ, त्यसो भएपछि उनले गोप्य रूपमा गुफामा लुकेर हामीलाई दुःख दिन सक्दैनन् । तिमी यातुधानी तथा समस्त किसिमका पिशाचिनीहरू पनि हामीलाई देखाऊ भनेर नै हामी तिमीलाई धारण गर्दछौँ ।

कश्यपस्य चक्षुरसि शुन्याश्च चतुरक्ष्याः । वीध्रे सूर्यमिव सर्पन्तं मा पिशाचं तिरस्करः ॥७॥

हे औषधि ! तिमी सर्वद्रष्टा कश्यप ऋषिको आँखोजस्तै हौ र चार आँखा भएका देवशुनिको पनि आँखा हौ । ग्रहनक्षत्र आदिले सम्पन्न आकाशमा सूर्यले झैँ विचरण गर्ने पिशाचहरूलाई तिमी लुक्न नदेऊ ।

उदग्रभं परिपाणाद् यातुधानं किमीदिनम् । तेनाहं सर्वं पशयाम्युत शूद्रमुतार्यम् ॥८॥

योगसाधनले हामीले राक्षसहरूलाई वशमा गराएका छौँ । उसैले हामी शूद्र अथवा आर्यहरूले युक्त समस्त ग्रहहरूमा हेर्दछौँ ।

यो अन्तरिक्षेण पतति दिवं यश्चातिसर्पति । भूमिं यो मन्यते नाथं तं पिशाचं प्र दर्शय ॥९॥

जो अन्तरिक्षबाट तल आउँछन् वा जसले द्युलोक कटेर माथि जान्छन्, त्यस्ता पिशाचहरूलाई पनि हाम्रा दृष्टिमा ल्याइदेऊ ।

## २१. गोसमूह सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– गो समूह । **छन्द**– त्रिष्टुप्, जगती ।

आ गावो अग्मन्नुत भद्रमक्रन्त्सीदन्तु गोष्ठे रणयन्त्वस्मे । प्रजावतीः पुररूपा इह स्युरिन्द्राय पूर्वीरुषसो दुहानाः ॥१॥

हाम्रो घरमा आएर गाईले हाम्रो कल्याण गरून् । ती गाईहरू गोठमा बसेर हामीलाई आनन्दित गराऊन् । ती अनेकौँ रूपरङ्गका बाछासहितका गाईहरूले उषाकालमा इन्द्रदेवताका लागि दुध दिने गरून् ।

इन्द्रो यज्वने गृणते च शिक्षत उपेद् ददाति न स्वं मुषायति । भूयोभूयो रयिमिदस्य वर्धयन्नभिन्ने खिल्ये नि दधाति देवयुम् ॥२॥

हे इन्द्रदेवता ! तिमी याजक एवं स्तोताहरूका लागि उनले रुचाएको अन्न तथा धन प्रदान गर्दछौँ । उनको धन कहिल्यै हरण गर्दैनौ, बरु निरन्तर बढाउँछौ । देवत्व प्राप्त गर्ने इच्छा भएकाहरूलाई अखण्डित एवं सुरक्षित निवास दिने गर्दछौ ।

न ता नशन्ति न दभाति तस्करो नासामामित्रो व्यथिरा दधर्षति । देवांश्च याभिर्यजते ददाति च ज्योगित् ताभिः सचते गोपतिः सह ॥३॥

ती गाईहरू नष्ट हुँदैनन् । चोरतस्करले तिनलाई हानी गर्न सक्दैन । शत्रुका अस्त्रले ती गाईलाई

क्षति गर्न सक्दैन । गाईका पालक जुन गाईले देवताको यजनपूजन गर्दछन्, उनै गाईहरूसित लामो समयसम्म सुखी भएर रहन्छन् ।

**न ता अर्वा रेणुककाटोऽश्नुते न संस्कृतत्रमुप यन्ति ता अभि । उरुगायमभयं तस्य ता अनु गावो मर्तस्य वि चरन्ति यज्वनः ॥४॥**

धुलो उडाउने खालका द्रुतगामी अश्वले पनि उनै गाईलाई जित्न सक्दैनन् । यिनै गाईलाई वध गर्नका लागि आघात गर्नु हुँदैन । याजकहरूका यी गाई फराकिला फाँटमा ढुक्क भएर चर्ने गरून् ।

**गावो भगो गाव इन्द्रो म इच्छाद् गावः सोमस्य प्रथमस्य भक्षः । इमा या गावः स जनास इन्द्र इच्छामि हृदा मनसा चिदिन्द्रम् ॥५॥**

यी गाईहरू धन दिने खालका छन् । हे इन्द्रदेवता ! हामीलाई तिमी गाई प्रदान गर । गाईको दुध पहिले त सोमरसमा मिसाइन्छ । हे मानिसहरू हो ! यी गाईहरू नै इन्द्रका रूप हुन् । उनै इन्द्रदेवतालाई हामी श्रद्धाका साथ प्राप्त गर्न खोज्दछौँ ।

**यूयं गावो मेदयथा कृशं चिदश्रीरं चित् कृणुथा सुप्रतीकम् । भद्रं गृहं कृणुथ भद्रवाचो बृहद् वो वय उच्यते सभासु ॥६॥**

हे गाईहरू हो ! हामीलाई तिमीहरू बलवान् बनाओ । तिमीहरू हाम्रो रोगी एवं ख्याउटे शरीरलाई सुन्दर र स्वस्थ बनाओ । तिमीहरू आआफ्ना कल्याणकारी ध्वनिले हाम्रा घरलाई पवित्र बनाओ । यज्ञमण्डपमा तिमीहरूबाट अन्न प्राप्त गरेपछि यश गाउने गरिन्छ ।

**प्रजावतिः सूयवसे रुशन्तीः शुद्धा अपः सुप्रपाणे पिबन्तीः । मा व स्तेन ईशत माघशंसः परि वो रुद्रस्य हेतिर्वृणक्तु ॥७॥**

हे गाईहरू हो ! तिमीहरू बाछासहितका होओ । उत्तम घाँस र सुखकारक स्वच्छ जल खानेपिउने गर । तिमीहरूलाई पाल्नेले चोर्ने काम नगरोस् । हिंस्रक पशुले तिमीहरूलाई नष्ट नगरून् । परमेश्वरको कालरूपी अस्त्र तिमीहरूका छेउमा नआओस् ।

## २२. अमित्रक्षयण सूक्त

**ऋषि**– वसिष्ठ, अथर्वा । **देवता**– इन्द्र, क्षत्रिय राजा । **छन्द**– त्रिष्टुप् ।

**इममिन्द्र वर्धय क्षत्रियं म इमं विशामेकवृषं कृणु त्वम् । निरमित्रानक्ष्णुह्यस्य सर्वांस्तान् रन्धयास्मा अहमुत्तरेषु ॥१॥**

हे इन्द्रदेवता ! तिमी हाम्रा यी क्षत्रियहरूलाई पुत्रपौत्रादि तथा सम्पत्ति आदि प्रदान गरेर समृद्ध गराऊ र पराक्रमी मानिसहरूमा अद्वितीय गराऊ । यिनका सबै शत्रुलाई प्रभावहीन बनाएर तिनलाई यिनैका अधीनमा गराऊ । म श्रेष्ठ हुँ भन्नेलाई यिनीहरूले आफ्नो वशमा गराऊन् ।

**एमं भज ग्रामे अश्वेषु गोषु निष्टं भज यो अमित्रो अस्य । वर्ष्म क्षत्राणामयमस्तु राजेन्द्र शत्रुं रन्धय सर्वमस्मै ॥२॥**

हे इन्द्रदेवता ! तिमी यी क्षत्रियलाई जनसमूह, गाई तथा अश्वको सुविधा प्राप्त गर्ने खालको बनाऊ र यिनका शत्रुलाई गाई एवं मानिसबाट अलग गराऊ । यी क्षत्रियहरू गुणका मूर्ति होऊन् । यिनका सबै शत्रुहरू र राष्ट्रलाई तिमी यिनैको अधीनमा गराऊ ।

**अयमस्तु धनपतिर्धनानामयं विशां विश्पतिरस्तु राजा । अस्मिन्निन्द्र महि वर्चांसि धेह्यवर्चसं कृणुहि शत्रुमस्य ॥३॥**

यी राजा सुन, चाँदी आदि धन तथा प्रजाका स्वामी बनून् । हे इन्द्रदेवता ! तिमी यी राजामा शत्रुलाई पराजित गर्न सक्ने तेज स्थापित गराऊ ।

**अस्मै द्यावापृथिवी भूरि वामं दुहाथां घर्मदुघे इव धेनू । अयं राजा प्रिय इन्द्रस्य भूयात् प्रियो गवामोषधीनां पशूनाम् ॥४॥**

हे द्यावापृथिवी ! धारो लागेको तातो दुध दिने गाईले झैँ तिमी पनि यिनलाई प्रचुर धन प्रदान

गर । यिनी इन्द्रदेवताका स्नेहपात्र होऊन् । त्यसो भएपछि यिनी गाई, औषधि र पशुका पनि प्रिय हुन सकून् ।

**युनज्मि त उत्तरावन्तमिन्द्रं येन जयन्ति न पराजयन्ते । यस्त्वा करदेकवृषं जनानामुत राज्ञामुत्तमं मानवानाम् ॥५॥**

हे नरश्रेष्ठ ! उत्तम गुण भएका इन्द्रदेवतालाई हामी तिम्रो मित्र बनाउँछौँ । उनीद्वारा प्रेरित तिम्रा सहयोगीले शत्रुको सेनामाथि विजयी होऊन्, उनीहरू विजित कहिल्यै नहोऊन् । जुन इन्द्रदेवताले तिमीलाई वीर राजाहरूका बीचमा साँढेजस्तै प्रमुख बनाउँछन्, त्यस्ता इन्द्रदेवतालाई हामी तिम्रो मित्र बनाउँछौँ ।

**उत्तरस्त्वमधरे ते सपत्ना ये के च राजन् प्रतिशत्रवस्ते । एकवृष इन्द्रसखा जिगीवाञ्छत्रूयतामा भरा भोजनानि ॥६॥**

हे वीर ! तिमी सर्वश्रेष्ठ हौ र तिम्रा शत्रुहरू निम्न स्तरका होऊन् । जुन शत्रु तिमीसित प्रतिकूल व्यवहार गर्दछन्, तिनीहरू उँधोतिर खस्किऊन् । इन्द्रदेवताको मित्रताले तिमी अद्वितीय बलवान् बनाऊन् र शत्रुको जस्तो व्यवहार गर्ने मानिसका भोगसाधन, ऐश्वय आदि सबै तिमी खोसेर ल्याऊ ।

**सिंहप्रतीको विशो अद्धि सर्वा व्याघ्रप्रतीकोऽव बाधस्व शत्रून् । एकवृष इन्द्रसखा जिगीवाञ्छत्रूयतामा खिदा भोजनानि ॥७॥**

हे राजा ! सिंहको जस्तै पराक्रमी बनेर, तिमी आफ्ना प्रजाहरूबाट भोगसाधन आदि प्राप्त गर र देव व्याघ्रसमान बलशाली बनेर आफ्ना शत्रुहरूलाई तिमी सताऊ । तिमी इन्द्रदेवताको मित्रताले अद्वितीय बलवान् होऊ र शत्रुको जस्तो व्यवहार गर्नेहरूका न विनाश गर्नमा सक्षम होऊ ।

## २३. पापमोचन सूक्त

**ऋषि—** मृगार । **देवता—** प्रचेता, अग्नि । **छन्द—** त्रिष्टुप्, पुरस्ताद् ज्योतिष्मती त्रिष्टुप्, अनुष्टुप्, प्रस्तारपङ्क्ति ।

**अग्नेर्मन्वे प्रथमस्य प्रचेतसः पाञ्चजन्यस्य बहुधा यमिन्धते । विशोविशः प्रविशिवांसमीमहे स नो मुञ्चत्वंहसः ॥१॥**

जसलाई प्रायः सबैले इन्धन प्रदान गरेर प्रदीप्त गराउँछन्, जो प्रखर चेतनाले सम्पन्न छन्, जो अद्वितीय स्वर भएका छन्, जसलाई पाँचै किसिमका मानिसले उपासना गर्दछन्, उनै अग्निदेवतालाई हामी नमस्कार गर्दछौँ । समस्त विश्वमा जो प्रविष्ट भएका छन्, हामीलाई पापबाट मुक्त गराऊन् भनी हामी याचना गर्दछौँ ।

**यथा हव्यं वहसि जातवेदो यथा यज्ञं कल्पयसि प्रजानन् । एवा देवेभ्यः सुमतिं न आ वह स नो मुञ्चत्वंहसः ॥२॥**

हे जातवेदा अग्निदेवता ! तिमी पूजनीय देवताहरूकहाँ जसरी हवि पुर्‍याउने काम गर्दछौ र यज्ञका अङ्गहरूलाई जानेर तिनको रचना गर्दछौ, उसै गरी देवताहरूबाट हामीलाई श्रेष्ठ बुद्धि प्राप्त गराऊ र समस्त पापबाट मुक्त गराऊ ।

**यामन्यामन्नुपयुक्तं वहिष्ठं कर्मन्कर्मन्नाभगम् । अग्निमीडे रक्षोहणं यज्ञवृधं घृताहुतं स नो मुञ्चत्वंहसः ॥३॥**

प्रत्येक यज्ञका आधाररूप, हवि पुर्‍याउने र प्रत्येक कर्ममा सेवन गर्न योग्य अग्निदेवतालाई हामी प्रार्थना गर्दछौँ । उनै अग्निदेवताले राक्षसहरूको संहार गरेर यज्ञलाई बढाउने गर्दछन् । घिउका आहुतिले जसलाई प्रदीप्त गरिन्छ, त्यस्ता अग्निदेवताले हामीलाई पापबाट मुक्त गराऊन् ।

**सुजातं जातवेदसमग्निं वैश्वानरं विभुम् । हव्यवाहं हवामहे स नो मुञ्चत्वंहसः ॥४॥**

उत्तम जन्म पाएका, उत्पन्न भएका वा हुने सबै पदार्थका विषयमा जानेका र समस्त उत्पन्न वस्तुलाई जसले जानेका छन्, त्यस्ता मानिसका हितैषि, हव्यवाहक, वैश्वानर अग्निदेवतालाई हामी

आह्वान गर्दछौँ । उनै अग्निदेवताले हामीलाई समस्त पापबाट मुक्त गराऊन् ।

**येन ऋषयो बलमद्योतयन् युजा येनासुराणामयुवन्त मायाः । येनाग्निना पणीनिन्द्रो जिगाय स नो मुञ्चत्वंहसः ॥५॥**

जुन ऋषिहरूले अग्निदेवताका साथमा मैत्री स्थापना गरेर आत्मशक्तिलाई जागृत गराएका छन्, जुन अग्निदेवताका सहायताले राक्षसहरूको कपट युक्तिलाई परास्त गराएका छन् र जसका सहायताले इन्द्रदेवताले पणीलाई जितेका थिए, त्यस्ता अग्निदेवताले हामीलाई पापबाट मुक्त गराऊन् ।

**येन देवा अमृतमन्वविन्दन् येनौषधीर्मधुमतीरकृण्वन् । येन देवाः स्वऽराभरन्त्स नो मुञ्चत्वंहसः ॥६॥**

जुन अग्निदेवताका सहायताले देवताहरूले अमरत्व प्राप्त गरेका थिए, जसका सहायताले देवताहरूले औषधिहरूलाई मधुर रसले सम्पन्न गराए र जसका कृपाले देवत्व प्राप्त गर्न इच्छा गर्ने यजमानलाई स्वर्ग प्राप्त गराउँछन्, उनै अग्निदेवताले हामीलाई पापबाट मुक्त गराऊन् ।

**यस्येदं प्रदिशि यद् विरोचते यज्जातं जनितव्यं च केवलम् । स्तौम्यग्निं नाथितो जोहवीमि स नो मुञ्चत्वंहसः ॥७॥**

जुन अग्निदेवताका शासनमा समस्त संसार विद्यमान छ, जसका तेजले ग्रहनक्षत्र आदि आलोकित हुने गरेका छन् र पृथ्वीमा उत्पन्न भएका प्राणी जसका अधीनमा हुन्छन्, उनै अग्निदेवतालाई हामी बारम्बार प्रार्थना गर्दै आह्वान गर्दछौँ ।

## २४. पापमोचन सूक्त

**ऋषि**— मृगार । **देवता**— इन्द्र । **छन्द**— त्रिष्टुप्, शक्वरीगर्भा पुरः शक्वरी त्रिष्टुप् ।

**इन्द्रस्य मन्महे शश्वदिदस्य मन्महे वृत्रघ्न स्तोमा उप मेम आगुः । यो दाशुषः सुकृतो हवमेति स नो मुञ्चत्वंहसः ॥१॥**

परम ऐश्वर्यसम्पन्न इन्द्रदेवताको माहात्म्य हामीले जानेका छौँ । वृत्रहन्ता इन्द्रदेवताको महत्त्व हामीले सधैँ जानेका छौँ । उनका अगाडि बोलिनुपर्ने स्तोत्र हामीकहाँ आएको छ । जुन दानी इन्द्रदेवता सत्कर्म गर्ने यजमानको पुकार सुनेर उनका नजिक आउँछन्, उनैले हामीलाई सबै पापबाट मुक्त गराऊन् ।

**य उग्रीणामुग्रबाहुर्ययुर्यो दानवानां बलमारुरोज । येन जिताः सिन्धवो येन गावः स नो मुञ्चत्वंहसः ॥२॥**

जुन उग्रबाहु भएका इन्द्रदेवताले प्रचण्ड शत्रुको सेनामा फुट हालेका थिए, जसले दानवको शक्तिलाई विनाश गरेका थिए, जसले मेघलाई फुटाएर उसमाथि विजय प्राप्त गरेका थिए, जसले वृत्रलाई नष्ट गरेर नदी र समुद्रलाई जितेका थिए, जसले असुरहरूलाई विनाश गरेर उनका गाई जितेका थिए, उनै इन्द्रदेवताले हामीलाई सबै पापबाट मुक्त गराऊन् ।

**यश्चर्षणिप्रो वृषभः स्वर्विद् यस्मै ग्रावाणः प्रवदन्ति नृम्णम् । यस्याध्वरः सप्तहोता मदिष्ठः स स नो मुञ्चत्वंहसः ॥३॥**

जुन इन्द्रदेवता मानिसलाई इच्छाअनुसारको फल दिएर उनका इच्छा पूरा गराउँछन्, जो साँढेझैँ स्वतन्त्र रूपमा स्वर्गलोक प्राप्त गर्नमा सक्षम छन्, जसका लागि पेल्ने ढुङ्गाले उनकै नामको इन्द्र इन्द्र ध्वनि भन्ने निकालेर सोमरसरूपी धन निकाल्छन्, जसको सोमयाग सात जना होताहरूले सम्पन्न गराउँछन् र जो यसरी सम्पन्न यज्ञमा आनन्ददायी बन्दछन्, उनै इन्द्रदेवताले हामीलाई सबै पापबाट मुक्त गराऊन् ।

**यस्य वशास ऋषभास उक्षणो यस्मै मीयन्ते स्वरवः स्वर्विदे । यस्मै शुक्रः पवते ब्रह्मशुम्भितः स नो मुञ्चत्वंहसः ॥४॥**

जुन इन्द्रदेवताका नियन्त्रणमा सेचन गर्नमा सक्षम ऋषभ आदि बलिया र वर्षणशील शक्तिहरू

तत्पर रहन्छन्, जसका लागि आत्मतत्त्वका ज्ञाताले यज्ञ आदिको स्थापना गर्दछन्, जसका लागि ब्रह्म या वेदवाणीले शोधित गरिएको सोम प्रवाहित हुने गर्दछ, उनै इन्द्रदेवताले हामीलाई सबै खालका पापबाट जोगाऊन् ।

**यस्य जुष्टिं सोमिनः कामयन्ते यं हवन्त इषुमन्तं गविष्टौ । यस्मिन्नर्कः शिश्रिये यस्मिन्नोजः स नो मुञ्चत्वंहसः ॥५॥**

जुन इन्द्रदेवतालाई खुसी गराउनका लागि याजकहरू सोम यज्ञ गर्न खोज्दछन्, जुन शस्त्रधारी इन्द्रदेवतालाई गाई, इन्द्रिय र किरण आदिको रक्षा गर्नका लागि बोलाउने गरिन्छ, जसमा मन्त्रले आश्रय पाउँछन् र जोसित अद्वितीय ओज रहेको हुन्छ, उनै इन्द्रदेवताले हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

**यः प्रथमः कर्मकृत्याय जज्ञे यस्य वीर्यं प्रथमस्यानुबुद्धम् । येनोद्यतो वज्रोऽभ्यायताहिं स नो मुञ्चत्वंहसः ॥६॥**

जुन इन्द्रदेवता कर्म गर्नका लागि सबैभन्दा पहिले प्रकट भए, जसका वृत्रहत्या आदि अद्वितीय पराक्रमलाई सर्वत्र सबैले जानेका छन्, जसले उचालेका वज्रले वृत्रासुरलाई सबै तिरबाट विनाश गरेको थियो, उनै इन्द्रदेवताले हामीलाई सबै पापबाट मुक्त गराऊन् ।

**यः सङ्ग्रामान् नयति सं युधे वशी यः पुष्टानि संसृजति द्वयानि । स्तौमीन्द्रं नाथितो जोहवीमि स नो मुञ्चत्वंहसः ॥७॥**

जुन इन्द्रदेवता स्वतन्त्र प्रहार गरेर युद्धमा, युद्ध गर्ने योद्धालाई युद्ध गर्नकै लागि ल्याइपुऱ्याउँछन्, जसले दुई वटा बलिया जोडालाई आपसमा एकत्र गराएका छन्, उनै इन्द्रदेवतालाई हामी सबै स्तोताहरू स्तुति गर्दछौँ र बारम्बार पुकार गर्दछौँ । उनैले हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

## २५. पापमोचन सूक्त

**ऋषि**–मृगार । **देवता**–वायु, सविता । **छन्द**–त्रिष्टुप्, शक्वरीगर्भा जगती, पथ्याबृहती ।

**वायोः सवितुर्विदथानि मन्महे यावात्मन्वद् विशथो यौ च रक्षथः । यौ विश्वशय परिभू बभूवथुस्तौ नो मुञ्चतमंहसः ॥१॥**

वायु र सूर्यको श्रुतिविहित कर्महरूलाई हामीले जानेका छौँ । हे वायुदेवता ! हे सवितादेवता ! तिमीहरू आत्माले सम्पन्न भएका स्थावर र जङ्गम प्राणीहरूमा विद्यमान रहेर संसारको सुरक्षा गर्दछौ र त्यसलाई धारण पनि गर्दछौ । त्यसैले तिमीहरू हामीलाई सबै खालका पापबाट मुक्त गराओ ।

**ययोः सङ्ख्याता वरिमा पार्थिवानि याभ्यां रजो युपितमन्तरिक्षे । ययोः प्रायं नान्वानशे कश्चन तौ नो मुञ्चतमंहसः ॥२॥**

जुन वायु र सविता यी दुवैका पार्थिव कर्मलाई मानिसहरू सबैले जानेका छन्, जसका कारणले अन्तरिक्षमा मेघमण्डल धारण गरिएको छ र जसको गतिलाई कुनै पनि देवताले प्राप्त गर्न सकेका छैनन्, उनै वायु र सविताले हामीलाई सबै खालका पापबाट जोगाऊन् ।

**तव ब्रते नि विशन्ते जनासस्त्वय्युदिते प्रेरते चित्रभानो । युवं वायो सविता च भुवनानि रक्षथस्तौ नो मुञ्चतमंहसः ॥३॥**

हे विचित्र किसिमको प्रकाश भएकाले चित्रभानु नाम पाएका सूर्यदेवता ! तिम्रो सेवा गर्नका लागि नै मानिसहरूले नियमपूर्वक कर्म गरेका हुन्छन् र तिमी उदाउने बित्तिकै सबै मानिसहरू आआफ्ना कार्यमा जुटेका हुन्छन् । हे वायु तथा सवितादेवता ! तिमीहरू दुवै समस्त प्राणीलाई सुरक्षा गर्दछौ । त्यसैले हामीलाई सबै पापबाट मुक्त गराओ ।

**ऽपेतो वायो सविता च दुष्कृतमप रक्षांसि शिमिदां च सेधतम् । सं ह्यू३र्जया सृजथः सं बलेन तौ नो मुञ्चतमंहसः ॥४॥**

हे वायु र सूर्यदेवता ! तिमीहरू हाम्रा दुष्कृत्यलाई हामीबाट पृथक् गर र उपद्रो गर्ने राक्षस र प्रदीप्त भएका कृत्यालाई हामीबाट पर राख । तिमीहरू अन्नका रसले उत्पन्न बलले हामीलाई सम्पन्न गराओ र सबै खालका पापबाट मुक्त गराओ ।

**रयिं मे पोषं सवितोत वायुस्तनू दक्षमा सुवतां सुशेवम् । अयक्ष्मतातिं मह इह धत्तं तौ नो मुञ्चतमंहसः ॥५॥**

वायुदेवता र सूर्यदेवताले हामीलाई ऐश्वर्य प्रदान गरून् र हाम्रा शरीरमा सुखसामर्थ्यको सञ्चार गराऊन् । हे वायुदेवता र सूर्यदेवता ! तिमीहरू हामीमा आरोग्यता धारण गराओ र सबै खालका पापबाट हामीलाई मुक्त गराओ ।

**प्र सुमतिं सवितर्वाय ऊतये महस्वन्तं मत्सरं मादयाथः । अर्वाग् वामस्य प्रवतो नि यच्छतं तौ नो मुञ्चतमंहसः ॥६॥**

हे सूर्यदेवता ! हे वायुदेवता ! तिमीहरू सुरक्षाका लागि हामीलाई श्रेष्ठ बुद्धि प्रदान गर र हर्षकारी सोमरस पान गरेर आनन्दित होओ । तिमीहरू हामीलाई सेवन गर्न योग्य प्रचुर धन प्रदान गर र सबै खालका पापबाट मुक्त गराओ ।

**उप श्रेष्ठा न आशिषो देवयोर्धामन्नस्थिरन् । स्तौमि देवं सवितारं च वायुं तौ नो मुञ्चतमंहसः ॥७॥**

वायुदेवता र सूर्यदेवताका सामु हाम्रा श्रेष्ठ आकाङ्क्षाहरू उपस्थित छन् । हामी उनै दुई देवतासित प्रार्थना गर्दछौं । उनीहरूले नै हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

## २६. पापमोचन सूक्त

**ऋषि**– मृगार । **देवता**– द्यावापृथिवी । **छन्द**– त्रिष्टुप्, पुरोऽष्टि जगती, शाक्वरगर्भातिमध्येजयोति त्रिष्टुप् ।

**मन्वे वां द्यावापृथिवी सुभोजसौ सचेतसौ ये अप्रथेथाममिता योजनानि । प्रतिष्ठे ह्यभवतं वसूनां ते नो मुञ्चतमंहसः ॥१॥**

हे द्यावापृथिवी ! तिमीहरू दुवै मनोहर भोग भएका र समान विचार भएका छौ । तिमीहरूको महिमा जानेर हामी प्रार्थना गर्दछौं । तिमीहरू दुवै असीमित योजनको दूरीसम्म फैलिएका छौ र देवता तथा मानिसका धनवैभवको मूल कारण पनि हौ । हामीलाई सबै खालका पापबाट मुक्त गराओ ।

**प्रष्तिष्ठे ह्यभवतं वसूनां प्रवृद्धे देवी सुभगे उरूची । द्यावापृथिवी भवतं मे स्योने ते नो मुञ्चतमंहसः ॥२॥**

हे द्यावापृथिवी ! तिमीहरू दुवै सबै खालका ऐश्वर्यको प्रतिष्ठा गराउँछौ र समस्त प्राणीका आश्रय स्थल हौ । तिमीहरू दान आदि गुण तथा समस्त सौभाग्यले सम्पन्न छौ । हाम्रा लागि तिमीहरू सुखदायी बनेर हामीलाई सबै खालका पापबाट मुक्त गराओ ।

**असन्तापे सुतपसौ हुवेऽहमुर्वी गम्भीरे कविभिर्नमस्ये । द्यावापृथिवी भवतं मे स्योने ते नो मुञ्चतमंहसः ॥३॥**

सबै खालका प्राणीको कष्ट मेटाउने, क्रान्तदर्शी ऋषिहरूले नमस्कार गरिएका, अत्यधिक विस्तृत था अत्यधिक गम्भीर द्यावापृथिवीलाई हामी आह्वान गर्दछौं । ती द्यावापृथिवी हाम्रा निम्ति सुखदायी होऊन् र हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

**ये अमृतं बिभृथो ये हवींषि ये स्रोत्या बिभृथो ये मनुष्यान् । द्यावापृथिवी भवतं मे स्योने ते नो मुञ्चतमंहसः ॥४॥**

हे द्यावापृथिवी ! तिमीहरू दुवै समस्त प्राणीहरूको अमरत्वरूपी जल तथा हविष्यान्न धारण

गर्दछौ । जसले प्रवाहमान नदी तथा मानिसहरूलाई धारण गरेको छ, त्यस्ता तिमीहरू नै हौ र हाम्रा लागि सुखदायी बनेर हामीलाई सबै पापबाट मुक्त गराओ ।

**ये उस्रिया बिभृथो ये वनस्पतीन् ययोर्वां विश्वा भुवनान्यन्तः । द्यावापृथिवी भवतं मे स्योने ते नो मुञ्चतमंहसः ॥५॥**

हे द्यावापृथिवी ! तिमीहरू जेजति गाई र वनस्पतिलाई पोषण गर्दछौ, तिमीहरू दुईका बीचमा जेजति विश्वले निवास गरेका छन्, त्यस्ता तिमीहरू दुई हाम्रा निम्ति सुखदायी होओ र हामीलाई सबै खालका पापबाट मुक्त गराओ ।

**ये कीलालेन तर्पयथो ये घृतेन याभ्यामृते न किं चन शक्नुवन्ति । द्यावापृथिवी भवतं मे स्योने ते नो मुञ्चतमंहसः ॥६॥**

हे द्यावापृथिवी ! तिमीहरू अन्न र जलले समस्त विश्वलाई नै पालन गर्दछौ । तिमीहरू विना मानिसले कुनै पनि कार्य गर्न सक्दैनन् । यस्ता तिमीहरू हामीलाई सुखदायी हुँदै सबै पापबाट मुक्त गराओ ।

**यन्मेदमभिशोचति येनयेन वा कृतं पौरुषेयान्न दैवान् । स्तौमि द्यावापृथिवी नाथितो जोहवीमि ते नो मुञ्चतमंहसः ॥७॥**

जुनसुकै कारणले देवताका वा मानिसका कार्यले हामीलाई दुःख दिइरहेका भए पनि र जुनजुन कारणले हामीले अरूप्रति पाप गरेका भए पनि ती सबैको निवारण गर्नका लागि हामी द्यावापृथिवीलाई प्रार्थना गर्दछौँ र उनीहरूलाई नै पुकार्दछौँ । उनीहरूले हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

## २७. पापमोचन सूक्त

**ऋषि**– मृगार । **देवता**– मरुद्‌गण । **छन्द**– त्रिष्टुप् ।

**मरुतां मन्वे अधि मे ब्रुवन्तु प्रेमं वाजं वाजसाते अवन्तु । आशूनिव सुयमानह्व ऊतये ते नो मुञ्चन्त्वंहसः ॥१॥**

हामीले मरुत्‌हरूको माहात्म्य जानेका छौँ, हामीलाई उनले आफन्त मानून् र हाम्रा अन्नको सुरक्षा गर्दै रणक्षेत्रमा हाम्रा बलको पनि सुरक्षा गरून् । कुद्न सक्ने गतिला घोडाजस्ता ती मरुत्‌हरूलाई हामी आफ्नो सुरक्षाका लागि बोलाउँछौँ । उनले हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

**उत्समक्षितं व्यचन्ति ये सदा य आसिञ्चन्ति रसमोषधीषु । पुरो दधे मरुतः पृश्निमातृंस्ते नो मुञ्चन्त्वंहसः ॥२॥**

जुन मरुत्‌हरू मेघलाई आकाशमा फैलाउँछन् र धान, जौ, रुखबिरुवा आदि औषधिहरूलाई वर्षाका जलले सेचन गर्दछन्, पृश्निलाई आमा भन्ने उनै मरुत्‌हरूलाई हामी प्रार्थना गर्दछौँ । उनीहरूले हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

**पयो धेनूनां रसमोषधीनां जवमर्वतां कवयो य इन्वथ । शग्मा भवन्तु मरुतो नः स्योनास्ते नो मुञ्चन्त्वंहसः ॥३॥**

हे मरुत्‌देवताहरू हो ! क्रान्तदर्शी भएर तिमीहरूले सबै गाईका शरीरलाई दुधले र औषधिलाई रसले व्याप्त गराएका छौ । अश्वलाई वेगवान् शक्तिले व्याप्त गराएका छौ । तिमीहरू यस्तो गर्नमा सक्षम हुनाले हामीलाई सुख तथा ऐश्वर्य प्रदान गर र सबै खालका पापबाट मुक्त गर ।

**अपः समुद्राद् दिवमुद् वहन्ति दिवस्पृथिवीमभि ये सृजन्ति । ये अद्भिरीशाना मरुतश्चरन्ति ते नो मुञ्चन्त्वंहसः ॥४॥**

मरुत्‌हरूले जललाई समुद्रबाट अन्तरिक्षसम्म पुऱ्याउँछन् र अन्तरिक्षबाट त्यसैलाई पृथ्वीको लक्ष्य गरी छोड्दछन् । उसै जलसितै विचरण गर्ने र त्यसै जलका स्वामी मरुत्‌हरूले हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

**ये कीलालेन तर्पयन्ति ये घृतेन ये वा वयो मेदसा संसृजन्ति । ये अद्भिरीशाना मरुतो वर्षयन्ति ते नो मुञ्चन्त्वंहसः ॥५॥**

जुन मरुत्‌हरू अन्न र जलले सबै मानिसको भोकतिर्खा मेटाउँछन्, जसले अन्नलाई पुष्टिकारक पदार्थका साथमा उब्जाउँछन् र जो मेघमा भएको जलका अधिपति बनेर सबै ठाउँमा वर्षा गराउँछन्, त्यस्ता मरुत्‌गणले हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

**यदीदिदं मरुतो मारुतेन यदि देवा दैव्येनेदृगार । यूयमीशिध्वे वसवस्तस्य निष्कृतेस्ते नो मुञ्चन्त्वंहसः ॥६॥**

सबैलाई आवास प्रदान गर्ने हे दिव्य मरुत्‌हरू हो ! देवताहरूसित सम्बन्धित अपराधका कारण हामीले आज जुन दुःख पाइरहेका छौँ, त्यस दुःख वा पापबाट मुक्त गराउन तिमीहरू नै सक्षम छौ । हामीलाई सबै खालका पापबाट मुक्त गराओ ।

**तिग्ममनीकं विदितं सहस्वन् मारुतं शर्धः पृतनासूग्रम् । स्तौमि मरुतो नाथितो जोहवीमि ते नो मुञ्चन्त्वंहसः ॥७॥**

सेनाको जस्तै मरुत्‌हरूको पनि तीक्ष्ण र प्रचण्ड बल रणक्षेत्रमा खपिनसक्ने खालको हुन्छ । हामी त्यस्ता मरुत्‌लाई प्रार्थना गर्दछौँ, उनीहरूलाई बोलाउँछौँ । उनीहरूले हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

## २८. पापमोचन सूक्त

**ऋषि–** मृगार, अथर्वा । **देवता–** भव शर्व, रुद्र । **छन्द–** त्रिष्टुप्, अति जागतगर्भा भुरिक् त्रिष्टुप् ।

**भवाशर्वौ मन्वे वां तस्य वित्तं ययोर्वामिदं प्रदिशि यद् विरोचते । यावस्येशाथे द्विपदो यौ चतुष्पदस्तौ नो मुञ्चतमंहसः ॥१॥**

संसारको उत्पत्ति र विनाश गर्ने हे भव र शर्व नामका देवताहरू हो ! हामीले तिमीहरूको महिमा जानेका छौँ । यो सम्पूर्ण संसार नै तिमीहरूका सामर्थ्यले आलोकित भएको छ । तिमी मानिस र पशुका स्वामी हौ । तिमीहरू दुवैले हामीलाई सबै खालका पापबाट मुक्त गराओ ।

**ययोरभ्यध्व उत यद् दुरे चिद् यौ विदिताविषुभृतामसिष्ठौ । यावस्येशाथे द्विपदो यौ चतुष्पदस्तौ नो मुञ्चतमंहसः ॥२॥**

नजिक वा टाढाका स्थानहरूमा जेजति खालका कुराहरू छन् वा हुन्छन्, ती सबै उनीहरू दुईकै नियन्त्रणमा छन् । उनीहरू धनुषमा बाण लगाएर ताक्न र चलाउनमा ख्यातिप्राप्त छन् । मानिस र पशुका अधिपति उनीहरूले नै हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

**सहस्राक्षौ वृत्रहणा हुवेऽहं दूरेगव्यूती स्तुवन्नेम्युग्रौ । यावस्येशाथे द्विपदो यौ चतुष्पदस्तौ नो मुञ्चतमंहसः ॥३॥**

हजारौँ आँखा भएका, शत्रुलाई संहार गर्ने र परसम्म विचरण गर्ने प्रचण्ड खालका भव र शर्व नामका दुई देवताहरूलाई हामी प्रार्थना गर्दै आह्वान गर्दछौँ । मानिस र पशुका अधिपति उनीहरूले नै हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

**यावारेभाथे बहु साकमग्रे प्र चेदस्राष्ट्रमभिभां जनेषु । यावस्येशाथे द्विपदो यौ चतुष्पदस्तौ नो मुञ्चतमंहसः ॥४॥**

सृष्टिको प्रारम्भमा उनीहरू दुवैले सँगसँगै मिलेर अनेकौँ कार्य गरेका थिए । उनीहरूले नै मानिसमा प्रतिभाको विकास गराएका थिए । हे समस्त मानिस तथा पशुका अधिपतिहरू हो ! हामीलाई सबै खालका पापबाट मुक्त गराओ ।

**ययोर्वधान्नापपद्यते कश्चनान्तर्देवेषूत मानुषेषु । यावस्येशाथे द्विपदो यौ चतुष्पदस्तौ नो मुञ्चतमंहसः ॥५॥**

जुन भव र शर्व नामका देवताका संहारक हतियारबाट देवता वा मानिसमध्ये कोही पनि जोगिन

सक्दैन र जो मानिस र पशुका अधिपति हुन् उनीहरूले नै हामीलाई सबै खालका पापबाट मुक्त गराऊन् ।

**यः कृत्याकृन्मूलकृद् यातुधानो नि तस्मिन् धत्तं वज्रमुग्रौ । यावस्येशाथे द्विपदो यौ चतुष्पदस्तौ नो मुञ्चतमंहसः ॥६॥**

जुन शत्रुले कृत्याको प्रयोग गरेर बनाएका पिशाचहरूद्वारा अनिष्ट गराउन खोज्दछन् अथवा जुन राक्षसले हाम्रो वंशवृद्धिको मूलका रूपमा रहेका सन्तानलाई विनाश गर्न खोज्दछन्, हे प्रचण्ड वीर दुई देवताहरू हो ! तिमीहरू उनीमाथि वज्रले प्रहार गर । हे समस्त मानिस तथा पशुका अधिपतिहरू हो ! हामीलाई सबै खालका पापबाट मुक्त गराओ ।

**अधि नो ब्रूतं पृतनासूग्रौ सं वज्रेण सृजतं यः किमीदी । स्तौमि भवाशर्वौ नाथितो जोहवीमि तौ नो मुञ्चतमंहसः ॥७॥**

हे उग्र वीर भव र शर्व नामका दुई देवताहरू हो ! तिमीहरू हामीलाई हितकारी कुरो सिकाओ र जो स्वार्थी छन्, उनीहरूमाथि प्रहार गर । तिमीहरूलाई हामी आफ्ना स्वामी मानेर पुकार्दछौँ, तिमीहरूको स्तुति गर्दछौँ । हामीलाई सबै खालका पापबाट जोगाओ ।

## २९. पापमोचन सूक्त

**ऋषि**— मृगार । **देवता**— मित्रावरुण, द्रुह्वण । **छन्द**— त्रिष्टुप्, शक्वरीगर्भा जगती ।

**मन्वे वां मित्रावरुणावृतावृधौ सचेतसौ द्रुह्वणो यौ नुदेथे । प्र सत्यावानमवथो भरेषु तौ नो मुञ्चतमंहसः ॥१॥**

हे मित्रावरुणदेवताहरू हो ! एकै खालको चित्त भएका तिमीहरू यज्ञ र जललाई संवर्द्धन गर्दछौ । तिमीहरू विद्रोहीलाई उनका स्थानबाट हटाइदिन्छौ र सत्यनिष्ठहरूलाई रणक्षेत्रमा सुरक्षा गर्दछौ । हामी तिमीहरूको माहात्म्य जान्दछौँ र गाउँछौँ । हामीलाई सबै खालका पापबाट मुक्त गराओ ।

**सचेतसौ द्रुह्वणो यौ नुदेथे प्र सत्यावानमवथो भरेषु । यौ गच्छथो नृचक्षसौ बभ्रुणा सुतं तौ नो मुञ्चतमंहसः ॥२॥**

हे समान विचार भएका मित्रावरुण ! तिमीहरू विद्रोहीहरूलाई उनका स्थानबाट हटाएर सत्यनिष्ठलाई रणक्षेत्रमा सुरक्षा गर्दछौ । तिमीहरू नै दिन र रातका अधिपति भएकाले मानिसका सबै खालका कर्मको निरीक्षण गर्दै सोमपान गर्दछौ । हामीलाई सबै खालका पापबाट जोगाओ ।

**यावङ्गिरसमवथो यावगस्तिं मित्रावरुणा जमदग्निमत्रिम् । यौ कश्यपमवथो यौ वसिष्ठं तौ नो मुञ्चतमंहसः ॥३॥**

हे मित्रावरुण ! तिमीहरू दुवै अङ्गिरा, अगस्त्य, अत्रि र जमदग्नि ऋषिहरूको सुरक्षा गर्दछौ र कश्यप र वसिष्ठ ऋषिको पनि सुरक्षा गर्दछौ । हामीलाई सबै खालका पापबाट जोगाओ ।

**यौ श्यावाश्वमवथो वध्र्यश्वं मित्रावरुणा पुरुमीढमत्रिम् । यौ विमदमवथः सप्तवध्रिं तौ नो मुञ्चतमंहसः ॥४॥**

हे मित्रावरुण ! तिमीहरू दुवै श्यावश्व, वध्र्यश्व, विमद, पुरुमीढ र अत्रि नामका ऋषिहरूलाई सुरक्षा गर्दछौ । तिमीहरू दुवैले नै सप्तर्षिहरूको पनि रक्षा गरेका छौ । हामीलाई सबै खालका पापबाट जोगाओ ।

**यौ भरद्वाजमवथो यौ गविष्ठिरं विश्वामित्रं वरुण मित्र कुत्सम् । यौ कक्षीवन्तमवथः प्रोत कण्वं तौ नो मुञ्चतमंहसः ॥५॥**

हे मित्रावरुण ! तिमीहरू दुवैले नै भरद्वाज, विश्वामित्र, कुत्स, गविष्ठिर, कक्षीवान् र कण्व नामका ऋषिहरूलाई सुरक्षा गर्दछौ । हामीलाई सबै खालका पापबाट जोगाओ ।

**यौ मेधातिथिमवथो यौ त्रिशोकं मित्रावरुणावुशनां काव्यं यौ । यौ गोतममवथः प्रोत मुद्गलं तौ नो मुञ्चतमंहसः ॥६॥**

हे मित्रावरुण ! तिमीहरू दुवैले नै मेधातिथि, त्रिशोक, काव्य, उशना र गोतम नामका

ऋषिहरूलाई सुरक्षा गरेका छौ । हामीलाई सबै खालका पापबाट जोगाओ ।

**ययो रथः सत्यवर्त्मर्जुरश्मिर्मिथुया चरन्तमभियाति दूषयन् । स्तौमि मित्रावरुणौ नाथितो जोहवीमि तौ नो मुञ्चतमंहसः ॥७॥**

जुन मित्रावरुणको सत्य मार्ग र सरल किरण भएको रथ मिथ्याचारी पुरुषलाई बाधा पार्नका लागि त्यस्ताका सामु आउँछ, उनै मित्रावरुणलाई प्रार्थना गर्दै हामी बारम्बार आह्वान गर्दछौं । उनीहरूले हामीलाई सबै खालका पापबाट जोगाऊन् ।

## ३०. राष्ट्रदेवी सूक्त

**ऋषि**– अथर्वा । **देवता**– सर्वरूपा सर्वात्मिका सर्वदेवमयी वाक् । **छन्द**– त्रिष्टुप्, जगती ।

**अहं रुद्रेभिर्वसुभिश्चराम्यहमादित्यैरुत विश्वदेवैः । अहं मित्रावरुणोभा बिभर्म्यहमिन्द्राग्नी अहमश्विनोभा ॥१॥**

म वाग्देवी रुद्रगण र वसुगणका साथमा भ्रमण गर्दछु । म नै आदित्यगण र समस्त देवताका साथमा रहने गर्दछु । मित्रावरुण, इन्द्र, अग्नि र दुवै अश्विनीकुमार आदि सबैलाई म नै धारण गर्दछु ।

**अहं राष्ट्री सङ्गमनी वसूनां चिकितुषी प्रथमा यज्ञियानाम् । तां मा देवा व्यदधुः पुरुत्रा भूरिस्थात्रां भूर्यावेशयन्तः ॥२॥**

म वाग्देवी नै जगदीश्वरी र धन प्रदात्री हुँ । म ज्ञानले सम्पन्न र यज्ञका लागि उपयोगी देवताहरूमा सर्वोत्तम छु । मेरो स्वरूप विभिन्न रूपमा रहेको छ र मेरो आश्रय स्थान विस्तृत छ । सबै देवताले विभिन्न किसिमले मलाई नै प्रतिपादन गर्दछन् ।

**अहमेव स्वयमिदं वदामि जुष्टं देवानामुत मानुषाणाम् । यं कामये तंतमुग्रं कृणोमि तं ब्रह्माणं तमृषिं तं सुमेधाम् ॥३॥**

देवता र मानिसहरूले श्रद्धापूर्वक जसको मनन गर्दछन् । ती सबै विचार र सन्देशहरू मबाटै प्रसारित हुन्छन् । जसप्रति मेरो कृपादृष्टि हुन्छ, ती बलशाली स्तोता र ऋषिहरू ज्यादै बुद्धिमान् हुन्छन् ।

**मया सोऽन्नमत्ति यो विपश्यति यः प्राणति य ईं शृणोत्युक्तम् । अमन्तवो मां त उप क्षियन्ति श्रुधि श्रुत श्रद्धेयं ते वदामि ॥४॥**

प्राणीहरूको जीवनशक्तिका रूपमा रहेको प्राण, दर्शनक्षमता, श्रवणसामर्थ्य, ज्ञान आदि छन्, ती सबै अन्न भोग गर्ने सामर्थ्य नै हुन् । तिनीहरू सबै म वाग्देवीकै सहयोगले प्राप्त हुने गर्दछन् । जसले मेरो सामर्थ्यका विषयमा जान्दैन, त्यसको विनाश हुन्छ । हे बुद्धिमान् मित्रहरू हो ! तिमीहरू ध्यान देओ, मैले जेजति भनिरहेकी छु त्यो सबै श्रद्धाको विषय हो ।

**अहं रुद्राय धनुरा तनोमि ब्रह्मद्विषे शरवे हन्तवा उ । अहं जनाय समदं कृणोम्यहं द्यावापृथिवी आ विवेश ॥५॥**

जुन समयमा रुद्रदेवता ब्रह्मद्रोही शत्रुको विध्वंस गर्नका लागि प्रयास गरिरहेका हुन्छन्, त्यस बेला दुष्टलाई पीडित गराउने रुद्रको धनुषबाणलाई म नै सन्धान गर्दछु । मानिसको हितका लागि म नै सङ्ग्राम गर्दछु । म नै द्युलोक र पृथ्वीलोक दुवैमा व्याप्त रहने गर्दछु ।

**अहं सोममाहनसं बिभर्म्यहं त्वष्टारमुत पूषणं भगम् । अहं दधामि द्रविणा हविष्मते सुप्राव्या३ यजमानाय सुन्वते ॥६॥**

सोम त्वष्टा, पूषा र भग आदि सबै देवताहरू मेरै आश्रय ग्रहण गर्दछन् । मैले नै हविष्यान्न आदि उत्तम हविले देवताहरूलाई सन्तुष्ट गराएकी छु र सोमरस पेल्ने यजमानहरूका यज्ञलाई खोजेको जस्तै फलका रूपमा धमन प्रदान गर्दछु ।

अहं सुवे पितरमस्य मूर्धन्मम योनिरप्स्वन्तः समुद्रे । ततो वि तिष्ठे भुवनानि विश्वोतामूं द्यां वर्ष्मणोप स्पृशामि ॥७॥

संसारको सर्वोच्च स्थानमा रहेको दिव्यलोकलाई मैले नै प्रकट गरेकी हुँ । मेरो उत्पत्तिस्थल विराट् आकाशमा जलरूपी मूलतत्त्वमा छ । उसै स्थानबाट म सम्पूर्ण विश्वमा व्याप्त हुन्छु । महान् अन्तरिक्षलाई मैले आफ्ना उन्नत शरीरले स्पर्श गरेकी छु ।

अहमेव वात इव प्र वाम्यारभमाणा भुवनानि विश्वा । परो दिवा पर एना पृथिव्यैतावती महिम्ना सं बभूव ॥८॥

सबै लोकहरूलाई निर्माण गर्दै म वायुकै जस्तो वेगले सबै भुवनहरूमा विचरण गर्दछु । मेरो महिमा स्वर्गलोक र पृथ्वीभन्दा पनि महान् छ ।

## ३१. सेनानिरीक्षण सूक्त

**ऋषि**– ब्रह्मास्कन्द । **देवता**– मन्यु । **छन्द**– त्रिष्टुप्, भरिक् त्रिष्टुप्, जगती ।

त्वया मन्यो सरथमारुजन्तो हर्षमाणा हृषितासो मरुत्वन् । तिग्मेषव आयुधा संशिशाना उप प्र यन्तु नरो अग्निरूपाः ॥१॥

हे उत्साह ! तिम्रा सहयोगले रथमा आरुढ भई प्रसन्न चित्तले आफ्ना आयुधहरू तिखारेर अग्निको जस्तै कडा डाह उत्पन्न गराउने मरुत्गण आदि युद्धनायकहरू हाम्रो सहायता गर्नका लागि युद्धका मैदानमा जाऊन् ।

अग्निरिव मन्यो त्विषितः सहस्व सेनानीर्नः सहुरे हूत एधि । हत्वाय शत्रून् वि भजस्व वेद ओजो मिमानो वि मृधो नुदस्व ॥२॥

हे मन्यु ! तिमी अग्निजस्तै प्रदीप्त भएर शत्रुलाई पराजित गर । हे सहनशक्तिले सम्पन्न उत्साह ! तिमीलाई आह्वान गर्दछौं । तिमी हाम्रा सङ्ग्रामको नायक बन । शत्रुलाई संहार गरेर उनीहरूको सम्पत्ति खोस । हामीलाई बल प्रदान गरेर हाम्रा शत्रुलाई पर भगाऊ ।

सहस्व मन्यो अभिमातिमस्मै रुजन् मृणन् प्रमृणन् प्रेहि शत्रून् । उग्रं ते पाजो नन्वा रुरुध्रे वशी वशं नयासा एकज त्वम् ॥३॥

हे उत्साह ! हामीविरुद्ध सक्रिय रहेका शत्रुलाई तिमी परास्त गर । तिमी शत्रुलाई सखाप गारउँदै आक्रमण गर । तिम्रो प्रभावपूर्ण क्षमतालाई रोक्नका लागि को सक्षम होला र ? हे अद्वितीय मन्यु ! तिमी स्वयं नै संयमशील भएर शत्रुलाई नियन्त्रणम लिने गर्दछौ ।

एको बहूनामसि मन्य ईडिता विशंविशं युद्धाय सं शिशाधि । अकृत्तरुक्त्वया युजा वयं द्युमन्तं घोषं विजयाय कृण्मसि ॥४॥

हे मन्यु ! तिमी एक्लै नै अनेकौं तिरबाट सत्कारयोग्य छौ । तिमी युद्धका निम्ति मानिसलाई निखार । हे अक्षय प्रकाशयुक्त मन्यु ! तिमीसितको मित्रताका सहयोगले हामी हर्षित हुँदै विजय प्राप्तिका लागि सिंहनाद गर्दछौं ।

विजेषकृदिन्द्र इवानवब्रवोऽस्माकं मन्यो अधिपा भवेह । प्रियं ते नाम सहुरे गृणीमसि विद्या तमुत्सं यत आबभूथ ॥५॥

हे मन्यु ! इन्द्रजस्तै विजेता, असन्तुलित भएर नबोल्ने तिमी नै हाम्रा अधिपति हौ । हे सहनशीलता ! तिम्रा निम्ति हामी प्रिय स्तोत्र उच्चारण गर्दछौं । जुन स्तोत्रले तिमी प्रकट हुन्छौ, हामी त्यस स्तोत्रका ज्ञाता हौं ।

आभूत्या सहजा वज्र सायक सहो बिभर्षि सहभूत उत्तरम् । क्रत्वा नो मन्यो सह मेद्येधि महाधनस्य पुरुहूत संसृजि ॥६॥

हे वज्रजस्तै शत्रुसंहारक मन्यु ! शत्रुलाई विनाश गर्नु तिम्रो जन्मजात स्वभाव नै हो । हे शत्रुलाई पराजित गराउने मन्यु ! तिमी श्रेष्ठ तेजस्विता ग्रहण गर्दछौ । कर्मशक्तिका साथमा युद्धक्षेत्रमा तिमी हाम्रा लागि सहायक होऊ । तिमीलाई असङ्ख्य वीरहरूले आह्वान गर्दछन् ।

*संसृष्टं धनमुभयं समाकृतमस्मभ्यं धत्तां वरुणश्च मन्युः । भियो दधाना हृदयेषु शत्रवः पराजितासो अप नि लयन्ताम् ॥७॥*

हे वरुणझैँ वरण गर्न योग्य मन्यु ! तिमी उत्पादित र सङ्ग्रहीत ऐश्वर्य हामीलाई प्रदान गर । भयभीत हृदय भएका शत्रु हामीसित पराजित भएर पर भागून् ।

## ३२. सेनासंयोजन सूक्त

**ऋषि**— ब्रह्मास्कन्द । **देवता**— मन्यु । **छन्द**— त्रिष्टुप्, जगती ।

**यस्ते मन्योऽविधद् वज्र सायक सह ओजः पुष्यति विश्वमानुषक् । साह्याम दासमार्यं त्वया युजा वयं सहस्कृतेन सहसा सहस्वता ॥१॥**

हे वज्रजस्तै तीखो र बाणजस्तै क्रोधको अभिमानले सम्पन्न मन्युदेवता ! जुन साधकले तिमीलाई धारण गरेको हुन्छ, उसले सबै किसिमका शक्ति र सामर्थ्यलाई निरन्तर परिपुष्ट गर्दछ । तिमी बलवर्द्धक र विजयदाता हौ, तिम्रा सहयोगले हामी विरोधी दास र आर्यहरूलाई आफ्ना अधीनमा बनाउन सकौँ ।

**मन्युरिन्द्रो मन्युरेवास देवो मन्युर्होता वरुणो जातवेदाः । मन्युर्विश ईडते मानुषीर्याः पाहि नो मन्यो तपसा सजोषाः ॥२॥**

मन्यु नै इन्द्रदेवता हुन् । यज्ञका सञ्चालक वरुण र जातवेदा अग्निले पनि मन्युकै सहयोग लिएका छन् । सबै मानवी प्रजाले मन्युको नै प्रशंसा गर्दछन् । हे मन्यु ! स्नेहयुक्त भएर तिमी तपस्वीझैँ हामीलाई रक्षा गर ।

**अभीहि मन्यो तवसस्तवीयान् तपसा युजा वि जहि शत्रून् । अमित्रहा वृत्रहा दस्युहा च विश्वा वसून्या भरा त्वं नः ॥३॥**

हे मन्यु ! तिमी महान् सामर्थ्यशाली छौ । तिमी यहाँ आऊ । आफ्ना तपस्याले युक्त भएर शत्रुलाई विध्वंस गर । तिमी शत्रुविनाशक, वृत्रहन्ता र दस्युहरूलाई दलन गर्ने हौ । हामीलाई सबै किसिमका ऐश्वर्य प्रदान गर ।

**त्वं हि मन्यो अभिभूत्योजाः स्वयंभूर्भामो अभिमातिषाहः । विश्वचर्षणिः सहुरिः सहीयानस्मास्वोजः पृतनासु धेहि ॥४॥**

हे मन्यु ! तिमी विजयी शक्तिले सम्पन्न, स्वसामर्थ्यले उन्नति गर्ने, तेजयुक्त, शत्रुलाई पराजित गराउने, सबैलाई निरीक्षण गर्नमा सक्षम र बलशाली छौ । सङ्ग्रामका क्षेत्रमा हामीभित्र तिमीले ओज स्थापना गर ।

**अभागः सन्नप परेतो अस्मि तव क्रत्वा तविषस्य प्रचेतः । तं त्वा मन्यो अक्रतुर्जिहीडाहं स्वा तनूर्बलदावा न एहि ॥५॥**

हे श्रेष्ठ ज्ञानले सम्पन्न मन्यु नामका उत्साहका देवता ! तिमीसितको सहयोग नपाएका कारणले हामी अलग भएर पर गएका थियौँ । तिमी महिमामय छौ र तिमीबाट विमुख भएर हामी कर्महीन भएका थियौँ । सङ्कल्पहीन हुनाले लज्जित भएर तिम्रा शरणमा आएका छौँ । हाम्रा शरीरमा बल सञ्चार गराउँदै तिमी आऊ ।

**अयं ते अस्म्युप न एह्यर्वाङ् प्रतीचीनः सहुरे विश्वदावन् । मन्यो वज्रिन्नभि न आ ववृत्स्व हनाव दस्यूंरुत बोध्यापेः ॥६॥**

हे मन्यु ! हामी तिम्रा सामुमा उपस्थित भएका छौँ । तिमी कृपापूर्वक हाम्रा चोटहरू सहन गर्न र सबैलाई धारण गर्नमा समर्थ छौ । हे वज्रधारी ! तिमी हाम्रा नजिकै आऊ । हामीलाई मित्र ठान, त्यसै भएर हामी दुष्टलाई मार्न सकौँ ।

**अभि प्रेहि दक्षिणतो भवा नोऽधा वृत्राणि जङ्घनाव भूरि । जुहोमि ते धरुणं मध्वो अग्रमुभावुपांशु प्रथमा पिबाव ॥७॥**

हे मन्यु ! तिमी हाम्रा नजिक आऊ । हाम्रो अनुकूल भएर दाहिनेतिर बस । हामी दुवै खालका

निलेर शत्रुलाई संहार गर्नमा समर्थ हुनेछौं । हामी तिम्रा लागि मधुर र श्रेष्ठ धारक क्षमता भएको सोम हवन गर्दछौं । हामी दुवै पक्षकाले एकान्तमा यो रस पान गरौं ।

## ३३. पापनाशन सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– अग्नि । **छन्द**– गायत्री ।

**अप नः शोशुचदघमग्ने शुशुग्ध्या रयिम् । अप नः शोशुचदघम् ॥१॥**

हे अग्निदेवता ! तिमी हाम्रा पापजति भस्म गराऊ । हाम्रा चारैतर्फ ऐश्वर्य प्रकट गर र पापजति विनाश गर ।

**सुक्षेत्रिया सुगातुया वसूया च यजामहे । अप नः शोशुचदघम् ॥२॥**

हे अग्निदेवता ! उत्तम क्षेत्र, उत्तम मार्ग र उत्तम धनको इच्छाले हामी तिमीलाई यजन गर्दछौं । हाम्रो पाप तिमी मेटाइदेऊ ।

**प्र यद् भन्दिष्ठ एषां प्रास्माकासश्च सूरयः । अप नः शोशुचदघम् ॥३॥**

हे अग्निदेवता ! हामी सबै साधकहरू वीरता र बुद्धिले तिमीलाई विशिष्ट प्रकारले भक्ति गर्दछौं । हाम्रो पाप तिमी विनाश गर ।

**प्र यत् ते अग्ने सूरयो जायेमहि प्र ते वयम् । अप नः शोशुचदघम् ॥४॥**

हे अग्निदेवता ! हामी सबै जना र विद्वान्हरूले पनि तिमीलाई उपासना गरेका छौं । तिमीजस्तै प्रकाशवान् हामी भएका छौं । त्यसैले तिमी हाम्रो पाप विनाश गर ।

**प्र यदग्नेः सहस्वतो विश्वतो यन्ति भानवः । अप नः शोशुचदघम् ॥५॥**

यी बलसम्पन्न अग्निदेवताको देदीप्यमान किरण सबैतिर फैलिएको छ । यस्ता अग्निले हाम्रो पाप नाश गरून् ।

**त्वं हि विश्वतोमुख विश्वतः परिभूरसि । अप नः शोशुचदघम् ॥६॥**

हे बलसम्पन्न अग्निदेवता ! तिमी निश्चय नै सबैतिर व्याप्त भएका छौ । हाम्रो पाप तिमीले नै नाश गर ।

**द्विषो नो विश्वतोमुखाति नावेव पारय । अप नः शोशुचदघम् ॥७॥**

हे सबैतिर मुख भएका अग्निदेवता ! तिमी नौकाजस्तो भएर शत्रुबाट हामीलाई पार लगाऊ । तिमी हाम्रो पाप विनाश गर ।

**स नः सिन्धुमिव नावाति पर्षा स्वस्तये । अप नः शोशुचदघम् ॥८॥**

हे अग्निदेवता ! नौकाले नदी पार तारिदिएझैं हिंसक शत्रुबाट हामीलाई तिमी पार लगाऊ । हामीलाई पापबाट तिमी जोगाऊ ।

## ३४. ब्रह्मौदन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– ब्रह्मौदन । **छन्द**– त्रिष्टुप्, उत्तमा भुरिक् त्रिष्टुप्, त्र्यवसाना सप्तपदा कृति, पञ्चपदातिशक्वरी, भुरिक् अतिशक्वरी, जगती ।

**ब्रह्मास्य शीर्षं बृहदस्य पृष्ठं वामदेव्यमुदरमोदनस्य । छन्दांसि पक्षौ मुखमस्य सत्यं विष्टारी जातस्तपसोऽधि यज्ञः ॥१॥**

यस ब्रह्मौदनको शीर्षभाग ब्रह्म हो, पृष्ठभाग विशाल बृहत् हो, उत्पादक सामर्थ्यका प्रतीक वामदेव यसको उदर हो, विविध छन्दहरू यसका पार्श्वभाग हुन् र सत्य नै यसको मुख हो । यो विकासशील ब्रह्मौदन यज्ञका तपबाट उत्पन्न भएको हो ।

**अनस्थाः पूताः पवनेन शुद्धाः शुचयः शुचिमपि यन्ति लोकम् । नैषां शिश्नं प्र दहति जातवेदाः स्वर्गे लोके बहु स्त्रैणमेषम् ॥२॥**

यो ब्रह्मौदन अस्थिजस्तो कठिनताविहीन र पवित्र छ । वायुले शुद्ध र पवित्र भएर यसले पवित्र लोकहरू प्राप्त गर्दछ । अग्निले यसको शिश्नरूपी उत्पादक अङ्गलाई नाश गर्न सक्दैन । स्वर्गका यसका धेरै नै प्रजननशील स्त्रीहरू छन् ।

**विष्यरिणमोदनं ये पचन्ति नैनानवर्तिः सचते कदा चन । आस्ते यम उप याति देवान्त्सं गन्धर्वैर्मदते सोम्येभिः ॥३॥**

जुन साधकले यस विस्तारित हुने ओदनलाई पकाउने काम गर्दछन् उनलाई कहिल्यै दरिद्रताले छोड्दैन । उनीहरू नियमपूर्वक रहेका हुन्छन् र देवताको निकटता प्राप्त गर्दछन् र सोमपान गर्न योग्य गन्धर्व आदिका साथमा आनन्दित हुने गर्दछन् ।

**विष्यरिणमोदनं ये पचन्ति नैनान् यमः परि मुष्णाति रेतः । रथी ह भूत्वा रथयान ईयते पक्षी ह भूत्वाति दिवः समेति ॥४॥**

जुन याजकले यस अन्नलाई पकाउँछन्, यमदेवताले उनलाई वीर्यहीन हुन दिँदैनन् । उनीहरू आफ्नो जीवनकालभरि नै रथमा आरुढ भएर पृथ्वीमा विचरण गर्दछन् र पक्षीजस्तो बनेर द्युलोकलाई अतिक्रमण गर्दै माथितिर गमन गर्दछन् ।

**एष यज्ञानां विततो वहिष्ठो विष्यरिणं पक्त्वा दिवमा विवेश । आण्डीकं कुमुदं सं तनोति बिसं शालूकं शफको मुलाली । एतास्त्वा धारा उप यन्तु सर्वाः स्वर्गे लोके मधुमत् पिन्वमाना उप त्वा तिष्ठन्तु पुष्करिणीः समन्ताः ॥५॥**

यो समस्त यज्ञमा श्रेष्ठ छ । यस अन्नलाई पकाउने याजकहरू स्वर्गलोकमा प्रविष्ट हुन्छन् । यस यज्ञले अण्डमा स्थित रहेको मूल शक्तिलाई शान्त चित्तले कमलनालको जस्तै तीव्र गतिमा विस्तृत गराउँछ । हे साधक ! यी सबै धाराहरू तिमीलाई प्राप्त होऊन् । स्वर्गको मधुर रसवाहिनी दिव्य नदीहरू तिम्रा नजिक आऊन् ।

**घृतह्रदा मधुकूलाः सुरोदकाः क्षीरेण पूर्णा उदकेन दध्ना । एतास्त्वा धारा उप यन्तु सर्वाः स्वर्गे लोके मधुमत् पिन्वमाना उप त्वा तिष्ठन्तु पुष्करिणीः समन्ताः ॥६॥**

हे सोमयज्ञ गर्नेहरू हो ! घिउको प्रवाह भएको, महले किनाराहरू भरिएको, निर्मल जल भएको, दुध, जल र दहीले पूर्ण समस्त धाराहरू मधुरतायुक्त पदार्थलाई पुष्ट गराउँदै द्युलोकमा तिमीलाई प्राप्त होऊन् ।

**चतुरः कुम्भांश्चतुर्धा ददामि क्षीरेण पूर्णां उदकेन दध्ना । एतास्त्वा धारा उप यन्तु सर्वाः स्वर्गे लोके मधुमत् पिन्वमाना उप त्वा तिष्ठन्तु पुष्करिणीः समन्ताः ॥७॥**

दुध, दही र जलले परिपूर्ण चार घडालाई हामी चार दिशामा स्थापित गर्दछौँ । स्वर्गलोकमा दुध आदिका धाराहरू मधुरतालाई परिपुष्ट गराउँदै तिमीलाई प्राप्त होऊन् र जलले भरिएका सरिताहरू पनि तिमीलाई नै प्राप्त होऊन् ।

**इममोदनं नि दधे ब्राह्मणेषु विष्यरिणं लोकजितं स्वर्गम् । स मे मा क्षेष्ट स्वधया पिन्वमानो विश्वरूपा धेनुः कामदुघा मे अस्तु ॥८॥**

यो विस्तृत हुने खालको स्वर्गीय ओदन हामी ब्रह्मनिष्ठ ब्राह्मण साधकहरूमा स्थापित गर्दछौँ । यो ओदन स्वधाका साथमा दुध आदिले वर्द्धित हुने भएकाले नष्ट नहोस् र खोजेको जस्तो फल प्रदान गर्नका लागि कामधेनुका रूपमा हामीलाई प्राप्त होस् ।

## ३५. मृत्युसंतरण सूक्त

**ऋषि–** प्रजापति । **देवता–** अतिमृत्यु । **छन्द–** त्रिष्टुप्, भुरिक् त्रिष्टुप्, जगती ।

**यमोदनं प्रथमजा ऋतस्य प्रजापतिस्तपसा ब्रह्मणेऽपचत् । यो लोकानां विधृतिर्नाभिरेषात् तेनौदनेनाति तराणि मृत्युम् ॥१॥**

जुन ओदन सर्वप्रथम उत्पन्न भएका प्रजापतिले तपस्याका प्रभावले आफ्नै कारणले ब्रह्मका लागि बनाएका थिए, जुन किसिमले नाभीले समस्त जीवलाई विशेष रूपमा धारण गर्दछ, उसै गरी यो ओदन पृथ्वीलाई धारण गर्दछ । हामी त्यसै ओदनका कारण मृत्युलाई जित्दछौँ ।

**येनातरन् भूतकृतोऽति मृत्युं यमन्वविन्दन् तपसा श्रमेण । यं पपाच ब्रह्मणे ब्रह्म पूर्वं तेनौदनेनाति तराणि मृत्युम् ॥२॥**

जुन अन्नलाई तपस्याका बलले प्राणीको सृष्टि गर्ने देवताहरूले प्राप्त गरेका थिए, जसका कारण

मृत्युलाई जितेर जान सकेका थिए, जसलाई सबैभन्दा पहिले उत्पन्न भएका ब्रह्मले आफ्नो कारणब्रह्मका रूपमा तयार गरेका थिए, उसै अन्नका प्रभावले हामी मृत्युलाई जित्छौँ ।

**यो दाधार पृथिवीं विश्वभोजसं यो अन्तरिक्षमापृणाद् रसेन । यो अस्तभ्नाद् दिवमूर्ध्वो महिम्ना तेनौदनेनाति तराणि मृत्युम् ॥३॥**

जुन ओदनले समस्त प्राणीलाई भोजन प्रदान गर्ने पृथ्वीलाई धारण गर्दछ, जुन ओदन आफ्ना रसका कारण अन्तरिक्षमा परिपूर्ण हुने गर्दछ र जुन ओदन आफ्नो माहात्म्यका कारण द्युलोकलाई माथि नै धारण गरेर रहेको छ उसै ओदनका प्रभावले हामी मृत्युलाई जित्दछौँ ।

**यस्मान्मासा निर्मितास्त्रिंशदराः संवत्सरो यस्मान्निर्मितो द्वादशारः । अहोरात्रा यं परियन्तो नापुस्तेनौदनेनाति तराणि मृत्युम् ॥४॥**

जुन ब्रह्मौदनले गर्दा बाह्र महिना उत्पन्न भएका छन्, जसले रथचक्रका अरहरूझैँ तीस दिन उत्पन्न भएका छन्, जसले बाह्र महिनालाई एक वर्षका रूपमा उत्पन्न गरेको छ र जुन ओदनका कारण विगतका दिन र रात फेरि प्राप्त हुँदैनन् त्यसै ओदनका प्रभावले हामी मृत्यलाई जित्दछौँ ।

**यः प्राणदः प्राणदवान् बभूव यस्मै लोका घृतवन्तः क्षरन्ति । ज्योतिष्मतीः प्रदिशो यस्य सर्वास्तेनौदनेनाति तराणि मृत्युम् ॥५॥**

जुन ओदनले मृत्युका नजिक पुगेकालाई प्राण प्रदान गर्दछ, जसका लागि समस्त संसारले घिउका धारा प्रवाहित गर्दछ र जसको ओजले समस्त दिशाहरू नै ओजस्वी हुने गर्दछन् त्यसै ओदनका प्रभावले हामी मृत्युलाई नाघ्दछौँ ।

**यस्मात् पक्वादमृतं सम्बभूव यो गायत्र्या अधिपतिर्बभूव । यस्मिन् वेदा निहिता विश्वरूपास्तेनौदनेनाति तराणि मृत्युम् ॥६॥**

जुन पाकिसकेका ओदनले द्युलोकमा रहेको अमृत उत्पन्न भयो, जो गायत्री छन्दका देवता बनेको छ, जसमा सबै खालका ऋक्, यजु, साम आदि वेदहरू अटाएका छन्, उसै ओदनका बलले हामी मृत्युलाई जित्दछौँ ।

**अव बाधे द्विषन्तं देवपीयुं सपन्ता ये मेऽप ते भवन्तु । ब्रह्मौदनं विश्वजितं पचामि शृण्वन्तु मे श्रद्दधानस्य देवाः ॥७॥**

रिसडाह गर्ने शत्रुलाई र देवत्वको हेला गर्नेहरूका काममा हामी बाधा हाल्दछौँ । हाम्रा सबै शत्रु नाश होऊन् भनेर नै सबैमाथि विजय प्राप्त गर्ने ब्रह्मरूपी ओदन हामी पकाउँछौँ । त्यसो हुँदा हाम्रो पुकार सबै देवताहरूले सुनून् ।

## ३६. सत्यौजा अग्नि सूक्त

**ऋषि**— चातन । **देवता**— सत्यौजा अग्नि । **छन्द**— अनुष्टुप्, भुरिक् अनुष्टुप् ।

**तान्त्सत्यौजाः प्र दहत्वग्निर्वैश्वानरो वृषा । यो नो दुरस्याद् दिप्साच्चाथो यो नो अरातियात् ॥१॥**

हामीमाथि झुटो दोषारोपण गर्ने, हामीलाई मार्ने विचार गर्ने, हामीसित शत्रुताको व्यवहार गर्ने जोजो छन्, ती सबै शत्रुलाई सत्यको बल भएका वैश्वानर अग्निदेवताले प्रबलताका साथ भस्म गराऊन् ।

**यो नो दिप्सददिप्सतो दिप्सतो यश्च दिप्सति । वैश्वानरस्य दंष्ट्रयोरग्नेरपि दधामि तम् ॥२॥**

हामी निरपराधलाई मार्न खोज्ने, खाली सताउनका लागि मात्रै हामीलाई मारपिट गर्ने जुन शत्रुहरूलाई हामी वैश्वानर अग्निदेवताका दाह्रामा हालिदिन्छौँ ।

**य आगरे मृगयन्ते प्रतिक्रोशे ऽमावास्ये । क्रव्यादो अन्यान् दिप्सतः सर्वांस्तान्त्सहसा सहे ॥३॥**

औँसीका अँध्यारा रातहरूमा घरघरमा पसेर सिकार खोज्दै घुम्ने गरेका परमांसभोजी र घातक भूताजस्ता पिशाचलाई हामी मन्त्रका बलले पराजित गर्दछौँ ।

**सहे पिशाचान्त्सहसैषां द्रविणं ददे । सर्वान् दुरस्यतो हन्मि सं म आकूतिर्ऋध्यताम् ॥४॥**
गात चुस्ने पिशाचहरूलाई मन्त्रका बलले हामी पराजित गर्दछौँ र उनको वैभव पनि हरण गर्दछौँ । दुष्टताको व्यवहार गर्नेहरूलाई हामी नष्ट गर्दछौँ । हामीले रहर गरेको सङ्कल्प सुखदायक र सफल होस् ।

**ये देवास्तेन हासन्ते सूर्येण मिमते जवम् । नदीषु पर्वतेषु ये सं तैः पशुभिर्विदे ॥५॥**
सूर्यको गतिलाई मापन गर्न र ती पिशाचहरूसित रमाउन सक्ने देवता वा दिव्यपुरुष तथा नदी एवं पर्वतमा रहने गरेका पशुका माध्यमबाट हामी तिनलाई उचित किसिमले जान्न सकौँ ।

**तपनो अस्मि पिशाचानां व्याघ्रो गोमतामिव । श्वानः सिंहमिव दृष्ट्वा ते न विन्दन्ते न्यञ्चनम् ॥६॥**
गाइका धनीलाई बाघले जसरी सताउँछ, उसै गरी मन्त्रका बलले हामी राक्षसहरूलाई सताउन सक्ने होऔँ । जसरी सिंहलाई देखेपछि कुकुर डरले लुक्दछ, उसै गरी यी पिशाचहरू हाम्रो मन्त्रबल देखेपछि पतित होऊन् ।

**न पिशाचैः सं शक्नोमि न स्तेनैर्न वनर्गुभिः । पिशाचास्तस्मान्नश्यन्ति यमहं ग्राममाविशे ॥७॥**
हामीभित्र पिशाचले प्रवेश गर्न सक्दैनन् । हामी चोर र डाकासित मिल्न सक्दैनौँ । हामी जुन गाउँमा प्रवेश गर्दछौँ त्यस गाउँका पिशाच नाश हुन्छन् ।

**यं ग्राममाविशत इदमुग्रं सहो मम । पिशाचास्तस्मान्नश्यन्ति न पापमुप जानते ॥८॥**
हाम्रो यो मन्त्रको बल जुन गाउँमा प्रवेश गरेर अडिन्छ, त्यस गाउँका राक्षसहरू विनाश हुन्छन् । त्यसैले हिंसायुक्त कार्यलाई त्यहाँका निवासीले जान्दैनन् ।

**ये मा क्रोधयन्ति लपिता हस्तिनं मशका इव । तानहं मन्ये दुर्हिताञ्जने अल्पशयूनिव ॥९॥**
मानिसहरू हिँड्दा तिनका पाइलाले जसरी सानातिना प्राणी मर्दछन्, जसरी हात्तीका शरीरमा बसेको लामखुट्टेलाई रिसाएका हात्तीले मार्दछ, उसै गरी सबै राक्षसहरूलाई हामी मन्त्रका बलले विनाश गरिरहेको ठान्दछौँ ।

**अभि तं निर्ऋतिर्धत्तामश्वमिवाश्वाभिधान्या । मल्वो यो मह्यं क्रुध्यति स उ पाशान्न मुच्यते ॥१०॥**
घोडा बाँध्ने डोरीले जसरी घोडालाई बाँधिन्छ, उसै गरी शत्रुलाई पापदेवता निर्ऋतिले आफ्ना पासले बाँधून् । जुन शत्रु हामीसित रिसाउँछन्, उनीहरू निर्ऋतिदेवताका पाशबाट फुत्कन नसकून् ।

## ३७. कृमिनाशन सूक्त

**ऋषि**– बादरायणि । **देवता**– अजशृङ्गी ओषधि, अप्सरासमूह, गन्धर्व अप्सरासमूह ।
**छन्द**– अनुष्टुप्, त्र्यवसाना षट्पदा त्रिष्टुप्, प्रस्तार पङ्क्ति, परोष्णिक्, षट्पदा जगती, निचृत् अनुष्टुप् ।

**त्वया पूर्वमथर्वाणो जघ्नू रक्षांस्योषधे । त्वया जघान कश्यपस्त्वया कण्वो अगस्त्यः ॥१॥**
हे औषधि ! सर्वप्रथम अथर्वा ऋषिले तिम्रो सहायताले रोगका कीटाणुरूपी राक्षसलाई विनाश गरेका थिए । कश्यप, कण्व, अगस्त्य आदि ऋषिहरूले पनि तिम्रै सहायताले रोगका कीटाणुहरू विनाश गरेका थिए र हामी पनि त्यसै गर्दछौँ ।

**त्वया वयमप्सरसो गन्धर्वांश्चातयामहे । अजशृङ्ग्यज रक्षः सर्वान् गन्धेन नाशय ॥२॥**
हे अजशृङ्गी नामका औषधि ! तिम्रो सहायताले हामी उपद्रव गर्ने गन्धर्व तथा अप्सरा नामका फोहर र दुर्गन्ध पानीमा उब्जने रोगका कीटाणुहरूलाई विनाश गर्दछौँ । तिम्रो कडा गन्धले हामी सबै खालका रोगरूपी राक्षसलाई पर हटाउँछौँ ।

**नदीं यन्त्वप्सरसोऽपां तारमवश्वसम् । गुल्गुलूः पीला नलद्यौ३क्षगन्धिः प्रमन्दनी । तत् परेताप्सरसः प्रतिबुद्धा अभूतन ॥३॥**

नदीपारि जाने रहर भएको मानिस जसरी कुशल नाविकसँग जसरी जाने गर्दछ, उसै गरी गुग्गुल, ..लु, नलदी, औक्षगन्धी र प्रमोदिनी आदि नाम भएका औषधिहरूको हवन गर्दा भयभीत भएका ..सरा नामका पानीमा उब्जने किराहरू फिर्ता भएर आफ्नै निवासतर्फ जाऊन् र हिँड्न नसकेर ..ला परुन् ।

**यत्राश्वत्था न्यग्रोधा महावृक्षाः शिखण्डिनः । तत् परेताप्सरसः प्रतिबुद्धा अभूतन ॥४॥**

.. अप्सरा नामका पानीका किराहरू हो ! जहाँ पिपल, वर र पिलखन आदि नामका ठूला खालका ..खहरू छन्, त्यहाँबाट तिमीहरू आआफ्ना स्थानमा फिर्ता जाओ र चल्न नसकेर थला पर ।

**यत्र वः प्रेङ्खा हरिता अर्जुना उत यत्राघाटाः कर्कर्यः संवदन्ति । तत् परेताप्सरसः प्रतिबुद्धा अभूतन ॥५॥**

.. अप्सराहरू हो ! जहाँ तिमीहरूलाई रमाउनका लागि खेल्नडुल्ने हरिया खालका अर्जुन, सिमल ..दि रुखहरू छन् र जहाँ तिमीहरूलाई नाच्नका लागि कर्‌कर् ध्वनि गर्ने कर्करी नामका रुखहरू .., त्यस्ता ठाउँबाट पनि तिमीहरू आफ्ना घरतिर फिर्ता जाओ र हिँड्न नसकेर थला पर ।

**एयमगन्नोषधीनां वीरुधां वीर्यावती । अजशृङ्ग्यराटकी तीक्ष्णशृङ्गी व्यृषतु ॥६॥**

..प किसिमले उम्रने लहराहरूमा यो अत्यन्त बलशाली अजशृङ्गी नामको कन्जुस र हिंस्रकलाई ..ख दिने लहरो हो । अत्यन्त कडा गन्ध र सिङको आकारका फल भएको यस अजशृङ्गी नामका ..ले पिशाचरूपी रोगहरूलाई नाश गरोस् ।

**आनृत्यतः शिखण्डिनो गन्धर्वस्याप्सरापतेः । भिनद्मि मुष्कावपि यामि शेपः ॥७॥**

.. नाचेझैँ नाच्ने, गीत गाएझैँ वाणी बोल्ने र हामीलाई मार्ने इच्छा भएका अप्सरापति गन्धर्वको ..डकोश र प्रजनन अङ्गलाई विकृत गराएर पुरुषत्वविहीन गराउँछौँ ।

**भीमा इन्द्रस्य हेतयः शतमृष्टीरयस्मयीः । ताभिर्हविरदान् गन्धर्वानवकादान् व्यृषतु ॥८॥**

..का जुन फलामे हतियारका सयौँ किसिमका धार छन् र जुनले प्राणीहरू भयभीत हुन्छन् तिनै ..रले हामी पानीमा उब्जिएर लेउ खाने गरेका गन्धर्व नामका रोगका कीटाणुहरूलाई विनाश ..छौँ ।

**भीमा इन्द्रस्य हेतयः शतमृष्टीर्हिरण्ययीः । ताभिर्हविरदान् गन्धर्वानकादान् व्यृषतु ॥९॥**

..का जुन सुनका हतियारका सयौँ किसिमका धार छन् र जुनले प्राणीहरू भयभीत हुन्छन् तिनै ..रले हामी पानीमा उब्जिएर लेउ खाने गरेका गन्धर्व नामका रोगका कीटाणुहरूलाई विनाश ..छौँ ।

**अवकादाभिशोचानप्सु ज्योतय मामकान् । पिशाचान् सर्वानोषधे प्र मृणीहि सहस्व च ॥१०॥**

.. ..शृङ्गी नामका औषधि ! पानीको लेउ खाने, चारैतिर चम्कने र दुःख दिने गरेका गन्धर्वलाई .. जलमा प्रकट गर । तिमी उपद्रव गर्ने ती पिशाचलाई विनाश गर र गाडिदेऊ ।

**श्वेवैकः कपिरिवैकः कुमारः सर्वकेशकः । प्रियो दृश इव भूत्वा गन्धर्वः सचते स्त्रियस्तमितो नाशयामसि ब्रह्मणा वीर्यावता ॥११॥**

.. ..टाणुहरूमध्ये एउटा कुकुरजस्तो, एउटा बाँदरजस्तो र एउटा रौँ भएको बालकजस्तै हुन्छन् । .. ..न्धर्वहरू राम्रा देखिएर स्त्रीहरूमा पुग्दछन् र रोगका कारण बन्दछन् । हामी मन्त्रका बलले .. ..न्धर्वलाई यी स्त्रीहरूदेखि पर हटाउँछौँ ।

**जाया इद् वो अप्सरसो गन्धर्वाः पतयो यूयम् । अप धावतामर्त्या मर्त्यान् मा सचध्वम् ॥१२॥**

.. ..न्धर्व नामका हावामा फैलने रोगका कीटाणुहरू हो ! पानीमा विकास हुने अप्सराहरू ने

तिमीहरूका पत्नी हुन् र तिमीहरू नै तिनका पति हौ । त्यसैले तिमीहरू सबै अब यहाँबाट पर जाओ । तिमीहरू अमरणशील हुनाले मरणशील मानिससँग टाँसिएर नबस ।

## ३८. बाजिनीवान् ऋषभ सूक्त

**ऋषि**— बादरायणि । **देवता**— अप्सरा, वाजिनीवान् ऋषभ । **छन्द**— अनुष्टुप्, त्र्यवसाना षट्पदा जगती, भुरिक् अत्यष्टि, त्रिष्टुप्, त्र्यवसाना पञ्चपदा अनुष्टुब्गर्भापुरउपरिष्टात् ज्योतिष्मती जगती ।

**उद्भिन्दतीं सञ्जयन्तीमप्सरां साधुदेविनीम् । ग्लहे कृतानि कृण्वानामप्सरां तामिह हुवे ॥१॥**

शत्रुको छेदन या ग्रन्थि निवारणरूपी उद्भेदन गर्ने, उत्तम किसिमले विजय प्रदान गर्ने, प्रतिस्पर्धामा उत्तम भएर विजय पाउने, कर्मकी अधिष्ठात्री देवीका रूपमा रहेका अप्सराहरूलाई हामी बोलाउँछौँ ।

**विचिन्वतीमाकिरन्तीमप्सरां साधुदेविनीम् । ग्लहे कृतानि गृह्णानामप्सरां तामिह हुवे ॥२॥**

चयन गर्नमा कुशल, श्रेष्ठ व्यवहार भएका अप्सरा तथा प्रतिस्पर्धामा श्रेष्ठ किसिमले विजयी गराउने खालका कर्ममा प्रेरित गर्ने स्पर्धाकी अधिष्ठात्री देवीलाई हामी आह्वान गर्दछौँ ।

**यायैः परिनृत्यत्याददाना कृतं ग्लहात् । सा नः कृतानि सीषती प्रहामाप्नोतु मायया । सा नः पयस्वत्यैतु मा नो जैषुरिदं धनम् ॥३॥**

प्रतिस्पर्धामा गतिशील, उत्तम प्रयासलाई अङ्गीकार गर्ने यी देवीले हामीबाट गरिने सबै कार्यलाई अनुशासित गराऊन् । उनले आफ्ना कुशलताले उन्नति प्राप्त गरून् र पोषक पदार्थ पय प्रदान गर्ने पयस्वती भएर हामीकहाँ आऊन् । हाम्रो यो श्रेष्ठ धन अर्काले जित्न नसकोस् ।

**या अक्षेषु प्रमोदन्ते शुचं क्रोधं च बिभ्रती । आनन्दिनीं प्रमोदिनीमप्सरां तामिह हुवे ॥४॥**

जुन देवीहरूले प्रतिस्पर्धाका समयमा पछि पर्दाखेरि शोक एवं क्रोधलाई आफ्ना अक्षमा नियन्त्रण गर्ने प्रयास गरेर आनन्द प्रदान गर्दछन्, त्यस्तै आनन्द र प्रमोद प्रदान गर्ने अप्सराहरूलाई हामी आह्वान गर्दछौँ ।

**सूर्यस्य रश्मीनन्नु याः संचरन्ति मरीचीर्वा या अनुसंचरन्ति । यासामृषभो दूरतो वाजिनीवान्त्सद्य । सर्वांल्लोकान् पर्यैति रक्षन् । स न ऐतु होममिमं जुषाणोऽन्तरिक्षेण सह वाजिनीवान् ॥५॥**

जुन देवीहरू सूर्यको रश्मि विचरण गर्ने ठाउँमा विचरण गर्दछन्, जसलाई सेचन गर्नमा समर्थ पतिका रूपमा रहेका सूर्यदेवताले समस्त लोकलाई नै सुरक्षा प्रदान गर्दै टाढाको अन्तरिक्षका सबै दिशामा विचरण गर्दछन्, उनै सूर्यदेवता तिनै अप्सराहरूका साथमा हाम्रो हवि ग्रहण गर्नका लागि हाम्रा नजिकै आऊन् ।

**अन्तरिक्षेण सह वाजिनीवन् कर्कीं वत्सामिह रक्ष वाजिन् । इमे ते स्तोका बहुला एह्यर्वाङियं ते कर्कीह ते मनोऽस्तु ॥६॥**

हे बलवान् सूर्यदेवता ! तिमी कर्मठ बाछा वा बालकहरूलाई यहाँ सुरक्षा गर । यो तिम्रो कृपा हो र यो तिम्रो कर्मशक्ति पनि हो । तिम्रो मन यहाँ रमाओस् । तिमी हाम्रो नमस्कार स्वीकार गर र हामीकहाँ आऊ ।

**अन्तरिक्षेण सह वाजिनीवन् कर्कीं वत्सामिह रक्ष वाजिन् । अयं घासो अयं वज्र इह वत्सां नि बध्नीमः । यथानाम व ईश्महे स्वाहा ॥७॥**

हे शक्तिवान् सूर्यदेवता ! तिमी कर्मठ बाछालाई सुरक्षा प्रदान गर र उनलाई पालनपोषण गर । यो गोठ हो, यो उनीहरूका लागि घाँस हो र हामी यहाँ बाछा बाँध्दछौँ । हाम्रो नाम जस्तो छ, त्यसैअनुसारको ऐश्वर्य हामीलाई प्राप्त होस् । तिमीप्रति हामी समर्पित छौँ ।

## ३९. सन्नति सूक्त

**ऋषि**– अङ्गिरा । **देवता**– सन्नति, पृथिवी, अग्नि, वायु, अन्तरिक्ष, दिव, आदित्य, दिशा, चन्द्रमा, ब्रह्मा, जातवेदा । **छन्द**– त्रिपदा महाबृहती, संस्तार पङ्क्ति, त्रिष्टुप् ।

**पृथिव्यामग्नये समनमन्त्स आर्ध्नोत् । यथा पृथिव्यामग्नये समनमन्नेवा मह्यं संनमः सं नमन्तु ॥१॥**

यस संसारमा अग्निका सामु सबै प्राणीहरू भुक्दछन् । अग्निदेवता पनि विनम्र भएर प्राणीहरूका कारणले समृद्ध भएका छन् । जसरी धर्तीमा अग्निदेवताका सामु सबै भुक्दछन्, उसै गरी हामीलाई सम्मान दिनका लागि हाम्रा अघि आएका मानिसहरू विनम्र हुने गर्दछन् ।

**पृथिवी धेनुस्तस्या अग्निर्वत्सः । सा मेऽग्निना वत्सेनेषमूर्जं कामं दुहाम् । आयुः प्रथमं प्रजां पोषं रयिं स्वाहा ॥२॥**

पृथ्वी गाई हुन् र अग्नि तिनका बाछा हुन् । यी धर्तीरूपी गाई बाछा अग्निदेवताले हामीलाई अन्न, बल, प्रशस्त आयु, सन्तान पुष्टि र सम्पत्ति प्रदान गरून् । हामी उनलाई हवि समर्पित गर्दछौँ ।

**अन्तरिक्षे वायवे समनमन्त्स आर्ध्नोत् । यथान्तरिक्षे वायवे समनमन्नेवा मह्यं संनमः सं नमन्तु ॥३॥**

अन्तरिक्षका अधिष्ठाता देवताका रूपमा रहेका वायुदेवताका सामु सबै विनम्र हुने गर्दछन् र वायुदेवता पनि उनीहरूबाट वृद्धि प्राप्त गर्दछन् । जसरी अन्तरिक्षमा वायुका सामु सबै भुक्दछन्, उसै गरी हामीलाई सम्मान दिनका लागि हाम्रा सामु उपस्थित भएका मानिसहरू भुकिरहून् ।

**अन्तरिक्षं धेनुस्तस्या वायुर्वत्सः । सा मे वायुना वत्सेनेषमूर्जं कामं दुहाम् । आयुः प्रथमं प्रजां पोषं रयिं स्वाहा ॥४॥**

खोजेको फल प्रदान गर्ने भएकाले अन्तरिक्ष गाईजस्तै हुन् र वायुदेवता उनका बाछा हुन् । उनै अन्तरिक्षले वायुरूपी आफ्ना बाछाका सहायताले हामीलाई अन्न, बल, प्रचुर आयु, सन्तान, पुष्टि र धन प्रदान गरून् । हामी उनलाई हवि समर्पित गर्दछौँ ।

**दिव्यादित्याय समनमन्त्स आर्ध्नोत् । यथा दिव्यादित्याय समनमन्नेवा मह्यं संनमः सं नमन्तु ॥५॥**

द्युलोकका अधिपतिका रूपमा रहेका सूर्यका सामु सबै द्युलोकवासीहरू विनम्रतापूर्वक भुक्दछन् र सूर्यदेवताले उनीहरूबाट सम्मान प्राप्त गर्दछन् । जसरी द्युलोकवासी सूर्यका सामु भुकेका छन्, उसरी नै हाम्रासामु आएका मानिस हामीसँग भुकून् ।

**द्यौर्धेनुस्तस्या आदित्यो वत्सः । सा म आदित्येन वत्सेनेषमूर्जं कामं दुहाम् । आयुः प्रथमं प्रजां पोषं रयिं स्वाहा ॥६॥**

इच्छा लागेको फल प्रदान गर्ने हुनाले द्युलोक गाईजस्तै हुन् र सूर्यदेवता उनका बाछोजस्तै भएका छन् । द्युलोकले सूर्यरूपी बाछाको माध्यमबाट हामीलाई अन्न, बल, मनग्गे आयु, सन्तान, पुष्टि र धन प्रदान गरून् । हामी उनलाई हवि समर्पित गर्दछौँ ।

**दिक्षु चन्द्राय समनमन्त्स आर्ध्नोत् । यथा दिक्षु चन्द्राय समनमन्नेवा मह्यं संनमः सं नमन्तु ॥७॥**

पूर्व आदि दिशाका अधिपतिका रूपमा रहेका चन्द्रका सामु सबै प्रजाहरू विनम्रतापूर्वक भुक्दछन् र चन्द्रदेवताले उनीहरूबाट सम्मान प्राप्त गर्दछन् । जसरी सबै दिशामा निवास गर्नेहरू चन्द्रका सामु भुकेका छन्, उसरी नै हाम्रासामु आएका मानिस हामीसँग भुकून् ।

**दिशो धेनवस्तासां चन्द्रो वत्सः । ता मे चन्द्रेण वत्सेनेषमूर्जं कामं दुहाम् । आयुः प्रथमं प्रजां पोषं रयिं स्वाहा ॥८॥**

इच्छा लागेको फल प्रदान गर्ने हुनाले दिशाहरू गाईजस्तै हुन् र चन्द्रदेवता उनका बाछोजस्तै भएका छन् । दिशाहरूले चन्द्ररूपी बाछाको माध्यमबाट हामीलाई अन्न, बल, मनग्गे आयु, सन्तान, पुष्टि

र धन प्रदान गरून् । हामी उनलाई हवि समर्पित गर्दछौं ।

**अग्नावग्निश्चरति प्रविष्ट ऋषीणां पुत्रो अभिशस्तिपा उ । नमस्कारेण नमसा ते जुहोमि मा देवानां मिथुया कर्म भागम् ॥९॥**

लौकिक अङ्गिरासम्बन्धी अग्निमा मन्त्रका बलले देवतारूपी अग्नि प्रवेश गरेर बसेका हुन्छन् । उनी चक्षु र अङ्गिरा आदि ऋषिका पुत्र हुन् । उनले झुटो अपवादबाट जोगाउँछन् । हामी उनलाई नमस्कारपूर्वक हवि प्रदान गर्दछौं । उनले देवताको हविको भाग मिथ्या हुन दिँदैनन् ।

**हृदा पूतं मनसा जातवेदो विश्वानि देव वयुनानि विद्वान् । सप्तास्यानि तव जातवेदस्तेभ्यो जुहोमि स जुषस्व हव्यम् ॥१०॥**

संसारमा उत्पन्न भएका र हुने प्राणीहरूका विषयमा जान्ने हे अग्निदेवता ! तिमी सबै कर्मका ज्ञाता हौ । हे जातवेदा अग्निदेवता ! तिम्रा जुन सात वटा मुखहरू छन्, तिनले हाम्रो मन र अन्तःकरण पवित्र गराऊ । हामी तिमीलाई हवि समर्पित गर्दछौं; तिमी त्यो हवि ग्रहण गर ।

## ४०. शत्रुनाशन सूक्त

**ऋषि**– शुक्र । **देवता**– ब्रह्म, अग्नि, यम, वरुण, सोम, भूमि, वायु, सूर्य, दिशा ।
**छन्द**– त्रिष्टुप्, जगती, पुरोऽतिशक्वरीपादयुग्जगती ।

**ये पुरस्ताज्जुह्वति जातवेदः प्राच्या दिशोऽभिदासन्त्यस्मान् । अग्निमृत्वा ते पराञ्चो व्यथन्तां प्रत्यगेनान् प्रतिसरेण हन्मि ॥१॥**

हे जातवेदा अग्निदेवता ! पूर्व दिशामा आहुति दिएर जुन शत्रुले अभिचार कर्म गर्दै हामीलाई विनाश गर्ने विचार गरेका छन्, ती शत्रुले तिम्रा नजिक पुगेपछि विमुख भएर कष्ट भोग्नुपरोस् । आभिचारिक कर्म गर्ने ती शत्रुलाई हामी यस प्रतिसर कर्मले विनाश गर्दछौं ।

**ये दक्षिणतो जुह्वति जातवेदो दक्षिणाया दिशोऽभिदासन्त्यस्मान् । यममृत्वा ते पराञ्चो व्यथन्तां प्रत्यगेनान् प्रतिसरेण हन्मि ॥२॥**

हे जातवेदा अग्निदेवता ! दक्षिण दिशामा आहुति दिएर जुन शत्रुले अभिचार कर्म गर्दै हामीलाई विनाश गर्ने विचार गरेका छन्, ती शत्रुले यमदेवताका नजिक पुगेपछि विमुख भएर कष्ट भोग्नुपरोस् । आभिचारिक कर्म गर्ने ती शत्रुलाई हामी यस प्रतिसर कर्मले विनाश गर्दछौं ।

**ये पश्चाज्जुह्वति जातवेदः प्रतीच्या दिशोऽभिदासन्त्यस्मान् । वरुणमृत्वा ते पराञ्चो व्यथन्तां प्रत्यगेनान् प्रतिसरेण हन्मि ॥३॥**

हे जातवेदा अग्निदेवता ! पश्चिम दिशामा आहुति दिएर जुन शत्रुले अभिचार कर्म गर्दै हामीलाई विनाश गर्ने विचार गरेका छन्, ती शत्रुले वरुणदेवताका नजिक पुगेपछि विमुख भएर कष्ट भोग्नुपरोस् । आभिचारिक कर्म गर्ने ती शत्रुलाई हामी यस प्रतिसर कर्मले विनाश गर्दछौं ।

**य उत्तरतो जुह्वति जातवेद उदीच्या दिशोऽभिदासन्त्यस्मान् । सोममृत्वा ते पराञ्चो व्यथन्तां प्रत्यगेनान् प्रतिसरेण हन्मि ॥४॥**

हे जातवेदा अग्निदेवता ! उत्तर दिशामा आहुति दिएर जुन शत्रुले अभिचार कर्म गर्दै हामीलाई विनाश गर्ने विचार गरेका छन्, ती शत्रुले सोमदेवताका नजिक पुगेपछि विमुख भएर कष्ट भोग्नुपरोस् । आभिचारिक कर्म गर्ने ती शत्रुलाई हामी यस प्रतिसर कर्मले विनाश गर्दछौं ।

**ये३ऽधस्ताज्जुह्वति जातवेदो ध्रुवाया दिशोऽभिदासन्त्यस्मान् । भूमिमृत्वा ते पराञ्चो व्यथन्तां प्रत्यगेनान् प्रतिसरेण हन्मि ॥५॥**

हे जातवेदा अग्निदेवता ! तल रहेको ध्रुव दिशामा आहुति दिएर जुन शत्रुले अभिचार कर्म गर्दै हामीलाई विनाश गर्ने विचार गरेका छन्, ती शत्रुले भूमिका नजिक पुगेपछि विमुख भएर कष्ट भोग्नुपरोस् । आभिचारिक कर्म गर्ने ती शत्रुलाई हामी यस प्रतिसर कर्मले विनाश गर्दछौं ।

**ये३ऽन्तरिक्षाज्जुह्वति जातवेदो व्यध्वाया दिशोऽभिदासन्त्यस्मान् । वायुमृत्वा ते पराञ्चो व्यथन्तां प्रत्यगेनान् प्रतिसरेण हन्मि ॥६॥**

हे जातवेदा अग्निदेवता ! द्यावापृथिवीका बीचमा रहेको अन्तरिक्षमा आहुति दिएर जुन शत्रुले

अभिचार कर्म गर्दै हामीलाई विनाश गर्ने विचार गरेका छन्, ती शत्रुले वायुदेवताका नजिक पुगेपछि विमुख भएर कष्ट भोग्नुपरोस् । आभिचारिक कर्म गर्ने ती शत्रुलाई हामी यस प्रतिसर कर्मले विनाश गर्दछौँ ।

**य उपरिष्ट्यज्जुह्वति जातवेद ऊर्ध्वाया दिशोऽभिदासन्त्यस्मान् । सूर्यमृत्वा ते पराञ्चो व्यथन्तां प्रत्यगेनान् प्रतिसरेण हन्मि ॥७॥**

हे जातवेदा अग्निदेवता ! ऊर्ध्व दिशामा आहुति दिएर जुन शत्रुले अभिचार कर्म गर्दै हामीलाई विनाश गर्ने विचार गरेका छन्, ती शत्रुले सूर्यदेवताका नजिक पुगेपछि विमुख भएर कष्ट भोग्नुपरोस् । आभिचारिक कर्म गर्ने ती शत्रुलाई हामी यस प्रतिसर कर्मले विनाश गर्दछौँ ।

**ये दिशामन्तर्देशेभ्यो जुह्वति जातवेदः सर्वाभ्यो दिग्भ्योऽभिदासन्त्यस्मान् । ब्रह्मर्त्वा ते पराञ्चो व्यथन्तां प्रत्यगेनान् प्रतिसरेण हन्मि ॥८॥**

हे जातवेदा अग्निदेवता ! उपदिशाहरूमा आहुति दिएर जुन शत्रुले अभिचार कर्म गर्दै हामीलाई विनाश गर्ने विचार गरेका छन्, ती शत्रुले परब्रह्मका नजिक पुगेपछि विमुख भएर कष्ट भोग्नुपरोस् । आभिचारिक कर्म गर्ने ती शत्रुलाई हामी यस प्रतिसर कर्मले विनाश गर्दछौँ ।

## ॥इति चतुर्थ काण्डम् ॥

चौथो काण्ड सकियो ।

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

अथर्ववेद – संहिता

# ॥अथ पञ्चमं काण्डम् ॥

## १. अमृता सूक्त

**ऋषि–** बृहद्दिवोऽथर्वा । **देवता–** वरुण । **छन्द–** त्रिष्टुप्, पराबृहती त्रिष्टुप्, विराट् जगती, त्र्यवसाना षट्पदा अत्यष्टि ।

**ऋधङ्मन्त्रो योनिं य आबभूवामृतासुर्वर्धमानः सुजन्मा । अदब्धासुर्भ्राजमानोऽहेव त्रितो धर्ता दाधार त्रीणि ॥१॥**

दिनजत्तिकै उज्यालो, तीनै लोकलाई पालन एवं संरक्षण गर्ने र तीनै भुवनलाई धारण गरेको, हिंसारहित तथा अविनाशी प्राण धारण गरेका, श्रेष्ठतम जन्म लिएर बढिरहने, समृद्धियुक्त मननशील आत्मा जुन हो, त्यो आफ्ना स्थानमा उत्पन्न भएको छ ।

**आ यो धर्माणि प्रथमः ससाद ततो वपूंषि कृणुषे पुरूणि । धास्युर्योनिं प्रथम आ विवेशा यो वाचमनुदितां चिकेत ॥२॥**

जुन जीवात्माले धर्मका नियमअनुसारका कर्म गर्दछ, त्यसैले अनेकौं श्रेष्ठ शरीर धारण गर्छ । जसले अस्पष्ट वाणीलाई बुझ्दछ र अन्नको कामना गर्दछ, त्यही आत्मा आफ्ना स्थानमा जन्मिएको छ ।

**यस्ते शोकाय तन्वं रिरेच क्षरद्धिरण्यं शुचयोऽनु स्वाः । अत्रा दधेते अमृतानि नामास्मे वस्त्राणि विश एरयन्ताम् ॥३॥**

जुन आत्मा धर्माचरणका कारण कष्ट सहन गर्दै, आफ्नो सुनजस्तो कान्तिलाई फिँजाउनका लागि तिम्रा शरीरमा प्रवेश गरेको त्यस धर्माचारी आत्मालाई द्यावापृथिवीले अमर नाम प्रदान गर्दछन् र प्रजाले वस्त्र प्रदान गर्दछन् ।

**प्र यदेते प्रतरं पूर्व्यं गुः सदःसद आतिष्ठन्तो अजुर्यम् । कविः शुषस्य मातरा रिहाणे जाम्यै धुर्यं पतिमेरयेथाम् ॥४॥**

जसले विभिन्न स्थानमा बसेर बुढ्यौलीले नछुने खालको, प्राचीन र सर्वप्रथम ईश्वरको चिन्तन गरेर ईश्वरलाई प्राप्त गरेको छ; उसैको जत्तिकै ईश्वरको चिन्तन गरेर प्रजारूपी बहिनीहरूको भारी उचाल्ने गरेका यस विवेकवान् तथा बलवान् राजारूपी आत्माले ईश्वर प्राप्त गरोस् ।

**तदू षु ते महत् पृथुज्मन् नमः कविः काव्येना कृणोमि । यत् सम्यञ्चावभिन्तावभि क्षामत्रा मही रोधचक्रे वावृधेते ॥५॥**

हे विस्तृत पृथ्वीका अधिष्ठातादेवता ! हामी अथर्व विद्याको ज्ञान पाएका पुरुषहरू आफ्नो कुशल शास्त्रका ज्ञानले तिमीलाई विशाल अन्नको हवि प्रदान गर्दछौँ । किनभने धर्तीलाई स्थिर गराउने रथका दुई वटा पक्ष तत्त्व पाङ्ग्राजस्तो गतिशील भएर यस धर्तीमा बढिरहेका छन् ।

**सप्त मर्यादाः कवयस्ततक्षुस्तासामिदेकामभ्यं हुरो गात् । आयोर्ह स्कम्भ उपमस्य नीडे पथां विसर्गे धरुणेषु तस्थौ ॥६॥**

ऋषिहरूले मानिसका लागि जुन सात वटा मर्यादाहरू निषेधका रूपमा निर्धारित गरेका छन्, तिनीहरूमध्ये कुनै एकको मात्रै पनि उल्लङ्घन जसले गर्दछ, त्यो पापी हुन्छ । ती मर्यादाहरूलाई पालन गर्नाले नै ध्रुव नामको श्रेष्ठ स्थानमा स्थित हुने गर्दछ ।

**उतामृतासुर्व्रत एमि कृण्वन्नसुरात्मा तन्व१स्तत् सुमद्गुः । उत वा शक्रो रत्नं दधात्यूर्जया वा यत् सचते हविर्दाः ॥७॥**

हामी सबै व्रतचारी बनेर कर्म गर्दै अविनाशी प्राणशक्तिले युक्त भएर आएका छौँ । त्यसो हुनाले नै

हाम्रो आत्मा, प्राण र शरीर गुणवान् भइरहेको छ । समर्थ भएर जसले हवि प्रदान गर्दछन्, इन्द्रदेवताले उनीहरूलाई रत्न आदि धन प्रदान गर्दछन् ।

**उत पुत्रः पितरं क्षत्रमीडे ज्येष्ठं मर्यादमह्वयन्त्स्वस्तये । दर्शन् नु ता वरुण यास्ते विष्ठा आवर्व्रततः कृणवो वपूंषि ॥८॥**

आफूलाई रक्षा गर्ने क्षत्रिय राजाजस्ता पितालाई पुत्रले वन्दना गरोस् र कल्याण प्राप्त गर्नका लागि श्रेष्ठ मर्यादापूर्वक धर्मको पालन गरोस् । हे वरुणदेवता ! तिम्रो विशेष स्थान जुन छ, त्यो देखाउँदै बारम्बार घुमिरहने गरेका प्राणीको शरीर तिमी नै सृजना गर्दछौ ।

**अर्धमर्धेन पयसा पृणक्ष्यर्धेन शुष्म वर्धसे अमुर । अविं वृधाम शग्मियं सखायं वरुणं पुत्रमदित्या इषिरम् । कविशस्तान्यस्मै वपूंष्यवोचाम रोदसी सत्यवाचा ॥९॥**

अदितिका पुत्र मित्रावरुणले हामीलाई समृद्ध गराउँछन् । हे बलशाली वरुणदेवता ! तिमी कसैबाट छेकिएका छैनौ । पोषक रसका रूपमा रहेको पयको आधा भागले तिमी यस संसारलाई समृद्ध गराउँछौ र आधाले स्वयं आफैँ समृद्ध हुने गर्दछौ । हे द्यावापृथिवीका अधिष्ठाता देवताहरू हो ! विद्वान् ऋषिहरूले प्रशंसा गरेको यस शरीरको वरुणदेवताले वर्णन गर्दछन् ।

## २. भुवनज्येष्ठ सूक्त

**ऋषि**– बृहद्दिवोऽथर्वा । **देवता**– वरुण । **छन्द**– त्रिष्टुप्, भुरिक परातिजागता त्रिष्टुप् ।

**तदिदास भुवनेषु ज्येष्ठं यतो जज्ञ उग्रस्त्वेषनृम्णः । सद्यो जज्ञानो नि रिणाति शत्रूननु यदेनं मदन्ति विश्व ऊमाः ॥१॥**

संसारको कारणभूत ब्रह्म नै सबै लोकहरूमा प्रकाशका रूपमा व्याप्त भएका छन् । त्यसैबाट प्रचण्ड तेजस्वी, बलले सम्पन्न सूर्य प्रकट भएका हुन् । उनी उदाउनासाथ सबैतिर भएको अज्ञानरूपी शत्रुजस्तो अन्धकार नष्ट हुने गर्दछ । उनलाई देखेपछि सबै प्राणीहरू हर्षित हुने गर्दछन् ।

**वावृधानः शवसा भूर्योजाः शत्रुर्दासाय भियसं दधाति । अव्यनच्च व्यनच्च सस्नि सं ते नवन्त प्रभृता मदेषु ॥२॥**

आफ्नै सामर्थ्यले उन्नति गर्दै जाने अनन्त शक्तिले सम्पन्न यी देवता शत्रुका अन्तःकरणमा भय उत्पन्न गराउँछन् । उनैले सबै चल र अचल प्राणीलाई सञ्चालन गर्दछन् । यस्ता खालका देवतालाई हामी याजकहरू एकत्रित भएर एकै साथमा स्तुति गर्दछौँ र उनका साथै आफूलाई पनि आनन्दित गर्दछौँ ।

**त्वे क्रतुमपि पृञ्चन्ति भूरि द्विर्यदेते त्रिर्भवन्त्यूमाः । स्वादोः स्वादीयः स्वादुना सृजा समदः सु मधु मधुनाभि योधीः ॥३॥**

हे देवता ! सबै यजमानहरू तिम्रा लागि नै अनुष्ठान गर्दछन् । जब यजमानको विवाहपछि दुई हुन्छन् र एक सन्तान भएपछि तीन हुन्छन्, त्यस बेला प्रिय सन्तानलाई प्रिय लाग्ने धन र गुणले सम्पन्न गराऊ । त्यसपछि त्यस प्रिय सन्तानलाई पुत्रपौत्रादिको मधुरताले पनि सम्पन्न गराऊ ।

**यदि चिन्नु त्वा धना जयन्तं रणेरणे अनुमदन्ति विप्राः । ओजीयः शुष्मिन्त्स्थिरमा तनुष्व मा त्वा दभन् दुरेवासः कशोकाः ॥४॥**

हे देवता ! तिमी जुन समयमा सोमपान गरेर आनन्दित हुँदै धनसम्पदामाथि विजय प्राप्त गर्दछौ, त्यस बेला ज्ञानी स्तोताहरूले तिम्रो स्तुति गर्दछन् । हे देवता ! हामीलाई तिमी तेजस्विता प्रदान गर, दुस्साहसी असुरले कहिल्यै तिमीलाई पराजित गर्न नसकून् ।

**त्वया वयं शाशद्महे रणेषु प्रपश्यन्तो युधेन्यानि भूरि । चोदयामि त आयुधा वचोभिः सं ते शिशामि ब्रह्मणा वयांसि ॥५॥**

हे देवता ! तिम्रा सहयोगले हामी रणभूमिमा दुष्ट शत्रुमाथि विजय प्राप्त गर्दछौँ । युद्धको इच्छाले

प्रेरित भएका अनेकौँ शत्रुसित हाम्रो जम्काभेट हुन्छ । तिम्रा वज्र आदि आयुधहरूलाई हामी स्तोत्रले प्रोत्साहित गर्दछौँ । स्तुति मन्त्रले हामी तिम्रो तेजलाई अझ प्रभावशाली बनाउँछौँ ।

**नि तद् दधिषेऽवरे परे च यस्मिन्नाविथावसा दुरोणे । आ स्थापयत मातरं जिगत्नुमत इन्वत कर्वराणि भूरि ॥६॥**

हे देवता ! तिमी जुन यजमानका घरमा हविरूपी अन्नले सन्तुष्ट हुन्छौ, उसलाई दिव्य र भौतिक सम्पदा प्रदान गर्दछौ । सम्पूर्ण प्राणीका निर्माता, गतिशील द्युलोक र पृथ्वीलोकलाई तिमी नै स्थिर गराउँछौ । त्यस बेलामा तिमीले अनेकौँ कार्य निर्वाह गर्नुपर्दछ ।

**स्तुष्व वर्ष्मन् पुरुवर्त्मानं समृभ्वाणमिनतममाप्तमाप्त्यानाम् । आ दर्शति शवसा भूर्योजाः प्र सक्षति प्रतिमानं पृथिव्याः ॥७॥**

स्तुति गर्न योग्य, विभिन्न स्वरूप भएका, दीप्तिमान्, सर्वेश्वर र सर्वश्रेष्ठ आत्मीय देवतालाई हामी स्तुति गर्दछौँ । उनका आफ्नै सामर्थ्यले वृत्र, नमुची, कुयव आदि सात राक्षसका साथ अनेक विनाशकारी असुरलाई पराजित गराउँछन् ।

**इमा ब्रह्म बृहद्दिवः कृणवदिन्द्राय शूषमग्रियः स्वर्षाः । महो गोत्रस्य क्षयति स्वराजा तुरश्चिद् विश्वमर्णवत् तपस्वान् ॥८॥**

ऋषिहरूमा श्रेष्ठ र स्वर्गलोकको आकाङ्क्षा गर्ने बृहद्दिव ऋषि यी देवताहरूलाई सुख प्रदान गर्नका लागि नै यस्ता वैदिक मन्त्र पाठ गर्दछन् । तेजस्वी, दीप्तिमान् इन्द्रदेवताले विशाल पर्वतको अवरोध हटाउँछन् र शत्रुका सहरका सबै ढोकाहरू उघार्दछन् ।

**एवा महान् बृहद्दिवो अथर्वावोचत् स्वां तन्व१मिन्द्रमेव । स्वसारौ मातरिभ्वरी अरिप्रे हिन्वन्ति चैने शवसा वर्धयन्ति च ॥९॥**

अथर्वाका पुत्र बृहद्दिव नामका महाप्राज्ञ ऋषिले देवताहरूलाई स्तुति गरे । माताजस्ती भूमिले उत्पन्न गरेका पवित्र नदीहरूले एकापसमा दिदीबहिनीझैँ भएर जल प्रवाहित गरेका छन् र अन्नको बलले संसारलाई कल्याण गरेका छन् ।

## ३. विजयप्रार्थना सूक्त

**ऋषि**– बृहद्दिवोऽथर्वा । **देवता**– अग्नि, देवगण, द्रविणोदा, वैश्वदेवी, सोम, इन्द्र, धाता, विधाता, सविता, आदित्यगण, रुद्रगण, अश्विनीकुमार । **छन्द**– त्रिष्टुप्, भुरिक् त्रिष्टुप्, विराट् जगती ।

**ममाग्ने वर्चो विहवेष्वस्तु वयं त्वेन्धानास्तन्वं पुषेम । मह्यं नमन्तां प्रदिशश्चतस्रस्त्वयाध्यक्षेण पृतना जयेम ॥१॥**

हे अग्निदेवता ! सङ्ग्राम या यज्ञका समयमा हामीभित्र तेजस्विता जागृत होस् । तिमीलाई समिधाले प्रज्वलित गर्दै हामी आफ्नो शरीरलाई परिपुष्ट गराउँछौँ । हाम्रा लागि चारै दिशा अनुकूल होऊन् । तिमीलाई स्वामीका रूपमा प्राप्त गरेर हामी शत्रुको सेनामाथि विजय प्राप्त गरौँ ।

**अग्ने मन्युं प्रतिनुदन् परेषां त्वं नो गोपाः परि पाहि विश्वतः । अपाञ्चो यन्तु निवता दुरस्यवोऽमैषां चित्तं प्रबुधां वि नेशत् ॥२॥**

हे अग्निदेवता ! तिमी हाम्रा शत्रुको क्रोधलाई दमन गर्दै अपराजेय भएर सबै किसिमले हाम्रो सुरक्षा गर । ती भयभीत भएर निरर्थक कुरा गर्ने शत्रुहरू फिर्ता भएर जाऊन् । ती शत्रुहरूको मन र मस्तिष्क भ्रमित होस् ।

**मम देवा विहवे सन्तु सर्व इन्द्रवन्तो मरुतो विष्णुरग्निः । ममान्तरिक्षमुरुलोकमस्तु मह्यं वातः पवतां कामायास्मै ॥३॥**

अग्निदेवताका साथमा मरुत्गण, विष्णु र इन्द्र आदि सबै देवताहरूले युद्धका समयमा हामीलाई सहयोग गरून् । अन्तरिक्षजस्तै विस्तृत लोक हाम्रा लागि प्रकाशमान होस् । हाम्रा यी अभिलक्षित कार्यहरूमा वायुदेवता अनुकूल भएर प्रवाहित होऊन् ।

**मह्यं यजन्तां मम यानीष्टकूतिः सत्या मनसो मे अस्तु । एनो मा नि गां कतमच्चनाहं विश्वे देवा अभि रक्षन्तु मेह ॥४॥**

ऋत्विक्हरूले हाम्रो चरु, पुरोडाश आदि यज्ञ सामग्रीलाई आहुतिका रूपमा देवतालाई समर्पित गरिदिऊन् । हाम्रा मनको सङ्कल्प पूरा होस् । हामी कुनै पनि पापमा संलिप्त नहोऔँ । हे विश्वेदेवताहरू हो ! हामीलाई आशीर्वाद प्रदान गर ।

**मयि देवा द्रविणमा यजन्तां मय्याशीरस्तु मयि देवहूतिः । दैवा होतारः सनिषन् न एतदरिष्टाः स्याम तन्वा सुवीराः ॥५॥**

श्रेष्ठ यज्ञ आदिका कार्यबाट प्रसन्न भएर सबै देवताहरूले हामीलाई ऐश्वर्य प्रदान गरून् । हामी देवशक्तिहरूलाई आह्वान गरौँ । प्राचीन कालमा जसले देवताहरूलाई आहुति प्रदान गरेका थिए, ती होताहरू अनुकूल भएर देवताको अर्चना गरून् । हामी शारीरिक दृष्टिले सुदृढ भएर वीर सन्तानले युक्त होऔँ ।

**दैवीः षडुर्वीरुरु नः कृणोत विश्वे देवास इह मादयध्वम् । मा नो विददभिभा मो अशस्तिर्मा नो विदद् वृजिना द्वेष्या या ॥६॥**

हे छ वटा ठूला दिव्य शक्तिहरू हो ! हाम्रा लागि तिमीहरू विस्तृत स्थान प्रदान गर । हे सबै देवताहरू हो ! हामीलाई हर्षित गराओ । निस्तेजता, अपकीर्ति र द्वेष आदि पाप हाम्रा नजिक आउन नपाऊन् ।

**तिस्रो देवीर्महि नः शर्म यच्छत प्रजायै नस्तन्वे३ यच्च पुष्टम् । मा हास्महि प्रजया मा तनूभिर्मा रधाम द्विषते सोम राजन् ॥७॥**

भारती, पृथ्वी र सरस्वती नामका हे तीन देवीहरू हो ! हाम्रा लागि तिमीहरू बृहत् रूपले कल्याण गर र पोषक वस्तुहरू जेजति छन्, त्यो हाम्रो शरीर र प्रजाका लागि प्रदान गर । हामी सन्तान र पशुविनाका नहोऔँ । हे राजा सोम ! शत्रुका कारण हामी दुःखी नहोऔँ ।

**उरुव्यचा नो महिषः शर्म यच्छत्वस्मिन् हवे पुरुहूतः पुरुक्षु । स नः प्रजायै हर्यश्व मृडेन्द्र मा नो रीरिषो मा परा दाः ॥८॥**

सर्वव्यापक, पूजनीय, अनेकौँ यजमानले बोलाउने गरिएका, विभिन्न स्थानमा वास गर्ने इन्द्रदेवता यस यज्ञमा आएर हामीलाई सुख प्रदान गरून् । हे हरियो अश्वका स्वामी ! हाम्रा सन्तानलाई सुखी राख । हाम्रो प्रतिकूल नहोऊ र हामीलाई अनिष्टबाट जोगाऊ ।

**धाता विधाता भुवनस्य यस्पतिर्देवः सविताभिमातिषाहः । आदित्या रुद्रा अश्विनोभा देवाः पान्तु यजमानं निर्ऋथात् ॥९॥**

सृष्टिका निर्माता र धारणकर्ता, जो सम्पूर्ण विश्वका अधिपति हुन्, उनै सर्वप्रेरक पालकर्ता तथा अहङ्कारी शत्रुका विजेता सवितादेवता, आदित्य, रुद्र, अश्विनीकुमार आदि सबै प्रमुख देवताले यस यजलाई संरक्षण गरून् र यजमानलाई पापबाट बचाऊन् ।

**ये नः सपत्ना अप ते भवन्त्विन्द्राग्निभ्यामव बाधामह एनान् । आदित्या रुद्रा उपरिस्पृशो न उग्रं चेत्तारमधिराजमक्रत ॥१०॥**

हाम्रा शत्रुहरू जति छन्, ती पराजित होऊन् । हामी तिनलाई इन्द्राग्नीका सामर्थ्यले विनाश गर्दछौँ । वसुगण, रुद्रगण र आदित्यगणहरू सबैले हामीलाई उच्च पदमा आसीन गरेर पराक्रमी, ज्ञानसम्पन्न तथा सबैका अधिपति बनाऊन् ।

**अर्वाञ्चमिन्द्रममुतो हवामहे यो गोजिद् धनजिदश्वजिद् यः । इमं नो यज्ञं विहवे शृणोत्वस्माकमभूर्हर्यश्व मेदी ॥११॥**

जो पृथ्वी, धन, अश्व आदि जित्ने र सबै शत्रुको सामना गर्नमा सक्षम छन्, उनै इन्द्रदेवतालाई हामी द्युलोकबाट बोलाउँछौँ । उनले सङ्ग्राममा हाम्रो यो स्तोत्र सुनून् । हे हरी नामको अश्व भएका इन्द्रदेवता ! तिमी हाम्रा स्नेही हौ ।

## ४. कुष्ठतक्मनाशन सूक्त

**ऋषि**— भृग्वङ्गिरा । **देवता**— कुष्ठ, यक्ष्मनाशन । **छन्द**— अनुष्टुप्, भुरिक् अनुष्टुप्, गायत्री, उष्णिक् गर्भा निचृत् अनुष्टुप् ।

**यो गिरिष्वजायथा वीरुधां बलवत्तमः । कुष्ठेहि तक्मनाशन तक्मानं नाशयन्नितः ॥१॥**

हे व्याधिनिवारक कुष्ठ औषधि ! तिमी पर्वतमा उत्पन्न हुने र समस्त औषधिमा अत्यधिक शक्तिदायी हौ । तिमी कष्टदायी रोगलाई विनाश गर्दै यहाँ आऊ ।

**सुपर्णसुवने गिरौ जातं हिमवतस्परि । धनैरभि श्रुत्वा यन्ति विदुर्हि तक्मनाशनम् ॥२॥**

गरूडको उत्पत्तिस्थान हिमालयका शिखरमा उत्पन्न यस औषधि आरोग्य धनरूपी छ भन्ने सुनेर मानिसहरू त्यहाँ जाने गर्दछन् र त्यहाँ पुगेर रोग नाश गर्ने यो औषधि प्राप्त गर्दछन् ।

**अश्वत्थो देवसदनस्तृतीयस्यामितो दिवि । तत्रामृतस्य चक्षणं देवाः कुष्ठमवन्वत ॥३॥**

यहाँबाट तेस्रो द्युलोकमा; देवताहरू बस्ने गरेको लोक छ र त्यहीँ अश्वत्थ पनि छ । त्यस ठाउँमा देवताहरूले अमृतको बयान गर्छन् र यसै ठाउँमा यो कुष्ठ नामको औषधि प्राप्त हुन्छ ।

**हिरण्ययी नौरचरद्धिरण्यबन्धना दिवि । तत्रामृतस्य पुष्पं देवाः कुष्ठमवन्वत ॥४॥**

स्वर्गलोकमा सुनको बन्धन भएको सुनकै नौका चल्ने गर्दछ । त्यहीँ नै देवताहरूले अमृतको फूलजस्तो कुष्ठ नामका औषधि प्राप्त गरेका थिए ।

**हिरण्ययाः पन्थान आसन्नरित्राणि हिरण्यया । नावो हिरण्ययीरासन् याभिः कुष्ठं निरावहन् ॥५॥**

जुन मार्गबाट कुष्ठ नामको औषधि प्राप्त गरेर ल्याइयो, त्यो मार्ग, बहना र त्यसको नौका पनि सुनको नै थियो ।

**इमं मे कुष्ठ पूरुषं तमा वह तं निष्कुरु । तमु मे अगदं कृधि ॥६॥**

हे कुष्ठ नामका औषधि ! तिमी हाम्रा यस पुरुषलाई उठाएर पूर्ण रूपमा रोगरहित गराऊ र यसलाई आरोग्य प्रदान गर ।

**देवेभ्यो अधि जातो ऽसि सोमस्यासि सखा हितः । स प्राणाय व्यानाय चक्षुषे मे अस्मै मृड ॥७॥**

हे कुष्ठ औषधि ! तिमीलाई देवताहरूले उत्पन्न गरेका हुन् । तिमी सोम औषधिका हितकारी सखा हौ । त्यसैले तिमी हाम्रा यस पुरुषको व्यान, प्राण र आँखालाई सुख प्रदान गर ।

**उदङ् जातो हिमवतः स प्राच्यां नीयसे जनम् । तत्र कुष्ठस्य नामान्युत्तमानि वि भेजिरे ॥८॥**

यो कुष्ठ नामको औषधि हिमालयका उत्तरी भागमा उत्पन्न भएको हो र पूर्व दिशामा मानिसका नजिकमा ल्याइएको हो । यस ठाउँमा उसलाई श्रेष्ठ नाम भएका मानिसहरूले विभाजन गरे ।

**उत्तमो नाम कुष्ठास्युत्तमो नाम ते पिता । यक्ष्मं च सर्वं नाशय तक्मानं चारसं कृधि ॥९॥**

हे कुष्ठ नामका औषधि ! तिमी र तिम्रा पिता अर्थात् हिमालय दुवैको नाम उत्तम छ । तिमी समस्त किसिमका क्षय आदि रोग हटाऊ र कष्टदायी ज्वरलाई प्रभावहीन गराऊ ।

**शीर्षामयमुपहत्यामक्ष्योस्तन्वोऽरपः । कुष्ठस्तत् सर्वं निष्करद् दैवं समह वृष्ण्यम् ॥१०॥**

शिरको रोग, आँखाको कमजोरी र शारीरिक दोष आदि सबै रोगहरू कुष्ठ नामका औषधिबाट दिव्य बल प्राप्त गरेपछि हटे ।

## ५. लाक्षा सूक्त

**ऋषि**— अथर्वा । **देवता**— लाक्षा । **छन्द**— अनुष्टुप् ।

**रात्री माता नभः पितार्यमा ते पितामहः । सिलाची नाम वा असि सा देवानामसि स्वसा ॥१॥**

हे लाहा ! चन्द्रमाको रश्मिले पोषित भएका कारण रात्रि तिम्री आमा हुन् र वर्षाद्वारा उत्पन्न भएकाले आकाश तिम्रा पिता हुन् । आकाशको बादललाई लिएर आउने हुनाले अर्यमा नामका

सूर्य तिम्रा पितामह हुन् । तिम्रो नाम सिलाची हो र तिमी देवताकी बहिनी हौ ।

**यस्त्वा पिबति जीवति त्रायसे पुरुषं त्वम् । भर्त्री हि शश्वतामसि जनानां च न्यञ्चनी ॥२॥**

जसले तिमीलाई पान गर्दछन्, तिनीहरू जीवित रहन्छन् । तिमी मानिसलाई सुरक्षा गर्दछ्यौ । तिमी समस्त मानिसलाई नै भरणपोषण गर्दछ्यौ र आरोग्य प्रदान गर्ने हौ ।

**वृक्षंवृक्षमा रोहसि वृषण्यन्तीव कन्यला । जयन्ती प्रत्यातिष्ठन्ती स्मरणी नाम वा असि ॥३॥**

पुरुषको कामना गर्ने कन्याको जस्तै तिमी प्रत्येक वृक्षमा चढ्ने गर्दछ्यौ । तिमी विजित भएर उभिने किसिमकी छ्यौ, त्यसो भएर नै तिम्रो नाम स्परणी पनि हो ।

**यद् दण्डेन यदिष्वा यद् वारुर्हरसा कृतम् । तस्य त्वमसि निष्कृतिः सेमं निष्कृधि पूरुषम् ॥४॥**

लाठाले, बाणले अथवा घोटाइले जुन घाउचोट लाग्दछन्, ती सबैकी औषधि तिमी नै हौ । हे लाक्षा ! तिमी उपायरूप हौ, त्यसैले यस पुरुषलाई रोगबाट मुक्त गराऊ ।

**भद्रात् प्लक्षान्निस्तिष्ठस्यश्वत्थात् खदिराद् धवात् । भद्रान्न्यग्रोधात् पर्णात् सा न एह्यरुन्धति ॥५॥**

घाउ निको पार्ने हे लाहा नामका औषधि ! तिमी कदम्ब, पाखरी, पिपल, धव, खयर, भद्र, न्यग्रोध र पर्णबाट उत्पन्न हुने गर्दछ्यौ; तिमी हाम्रा नजिक आऊ ।

**हिरण्यवर्णे सुभगे सूर्यवर्णे वपुष्टमे । रुतं गच्छासि निष्कृते निष्कृतिर्नाम वा असि ॥६॥**

हे स्वर्ण तथा सूर्यको जस्तै वर्ण भएकी सुभगे ! हे शरीरका लागि कल्याणकारिणी तथा रोग निवारण गर्ने औषधि ! तिमी रोगका नजिक पुग्दछ्यौ; त्यसैले तिम्रो नाम निष्कृति पनि हो ।

**हिरण्यवर्णे सुभगे शुष्मे लोमशवक्षणे । अपामसि स्वसा लाक्षे वातो हात्मा बभूव ते ॥७॥**

हे सुनको जस्तो रङ्ग भएकी भाग्यशालिनी ! हे बलकारिणी तथा रौंले ढाकिएकी लाहा ! तिमी जलकी बहिनी हौ र आयु तिम्रो आत्मा हो ।

**सिलाची नाम कानीनोऽजबभ्रु पिता तव । अश्वो यमस्य यः श्यावस्तस्य हास्नास्युक्षिता ॥८॥**

तिम्रो नाम सिलाची र कानीन पनि हो र बाख्रालाई पालपोषण गर्ने वृक्षहरू तिम्रा पिता हुन् । यमका पहेँलो र कालो रङ्गका जुन घोडाहरू छन्, तिनका रगतले तिमीलाई सेचन गरिन्छ ।

**अश्वस्यास्नः सम्पतिता सा वृक्षाँ अभि सिष्यदे । सरा पतत्रिणी भूत्वा सा न एह्यरुन्धति ॥९॥**

हे घाउ निको पार्ने औषधि ! तिमी अश्वको रक्तजस्तै छ्यौ । तिमी वृक्षलाई सेचन गर्ने र सर्दै जाने गर्दछ्यौ । तिमी चुहुँदै वा प्रवाहमान हुँदै हामीकहाँ आऊ ।

## ६. ब्रह्मविद्या सूक्त

**ऋषि–** अथर्वा । **देवता–** सोमारुद्र, ब्रह्म, कर्म, रुद्रगण, हेति, अग्नि, सर्वात्मा रुद्र ।
**छन्द–** पङ्क्ति, त्रिष्टुप्, अनुष्टुप्, जगती, पञ्चपदा अनुष्टुप् उष्णिक् त्रिष्टुब्गर्भा जगती, त्रिपदा विराट् गायत्री, एकावसाना द्विपदार्च्यनुष्टुप्, प्रस्तार पङ्क्ति, स्वराट् पङ्क्ति ।

**ब्रह्म जज्ञानं प्रथमं पुरस्ताद् वि सीमतः सुरुचो वेन आवः । स बुध्न्या अपमा अस्य विष्ठाः सतश्च योनिमसतश्च वि वः ॥१॥**

सत्‌चित् सुखात्मक तथा संसारका कारणभूत ब्रह्म सृष्टिभन्दा पहिले नै उत्पन्न भए । पूर्व दिशामा उदाउने जुन सूर्यको तेजसम्बन्धी वेन छन्, उनी नै सत् र असत्‌को उद्‌गम स्थानको ज्ञान व्यक्त गर्ने हुन् ।

**अनाप्ता ये वः प्रथमा यानि कर्माणि चक्रिरे । वीरान् नो अत्र मा दभन् तद् व एतत् पुरो दधे ॥२॥**

हे मानिसहरू हो ! तिमीले नै अज्ञानका अवस्थामा जुन कर्महरू सम्पन्न गरेका थियौ, तिनले हाम्रा

[illegible] नष्ट हुन नदिऊन् । त्यसैले ती कर्महरू सबैलाई हामी तिम्रा सम्मुख [illegible]

**सहस्रधार एव ते समस्वरन् दिवो नाके मधुजिह्वा असश्चतः । तस्य स्पशो न नि मिषन्ति भूर्णयः पदेपदे पाशिनः सन्ति सेतवे ॥३॥**

सामर्थ्ययुक्त पवित्र सोमको स्तुति गरिन्छ । आदिपिता यी सोमदेवता आफ्नो व्रत निर्वाह गर्दै महान् अन्तरिक्षलाई आफ्नो तेजले आवृत गर्दछन् । ज्ञानी याजकले त्यसलाई धारणशील जलमा मिश्रित गर्दछन् ।

**पर्यू षु प्र धन्वा वाजसातये परि वृत्राणि सक्षणिः । द्विषस्तदध्यर्णवेनेयसे सनिस्रसो नामासि त्रयोदशो मास इन्द्रस्य गृहः ॥४॥**

हे सूर्यदेवता ! अन्न या बल वृद्धिका लागि तिमी शत्रुनिवारक भएर अवरोधक आवरणरूपी वृत्रलाई हटाइदेऊ । तिमी आकाश वा समुद्रबाट शत्रुमाथि आक्रमण गर्दछौ, त्यसै कारणले तिम्रो नाम सनिस्रस पनि हो । तेह्रौं महिनाका रूपमा परिचित पुरुषोत्तम महिना यी इन्द्ररूपी सूर्यदेवताको आवास हो ।

**न्वेऽ३तेनारात्सीरसौ स्वाहा । तिग्मायुधौ तिग्महेती सुशेवौ सोमारुद्राविह सु मृडतं नः ॥५॥**

निश्चित रूपले यस्ता क्रमले नै यिनले सिद्धि प्राप्त गरेका हुन् । उनका लागि यो हवि समर्पित छ । हे तीक्ष्ण आयुध तथा तीक्ष्ण अस्त्र धारण गरेका सोम र रुद्रदेवताहरू हो ! यस युद्धमा तिमीहरू हामीलाई सुख प्रदान गर ।

**अवैतेनारात्सीरसौ स्वाहा । तिग्मायुधौ तिग्महेती सुशेवौ सोमारुद्राविह सु मृडतं नः ॥६॥**

यसै विद्याका सहायताले यिनीहरूले सिद्धि प्राप्त गरेका थिए । उनका लागि यो हवि समर्पित छ । हे तीक्ष्ण आयुध तथा तीक्ष्ण अस्त्र धारण गरेका सोम र रुद्रदेवताहरू हो ! यस युद्धमा तिमीहरू हामीलाई सुख प्रदान गर ।

**अपैतेनारात्सीरसौ स्वाहा । तिग्मायुधौ तिग्महेती सुशेवौ सोमारुद्राविह सु मृडतं नः ॥७॥**

यसै प्रक्रियाका कारण उनीहरूले यस्तो सिद्धि प्राप्त गरेका हुन् । उनका लागि यो हवि समर्पित छ । हे तीक्ष्ण आयुध तथा तीक्ष्ण अस्त्र धारण गरेका सोम र रुद्रदेवताहरू हो ! यस युद्धमा तिमीहरू हामीलाई सुख प्रदान गर ।

**मुमुक्तमस्मान्दुरितादवद्याज्जुषेथां यज्ञममृतमस्मासु धत्तम् ॥८॥**

हे सोम र रुद्रदेवताहरू हो ! तिमीहरू हामीलाई पापबाट मुक्त गराओ र यज्ञलाई ग्रहण गर्दै हामीलाई अमरता प्रदान गर ।

**चक्षुषो हेते मनसो हेते ब्रह्मणो हेते तपसश्च हेते । मेन्या मेनिरस्यमेनयस्ते सन्तु येऽ३स्माँ अभ्यघायन्ति ॥९॥**

हे आँखा, मन तथा मन्त्रसम्बन्धी आयुधहरू हो ! तिमीहरू हतियारका पनि हतियार हौ । जसले हामीलाई विनाश गर्ने विचार गरेका छन्, उनीहरू हतियारविनाका भइजाऊन् ।

**योऽ३स्मांश्चक्षुषा मनसा चित्त्याकूत्या च यो अघायुरभिदासात् । त्वं तानग्ने मेन्यामेनीन् कृणु स्वाहा ॥१०॥**

हिंस्रक पाप कर्म गर्ने विचार भएका पापीहरूले आँखा, मन, चित्त र सङ्कल्पले हामीलाई क्षीण गराउन खोजेका छन् । उनीहरूलाई हे अग्निदेवता ! तिमी आफ्ना शस्त्रले शस्त्रहीन गराओ । यो हवि तिमीहरूका लागि समर्पित गरिएको छ ।

**इन्द्रस्य गृहोऽसि । तं त्वा प्र पद्ये तं त्वा प्र विशामि सर्वगुः सर्वपूरुषः सर्वात्मा सर्वतनूः सह यन्मेऽस्ति तेन ॥११॥**

हे अग्निदेवता ! तिमी इन्द्रका घर हौ । तिमी सर्वगामी, सर्वात्मा, सर्वशरीर र सर्वपुरुष हौ । आफ्ना समस्त साथीहरूका साथमा हामी तिम्रा शरणमा छौं र तिमीमा नै प्रविष्ट हुनेछौं ।

**इन्द्रस्य शर्मासि । तं त्वा प्र पद्ये तं त्वा प्र विशामि सर्वगुः सर्वपूरुषः सर्वात्मा सर्वतनूः सह यन्मेऽस्ति तेन ॥१२॥**

हे अग्निदेवता ! तिमी इन्द्रदेवताका सुखको स्थान हौ । तिमी सर्वगामी, सर्वात्मा, सर्वशरीर र सर्वपुरुष हौ । आफ्ना समस्त साथीहरूका साथमा हामी तिम्रा शरणमा छौँ र तिमीमा नै प्रविष्ट हुनेछौँ ।

**इन्द्रस्य वर्मासि । तं त्वा प्र पद्ये तं त्वा प्र विशामि सर्वगुः सर्वपूरुषः सर्वात्मा सर्वतनूः सह यन्मेऽस्ति तेन ॥१३॥**

हे अग्निदेवता ! तिमी इन्द्रदेवताका कवच हौ । तिमी सर्वगामी, सर्वात्मा, सर्वशरीर र सर्वपुरुष हौ । आफ्ना समस्त साथीहरूका साथमा हामी तिम्रा शरणमा छौँ र तिमीमा नै प्रविष्ट हुनेछौँ ।

**इन्द्रस्य वरूथमसि । तं त्वा प्र पद्ये तं त्वा प्र विशामि सर्वगुः सर्वपूरुषः सर्वात्मा सर्वतनूः सह यन्मेऽस्ति तेन ॥१४॥**

हे अग्निदेवता ! तिमी इन्द्रदेवताका ढालजस्तै हौ । तिमी सर्वगामी, सर्वात्मा, सर्वशरीर र सर्वपुरुष हौ । आफ्ना समस्त साथीहरूका साथमा हामी तिम्रा शरणमा छौँ र तिमीमा नै प्रविष्ट हुनेछौँ ।

## ७. अरातिनाशन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– अरातिसमूह, सरस्वती । **छन्द**– अनुष्टुप्, विराट् गर्भा प्रस्तारपङ्क्ति, पथ्याबृहती, प्रस्तारपङ्क्ति ।

**आ नो भर मा परि ष्ठा अराते मा नो रक्षीर्दक्षिणां नीयमानाम् । नमो वीर्त्साया असमृद्धये नमो अस्त्वरातये ॥१॥**

हे अराती नामकी अलच्छिनकी देवी ! तिमी दिव्य सम्पदाबाट हामीलाई पूर्ण गराऊ र हामीलाई छेकेर नबस । हामीले ल्याएको दक्षिणा तिमी रोकेर नबस । ईर्ष्यायुक्त, असमृद्धि र दान नदिने वृत्तिकी अधिष्ठात्री देवीका रूपमा तिमीलाई हामी नमस्कार गर्दछौँ ।

**यमराते पुरोधत्से पुरुषं परिरापिणम् । नमस्ते तस्मै कृण्मो मा वनिं व्यथयीर्मम ॥२॥**

हे अराती नामकी देवी ! तिमी अभावको मात्रै कुरो गर्ने बकवादी मानिसलाई आफ्ना अगाडि राख्दछ्यौ, त्यस्तालाई हामी परैबाट नमस्कार गर्दछौँ तर तिमी हाम्रो भावनालाई पीडित नगर ।

**प्र णो वनिर्देवकृता दिवा नक्तं च कल्पताम् । अरातिमनुप्रेमो वयं नमो अस्त्वरातये ॥३॥**

देवताको र सद्गुणको सम्पदाप्रति उत्पन्न भएको हाम्रो भक्ति दिनरात बढिरहोस् । हामी अराती नामकी अलच्छिनकी देवीका आश्रयमा सादा जीवनका साथ जान्छौँ र उनलाई नमस्कार गर्दछौँ ।

**सरस्वतीमनुमतिं भगं यन्तो हवामहे । वाचं जुष्टां मधुमतीमवादिषं देवानां देवहूतिषु ॥४॥**

देवताहरूलाई बोलाइएका यज्ञमा देवताहरूलाई हर्षित गर्ने खालको मधुर वाणी हामी उच्चारण गर्दछौँ र अनुमति, सरस्वती नामका देवी तथा भग नामका देवताका शरणमा गएर हामी उनलाई आह्वान गर्दछौँ ।

**यं याचाम्यहं वाचा सरस्वत्या मनोयुजा । श्रद्धा तमद्य विन्दतु दत्ता सोमेन बभ्रुणा ॥५॥**

मनसित सम्बन्धित सरस्वती नामकी वाणीकी देवीसित हामी जुन वस्तु माग्दछौँ, त्यो वस्तु सोमदेवताले प्रदान गरेपछि श्रद्धा नामकी देवीले प्राप्त गरून् ।

**मा वनिं मा वाचं नो वीर्त्सीरुभाविन्द्राग्नी आ भरतां नो वसूनि । सर्वे नो अद्य दित्सन्तोऽरातिं प्रति हर्यत ॥६॥**

हे अराती नामकी देवी ! हाम्रो वाणी र भक्तिलाई तिमी अवरुद्ध नगर । इन्द्र र अग्नि दुवै देवताले हामीलाई चारै तिरबाट ऐश्वर्य प्राप्त गराऊन् । हाम्रा शत्रुको विपरीत भएर समस्त देवताहरूले हामीलाई दिने इच्छा गरून् ।

**परोऽपेह्यसमृद्धे वि ते हेतिं नयामसि । वेद त्वाहं निमीवन्तीं नितुदन्तीमराते ॥७॥**

हे असमृद्धिकी देवी अराती ! तिमीलाई हामी क्लेश तथा पीडा प्रदान गर्ने हौ भनेर चिन्दछौँ ।

सभोबाट तिमी पर जाऊ । हे दरिद्रताकी देवी अराती ! हामी तिम्रो विघटनकारी शक्तिलाई पर राख्दछौं ।

**उत नग्ना बोभुवती स्वप्नया सचसे जनम् । अराते चित्तं वीर्त्सन्त्याकूतिं पुरुषस्य च ॥८॥**

हे दरिद्रताकी देवी अराती ! तिमी मानिसलाई अल्छ्याइँयुक्त बनाएर नग्नजस्तो लज्जास्पद स्थिति प्रदान गर्दछ्यौ र मानिसका सङ्कल्पहरूलाई धनरहित पारेर असफल गराउँछ्यौ ।

**या महती महोन्माना विश्वा आशा व्यानशे । तस्यै हिरण्यकेश्यै निर्ऋत्या अकरं नमः ॥९॥**

जो अत्यन्त विशाल भएर समस्त दिशाहरूमा व्याप्त भएको छ, त्यस सुनौलो रौँ भएको लाभप्रदजस्तो मात्रै देखिने असमृद्धिलाई हामी नमस्कार गर्दछौँ ।

**हिरण्यवर्णा सुभगा हिरण्यकशिपुर्मही । तस्यै हिरण्यद्रा पयेऽरात्या अकरं नमः ॥१०॥**

जो सुनौलो रङ्ग भएको हिरण्यकशिपु नामको राक्षसजस्तो सुनमा नै मानिसलाई वश गराउने खालको खोल भएकी, पृथ्वीझैँ महान् भईकन पनि रमणीयतालाई नष्ट गराउने खालकी छन्, ती दान दिने वृत्तिविनाकी, दरिद्रता निम्त्याउने, असमृद्धिकी देवी अरातीलाई हामी नमस्कार गर्दछौँ ।

## ७. शत्रुनाशन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– अग्नि, विश्वेदेवा, इन्द्र । **छन्द**– अनुष्टुप्, त्र्यवसाना षट्पदा जगती, भुरिक् पथ्यापङ्क्ति, आस्तारपङ्क्ति, द्व्युष्णिग्गर्भा पथ्यापङ्क्ति, त्र्यवसाना षट्पदा द्व्युष्णिग्गर्भा जगती ।

**वैकङ्कतेनेध्मेन देवेभ्य आज्यं वह । अग्ने ताँ इह मादय सर्व आ यन्तु मे हवम् ॥१॥**

हे अग्निदेवता ! तिमी बलशाली औषधिले युक्त वृक्षका इन्धनले देवताहरूलाई घिउ पुऱ्याइदिने काम गर र उनीहरूलाई हर्षित गराऊ । हामीले आह्वान गर्दाखेरि उनीहरू सबै हाम्रा यज्ञमा आऊन् ।

**इन्द्रा याहि मे हवमिदं करिष्यामि तच्छृणु । इम ऐन्द्रा अतिसरा आकूतिं सं नमन्तु मे । तेभिः शकेम वीर्यं जातवेदस्तनूवशिन् ॥२॥**

हे इन्द्रदेवता ! तिमी हाम्रा यज्ञमा आऊ र हामीले स्तुति गरेको सुन । याजकहरू हाम्रा सङ्कल्प लिएर तिमीतिर अग्रगामी होऊन् । उत्पन्न भएका सबै मानिसलाई चिनेका र शरीरलाई वशमा राख्ने हे इन्द्रदेवता ! ती याजकहरूबाटै हामीले पराक्रम प्राप्त गरौँ ।

**यदसावमुतो देवा अदेवः संश्चिकीर्षति । मा तस्याग्निर्हव्यं वाक्षीद्धवं देवा अस्य मोप गुर्ममैव हवमेतन ॥३॥**

हे देवताहरू हो ! तिमीहरूको भक्ति नगर्ने तर मानिसको घात गर्ने विचार जसले गरेका हुन्छन्, तिनीहरूको हवि अग्निदेवताले पुऱ्याउने काम नगरून् । देवताहरूले तिनको हवि ग्रहण नगरून् र तिनका यज्ञमा नगएर हाम्रै यज्ञमा आऊन् ।

**अति धावतातिसरा इन्द्रस्य वचसा हत । अविं वृक इव मथ्नीत स वो जीवन् मा मोचि प्राणमस्यापि नह्यत ॥४॥**

हे योद्धाहरू हो ! तिमीहरू इन्द्रदेवताका अभय वचनले अघि बढेर शत्रुलाई संहार गर । जसरी ब्वाँसाले भेडा मार्दछ, उसै गरी तिमी शत्रुलाई माडमुड पार । तिमीबाट तिनीहरू नजोगिऊन्; तिनका प्राणलाई पनि तिमी भेदन गर ।

**यममी पुरोदधिरे ब्रह्माणमपभूतये । इन्द्र स ते अधस्पदं तं प्रत्यस्यामि मृत्यवे ॥५॥**

हे इन्द्रदेवता ! हाम्रो अवनति गराउनका लागि यी शत्रुहरूले जुन ब्रह्मणलाई आफ्नो पुरोहित बनाएका छन्, तिनी गोडाका मुनितिरै रहून् । हामी त्यस्तालाई मृत्युतर्फ फ्याँकिदिन्छौँ ।

**यदि प्रेयुर्देवपुरा ब्रह्म वर्माणि चक्रिरे । तनूपानं परिपाणं कृण्वाना यदुपोचिरे सर्वं तदरसं कृधि ॥६॥**

हे देवता ! तनूनपात र परिपाण नामका क्रियाहरू सम्पन्न गर्दाखेरि यदि शत्रुले पहिले नै मन्त्र गरेर

कवच बनाइसकेका रहेछन् भनेदेखि उनीहरूले त्यस्ता बेलामा बोलेका वचनलाई तिमी असफल गराऊ ।

**यानसावतिसरांश्चकार कृणवच्च यान् । त्वं तानिन्द्र वृत्रहन् प्रतीचः पुनरा कृधि यथामुं तुणहां जनम् ॥७॥**

हे वृत्रसंहारक इन्द्रदेवता ! हाम्रा शत्रुले जुन योद्धाहरूलाई अगुवा बनाएका थिए र अहिले जसलाई नेता बनाएका छन् तिनलाई तिमी पछाडि नै छोडिदेऊ । त्यसो गरेर नै हामी शत्रुको सैन्यदललाई विनाश गर्न सकौं ।

**यथेन्द्र उद्वाचनं लब्वा चक्रे अधस्पदम् । कृण्वेऽहमधरांस्तथामूञ्छश्वतीभ्यः समाभ्यः ॥८॥**

जसरी इन्द्रदेवताले उत्तम स्तुति वचन प्राप्त गरेर शत्रुहरूलाई आफ्नो गोडाले मिचेर धुल्याएका थिए, उसै गरी हामी पनि शत्रुलाई सधैंका लागि तिरस्कृत गर्दछौं ।

**अत्रैनानिन्द्र वृत्रहन्नुग्रो मर्मणि विध्य । अत्रैवैनानभि तिष्ठेन्द्र मेद्य१हं तव । अनु त्वेन्द्रा रभामहे स्याम सुमतौ तव ॥९॥**

हे वृत्रसंहारक इन्द्रदेवता ! तिमी यस सङ्ग्राममा प्रचण्ड बनेर शत्रुको मर्मस्थलमा घात गर । हे देवता ! तिमीसित प्रेम गर्ने हामी हौं । त्यसो हुँदा यी शत्रुमाथि तिमी आक्रमण गर । हे इन्द्रदेवता ! तिम्रो अनुकूल रहेर नै हामी आफ्नो कार्य आरम्भ गर्दछौं । त्यो हुनाले नै हामीमाथि तिमी अनुग्रह गर्ने विचार राख ।

## ९. आत्मा सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– वास्तोष्पति । **छन्द**– दैवी बृहती, दैवी त्रिष्टुप्, दैवी जगती, पञ्चपदा विराट् उष्णिक् बृहतीगर्भा जगती, त्र्यवसाना चतुष्पदा पुरस्कृति त्रिष्टुप् बृहतीगर्भातिजगती ।

**दिवे स्वाहा ॥१॥**

द्युलोकका अधिष्ठाता देवताका लागि यो आहुति समर्पित छ ।

**पृथिव्यै स्वाहा ॥२॥**

पृथ्वीका अधिष्ठाता देवताका लागि यो आहुति समर्पित छ ।

**अन्तरिक्षाय स्वाहा ॥३॥**

अन्तरिक्षका अधिष्ठाता देवताका लागि यो आहुति समर्पित छ ।

**अन्तरिक्षाय स्वाहा ॥४॥**

अन्तःकरणमा रहेका देवताका लागि यो आहुति समर्पित छ ।

**दिवे स्वाहा ॥५॥**

स्वर्गलोक वा गमनका देवताका लागि यो आहुति समर्पित छ ।

**पृथिव्यै स्वाहा ॥६॥**

पृथ्वीलोकमा रहेका सबैका लागि यो आहुति समर्पित छ ।

**सूर्यो मे चक्षुर्वातः प्राणोऽन्तरिक्षमात्मा पृथिवी शरीरम् । अस्तृतो नामाहमयमस्मि स आत्मानं नि दधे द्यावापृथिवीभ्यां गोपीथाय ॥७॥**

सूर्यदेवता हाम्रा नेत्र हुन्, वायुदेवता प्राण हुन्, अन्तरिक्षदेवता आत्मा हुन् र पृथ्वी शरीर हुन् । हामी यहाँका सबै अमर नामका हौं । द्यावापृथ्वीबाट संरक्षित हुनका लागि हामी आफ्नो आत्मा उनीहरूकै आश्रयमा राख्दछौं ।

**उदायुरुद् बलमुत् कृतमुत् कृत्यामुन्मनीषामुदिन्द्रियम् । आयुष्कृदायुष्पत्नी स्वधावन्तौ गोपा मे स्तं गोपायतं मा । आत्मसदौ मे स्तं मा मा हिंसिष्टम् ॥८॥**

हे द्यावापृथिवी ! तिमीहरू हाम्रो आयु, बल, कर्म, कृत्या, बुद्धि र इन्द्रियलाई उत्कृष्ट गराओ । हे आयु बढाउने र आयुको रक्षा गर्ने स्वधाले युक्त द्यावापृथिवी ! हाम्रा संरक्षक तिमीहरू नै हौ ।

हामीभित्रै तिमीहरू रहेर हाम्रो सुरक्षा गर, हामीलाई नष्ट हुन नदेओ ।

## १०. आत्मारक्षा सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** वास्तोष्पति । **छन्द–** यवमध्यात्रिपदागायत्री, यवमध्याककुप्, पुरोधृति द्व्यनुष्टुब्गर्भा पराष्टिस्त्र्यवसाना चतुष्पदातिजगती ।

**अश्मवर्म मेऽसि यो मा प्राच्या दिशो ऽघायुरभिदासात् । एतत् स ऋच्छात् ॥१॥**

हे अश्मवर्म नामका ढुङ्गाका कवच ! तिमी हाम्रा हौ । हामीलाई मार्न खोज्ने पूर्व दिशाका जुन मानिसहरू छन् ती सबै आफैँ नष्ट होऊन् ।

**अश्मवर्म मेऽसि यो मा दक्षिणाया दिशो ऽघायुरभिदासात् । एतत् स ऋच्छात् ॥२॥**

हे अश्मवर्म नामका ढुङ्गाका कवच ! तिमी हाम्रा हौ । हामीलाई मार्न खोज्ने दक्षिण दिशाका जुन मानिसहरू छन् ती सबै आफैँ नष्ट होऊन् ।

**अश्मवर्म मेऽसि यो मा प्रतिच्या दिशो ऽघायुरभिदासात् । एतत् स ऋच्छात् ॥३॥**

हे अश्मवर्म नामका ढुङ्गाका कवच ! तिमी हाम्रा हौ । हामीलाई मार्न खोज्ने पश्चिम दिशाका जुन मानिसहरू छन् ती सबै आफैँ नष्ट होऊन् ।

**अश्मवर्म मेऽसि यो मा मोदिच्या दिशो ऽघायुरभिदासात् । एतत् स ऋच्छात् ॥४॥**

हे अश्मवर्म नामका ढुङ्गाका कवच ! तिमी हाम्रा हौ । हामीलाई मार्न खोज्ने उत्तर दिशाका जुन मानिसहरू छन् ती सबै आफैँ नष्ट होऊन् ।

**अश्मवर्म मेऽसि यो मा ध्रुवाया दिशो ऽघायुरभिदासात् । एतत् स ऋच्छात् ॥५॥**

हे अश्मवर्म नामका ढुङ्गाका कवच ! तिमी हाम्रा हौ । हामीलाई मार्न खोज्ने ध्रुव दिशाका जुन मानिसहरू छन् ती सबै आफैँ नष्ट होऊन् ।

**अश्मवर्म मेऽसि यो मोर्ध्वाया दिशो ऽघायुरभिदासात् । एतत् स ऋच्छात् ॥६॥**

हे अश्मवर्म नामका ढुङ्गाका कवच ! तिमी हाम्रा हौ । हामीलाई मार्न खोज्ने ऊर्ध्व दिशाका जुन मानिसहरू छन् ती सबै आफैँ नष्ट होऊन् ।

**अश्मवर्म मेऽसि यो मा दिशामन्तर्देशेभ्योऽघायुरभिदासात् । एतत् स ऋच्छात् ॥७॥**

हे अश्मवर्म नामका ढुङ्गाका कवच ! तिमी हाम्रा हौ । हामीलाई मार्न खोज्ने अन्तर्दिशाका जुन मानिसहरू छन् ती सबै आफैँ नष्ट होऊन् ।

**बृहता मन उप ह्वये मातरिश्वना प्राणापानौ । सूर्याच्चक्षुरन्तरिक्षाच्छ्रोत्रं पृथिव्याः शरीरम् । सरस्वत्या वाचमुप ह्वयामहे मनोयुजा ॥८॥**

बृहत् चन्द्रदेवताबाट हामी मन, वायुदेवताबाट प्राण-अपान, सूर्यदेवताबाट आँखा, अन्तरिक्षबाट श्रोत्र, धर्तीबाट शरीर र अत्यन्त मन लगाएर सरस्वतीबाट वाणीको याचना गर्दछौँ ।

## ११. संपत्कर्म सूक्त

**ऋषि–** अथर्वा । **देवता–** वरुण । **छन्द–** त्रिष्टुप्, भुरिक् त्रिष्टुप्, पङ्क्ति, पञ्चपदा अतिशक्वरी, त्र्यवसाना षट्पदा अत्यष्टि ।

**कथं महे असुरायाब्रवीरिह कथं पित्रे हरये त्वेषनृम्णः । पृश्निं वरुण दक्षिणां ददावान् पुनर्मघ त्वं मनसाचिकित्सीः ॥१॥**

हे अत्यधिक बलवान् तथा ऐश्वर्यवान् वरुणदेवता ! पालनकर्ता र प्राणदाता सूर्यदेवतासित तिमीले केके भनेका थियौ ? हे बारम्बार धन प्रदान गर्ने देवता ! तिमीले सूर्यलाई जलरूपी दक्षिणा प्रदान गर्दछौ र मनले हाम्रो चिकित्सा गर्दछौ ।

**न कामेन पुनर्मघो भवामि सं चक्षे कं पृश्निमेतामुपाजे । केन नु त्वमथर्वन् काव्येन केन जातेनासि जातवेदाः ॥२॥**

हामी इच्छा गरेर नै बारम्बार ऐश्वर्यवान् हुन सक्दैनौँ तर सुखका लागि सूर्यदेवतासित स्तुति गर्दा यस्तो सुखपूर्ण अवस्था प्राप्त गर्न सक्छौँ । हे अथर्ववेदका ऋत्विक्हरू हो ! तिमीहरू कस्तो

कुशलताले जातवेदा अग्निजस्तै तेजस्वी हुन सकेका छौं ?

**सत्यमहं गभीरः काव्येन सत्यं जातेनास्मि जातवेदाः । न मे दासो नार्यो महित्वा व्रतं मीमाय यदहं धरिष्ये ॥३॥**

म गम्भीर छु भन्ने कुरो सत्य हो र वैदिक उपचारका माध्यमबाट काव्य भन्ने नामले चिनिएको छु । जुन पवित्र व्रत म धारण गर्दछु त्यस व्रतलाई मेरो महिमाका कारणले गर्दा कुनै पनि आर्य वा दासले समाप्त गर्न सक्दैन ।

**न त्वदन्यः कवितरो न मेधया धीरतरो वरुण स्वधावन् । त्वां ता विश्वा भुवनानि वेत्थ स चिन्नु त्वज्जनो मायी बिभाय ॥४॥**

हे स्वधाले सम्पन्न वरुणदेवता ! तिमीभन्दा बाहेक अर्को कुनै पनि कवि छैन र बुद्धिको कारण पनि अर्को कोही धैर्यवान् छैन । तिमी सबै प्राणीका ज्ञाता हौ, त्यसैले कपटी मानिसहरू तिमीसित भयभीत हुने गर्दछन् ।

**त्वं ह्य१ङ्ग वरुण स्वधावन् विश्वा वेत्थ जनिमा सुप्रणीते । किं रजस एना परो अन्यदस्त्येना किं परेणावरममुर ॥५॥**

हे स्वधावान् र नीतिवान् वरुणदेवता ! तिमी प्राणीका सबै जन्मका विषयमा जान्दछौ । हे ज्ञानी वरुणदेवता ! यो तेजस्वी प्रकृतिभन्दा माथि के छ र यसभन्दा मुनि के छ ?

**एकं रजस एना परो अन्यदस्त्येना पर एकेन दुर्णशं चिदर्वाक् । तत् ते विद्वान् वरुण प्र ब्रवीम्यधोवचसः पणयो भवन्तु नीचैर्दासा उप सर्पन्तु भूमिम् ॥६॥**

यस रजोगुणले सम्पन्न प्रकृतिभन्दा पर अर्को एउटा सतोगुण छ र त्यस सतोगुणभन्दा पर दुर्णश नामको अविनाशी ब्रह्म छ । हे वरुणदेवता ! तिम्रो महिमा जानेकाले हामी भन्दछौँ कि– हाम्रा प्रति कुत्सित् व्यवहार गर्नेहरू अधोमुखी होऊन् र हीनभाव भएका मानिसहरू भुइँमा घोप्टो परेर पछारिऊन् ।

**त्वं ह्य१ङ्ग वरुण ब्रवीषि पुनर्मघेष्ववद्यानि भूरि । मो षु पर्णी रभ्येश्तावतो भून्मा त्वा वोचन्नराधसं जनासः ॥७॥**

हे स्नेही वरुणदेवता ! धन प्राप्त हुने अवसरप्रति तिमी बारम्बार निन्दनीय वचन बोल्ने गर्दछौ । ती प्रार्थना गर्नेहरूप्रति यति उदासीन नहोऊ; किनभने उनीहरूको हानी पनि नहोस् र उनले तिमीलाई धनहीन पनि नठानून् ।

**मा मा वोचन्नराधसं जनासः पुनस्ते पृश्निं जरितर्ददामि । स्तोत्रं मे विश्वमा याहि शचीभिरन्तर्विश्वासु मानुषीषु दिक्षु ॥८॥**

हे स्तोताहरू हो ! मानिसले हामीलाई ऐश्वर्यहीन नभनून, हामी तिमीलाई अनुदानका रूपमा गाई, पुनः प्रदान गर्दछौँ । मानिसका सबै अन्तर्दिशाहरूमा रहेको वाणीको शक्तिले तिमी हाम्रो सबै स्तोत्र पढ ।

**आ ते स्तोत्राण्युद्यतानि यन्त्वन्तर्विश्वासु मानुषीषु दिक्षु । देहि नु मे यन्मे अदत्तो असि युज्यो मे सप्तपदः सखासि ॥९॥**

हे वरुणदेवता ! मानिसहरू भरिएर रहेका सबै दिशामा तिम्रो स्तोत्र व्याप्त भएर रहोस् । तिमी हामीलाई जेजति दिनमा सक्षम छौ, त्यो हामीलाई प्रदान गर । तिमी हामीलाई सुहाउने सप्तपदा मित्र हौ ।

**समा नौ बन्धुर्वरुण समा जा वेदाहं तद्यन्नवेषा समा जा । ददामि तद् यत् ते अदत्तो अस्मि युज्यस्ते सप्तपदः सखास्मि ॥१०॥**

हे वरुणदेवताहरू हो ! हामी दाजुभाइ हौँ र हाम्रो जन्म पनि एकै किसिमको छ भन्ने कुरो हामीले जानेका छौँ । तिमीलाई जे कुरो दिइएको छैन, त्यो हामी सबैलाई दिनेछौँ । तिमी हामीलाई सुहाउने सप्तपदा मित्र हौ ।

**देवो देवाय गृणते वयोधा विप्रो विप्राय स्तुवते सुमेधाः । अजीजनो हि वरुण स्वधावन्नथर्वाणं पितरं देवबन्धुम् । तस्मा उ राधः कृणुहि सुप्रशस्तं सखा नो असि परमं च बन्धुः ॥११॥**

हे देवता ! स्तुति गर्दाखेरि तिमी देवताहरूका लागि अन्न र आयु प्रदान गर्ने गर्दछौ । तिमी नै विप्रलाई श्रेष्ठ मेधाले सम्पन्न गराउने विज्ञान हौ । हे स्वधासम्पन्न वरुणदेवता ! देवताका बन्धुहरू हाम्रा पितासमान अथर्ववेदका विद्वान्हरूलाई तिमीले नै उत्पन्न गरेका हौ । त्यसैले हामीलाई तिमी ऐश्वर्य प्रदान गर । तिमी हामीलाई सुहाउने बन्धु तथा मित्र हौ ।

## १२. ऋतयज्ञ सूक्त

**ऋषि**— अङ्गिरा । **देवता**— जातवेदा अग्नि । **छन्द**— त्रिष्टुप् पङ्क्ति ।

**समिद्धो अद्य मनुषो दुरोणे देवो देवान् यजसि जातवेदः । आ च वह मित्रमहश्चिकित्वान् त्वं दूतः कविरसि प्रचेताः ॥१॥**

सबै प्राणीका हितैषि हे अग्निदेवता ! तिमी महान् गुणले सम्पन्न भएर प्रज्वलित होऊ । कुशल याजकहरूले निर्धारित गरेका यज्ञमण्डपमा देवताहरूलाई बोलाऊ र यजन गर । तिमी श्रेष्ठ चेतनायुक्त, विद्वान् र देवदूत हौ ।

**तनूनपात् पथ ऋतस्य यानान् मध्वा समञ्जन्त्स्वदया सुजिह्व । मन्मानि धीभिरुत यज्ञमृन्धन् देवत्रा च कृणुह्यध्वरं नः ॥२॥**

शरीरका रक्षक श्रेष्ठ वाणी भएका हे अग्निदेवता ! तिमी सत्यरूपी यज्ञका मार्गलाई वाणीको मायुर्धले ससङ्गत गराउँदै हवि ग्रहण गर । विचारपूर्वक ज्ञान र यज्ञलाई देवताहरूका लागि ग्रहण गर र उनीहरूसम्म पुऱ्याओ ।

**आजुह्वान ईड्यो वन्द्यश्चा याह्यग्ने वसुभिः सजोषाः । त्वं देवानामसि यह्व होता स एनान् यक्षीषितो यजीयान् ॥३॥**

देवताहरूलाई बोलाउने हे अग्निदेवता ! तिमी प्रार्थना गर्न योग्य, वन्दनीय र वसुहरूजस्तै प्रेमको भावना भएका छौ । तिमी देवताहरूका होताका रूपमा यहाँ आएर उनीहरूकै लागि यज्ञ गर।

**प्राचीनं बर्हिः प्रदिशा पृथिव्या वस्तोरस्या वृज्यते अग्रे अह्नाम् । व्यु प्रथते वितरं वरीयो देवेभ्यो अदितये स्योनम् ॥४॥**

दिनका प्रारम्भकालमा भूमि या यज्ञस्थललाई ढाक्ने यी कुशहरू ज्यादै उत्तम छन् । यी देवता तथा अदितिले सुखपूर्वक बस्न योग्य छन् । यो यज्ञवेदीलाई ढाक्न यिनलाई फिँजाइएको छ ।

**व्यचस्वतीरुर्विया वि श्रयन्तां पतिभ्यो न जनयः शुम्भमानाः । देवीर्द्वारो बृहतीर्विश्वमिन्वा देवेभ्यो भवत सुप्रायणाः ॥५॥**

पतिव्रता स्त्रीहरू आफ्नो उन्नति गराउने भएजसरी नै देवत्वले युक्त रिक्त स्थानका महान् द्वाररूपी देवीहरूले सबैलाई आउनजानका लागि मार्ग प्रदान गर्दछन् र देवताहरूलाई सुगमतापूर्व आइपुग्नमा सहायक हुन्छन् ।

**आ सुष्वयन्ती यजते उपाके उषासानक्ता सदतां नि योनौ । दिव्ये योषणे बृहती सुरुक्मे अधि श्रियं शुक्रपिशं दधाने ॥६॥**

उषा र रात्रि नामका देवीहरू मानिसका लागि विभिन्न किसिमले सुख प्रकट गरून् । उनीहरू यज्ञस्थलमा आएर प्रतिष्ठित होऊन्, किनभने उनीहरू यज्ञभागका अधिकारी हुन् । उनीहरू दुई नै दिव्यलोकमा निवास गर्ने, अत्यन्त गुणवती, श्रेष्ठ आभूषण आदिले शोभायुक्त, उज्ज्वल, तेजस्वी स्वरूप भएका र सौन्दर्य धारण गर्ने खालका छन् ।

**दैव्या होतार प्रथमा सुवाचा मिमाना यज्ञं मनुषो यजध्यै । प्रचोदयन्ता विदथेषु कारू प्राचीनं ज्योतिः प्रदिशा दिशन्ता ॥७॥**

दिव्य गुणले सम्पन्न होताका रूपमा रहेका अग्निदेवता र आदित्यगण सर्वश्रेष्ठ वेदमन्त्रका ज्ञाता

मानिसका लागि यज्ञको रचना गर्दछन् । उनीहरू देवपूजनका निम्ति यज्ञीय अनुष्ठानका प्रेरक, कर्मकुशल, स्तुतिकर्ता र पूर्व दिशाका प्रकाशलाई उचित किसिमले प्रकट गराउने हुन् ।

**आ नो यज्ञं भारती तूयमेत्विडा मनुष्वदिह चेतयन्ती । तिस्रो देवीर्बर्हिरेदं स्योनं सरस्वतीः स्वपसः सदन्ताम् ॥८॥**

देवी भारती हाम्रा यज्ञमा चाँडै आऊन् । यस यज्ञको खबर सम्झेर इडा नामकी देवी मानिसजस्तै किसिले यहाँ पाइलो हाल्न आऊन् र देवी सरस्वती पनि यहाँ चाँडै आऊन् । सत्कर्ममा लागेका यी तीनै देवीहरू यस यज्ञमा आएर सुखकारी आसनमा प्रतिष्ठित होऊन् ।

**य इमे द्यावापृथिवी जनित्री रूपैरपिंशद् भुवनानि विश्वा । तमद्य होतरिषितो यजीयान् देवं त्वष्टारमिह यक्षि विद्वान् ॥९॥**

हे होताहरू हो ! द्यावापृथिवी प्राणी जन्माउने गर्दछन् । तिनलाई त्वष्टादेवताले सुशोभित गरेका छन् । तिमी ज्ञानवान्, श्रेष्ठ कामनायुक्त र यज्ञको जस्तै स्वभाव भएका छन् । त्यसो हुनाले आज यस यज्ञमा उनै त्वष्टा नामका देवतालाई उचित किसिमले अर्चना गर ।

**उपावसृज त्मन्या समञ्जन् देवानां पाथ ऋतुथा हवींषि । वनस्पतिः शमिता देवो अग्निः स्वदन्तु हव्यं मधुना घृतेन ॥१०॥**

हे यज्ञको स्तम्भका रूपमा रहेका यूप ! तिमी स्वयं नै आफ्ना सामर्थ्यले देवताहरूका निम्ति अन्न र अन्य यज्ञसम्बन्धी सामग्री उचित किसिमले ल्याएर ठिक समयमा प्रस्तुत गर । वनस्पतिदेवता, शमितादेवता र अग्निदेवताले मधुर घिउ आदिका सँगै यजनीय हविष्यान्न सेवन गरून् ।

**सद्यो जातो व्यमिमीत यज्ञमग्निर्देवानामभवत् पुरोगाः । अस्य होतुः प्रशिष्यृतस्य वाचि स्वाहाकृतं हविरदन्तु देवाः ॥११॥**

प्रदीप्त हुनेबित्तिकै अग्निदेवताले यज्ञीय भावना प्रकट गरे र देवताहरूका अगुवा दूत बने । यस यज्ञलाई प्रमुख स्थानमा होताको भावनाअनुसार वेदमन्त्रको उच्चारण होस् । स्वाहाका साथमा उनका अग्निमा समर्पित गरिएको हविष्यान्नलाई देवताहरूले ग्रहण गरून् ।

## १३. सर्पविषनाशन सूक्त

**ऋषि**— गरुत्मान् । **देवता**— तक्षक । **छन्द**— अनुष्टुप्, जगती, आस्तार पङ्क्ति, त्रिष्टुप्, पथ्यापङ्क्ति, भुरिक् जगती, निचृत् गायत्री ।

**ददिर्हि मह्यं वरुणो दिवः कविर्वचोभिरुग्रैर्नि रिणामि ते विषम् । खातमखातमुत सक्तमग्रभमिरेव धन्वन्नि जजास ते विषम् ॥१॥**

द्युलोकका देवता वरुणदेवले हामीलाई उपदेश दिएका छन् । उनका प्रचण्ड मन्त्रवचनले तिमीजस्ता बिखालु सर्पको विष हटाउँछौँ । मांसमा विष फैलिएको अथवा नफैलिएको अथवा त्यहीँ नै टाँसिएको जनुसुकै अवस्थामा भए पनि हामी त्यो विष फेला पार्दछौँ । जसरी बालुवामा पानी हराउँछ, उसै गरी तिम्रो विष पूरै हामी नष्ट गराउँछौँ ।

**यत् ते अपोदकं विषं तत् त एतास्वग्रभम् । गृह्णामि ते मध्यममुत्तमं रसमुतावमं भियसा नेशदादु ते ॥२॥**

पानी सुकाउने तिम्रा विषको यो नाडीमा हामीले पक्रेका छौँ । तिम्रो उत्तम, मध्यम र अधम विषका रसलाई हामी फेला पार्दछौँ; हाम्रा उपचारका डरले नै त्यो विष विनाश होस् ।

**वृषा मे रवो नभसा न तन्यतुरुग्रेण ते वचसा बाध आदु ते । अहं तमस्य नृभिरग्रभं रसं तमस इव ज्योतिरुदेतु सूर्यः ॥३॥**

हाम्रा मन्त्रको शब्द वर्षणशील बादलजस्तै शब्द र शक्ति भएको छ । यस्ता प्रचण्ड वचनले हामी तिमीजस्ता विषले भरिएकाहरूलाई बाँध्दछौँ । मानिसका सहायताले हामीले तिम्रो विष रोकेका छौँ । जसरी उज्यालो फिँजाउने सूर्य अन्धकारका माझबाट उदाउँछन् उसै गरी यो पुरुष पनि उठेको छ ।

**चक्षुषा ते चक्षुर्हन्मि विषेण हन्मि ते विषम् । अहे म्रियस्व मा जीवीः प्रत्यगभ्येतु त्वा विषम् ॥४॥**

हे सर्प ! हामी आफ्ना आँखाका शक्तिले तिम्रा आँखाको शक्ति नष्ट गराउँछौं । हे सर्प ! तिमीहरू मर, नबाँच । तिमीहरूको विष तिमीसँगै फिर्ता जाओस् ।

**कैरात पृश्न उपतृण्य बभ्र आ मे शृणुतासिता अलीकाः । मा मे सख्युः स्तामानमपि ष्ठाताश्रावयन्तो नि विषे रमध्वम् ॥५॥**

हे जङ्गलमा घुम्ने, छिर्काबुट्टा भएका, घाँसपातमा बस्ने, खैरो रङ्गका र काला निन्दनीय सर्पहरू हो ! हाम्रो भनाइ तिमीहरू सुन । हाम्रा मित्रका घरछेउछाउमा तिमीहरू नबस । हाम्रो यो कुरो अरू सर्पलाई पनि सुनाउँदै आफ्ना विषसित आफैं रमाउने गर ।

**असितस्य तैमातस्य बभ्रोरपोदकस्य च । सात्रासाहस्याहं मन्योरव ज्यामिव धनवनो वि मुञ्चामि रथाँ इव ॥६॥**

चिस्यानमा बस्ने गरेका, काला र खैरो रङ्ग भएका, पानीदेखि टाढा रहेका र सबैलाई परास्त गर्ने खालका क्रोधी सर्पको विष पनि हामी जसरी धनुषबाट ताँदो र रथबाट बन्धनलाई खोल्ने गरिन्छ उसरी नै झारिदिन्छौं ।

**आलिगी च विलिगी च पिता च माता च । विद्म वः सर्वतो बन्ध्वरसाः किं करिष्यथ ॥७॥**

हे सर्पहरू हो ! तिमीहरूका मातापिता टाँसिने खालका र नटाँसिने खालका छन् । हामीले तिमीहरूका सबै दाजुभाइलाई चिनेका छौं । तिमीहरू पराक्रमहीन भएपछि के गर्न सक्छौ र ?

**उरुगूलाया दुहिता जाता दास्यसिक्न्या । प्रतङ्कं दद्रुषीणां सर्वासामरसं विषम् ॥८॥**

विशालकाय गुल नामका वृक्षमा उत्पन्न हुनेकी पुत्री सर्पिणी नै काली सर्पिणीकी दासी हो । दाँतले रिस प्रकट गर्ने यी सर्पिणीको दुःखदायी विष प्रभावहीन होस् ।

**कर्णा श्वावित् तदब्रवीद् गिरेरवचरन्तिका । याः काश्चेमाः खनित्रिमास्तासामरसतमं विषम् ॥९॥**

पर्वतका नजिकै विचरण गर्ने र कान भएको साही नाम हुनेले पनि जो धर्ती खनेर बस्ने गरेका छन्, ती सर्पिणीहरूको विष प्रभावहीन होस् भनेको छ ।

**ताबुवं न ताबुवं न घेत् त्वमसि ताबुवम् । ताबुवेनारसं विषम् ॥१०॥**

तिमी ताबुव होइनौ, पक्का पनि तिमी ताबुव हुँदै होइनौ । किनभने ताबुवले त अवश्य विष प्रभावहीन हुने गर्दछ ।

**तस्तुवं न तस्तुवं न घेत् त्वमसि तस्तुवम् । तस्तुवेनारसं विषम् ॥११॥**

तिमी तस्तुव होइनौ, पक्का पनि तिमी तस्तुव हुँदै होइनौ । किनभने तस्तुवले त अवश्य विष प्रभावहीन हुने गर्दछ ।

## १४. कृत्यापरिहरण सूक्त

**ऋषि**— शुक्र । **देवता**— ओषधि, कृत्या परिहरण । **छन्द**— अनुष्टुप, भुरिक् अनुष्टुप, त्रिपदा विराट् अनुष्टुप, निचृत् बृहती, त्रिपदासाम्नी त्रिष्टुप, स्वराट् अनुष्टुप् ।

**सुपर्णस्त्वानवविन्दत् सूकरस्त्वाखनन्नसा । दिप्सौषधे त्वं दिप्सन्तमव कृत्याकृतं जहि ॥१॥**

हे औषधि ! सुपर्ण नामका गरूड पक्षी वा सूर्यले तिमीलाई प्राप्त गरेका थिए र सुँगुरले नाकले खनेर निकालेका थिए । हे औषधि ! कृत्या प्रयोग गरेर हामीलाई मार्न खोज्नेहरूलाई तिमी विनाश गर ।

**अव जहि युतधानानव कृत्याकृतं जहि । अथो यो अस्मान् दिप्सति तमु त्वं जह्योषधे ॥२॥**

हे औषधि ! दुःख दिने यातुधानलाई तिमी विनाश गर र कृत्या प्रयोग गर्नेहरूलाई मार । हामीलाई

मार्न खोज्नेहरूलाई पनि तिमी विनाश गर ।

**रिश्यस्येव परीशासं परिकृत्य परि त्वचः । कृत्यां कृत्याकृते देवा निष्कमिव प्रति मुञ्चत ॥३॥**

हे देवताहरू हो ! हिंसा गर्नेहरूका अस्त्रलाई उसैको छाला छेडेर घाउ गराउन प्रयोग गर । मानिसले जसरी सुनलाई प्रेमपूर्वक ग्रहण गर्दछ, उसै गरी कृत्या प्रयोग गर्नेहरूले त्यस कृत्यालाई पनि मोहग्रस्त भएर ग्रहण गरोस् ।

**पुनः कृत्यां कृत्याकृते हस्तगृह्य परा णय । समक्षमस्मा आ धेहि यथा कृत्याकृतं हनत् ॥४॥**

हे औषधि ! तिमी कृत्यालाई हातमा पक्रेर कृत्या प्रयोग गर्नेकै निकट लिएर जाऊ र ती कृत्याकारीहरूलाई कृत्याका सम्मुख गराऊ । त्यसबाट कृत्याले उनै कृत्याकारीलाई नै मारोस् ।

**कृत्याः सन्तु कृत्याकृते शपथः शपथीयते । सुखो रथ इव वर्ततां कृत्या कृत्याकृतं पुनः ॥५॥**

कृत्या प्रयोग गर्नेहरूलाई नै कृत्याले फेला पारोस् र अभिशाप दिनेहरूलाई नै अभिशाप लागोस् । सुखदायी रथको गतिले त्यो कृत्या कृत्याकारी भएकै ठाउँमा फर्केर जाओस् ।

**यदि स्त्री यदि वा पुमान् कृत्यां चकार पाप्मने । तामु तस्मै नयामस्यश्वमिवाश्वाभिधान्या ॥६॥**

आइमाई वा लोग्ने मानिस जोसुकैले तिमीलाई पापपूर्ण कृत्य गर्नका लागि खटाएको भए पनि हामी अश्वलाई डोरीले हिर्काएझैँ कृत्या प्रयोग गर्नेलाई नै कृत्याले हिर्काउँछौँ ।

**यदि वासि देवकृता यदि वा पुरुषैः कृता । तां त्वा पुनर्णयामसीन्द्रेण सयुजा वयम् ॥७॥**

हे कृत्या ! तिमी देवता वा मानिस जोसुकैले प्रयोग गरिएका भए पनि इन्द्र तिम्रा सखा हुनाले तिमीलाई हामी फिर्ता गर्दछौँ ।

**अग्ने पृतनाषाट् पृतनाः सहस्व । पुनः कृत्यां कृत्याकृते प्रतिहरणेन हरामसि ॥८॥**

हे युद्धमा विजयी हुने अग्नि ! तिमी कृत्याका सेनालाई परास्त गर । यस खालको पराजित गराउने कार्यले हामी कृत्यालाई कृत्या प्रयोग गर्नेहरूतिरै फिर्ता गर्दछौँ ।

**कृतव्यधनि विध्य तं यश्चकार तमिज्जहि । न त्वामचक्रुषे वयं वधाय सं शिशीमहि ॥९॥**

हे संहारक साधनले युक्त कृत्या ! तिमी त्यही कृत्याकारीलाई नै घोचेर विनाश गर । जसले तिमीलाई प्रेरित गरेको होइन, त्यसलाई मार्नका लागि तिमीलाई उत्तेजित गर्दैनौँ ।

**पुत्र इव पितरं गच्छ स्वज इवाभिष्ठितो दश । बन्धमिवावक्रामी गच्छ कृत्ये कृत्याकृतं पुनः ॥१०॥**

हे कृत्या ! पितासँग पुत्र गएझैँ तिमी पनि प्रयोगकर्तासँगै जाऊ । टाँसिने खालका सर्पले थिचिएपछि जसरी डुङ्छ, तिमी त्यसरी नै त्यसलाई डस । अङ्गको जोर्नी खुस्किँदा फेरि आफ्नै ठाउँमा जसरी जोडिन्छ, उसै गरी हे कृत्या ! तिमी उसै कृत्याकारीकहाँ फर्केर जाऊ ।

**उदेणीव वारण्यभिस्कन्दं मृगीव । कृत्या कर्तारमृच्छतु ॥११॥**

हात्तीको ढोई, मृगिनी अथवा कृष्णसारको पोथीले आक्रमणकारीमाथि झम्टिन्छन्, उसै गरी कृत्याकारीलाई कृत्याले पनि झम्टियोस् ।

**इष्वा ऋजीयः पततु द्यावापृथिवी तं प्रति । सा तं मृगमिव गृह्णातु कृत्या कृत्याकृतं पुनः ॥१२॥**

हे द्यावापृथिवी ! कृत्याकारीमाथि कृत्या बाणझैँ सोझै खसोस् र मृगजस्तो भएका त्यस कृत्याकारीलाई फेरि पक्रोस् ।

**अग्निरिवैतु प्रतिकूलमनुकूलमिवोदकम् । सुखो रथ इव वर्ततां कृत्या कृत्याकृतं पुनः ॥१३॥**

कृत्याले अग्निझैँ भएर कृत्याकारीकारीसित प्रतिकूल व्यवहार गर्दै उसैका सामु पुगोस् । जसरी

पानीले आफ्नै किनारा काट्दै अघि बढ्छ, उसै गरी कृत्याकारीको अनुकूल भएर कृत्या उसैका सामु पुगोस् । त्यो कृत्या सुखकारी रथझैँ भएर कृत्याकारीका नजिक पुगोस् ।

## १५. रोगोपशमन सूक्त

**ऋषि–** विश्वामित्र । **देवता–** मधुलौषधि । **छन्द–** अनुष्टुप्, पुरस्ताद् बृहती, भुरिक् अनुष्टुप् ।

**एका च मे दश च मेऽपवक्तार ओषधे । ऋतजात ऋतावरि मधु मे मधुला करः ॥१॥**

ऋत नामका यज्ञबाट उत्पन्न र ऋतयुक्त हे औषधि ! हाम्रो निन्दा गर्नेहरू एउटा होस् वा दस होऊन्, तिमी मधुरता उत्पन्न गर्ने भएर हाम्रो वाणी मधुर गराऊ ।

**द्वे च मे विंशतिश्च मेऽपवक्तार ओषधे । ऋतजात ऋतावरि मधु मे मधुला करः ॥२॥**

ऋत नामका यज्ञबाट उत्पन्न र ऋतयुक्त हे औषधि ! हाम्रो निन्दा गर्नेहरू दुई होऊन् वा बीस होऊन्, तिमी मधुरता उत्पन्न गर्ने भएर हाम्रो वाणी मधुर गराऊ ।

**तिस्रश्च मे त्रिंशच्च मेऽपवक्तार ओषधे । ऋतजात ऋतावरि मधु मे मधुला करः ॥३॥**

ऋत नामका यज्ञबाट उत्पन्न र ऋतयुक्त हे औषधि ! हाम्रो निन्दा गर्नेहरू तीन होऊन् वा तीस होऊन्, तिमी मधुरता उत्पन्न गर्ने भएर हाम्रो वाणी मधुर गराऊ ।

**चतस्रश्च मे चत्वारिंशच्च मेऽपवक्तार ओषधे । ऋतजात ऋतावरि मधु मे मधुला करः ॥४॥**

ऋत नामका यज्ञबाट उत्पन्न र ऋतयुक्त हे औषधि ! हाम्रो निन्दा गर्नेहरू चार होऊन् वा चालीस होऊन्, तिमी मधुरता उत्पन्न गर्ने भएर हाम्रो वाणी मधुर गराऊ ।

**पञ्च च मे पञ्चाशच्च मेऽपवक्तार ओषधे । ऋतजात ऋतावरि मधु मे मधुला करः ॥५॥**

ऋत नामका यज्ञबाट उत्पन्न र ऋतयुक्त हे औषधि ! हाम्रो निन्दा गर्नेहरू पाँच होऊन् वा पचास होऊन्, तिमी मधुरता उत्पन्न गर्ने भएर हाम्रो वाणी मधुर गराऊ ।

**षट् च मे षष्टिश्च मेऽपवक्तार ओषधे । ऋतजात ऋतावरि मधु मे मधुला करः ॥६॥**

ऋत नामका यज्ञबाट उत्पन्न र ऋतयुक्त हे औषधि ! हाम्रो निन्दा गर्नेहरू छ होऊन् वा साठी होऊन्, तिमी मधुरता उत्पन्न गर्ने भएर हाम्रो वाणी मधुर गराऊ ।

**सप्त च मे सप्ततिश्च मेऽपवक्तार ओषधे । ऋतजात ऋतावरि मधु मे मधुला करः ॥७॥**

ऋत नामका यज्ञबाट उत्पन्न र ऋतयुक्त हे औषधि ! हाम्रो निन्दा गर्नेहरू सात होऊन् वा सत्तरी होऊन्, तिमी मधुरता उत्पन्न गर्ने भएर हाम्रो वाणी मधुर गराऊ ।

**अष्ट च मेऽशीतिश्च मेऽपवक्तार ओषधे । ऋतजात ऋतावरि मधु मे मधुला करः ॥८॥**

ऋत नामका यज्ञबाट उत्पन्न र ऋतयुक्त हे औषधि ! हाम्रो निन्दा गर्नेहरू आठ होऊन् वा असी होऊन्, तिमी मधुरता उत्पन्न गर्ने भएर हाम्रो वाणी मधुर गराऊ ।

**नव च मे नवतिश्च मेऽपवक्तार ओषधे । ऋतजात ऋतावरि मधु मे मधुला करः ॥९॥**

ऋत नामका यज्ञबाट उत्पन्न र ऋतयुक्त हे औषधि ! हाम्रो निन्दा गर्नेहरू नौ होऊन् वा नब्बे होऊन्, तिमी मधुरता उत्पन्न गर्ने भएर हाम्रो वाणी मधुर गराऊ ।

**दश च मे शतं च मेऽपवक्तार ओषधे । ऋतजात ऋतावरि मधु मे मधुला करः ॥१०॥**

ऋत नामका यज्ञबाट उत्पन्न र ऋतयुक्त हे औषधि ! हाम्रो निन्दा गर्नेहरू दस होऊन् वा सय होऊन्, तिमी मधुरता उत्पन्न गर्ने भएर हाम्रो वाणी मधुर गराऊ ।

**शतं च मे सहस्रं चापवक्तार ओषधे । ऋतजात ऋतावरि मधु मे मधुला करः ॥११॥**

ऋत नामका यज्ञबाट उत्पन्न र ऋतयुक्त हे औषधि ! हाम्रो निन्दा गर्नेहरू सय होऊन् वा हजार होऊन्, तिमी मधुरता उत्पन्न गर्ने भएर हाम्रो वाणी मधुर गराऊ ।

## १६. वृषरोगशमन सूक्त

**ऋषि**– विश्वामित्र । **देवता**– एकवृष । **छन्द**– साम्नी उष्णिक्, आसुरी अनुष्टुप्, आसुरी ।

**यद्येकवृषोऽसि सृजारसोऽसि ॥१॥**

हे मानिस ! यदि तिमी एउटा शक्ति वा एकाइका रूपमा रहेका छौ भनेदेखि सिर्जनशील होऊ नभए तिमी रसविहीन वा सामर्थ्यहीन मानिनेछौ ।

**यदि द्विवृषोऽसि सृजारसोऽसि ॥२॥**

हे मानिस ! यदि तिमी दुई वटा शक्ति वा एकाइका रूपमा रहेका छौ भनेदेखि सिर्जनशील होऊ नभए तिमी रसविहीन वा सामर्थ्यहीन मानिनेछौ ।

**यदि त्रिवृषोऽसि सृजारसोऽसि ॥३॥**

हे मानिस ! यदि तिमी तीन वटा शक्ति वा एकाइका रूपमा रहेका छौ भनेदेखि सिर्जनशील होऊ नभए तिमी रसविहीन वा सामर्थ्यहीन मानिनेछौ ।

**यदि चतुर्वृषोऽसिं सृजारसोऽसि ॥४॥**

हे मानिस ! यदि तिमी चार वटा शक्ति वा एकाइका रूपमा रहेका छौ भनेदेखि सिर्जनशील होऊ नभए तिमी रसविहीन वा सामर्थ्यहीन मानिनेछौ ।

**यदि पञ्चवृषोऽसि सृजारसोऽसि ॥५॥**

हे मानिस ! यदि तिमी पाँच वटा शक्ति वा एकाइका रूपमा रहेका छौ भनेदेखि सिर्जनशील होऊ नभए तिमी रसविहीन वा सामर्थ्यहीन मानिनेछौ ।

**यदि षड्वृषोऽसि सृजारसोऽसि ॥६॥**

हे मानिस ! यदि तिमी छ वटा शक्ति वा एकाइका रूपमा रहेका छौ भनेदेखि सिर्जनशील होऊ नभए तिमी रसविहीन वा सामर्थ्यहीन मानिनेछौ ।

**यदि सप्तवृषोऽसि सृजारसोऽसि ॥७॥**

हे मानिस ! यदि तिमी सात वटा शक्ति वा एकाइका रूपमा रहेका छौ भनेदेखि सिर्जनशील होऊ नभए तिमी रसविहीन वा सामर्थ्यहीन मानिनेछौ ।

**यद्यष्टवृषोऽसि सृजारसोऽसि ॥८॥**

हे मानिस ! यदि तिमी आठ वटा शक्ति वा एकाइका रूपमा रहेका छौ भनेदेखि सिर्जनशील होऊ नभए तिमी रसविहीन वा सामर्थ्यहीन मानिनेछौ ।

**यदि नववृषोऽसि सृजारसोऽसि ॥९॥**

हे मानिस ! यदि तिमी नौ वटा शक्ति वा एकाइका रूपमा रहेका छौ भनेदेखि सिर्जनशील होऊ नभए तिमी रसविहीन वा सामर्थ्यहीन मानिनेछौ ।

**यदि दशवृषोऽसि सृजारसोऽसि ॥१०॥**

हे मानिस ! यदि तिमी दस वटा शक्ति वा एकाइका रूपमा रहेका छौ भनेदेखि सिर्जनशील होऊ नभए तिमी रसविहीन वा सामर्थ्यहीन मानिनेछौ ।

**यद्येकादशोऽसि सृजारसोऽसि ॥११॥**

हे मानिस ! यदि तिमी एघार वटा शक्ति वा एकाइका रूपमा रहेका छौ भनेदेखि सिर्जनशील होऊ नभए तिमी रसविहीन वा सामर्थ्यहीन मानिनेछौ ।

## १७. ब्रह्मजाया सूक्त

**ऋषि**– मयोभू । **देवता**– ब्रह्मजाया । **छन्द**– अनुष्टुप्, त्रिष्टुप् ।

**तेऽवदन् प्रथमा ब्रह्मकिल्बिषेऽकूपारः सलिलो मातरिश्वा । वीडुहरास्तप उग्रं मयोभूरापो देवीः प्रथमजा ऋतस्य ॥१॥**

उनले सबैभन्दा पहिले ब्रह्मकिल्बिष नामका ब्रह्मविकार अथवा प्रकृतिका विषयमा बताए । उग्र

तपस्याबाट पहिले दिव्य आपः तत्त्व र सोम प्रकट भए । टाढा रहेका सूर्य वायु र तेजले सम्पन्न भए ।

**सोमो राजा प्रथमो ब्रह्मजायां पुनः प्रायच्छदहृणीयमानः । अन्वर्तिता वरुणो मित्र आसीदग्निर्होता हस्तगृह्या निनाय ॥२॥**

सोम राजाले सङ्कोच परित्याग गरेर चरित्रवती ब्रह्मजाया बृहस्पति नामका ब्रह्मनिष्ठ ज्ञानी पुरुषलाई प्रदान गरे । मित्रावरुण देवताहरूले यस कार्यलाई अनुमोदन गरे । त्यसपछि यज्ञसम्पादक अग्निदेवताका हातले पक्रेर उनलाई अघि लगाएर आए ।

**हस्तेनैव ग्राह्य आधिरस्या ब्रह्मजायेति चेदवोचत् । न दूताय प्रहेया तस्थ एषा तथा राष्ट्रं गुपितं क्षत्रियस्य ॥३॥**

हे बृहस्पतिदेवता ! यिनलाई हातले स्पर्श गर्नु उचित हुँदैन । किनभने यिनी ब्रह्मजाया हुन् भनेर सबै देवताहरूले भनेका थिए । यिनलाई खोज्नका लागि जुन दूतहरू पठाइएका थिए, उनीहरूप्रति यिनको लगावको भावना थिएन । शक्तिशाली राजाको राज्य सुरक्षित रहेझैँ यिनको चरित्रनिष्ठा पनि अडिग रहेको छ ।

**यामाहुस्तारकैषा विकेशीति दुच्छुनां ग्राममवपद्यमानाम् । सा ब्रह्मजाय वि दुनोति राष्ट्रं यत्र प्रापादि शश उल्कुषीमान् ॥४॥**

गाउँसमुदायमा आइलागेको यो अविद्यारूपी आपद्‌लाई चिन्नेहरूले यसलाई विरुद्ध प्रभाव पार्ने तारका हो भन्ने गर्दछन् । जुन ठाउँमा विनाशकारी उल्काजस्तो भएर गतिशील रूपमा यो तारका खसेको हुन्छ, त्यहाँ अविद्याको प्रभाव परेको हुन्छ र यिनै ब्रह्मजायाले त्यस ठाउँलाई विशेष तरिकाले परिवर्तन ल्याएर उचित किसिमको बनाउने गर्दछिन् ।

**ब्रह्मचारी चरति वेविषद् विषः स देवानां भवत्येकमङ्गम् । तेन जायामन्वविन्दद् बृहस्पतिः सोमेन नीतां जुह्वं न देवाः ॥५॥**

हे देवताहरू हो ! सर्वव्यापी बृहस्पतिदेवता विरक्त भएपछि ब्रह्मचर्य नियम निर्वाह गर्दै सर्वत्र विचरण गर्दछन् । उनी देवताहरूसित एकाकार भएका उनीहरूकै अङ्गअवयवजस्तै छन् । जसरी उनले सर्वप्रथम सोमका हातबाट जुहू प्राप्त गरेका थिए, उसरी नै यस बेला पनि बृहस्पतिदेवताले यिनलाई प्राप्त गरेका छन् ।

**देवा वा एतस्यामवदन्त पूर्वे सप्तऋषयस्तपसा ये निषेदुः । भीमा जाया ब्राह्मणस्यापनीता दुर्धां दधाति परमे व्योमन् ॥६॥**

जुन सप्तर्षिहरू तपस्यामा लागेका थिए, उनीहरूले र चिरप्राचीन देवताहरूले यिनका विषयमा घोषणा गर्दै यी ब्राह्मण बृहस्पतिले ग्रहण गरेकी कन्या अति सामर्थ्यशाली छन् भनेका थिए । यिनले परम व्योममा दुर्लभ शक्ति धारण गर्दछिन् ।

**ये गर्भा अवपद्यन्ते जगद् यच्चापलुप्यते । वीरा ये तृह्यन्ते मिथो ब्रह्मजाया हिनस्ति तान् ॥७॥**

गर्भपात भएझैँ गरी अवाञ्छनीय पक्षको विकास समाप्त हुँदाखेरि संसारमा उथलपुथल हुन्छ र मानिसहरू एकापसमा लडाइँ गर्न लाग्दछन् । त्यस्ता बेलामा ती सबै अवाञ्छनीय पक्षलाई यिनै ब्रह्मजायाका रूपमा रहेकी ब्रह्मविद्याले नष्ट गराउँछिन् ।

**उत यत् पतयो दश स्त्रियाः पूर्वे अब्राह्मणाः । ब्रह्मा चेद्धस्तमग्रहीत् स एव पतिरेकधा ॥८॥**

यी ब्राह्मी शक्तिका रूपमा रहेकी स्त्रीका पहिले त ब्रह्मविद्याहीन अब्राह्मण दस प्राण वा दस दिक्पालका रूपमा दस पति हुने गर्दछन् । तर जब ती ब्रह्मचेतनाले सम्पन्न ब्राह्मण साधकले यिनलाई ग्रहण गर्दछन्, त्यस बेला उनी एक मात्र यिनका पति हुने गर्दछन् ।

**ब्राह्मण एव पतिर्न राजन्योऽ न वैश्यः । तत् सूर्यः प्रब्रुवन्नेति पञ्चभ्यो मानवेभ्यः ॥९॥**

मानिसका समाजका पाँचै खालका मानिस अथवा पाँचै तत्त्वसित यी सूर्यदेवता पनि यी स्त्रीका

पति यिनै ब्राह्मण हुन्; राजा वा क्षत्रिय, वैश्य वा व्यापारीहरू कोही पनि यिनका पति होइनन् भन्दै विचरण गर्दछन् ।

**पुनर्वै देवा अददुः पुनर्मनुष्या अददुः । राजानः सत्यं गृह्णाना ब्रह्मजायां पुनर्ददुः ॥१०॥**

देवता र मानिसहरूले पनि बारम्बार यी ब्रह्मजाया ब्रह्मनिष्ठलाई नै प्रदान गरेका छन् । सत्यनिष्ठ राजाहरूले पनि सङ्कल्प गरेर यी सत्यनिष्ठा उनैलाई प्रदान गरेका छन् ।

**पुनर्दाय ब्रह्मजायां कृत्वा देवैर्निकिल्बिषम् । उर्जं पृथिव्या भक्त्वोरुगायमुपासते ॥११॥**

ब्रह्मविद्यालाई फेरि ल्याएर देवताहरूले बृहस्पतिदेवतालाई दोषमुक्त गराए । त्यसपछि पृथ्वीका सर्वोत्तम अन्नको विभाजन गरेर सबैले सुखपूर्वक यज्ञीय आराधना गर्न थाले ।

**नास्य जाया शतवाही कल्याणी तल्पमा शये । यस्मिन् राष्ट्रे निरुध्यते ब्रह्मजायाचित्त्या ॥१२॥**

जुन राष्ट्रमा यी ब्रह्मजायारूपी ब्रह्मविद्यालाई जडतापूर्वक प्रतिबन्ध लगाउने गरिन्छ, उसै राष्ट्रमा सयौँ किसिमका कल्याण धारण गर्ने यी जायारूपी विद्याले पनि सुखको ओछ्यानमा सुत्न पाउनेछैनन् ।

**न विकर्णः पृथुशिरास्तस्मिन् वेश्मनि जायते । यस्मिन् राष्ट्रे निरुध्यते ब्रह्मजायाचित्त्या ॥१३॥**

जुन राष्ट्रमा यी ब्रह्मजायारूपी ब्रह्मविद्यालाई जडतापूर्वक प्रतिबन्ध लगाउने गरिन्छ, उस राष्ट्रमा सबै किसिमको कुरो सुन्नेबुझ्ने खालका कान भएका र धेरै ज्ञानबुद्धिले भरिएको ठूलो शिर भएका सन्तान जन्मनेछैनन् ।

**नास्य क्षत्ता निष्कग्रीवः सूनानामेत्यग्रतः । यस्मिन् राष्ट्रे निरुध्यते ब्रह्मजायाचित्त्या ॥१४॥**

जुन राष्ट्रमा यी ब्रह्मजायारूपी ब्रह्मविद्यालाई जडतापूर्वक प्रतिबन्ध लगाउने गरिन्छ, उस राष्ट्रमा नाना सुनौला आभूषण धारण गरेका वीरहरू गौरवपूर्वक सत्परम्परारूपी सुन्दरीहरूका सामु आउनेछैनन् ।

**नास्य श्वेतः कृष्णकर्णो धुरि युक्तो महीयते । यस्मिन् राष्ट्रे निरुध्यते ब्रह्मजायाचित्त्या ॥१५॥**

जुन राष्ट्रमा यी ब्रह्मजायारूपी ब्रह्मविद्यालाई जडतापूर्वक प्रतिबन्ध लगाउने गरिन्छ, उस राष्ट्रमा सफा धुरो भएका रथमा जोतिएका श्यामकर्ण घोडाहरू पनि प्रशंसित हुनेछैनन् ।

**नास्य क्षेत्रे पुष्करिणी नाण्डीकं जायते बिसम् । यस्मिन् राष्ट्रे निरुध्यते ब्रह्मजायाचित्त्या ॥१६॥**

जुन राष्ट्रमा यी ब्रह्मजायारूपी ब्रह्मविद्यालाई जडतापूर्वक प्रतिबन्ध लगाउने गरिन्छ, उस राष्ट्रमा कमलको फूल फुल्ने तलाउ पनि हुँदैनन् र कमलको बिउ पनि रहेको हुँदैन ।

**नास्मै पृश्निं वि दुहन्ति येऽस्या दोहमुपासते । यस्मिन् राष्ट्रे निरुध्यते ब्रह्मजायाचित्त्या ॥१७॥**

जुन राष्ट्रमा यी ब्रह्मजायारूपी ब्रह्मविद्यालाई जडतापूर्वक प्रतिबन्ध लगाउने गरिन्छ, उस राष्ट्रमा धर्तीरूपी गाईलाई दोहन गर्ने ग्वालाले अलिकति पनि दुधरूपी पोषण गर्ने पदार्थ निकाल्न सक्नेछैनन् ।

**नास्य धेनुः कल्याणी नानड्वान्त्सहते धुरम् । विजानिर्यत्र ब्राह्मणो रात्रिं वसति पापया ॥१८॥**

जुन राष्ट्रमा ब्राह्मणहरू विशिष्ट ज्ञानरूपी स्त्रीविनाका भएर अज्ञानतारूपी रात्रिमा पापबुद्धिका सहारामा निवास गरेका हुन्छन्, त्यस राष्ट्रमा न त कल्याण गर्न सक्ने गाईरूपी धारक क्षमता हुने गर्दछन् न त राष्ट्ररूपी गाडीको भार वहन गर्नमा समर्थ गोरु नै उत्पन्न हुन्छन् ।

## १८. ब्रह्मगवी सूक्त

**ऋषि–** मयोभू । **देवता–** ब्रह्मगवी । **छन्द–** अनुष्टुप्, भुरिक् त्रिष्टुप्, त्रिष्टुप् ।

**नैतां ते देवा अददुस्तुभ्यं नृपते अत्तवे । मा ब्राह्मणस्य राजन्य गां जिघत्सो अनाद्याम् ॥१॥**

हे राजा ! देवताहरूले यी गाई भक्षण गर्नका लागि तिमीलाई प्रदान गरेका होइनन् । हे राजन् ! ब्राह्मणलाई विनाश नगर्ने यी गाईलाई तिमी नाश नगर ।

**अक्षद्रुग्धो राजन्यः पाप आत्मपराजितः । स ब्राह्मणस्य गामद्यादद्य जीवानि मा श्वः ॥२॥**

इन्द्रियविद्रोही, आत्मपराजित र पापी राजाले यदि ब्राह्मणको गाईरूपी निष्ठाधन भक्षण गर्दछन् भने त्यस्ता राजा आज मात्रै जीवित हुनेछन्; भोलि होइन ।

**आविष्टिताघविषा पृदाकूरिव चर्मणा । सा ब्राह्मणस्य राजन्य तृष्टैषा गौरनाद्या ॥३॥**

हे राजा ! यी ब्राह्मणकी निष्ठारूपी गाई तिरस्कार गर्न योग्य छैनन् । किनभने यी दह्रो छालाले छोपिएकी गाई फुङ्कार गर्ने सर्पिणीजस्तै भयङ्कर विष भरिएकी छिन् ।

**निर्वै क्षत्रं नयति हन्ति वर्चोऽग्निरिवारब्धो वि दुनोति सर्वम् । यो ब्राह्मणं मन्यते अन्नमेव स विषस्य पिबति तैमातस्य ॥४॥**

जुन क्षत्रियले ब्राह्मणलाई अन्नजस्तो ठान्ने गर्दछन्, तिनले सर्पको विष पान गर्दछन् र आफ्नो क्षात्रवृत्तिलाई विनाश गर्दै पराक्रम क्षीण गराउँछन् । क्रोधित अग्निले झैँ तिनीहरूले आफ्नो सबै कुरो नष्ट पारिदिन्छन् ।

**य एनं हन्ति मृदुं मन्यमानो देवपीयुर्धनकामो न चित्तात् । सं तस्येन्द्रो हृदयेऽग्निमिन्ध उभे एनं द्विष्टो नभसी चरन्तम् ॥५॥**

धनको लोभ गर्ने जुन मानिसले ब्राह्मलाई कमजोर ठानेर विचार नपुऱ्याई उनलाई विनाश गर्ने प्रयास गर्दछ, तिनले देवताको पनि हिंसा गर्न लागेका हुन्छन् । यस्ता पापीका हृदयमा इन्द्रदेवताले अग्नि प्रज्वलित गराउँछन् । यस किसिमको विचार भएका मानिससँग द्यावापृथिवीले पनि विद्वेष गर्दछन् ।

**न ब्राह्मणो हिंसितव्योऽ३ग्निः प्रियतनोरिव । सोमो ह्यस्य दायाद इन्द्रो अस्याभिशस्तिपाः ॥६॥**

जसरी कुनै पनि प्राणीले आफ्नो प्रिय शरीरलाई विनाश हुन दिन खोज्दैन, उसै गरी अग्निका रूपमा रहेका यी ब्राह्मलाई विनाश गर्नुहुँदैन । सोमदेवता यिनका सम्बन्धी हुन् र इन्द्रदेवता यिनका सङ्कल्पका पालक र पूरक हुन् ।

**शतपाष्ठां नि गिरति तां न शक्नोति निःखिदन् । अन्नं यो ब्रह्मणां मल्वः स्वाद्व१द्मीति मन्यते ॥७॥**

जुन मलीन मानिसले आफू ब्राह्मणको अन्न स्वादले खाएर पचाउन सक्छु भन्ने ठान्दछन्, तिनीहरू सयौँ खालका विपद्हरूमा पर्दछन् । तिनले त्यस्ता आपद्‌विपद् मेटाउन खोजेर पनि सक्दैनन् ।

**जिह्वा ज्या भवति कुल्मलं वाङ्नाडीका दन्तास्तपसाभिदिग्धाः । तेभिर्ब्रह्मा विध्यति देवपीयून् हृद्बलैर्धनुर्भिर्देवजूतैः ॥८॥**

ब्राह्मणको जिब्रो धनुषको डोरीजस्तै हो, उसको वाणी भनेको धनुषको दण्डजस्तै हो, तपस्याले खिइएका उसका दाँतहरू बाणजस्तै हुन् । देवताले प्रेरित गरेको उसको आत्मबलरूपी धनुषले उसले देवताका शत्रुलाई प्वाल पारिदिन्छ ।

**तीक्ष्णेषवो ब्राह्मणा हेतिमन्तो यामस्यन्ति शरव्यां३ न सा मृषा । अनुहाय तपसा मन्युना चोत दूरादव भिन्दन्त्येनम् ॥९॥**

तप र क्रोधलाई साथमा लिएर पिछा गर्दै, तीक्ष्ण बाण तथा अस्त्रले सजिएका ब्राह्मणले जुन बाण छोड्दछ, त्यो निरर्थक हुँदैन । त्यस्ता खालका बाणले टाढैबाट शत्रुलाई छेडिदिन्छ ।

**ये सहस्रमराजन्नासन् दशशता उत । ते ब्राह्मणस्य गां जग्ध्वा वैतहव्याः पराभवन् ॥१०॥**

देवताका हव्यको अंश हरण गर्ने वीतहव्य नामका वंशज धेरै राजाहरूले यस धर्तीमा शासन गरेका थिए । ब्राह्मणको गाईरूपी अभिशाप खाएर नै उनीहरू नष्ट भए ।

**गौरेव तान् हन्यमाना वैतहव्याँ अवातिरत् । ये केशरप्राबन्धायाश्चरमाजामपेचिरन् ॥११॥**

जसले रौँसम्म डोरीले बाँधेको अन्तिम अजा खाइदिए, ती वीतहव्यका वंशजलाई ब्राह्मणका त्यस गाईले पिटेर नै विनाश गरिदियो ।

एकशतं ता जनता या भूमिर्व्यधूनुत । प्रजां हिंसित्वा ब्राह्मणीमसंभव्यं पराभवन् ॥१२॥
सयौँ जनताले आफ्नो शौर्यले पृथ्वीलाई थर्कमान गराएका थिए तर तिनैले ब्राह्मणका सन्तानलाई मारेका कारण विनासम्भावना नै पराजित भए ।

देवपीयुश्चरति मर्त्येषु गरगीर्णो भवत्यस्थिभूयान् । यो ब्राह्मणं देवबन्धुं हिनस्ति न स पितृयाणमप्येति लोकम् ॥१३॥
ती ब्राह्मणहरू देवहिंसक विषका प्रभावले जीर्ण भएर कायामात्र अवशेष रहँदै मानिसका बीचमा विचरण गर्दछन् । जुन मानिसले देवताका बन्धुका रूपमा रहेका ब्राह्मणको हत्या गर्दछन्, तिनले पितृयानले प्राप्त गराउने खालको लोक प्राप्त गर्न सक्दैनन् ।

अग्निर्वै नः पदवायः सोमो दायाद उच्यते । हन्ताभिशस्तेन्द्रस्तथा तद् वेधसो विदुः ॥१४॥
अग्निदेवता नै हाम्रा पथप्रदर्शक हुन् । सोमदेवता हाम्रा आफन्त हुन् र इन्द्रदेवता शाप लागेका मानिसका विनाशक हुन् भन्ने खालको कुरो ज्ञानी मानिसहरूले जानेका छन् ।

इषुरिव दिग्धा नृपते पृदाकूरिव गोपते । सा ब्रह्मणस्येषुर्घोरा तया विध्यति पीयतः ॥१५॥
हे राजा ! हे पृथ्वीका अधिपति ! ब्राह्मणको बाण फुङ्कार गरिरहेको सर्पिणीजस्तै छ । उनका त्यस बाणले हिंस्रकलाई छेड्दछ ।

## १९. ब्रह्मगवी सूक्त

**ऋषि**– मयोभू । **देवता**– ब्रह्मगवी । **छन्द**– अनुष्टुप्, विराट् पुरस्ताद् बृहती, उपरिष्टाद्बृहती ।

अतिमात्रमवर्धन्त नोदिव दिवमस्पृशन् । भृगुं हिंसित्वा सृञ्जया वैतहव्याः पराभवन् ॥१॥
सृञ्जय नामका विजयशील अत्यन्त अगाडि बढिसकेका थिए, तर उनले भृगुवंशीहरूलाई विनाश गरे र वीतहव्यका रूपमा हव्य खोस्ने काम गरे । त्यसो भएपछि उनको पराजय भयो र उनले स्वर्गलोक छुन पनि पाएनन् ।

ये बृहत्सामानमाङ्गिरसमार्पयन् ब्राह्मणं जनाः । पेत्वस्तेषामुभयादमविस्तोकान्यावयत् ॥२॥
जुन मानिसले बृहत्साम आदि वेदको अध्ययन गर्ने आङ्गिरस आदि तेजस्वी ब्राह्मणलाई सताउँछन्, तिनका सन्तानलाई हिंसा गर्ने पशु वा कालले दुवै ओठले च्यापेर चबाइदिन्छ ।

ये ब्राह्मणं प्रत्यष्ठीवन् ये वास्मिञ्छुल्कमीषिरे । अस्नस्ते मध्ये कुल्यायाः केशान् खादन्त आसते ॥३॥
जुन मानिसले ब्राह्मणलाई अपमानित गर्दछन्, अथवा जसले उनीहरूबाट बलपूर्वक कर उठाउँछन्, ती खुनका नदीमा कपाल खाँदै डुबिरहेका हुन्छन् ।

ब्रह्मगवी पच्यमाना यावत् साभि विजङ्गहे । तेजो राष्ट्रस्य निर्हन्ति न वीरो जायते वृषा ॥४॥
जुन अनीतिका कारणले राष्ट्रमा ब्राह्मणलाई दुःख दिने गरिन्छ, गाईले छटपटाउनुपर्ने हुन्छ, त्यसै अपराधका कारण राष्ट्रको पराक्रम समाप्त हुन्छ र त्यो राष्ट्रमा शौर्यवान् वीर पुरुषहरू पनि कहिल्यै उत्पन्न हुँदैनन् ।

क्रूरमस्या आशसनं तृष्टं पिशितमस्यते । क्षीरं यदस्याः पीयते तद् वै पितृषु किल्बिषम् ॥५॥
यस्ता ब्राह्मणको सम्पत्तिका रूपमा रहेको ब्रह्मविद्यारूपी गाईलाई दुःख दिनु क्रूर कार्य हो । यस्ता गाईको मासले तिर्खा लगाउने हुनाले यो फ्याँक्न योग्य हुन्छ र त्यसको दुध खानाले पितृहरूमा पाप उत्पन्न गराउँछ ।

उग्रो राजा मन्यमानो ब्राह्मणं यो जिघत्सति । परा तत् सिच्यते राष्ट्रं ब्राह्मणो यत्र जीयते ॥६॥
जुन राजाले आफूलाई निकै उग्र ठानेर ब्राह्मणलाई दुःख दिन्छन् र जसका राष्ट्रमा ब्राह्मणले दुःख

पाउनुपर्छ त्यो राष्ट्र अत्यन्त पतित हुनेछ ।

**अष्ट्यपदी चतुरक्षी चतुःश्रोत्रा चतुर्हनुः । द्व्यास्या द्विजिह्वा भूत्वा सा राष्ट्रमव धूनुते ब्रह्मजस्य ॥७॥**

ब्राह्मणमाथि आपद, पार्दा उसलाई दुःख दिने राजालाई उनकै राज्यले आठ वटा खुट्टा, चार वटा आँखा, चार कान, चार चिउँडा, दुई मुख र दुई जिब्रा भएको घातक प्राणीजस्तो बनेर थर्काउँछ ।

**तद् वै राष्ट्रमा स्रवति नावं भिन्नामिवोदकम् । ब्रह्माणं यत्र हिंसन्ति तद् राष्ट्रं हन्ति दुच्छुना ॥८॥**

जुन राष्ट्रमा ब्राह्मणको हिंसा हुन्छ, त्यस राष्ट्रलाई आपद्ले घेरेर विनाश गरिदिन्छ । जसरी भाँचिएको डुङ्गालाई पानीले डुबाइदिन्छ उसै गरी पापले त्यस्तो राष्ट्रलाई पनि डुबाउँछ ।

**तं वृक्षा अप सेधन्ति छायां नो मोपगा इति । यो ब्राह्मणस्य सद्धनमभि नारद मन्यते ॥९॥**

हे नारद ! जुन मानिस ब्राह्मणको सम्पत्ति हरण गरेर आफ्नो बनाउँछन्, त्यस्तालाई रुखले पनि आफूभन्दा परै राख्न खोज्दछन् ।

**विषमेतद् देवकृतं राजा वरुणोऽब्रवीत् । न ब्राह्मणस्य गां जग्ध्वा राष्ट्रे जागार कश्चन ॥१०॥**

ब्राह्मणको सम्पत्ति हरण गर्नु भनेको देवताले बनाएको विषजस्तै हो भनेर राजा वरुणले भन्ने गर्दछन् । ब्राह्मणको धन हरण गरेर राष्ट्रमा कसैले पनि उन्नति गर्दै जिउँदो रहन सक्दैन ।

**नवैव ता नवतयो या भूमिर्व्यधूनुत । प्रजां हिंसित्वा ब्राह्मणीमसंभव्यं पराभवन् ॥११॥**

ब्राह्मणका सन्तान वा प्रजाको हिंसा गरेकाहरू पराजित नै हुन्छन् । त्यस्तालाई भूमि स्वयंले नष्ट गर्दछ भन्ने झन्डै सय पुग्ने गरी अनेकौं उदाहरण छन् ।

**यां मृतायानुबध्नन्ति कूद्यं पदयोपनीम् । तद् वै ब्रह्मज्य ते देवा उपस्तरणमब्रुवन् ॥१२॥**

हे ब्राह्मणलाई सताउनेहरू हो ! गोडाको पाइलो मेटाउने जुन काँटाको कुच्चालाई मृतकसित बाँधिन्छ, त्यसैलाई तिमीहरूको ओछ्यानका रूपमा राख्नुपर्छ भनेर देवताले भनेका छन् ।

**अश्रूणि कृपमाणस्य यानि जीतस्य वावृतुः । तं वै ब्रह्मज्य ते देवा अपां भागमधारयन् ॥१३॥**

हे ब्राह्मणलाई दुःख दिनेहरू हो ! दुर्बल र जितिएका ब्राह्मणका जति आँसु बग्दछ, देवताहरूले तिमीहरूका लागि जलका रूपमा त्यही बनाइदिएका छन् ।

**येन मृतं स्नपयन्ति श्मश्रूणि येनोन्दते । तं वै ब्रह्मज्य ते देवा अपां भागमधारयन् ॥१४॥**

हे ब्राह्मणलाई दुःख दिनेहरू हो ! जुन जलले मृत व्यक्तिलाई स्नान गराइन्छ र जुन जलले जुँगाका रौं भिजाउने गरिन्छ, देवताहरूले तिमीहरूको जलका रूपमा त्यही बनाइदिएका छन् ।

**न वर्षं मैत्रावरुणं ब्रह्मज्यमभि वर्षति । नास्मै समितिः कल्पते न मित्रं नयते वशम् ॥१५॥**

सूर्य र वरुणदेवताले प्रेरित गरेको वर्षा ब्राह्मणपीडकमाथि पर्दैन र त्यस्तालाई समाजमा बस्ने अनुमति पनि प्रदान गरिँदैन । त्यस्ताले आफ्ना मित्रहरूलाई पनि आफ्नो वशमा राख्न सक्दैनन् ।

## २०. शत्रुसेनात्रासन सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** वनस्पति, दुन्दुभि । **छन्द–** त्रिष्टुप्, जगती ।

**उच्चैर्घोषो दुन्दुभिः सत्वनायन् वानस्पत्यः संभृत उस्रियाभिः । वाचं क्षुणुवानो दमयन्त्सपत्नान्त्सिंह इव जेष्यन्नभि तंस्तनीहि ॥१॥**

हे दुन्दुभि नामका बाजा ! तिमी बलियो प्राणीको व्यवहारजस्तै उच्च स्वर निकाल्दछौ । तिमी वनस्पतिले बनाइएका र गाईको छालाले ढाकिएका छौ । तिमी उद्घोष गर्दै शत्रुलाई दमन गर र सिंहको जस्तै विजयको अभिलाषा गर्दै गर्जना गर ।

**सिंह इवास्तानीद् द्रुवयो विबद्धोऽभिक्रन्दन्नृषभो वासितामिव । वृषा त्वं वध्रयस्ते सपत्ना ऐन्द्रस्ते शुष्मो अभिमातिषाहः ॥२॥**

हे दुन्दुभि नामका बाजा ! तिम्रो अवस्था वृक्षको जस्तै छ । तिमी विशेष किसिमले बाँधिएर सिंह

गर्जिएझैँ र गाईको खोजीमा लागेको साँढे डुक्रिएझैँ गर्जन गर्दछौ । तिमी शक्तिशाली छौ, त्यसैले तिम्रा शत्रुहरू निर्वीर्य हुने गर्दछन् । तिम्रो बल इन्द्रको जस्तै भएर शत्रुलाई विनाश गर्ने होस् ।

**वृषेव यूथे सहसा विदानो गव्यन्नभि रुव सन्धनाजित् । शुचा विध्य हृदयं परेषां हित्वा ग्रामान् प्रच्युता यन्तु शत्रवः ॥३॥**

जसरी गाईको खोजी गर्दै उन्मत्त भएर बथानमा पसेको साँढे सजिलै चिनिन्छ, उसै गरी ऐश्वर्य जित्ने रहर लिएका तिमी गर्जन गर्दछौ । तिमी शत्रुको हृदयलाई छेड, त्यसो गरेपछि तिनले आफ्नो ठाउँ छोडेर मुन्टिँदै भागून् ।

**संजयन् पृतना ऊर्ध्वमायुर्गृह्या गृह्णानो बहुधा वि चक्ष्व । दैवीं वाचं दुन्दुभ आ गुरस्व वेधाः शत्रूणामुप भरस्व वेदः ॥४॥**

हे दुन्दुभि नामका बाजा ! तिमी ठूलो स्वर गर्दै युद्धमा जित । ग्रहण गर्नुपर्ने वस्तुहरू निरीक्षण गरेर ग्रहण गर । तिमी दिव्य वाणीको उद्घोष गर र विधाता बनेर शत्रुको ऐश्वर्य खोसेर ल्याऊ र हामीलाई देऊ ।

**दुन्दुभेर्वाचं प्रयतां वदन्तीमाशृण्वती नाथिता घोषबुद्धा । नारी पुत्रं धावतु हस्तगृह्यामित्री भीता समरे वधानाम् ॥५॥**

दुन्दुभि बाजाको स्पष्ट रूपमा निस्केको ध्वनि सुनेर त्यसको गर्जनाले जागेका शत्रुका स्त्रीहरू सङ्ग्राममा आफ्ना वीर पतिहरू मरेपछि डराउँदै छोरालाई हातमा समातेर भाग्न लागून् ।

**पूर्वो दुन्दुभे प्र वदासि वाचं भूम्याः पृष्ठे वद रोचमानः । अमित्रसेनामभिजञ्जभानो द्युमद् वद दुन्दुभे सूनृतावत् ॥६॥**

हे दुन्दुभि बाजा ! तिमी सबैभन्दा पहिले ध्वनि गर्दछौ । त्यसो हुनाले नै तिमी शत्रुको सेनालाई विनाश गर्दै पृथ्वीका पिठमा प्रकाशित भएर मिठो ध्वनि निकाल ।

**अन्तरेमे नभसी घोषो अस्तु पृथक् ते ध्वनयो यन्तु शीभम् । अभि क्रन्द स्तनयोत्पिपानः श्लोककृन्मित्रतूर्याय स्वर्धी ॥७॥**

द्युलोक र पृथ्वीभरि तिम्रो उद्घोष सुनियोस् । तिम्रो ध्वनि चाँडै नै चारै दिशामा फैलियोस् । तिमी प्रशंसक शब्दले समृद्ध भएर माथि चढ्दै मित्रहरूमा वेग उत्पन्न गर्नका लागि ध्वनि गर र गर्जन गर ।

**धीभिः कृतः प्र वदाति वाचमुद्धर्षय सत्वनामायुधानि । इन्द्रमेदी सत्वनो नि ह्वयस्व मित्रैरमित्राँ अव जङ्घनीहि ॥८॥**

बुद्धिपूर्वक बनाइएको यो दुन्दुभि ठूलो ध्वनि निकाल्छ ! हे दुन्दुभि नामका बाजा ! तिमी पराक्रमी मानिसका हतियारलाई माथि उठाएर तिनलाई हर्षित गराऊ । तिमीसित इन्द्रदेवताले प्रेम गर्दछन् । तिमी वीरहरूलाई बोलाऊ र हाम्रा मित्रद्वारा शत्रुको वध गराऊ ।

**संक्रन्दनः प्रवदो धृष्णुषेणः प्रवेदकृद् बहुधा ग्रामघोषी । श्रेयो वन्वानो वयुनानि विद्वान् कीर्तिं बहुभ्यो वि हर द्विराजे ॥९॥**

हे दुन्दुभि नामका बाजा ! तिमी कड्किएर ध्वनि उत्पन्न गर्दछौ र सेनालाई विजयी तथा साहसी बनाउँछौ । तिमी गाउँहरूलाई गुञ्जायमान गर्दछौ, उनको कल्याण गर्ने र विद्वान्हरूलाई चिन्दछौ । दुई राजाहरूका युद्धमा तिमी अनेकौँ योद्धाहरूलाई कीर्ति प्रदान गर्दछौ ।

**श्रेयःकेतो वसुजित् सहीयान्त्संग्रामजित् संशितो ब्रह्मणासि । अंशूनिव ग्रावाधिषवणे अद्रिर्गव्यन् दुन्दुभेऽधि नृत्य वेदः ॥१०॥**

हे दुन्दुभि नामका बाजा ! तिमी कल्याण प्रदान गर्दछौ, ऐश्वर्य विजय गर्दछौ, बलले सम्पन्न छौ र युद्धमा विजय प्रदान गर्दछौ । तिमी ब्राह्मणबाट समर्थन प्राप्त गर्दछौ । जसरी सोमरस पेल्ने समयमा सोमवल्लीमाथि ढुङ्गाहरू नाच्दछन् उसै गरी भूमिको आशा गर्ने हुनाले तिमी शत्रुको धनमाथि नृत्य गर्दछौ ।

**शत्रूषाण्नीषाडभिमातिषाहो गवेषणः सहमान उद्भित् । वाग्वीव मन्त्रं प्र भरस्व वाचं सांग्रामजित्यायेषमुद् वदेह ॥११॥**

तिमी शत्रुमाथि विजय प्राप्त गर्ने, सधैँ विजय नै प्राप्त गर्ने, वैरीलाई वशमा ल्याउने र वैरीको खोजी गर्ने हौ । तिमी आफ्ना वाणीलाई विस्फोट गराउँदै शत्रुलाई उखेल्दछौ । तिमी कुशल वक्ताजस्तो भएर ध्वनि निकाल्दछौ र युद्ध जित्नका लागि ठूलो गड्गडाहट उत्पन्न गर्दछौ ।

**अच्युतच्युत् समदो गमिष्ठो मृधो जेता पुरएतायेध्यः । इन्द्रेण गुप्तो विदथा निचिक्यद्धृद्द्योतनो द्विषतां याहि शीभम् ॥१२॥**

हे दुन्दुभि नामका बाजा ! तिमी कहिल्यै नढल्ने शत्रुलाई पनि ढलाउँछौ । तिमी आनन्दित हुने वीरलाई चलाउने, युद्धमा विजय प्राप्त गर्ने र अगाडि बढ्ने खालका छौ । तिमीलाई इन्द्रले रक्षा गरेका छन्, त्यसो हुनाले तिमीसित कसैले युद्ध गर्न सक्दैन । तिमी युद्धका कामहरू सबै जान्दछौ र शत्रुको हृदय जलाउँदै शीघ्र नै शत्रुहरू भएतिर अगाडि बढ ।

## २१. शत्रुसेनात्रासन सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– वनस्पति, दुन्दुभि, आदित्यगण । **छन्द**– अनुष्टुप्, पथ्यापङ्क्ति, जगती, बृहती गर्भा त्रिष्टुप्, त्रिपदा यवमध्या गायत्री ।

**विहृदयं वैमनस्यं वदामित्रेषु दुन्दुभे । विद्वेषं कश्मशं भयममित्रेषु नि दध्मस्यवैनान् दुन्दुभे जहि ॥१॥**

हे दुन्दुभि नामका बाजा ! तिमी शत्रुहरूभित्र वैमनस्य र हृदयको व्याकुलता सञ्चार गराऊ । हामी शत्रुहरूमा द्वेष, भय र द्विविधापूर्ण मनस्थिति स्थापित गराउने कामना गर्दछौँ । त्यसै कारणले तिनलाई तिरस्कृत गर्दै तिमीले मारिदेऊ ।

**उद्वेपमाना मनसा चक्षुषा हृदयेन च । धावन्तु बिभ्यतोऽमित्राः प्रत्रासेनाज्ये हुते ॥२॥**

घिउको हवि प्रदान गर्दाखेरि हाम्रा शत्रुहरू काम्न थालून् र मन, आँखा र हृदयले उनीहरू डराउँदै पर भागून् ।

**वानस्पत्यः संभृत उस्रियाभिर्विश्वगोत्र्यः । प्रत्रासममित्रेभ्यो वदाज्येनाभिघारितः ॥३॥**

हे दुन्दुभि नामका बाजा ! तिमी काठदाउराले बनाइएका छौ र छाला ओढेका तथा छालाका डोरीले कसिएका छौ । तिमी मेघको जस्तै ध्वनि निकाल्दछौ । हे घिउको सेचन पाएका दुन्दुभि नामका बाजा ! तिमी शत्रुका लागि दुःखको घोषणा गर ।

**यथा मृगाः संविजन्त आरण्याः पुरुषादधि । एवा त्वं दुन्दुभेऽमित्रानभि क्रन्द प्र त्रासयाथो चित्तानि मोहय ॥४॥**

हे दुन्दुभि नामका बाजा ! वनका मृगहरू मानिसलाई देखेपछि जसरी भाग्दछन्, उसै गरी तिमीले गर्जन गरेपछि शत्रुहरू पनि भयभीत भएर भागून् र उनीहरूका मनलाई तिमी मोहले स्तम्भित गराऊ ।

**यथा वृकादजावयो धावन्ति बहु बिभ्यतीः । एवा त्वं दुन्दुभेऽमित्रानभि क्रन्द प्र त्रासयाथो चित्तानि मोहय ॥५॥**

हे दुन्दुभि नामका बाजा ! ब्वाँसादेखि डराएर जसरी भेडाबाख्रा भाग्दछन्, उसै गरी तिम्रो गर्जनले शत्रुहरू भयभीत होऊन् र उनका मनलाई तिमी मोहित गराऊ ।

**यथा श्येनात् पतत्रिणः संविजन्ते अहर्दिवि सिंहस्य स्तनथोर्यथा । एवा त्वं दुन्दुभेऽमित्रानभि क्रन्द प्र त्रासयाथो चित्तानि मोहय ॥६॥**

जसरी बाजलाई देखेपछि अरू चराहरू डरले आत्तिँदै भाग्दछन् र जसरी सिंहको आवाज सुनेपछि प्राणीहरू दिनरात भयभीत हुने गर्दछन्, उसै गरी हे दुन्दुभि नामका बाजा ! तिमी गर्जन गरेर शत्रुलाई भयभीत गराऊ र उनका मनलाई मोहित पारिदेऊ ।

**परामित्रान् दुन्दुभिना हरिणस्याजिनेन च । सर्वे देवा अतित्रसन् ये संग्रामस्येशते ॥७॥**
सङ्ग्रामका अधिपति देवताहरू जति छन्, ती सबै हरिणका छालाले बनाइएका दुन्दुभिका सहायताले सबै शत्रुलाई अत्यन्त भयभीत गराउँछन् ।

**यैरिन्द्रः प्रक्रीडते पद्घोषैश्छायया सह । तैरमित्रास्त्रसन्तु नोऽमी ये यन्त्यनीकशः ॥८॥**
इन्द्रदेवता जसमाथि आहट र छायारूपी सेनाका साथमा क्रीडा गर्दछन्, उनै सेनासित एकत्र भएर हिँड्ने गरेका इन्द्रसित हाम्रा शत्रुहरू सबै डराऊन् ।

**ज्याघोषा दुन्दुभयोऽभि क्रोशन्तु या दिशः । सेनाः पराजिता यतीरमित्राणामनीकशः ॥९॥**
शत्रुको एकीकृत रूपमा सङ्गठित सेना परास्त भएर जुन दिशामा भाग्न लागेको हुन्छ, उतै तिरबाट हाम्रा नगाडा र धनुषका प्रत्यञ्चाको ध्वनि सँगसँगै निस्केर आओस् ।

**आदित्य चक्षुरा दत्स्व मरीचयोऽनु धावत । पत्सङ्गिनीरा सजन्तु विगते बाहुवीर्ये ॥१०॥**
हे सूर्यदेवता ! तिमी शत्रुको दृष्टिशक्ति हरण गर । हे सूर्यका किरण ! तिमी सबै शत्रुका पछि लागेर दौड । तिनको बाहुबल कम भएपछि उनलाई गोडामा बाँध्ने डोरीले अल्झाऊ ।

**यूयमुग्रा मरुतः पृश्निमातर इन्द्रेण युजा प्र मृणीत शत्रून् । सोमो राजा वरुणो राजा महादेव उत मृत्युरिन्द्रः ॥११॥**
हे भूमिलाई माता मात्रै गरेका शूरवीर मरुत्हरू हो ! तिमीहरू राजा सोम, राजा वरुण, महादेव, मृत्युदेवता र इन्द्रदेवताका साथमा एकीकृत भएर शत्रुलाई कुच्याओ ।

**एता देवसेनाः सूर्यकेतवः सचेतसः । अमित्रान् नो जयन्तु स्वाहा ॥१२॥**
यी देवसेनाहरू सूर्यको झन्डा लिएर र एकै किसिमको विचारले सङ्गठित भएर हाम्रा शत्रुमाथि विजय प्राप्त गरून् भनेर हामी यो हवि प्रदान गर्दछौँ ।

## २२. तक्मनासन सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** तक्मनाशन । **छन्द–** अनुष्टुप्, भुरिक् त्रिष्टुप्, त्रिष्टुप्, विराट् पथ्या बृहती ।

**अग्निस्तक्मानमप बाधतामितः सोमो ग्रावा वरुणः पूतदक्षाः । वेदिर्बर्हिः समिधः शोशुचाना अप द्वेषांस्यमुया भवन्तु ॥१॥**
अग्निदेवता, सोमदेवता, ग्रावादेवता, मेघका अधिपति इन्द्रदेवता, पवित्र बलले सम्पन्न वरुणदेवता, वेदी, कुश र प्रज्वलित समिधाहरूले ज्वर आदि रोगलाई हटाऊन् अनि हाम्रा शत्रुलाई यहाँबाट पर लैजाऊन् ।

**अयं यो विश्वान् हरितान् कृणोष्युच्छोचयन्नग्निरिवाभिदुन्वन् । अधा हि तक्मन्नरसो हि भूया अधा न्य ङ्ङधाराङ् वा परेहि ॥२॥**
जीवनलाई दुःखी गराउने हे ज्वर ! तिमी सबै मानिसहरूलाई निस्तेज गराउँछौ र अग्निको जस्तै तातो गराउँदै उनलाई कष्ट प्रदान गर्दछौ । त्यसैले तिमी निर्बल होऊ र तल्लो स्थानबाट पर जाऊ ।

**यः परुषः पारुषेयो ऽवध्वंस इवारुणः । तक्मानं विश्वधावीर्याधराञ्चं परा सुव ॥३॥**
जो अत्यन्त कठोर छ र कठोरताका कारण अवध्वंसजस्तै रातो वर्णको भएको छ, त्यस्तो हे सबै किसिमका बलले सम्पन्न हुनेहरू हो ! त्यस्ता ज्वरलाई तिमीहरू उँधोमुन्टो पारेर पर पुऱ्याओ ।

**अधराञ्चं प्र हिणोमि नमः कृत्वा तक्मने । शकम्भरस्य मुष्टिहा पुनरेतु महावृषान् ॥४॥**
हामी ज्वरलाई नमस्कार गर्दै तल ओराल्दछौँ । साग खाने मानिसका मुक्काले विनाश हुने यो रोग अत्यधिक वर्षा हुने गरेका देशमा बारम्बार आउने गर्दछ ।

**ओको अस्य मूजवन्त ओको अस्य महावृषाः । यावज्जातस्तक्मस्तावानसि बल्हिकेषु न्योचरः ॥५॥**
मुँज नामको घाँस भएको ठाउँ नै यस ज्वरको निवासस्थान हो र यसको घर अतिवृष्टि हुने स्थान

हो । हे ज्वर ! तिमी जबदेखि उत्पन्न भयौ, त्यस बेलादेखि नै बाल्हिक भन्ने स्थानमा देखा पर्दछौ ।

**तक्मन् व्याल वि गद व्यङ्ग भूरि यावय । दासीं निष्टक्वरीमिच्छ तां वज्रेण समर्पय ॥६॥**

सर्पले जस्तै जीवनलाई दुःखमय र अङ्गलाई विकृत बनाउन पल्केका हे ज्वर ! तिमी विशिष्ट रोग हौ । त्यसो हुनाले हामीदेखि तिमी धेरै पर जाऊ र निकृष्टतामा निवास गर्नेहरूमाथि आफ्नो वज्र चलाऊ ।

**तक्मन् मूजवतो गच्छ बल्हिकान् वा परस्तराम् । शूद्रामिच्छ प्रफर्व्यं१ तां तक्मन् वीव धूनुहि ॥७॥**

जीवनलाई कष्टमय बनाउने हे ज्वर ! तिमी मुँज नामको घाँस भएको अथवा त्यसभन्दा पनि पर बाल्हिक नामको वनस्पति भएका ठाउँमा जाने विचार बनाऊ । हे तक्मा नामका रोग तिमी पहिलो अवस्थामा रहेकी शूद्र स्त्री वा अल्छ्याइँ गर्ने आइमाईको कामना गर र उसैलाई मनग्गे कँपाइदिने गर ।

**महावृषान् मूजवतो बन्ध्वद्धि परेत्य । प्रैतानि तक्मने ब्रूमो अन्यक्षेत्राणि वा इमा ॥८॥**

तिमी मुँज भएको र अतिवृष्टि हुने ठाउँमा जाऊ र त्यहाँ बाँधेर अवरोध गर्नेहरूलाई भक्षण गर । यी सबै अवाञ्छनीय व्यक्तिहरूका लागि नै अरूतिर भएको ज्वर पनि प्रेरित होस् भन्ने हामी चाहन्छौँ ।

**अन्यक्षेत्रे न रमसे वशी सन् मृडयासि नः । अभूदु प्रार्थस्तक्मा स गमिष्यति बल्हिकान् ॥९॥**

तिमी अरू ठाउँमा रमाउन सक्दैनौ । तिमी हाम्रा वशमा रहेर हामीलाई सुख प्रदान गर्दछौ । यो ज्वर प्रबल भएको छ र अब बाल्हिक अर्थात् हिंस्रकहरू भएका ठाउँमा जानेछ ।

**यत् त्वं शीतोऽथो रुरः सह कासावेपयः । भीमास्ते तक्मन् हेतयस्ताभिः स्म परि वृङ्ग्धि नः ॥१०॥**

हे ज्वर ! तिमी शीतसँग आउने गर्दछौ, रुघासित आउने गर्दछौ अथवा खोकी लागेपछि आउने गर्दछौ र कम्प छुटाउने गर्दछौ । यी तिम्रा भयङ्कर हतियार हुन् । हामीलाई ती हतियारदेखि मुक्त गर ।

**मा स्मैतान्त्सखीन् कुरुथा बलासं कासमुद्युगम् । मा स्मातोऽर्वाङैः पुनस्तत् त्वा तक्मन्नुप ब्रुवे ॥११॥**

हे ज्वर ! तिमी कफ, खोकी र क्षय आदि रोगहरूलाई आफ्नो मित्र नबनाऊ र त्यस ठाउँबाट हामी भएका ठाउँमा नआऊ । हे ज्वर ! हामी यो कुरो तिमीसित फेरि पनि भन्दै छौँ ।

**तक्मन्न् भ्रात्रा बलासेन स्वस्रा कासिकया सह । पाप्मा भ्रातृव्येण सह गच्छामुमरणं जनम् ॥१२॥**

हे ज्वर ! तिमी आफ्ना दाजुभाइ कफ, दिदीबहिनी खोकी र भतिजो पापरूपी दुष्कर्मका साथमा मलीन मानिसका नजिकै जाऊ ।

**तृतीयकं वितृतीयं सदन्दिमुत शारदम् । तक्मानं शीतं रुरं ग्रैष्मं नाशय वार्षिकम् ॥१३॥**

हे देवता ! तिमी तेस्रो दिन आउने गरेको तिजारी, चारचार दिनमा आउने चौथिया, सधैँ रहेर दुःख दिने तथा शरद् ऋतु, वर्षा ऋतु र ग्रीष्म ऋतुमा आउने गरेका ज्वर एवं ठन्डी ल्याउने ज्वरलाई विनाश गर ।

**गन्धारिभ्यो मूजवद्भ्योऽङ्गेभ्यो मगधेभ्यः । प्रैष्यन् जनमिव शेवधिं तक्मानं परि दद्मसि ॥१४॥**

जसरी पठाइएको खजाना रक्षा गर्ने मानिस गान्धार, मुँजवान्, अङ्ग तथा मगध देशमा पुग्ने गर्दछ, उसै गरी यस कष्टदायक रोगलाई पनि हामी टाढाका देशहरूमा पठाउँछौँ ।

## २३. कृमिघ्न सूक्त

**ऋषि–** कण्व । **देवता–** इन्द्र । **छन्द–** अनुष्टुप्, विराट् अनुष्टुप् ।

**ओते मे द्यावापृथिवी ओता देवी सरस्वती । ओतौ म इन्द्रश्चाग्निश्च क्रिमिं जम्भयतामिति ॥१॥**

द्युलोक, पृथ्वीलोक, देवी सरस्वती, इन्द्रदेवता र अग्निदेवता एकापसमा सँगै भएर हाम्रो हितका लागि कृमिहरूको नाश गरून् ।

**अस्येन्द्र कुमारस्य क्रिमीन् धनपते जहि । हता विश्वा अरातय उग्रेण वचसा मम ॥२॥**

हे धनका अधिपति इन्द्रदेवता ! तिमी यी कुमारको शत्रुका रूपमा रहेका कृमिहरूलाई विनाश गर । हम्रा उग्र मन्त्रवचनले समस्त कष्टदायी कृमिहरूको विनाश गरिदेऊ ।

**यो अक्ष्यौ परिसर्पति यो नासे परिसर्पति । दतां यो मध्यं गच्छति तं क्रिमिं जम्भयामसि ॥३॥**

जुन किराहरू आँखामा घुम्दछन्, जो नाकमा घुम्छन् र जुन दाँतका बीचमा घुम्छन्, हामी ती किराहरू विनाश गर्दछौँ ।

**सरूपौ द्वौ विरूपौ द्वौ कृष्णौ द्वौ रोहितौ द्वौ । बभ्रुश्च बभ्रुकर्णश्च गृध्रः कोकश्च ते हताः ॥४॥**

दुई वटा किरा एकै खालका हुन्छन्, दुई भिन्नभिन्न खालका हुन्छन्, दुई वटा काला रङ्गका हुन्छन्, दुई वटा राता रङ्गका हुन्छन्, एउटा खैरो रङ्गको हुन्छ, एउटा खैरा कान भएको हुन्छ र एउटा गिद्ध, एउटा ब्वाँसो यी सबै नै मन्त्रका बलले विनाश होऊन् ।

**ये क्रिमयः शितिकक्षा ये कृष्णाः शितिबाहवः । ये के च विश्वरूपास्तान् क्रिमीन् जम्भयामसि ॥५॥**

जुन तिखो कान भएका, जुन कालका र तिखा पाखुरा भएका किराहरू हुन्छन् अथवा जुन किरा विभिन्न रूप भएका हुन्छन्, ती सबै किराहरूलाई हामी मन्त्रका बलले विनाश गर्दछौँ ।

**उत् पुरस्तात् सूर्य एति विश्वदृष्टो अदृष्टहा । दृष्टांश्च घ्नन्नदृष्टांश्च सर्वांश्च प्रमृणन् क्रिमीन् ॥६॥**

विश्वद्रष्टा सूर्यदेवता देखिने वा नदेखिने सबै खालका किरालाई विनाश गर्दछन् । उनी दृश्य वा अदृश्य सबै किसिमका किरालाई पेलिदिन्छन् ।

**येवाषासः कष्कषास एजत्काः शिपवित्नुकाः । दृष्टश्च हन्यतां क्रिमिरुतादृष्टश्च हन्यताम् ॥७॥**

चाँडो कुद्ने खालका, अत्यधिक पीडा दिने खालका र कँपाउने खालका तेजस्वी किराहरू; जो देखिने वा नदेखिने जस्तासुकै खालका भए पनि सबै किराहरू नाश होऊन् ।

**हतो येवाषः क्रिमीणां हतो नदनिमोत । सर्वान् नि मष्मषाकरं दृषदा खल्वाँ इव ॥८॥**

कीटाणुहरूमा तीव्र गमन गर्नेहरूजति सबै मन्त्रका बलले नाश होऊन् र नदनिमा नामका किराहरू पनि मारिऊन् । जसरी ढुङ्गामा चना पिँध्ने गरिन्छ उसै गरी हामीले यी सबै किरालाई किचेर मारिदियौँ ।

**त्रिशीर्षाणं त्रिककुदं क्रिमिं सारङ्गमर्जुनम् । शृणाम्यस्य पृष्टिरपि वृश्चामि यच्छिरः ॥९॥**

तीन वटा टाउका भएका, तीन वटा जुरो भएका, विचित्र किसिमको रङ्ग भएका कीटाणुलाई हामी विनाश गर्दछौँ । तिनको छाला फर्काउँदै हामी तिनको टाउको पनि किचिदिन्छौँ ।

**अत्रिवद् वः क्रिमयो हन्मि कण्ववज्जमदग्निवत् । अगस्त्यस्य ब्रह्मणा सं पिनष्म्यहं क्रिमीन् ॥१०॥**

हे किराहरू हो ! जसरी अत्रि, कण्व तथा जमदग्नि आदि ऋषिहरूले तिमीहरूलाई विनाश गरेका थिए, उस्तै हामी पनि गर्दछौँ र अगस्त्य ऋषिका मन्त्रका बलले तिमीहरूलाई किच्दछौँ ।

**हतो राजा क्रिमीणामुतैषां स्थपतिर्हतः । हतो हतमाता क्रिमिर्हतभ्राता हतस्वसा ॥११॥**

हाम्रा मन्त्रका बलले किराहरूको राजा र मन्त्री मारिइसके । उसकी आमा, दाजुभाइ र दिदीबहिनी मारिएकाले उसको परिवार नै पूरै मासिइसक्यो ।

**हतासो अस्य वेशसो हतासः परिवेशसः । अथो ये क्षुल्लका इव सर्वे ते क्रिमयो हताः ॥१२॥**

यस कृमिको सबै परिवार नै मासिइसकेको छ र यसको नजिकैका घरपरिवारवालाहरू पनि मारिए । त्यसै गरी बिउको काम लाग्ने गरी जोगिएका सानातिना कृमिहरू पनि सबै मासिए ।

**सर्वेषां च क्रिमीणां सर्वासां च क्रिमीणाम् । भिनद्म्यश्मना शिरो दहाम्यग्निना मुखम् ॥१३॥**

समस्त भाले कृमि र पोथी कृमिहरूका शिर हामी ढुङ्गाले किचेर फोर्दछौँ र अग्निले तिनको मुख डढाइदिन्छौँ ।

## २४. ब्रह्मकर्म सूक्त

**ऋषि–** अथर्वा । **देवता–** ब्रह्मकर्मात्मा, सविता, अग्नि, द्यावापृथिवी, वरुण, मित्रावरुण, मरुद्गण, सोम, वायु, सूर्य, चन्द्रमा, इन्द्र, मरुत्पिता, मृत्यु, यम, पितरगण, तता पितरगण, ततामहा पितरगण । **छन्द–** अति शक्वरी, शक्वरी, त्रिपदा भुरिक् जगती, त्रिपदा विराट् शक्वरी ।

**सविता प्रसवानामधिपतिः स मावतु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥१॥**

भगवान् सवितादेवता समस्त उत्पन्न पदार्थका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनलाई हवि प्रदान गर्दछौँ ।

**अग्निर्वनस्पतीनामधिपतिः स मावतु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥२॥**

अग्निदेवता समस्त वनस्पतिका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनलाई हवि प्रदान गर्दछौँ ।

**द्यावापृथिवी दातृणामधिपत्नी ते मावताम् । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥३॥**

द्यावापृथिवी सबै दाताहरूका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौँ ।

**वरुणोऽपामधिपतिः स मावतु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥४॥**

वरुणदेवता जलका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौँ ।

**मित्रावरुणौ वृष्ट्याधिपती तौ मावताम् । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥५॥**

मित्र र वरुणदेवताहरू वर्षाको जलका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा

हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौं ।

**मरुतः पर्वतानामधिपतयस्ते मावन्तु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥६॥**

मरुत्गण पर्वतका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौं ।

**सोमो वीरुधामधिपतिः स मावतु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥७॥**

सोमदेवता औषधिहरूका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौं ।

**वायुरन्तरिक्षस्याधिपतिः स मावतु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यांमाशिष्यस्यां देवहूत्यां स्वाहा ॥८॥**

वायु अन्तरिक्षका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौं ।

**सूर्यश्चक्षुषामधिपतिः स मावतु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥९॥**

सूर्यदेवता आँखाको शक्तिका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौं ।

**चन्द्रमा नक्षत्राणामधिपतिः स मावतु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥१०॥**

चन्द्रदेवता नक्षत्रहरूका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौं ।

**इन्द्रो दिवोऽधिपतिः स मावतु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥११॥**

इन्द्रदेवता स्वर्गलोकका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौं ।

**मरुतां पिता पशूनामधिपतिः स मावतु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥१२॥**

मरुत्हरूका पिता पशुहरूका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौं ।

**मृत्युः प्रजानामधिपतिः स मावतु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥१३॥**

मृत्यु प्रजाहरूका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौं ।

**यमः पितृणामधिपतिः स मावतु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥१४॥**

यम पितृहरूका अधिपति हुन् । उनले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौँ ।

**पितरः परे ते मावन्तु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥१५॥**

सात पुस्ताभन्दा माथिका पितृहरूले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौँ ।

**तता अवरे ते मावन्तु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥१६॥**

सपिण्डभित्रका पितृहरूले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौँ ।

**ततस्ततामहास्ते मावन्तु । अस्मिन् ब्रह्मण्यस्मिन् कर्मण्यस्यां पुरोधायामस्यां प्रतिष्ठायामस्यां चित्त्यामस्यामाकूत्यामस्यामाशिष्यस्यां देवहूत्यां स्वाहा ॥१७॥**

वृद्धप्रपितामह आदि पितृहरूले यस पौरोहित्य कर्ममा, प्रतिष्ठामा, चिति नामको अग्निकुण्डमा, सङ्कल्पमा, देवतालाई आह्वान गर्नमा र आशीर्वादात्मक कर्ममा हामीलाई सुरक्षा गरून्; हामी उनीहरूलाई हवि प्रदान गर्दछौँ ।

## २५. गर्भाधान सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** योनिगर्भ । **छन्द–** अनुष्टुप्, विराट् पुरस्ताद् बृहती ।

**पर्वताद् दिवो योनेरङ्गादङ्गात् समाभृतम् । शेपो गर्भस्य रेतोधाः सरौ पर्णमिवा दधत् ॥१॥**

पर्वतका औषधिहरूबाट, स्वर्गलोकका पुण्यको सूक्ष्म प्रवाहबाट र अङ्गप्रत्यङ्गबाट एकत्रित एवं पुष्ट वीर्य धारण गर्ने पुरुषहरूले जल प्रवाहमा पत्ता राखेझैँ गरी गर्भस्थानमा गर्भ स्थापित गर्दछन् ।

**यथेयं पृथिवी मही भूतानां गर्भमादधे । एवा दधामि ते गर्भं तस्मै त्वामवसे हुवे ॥२॥**

जसरी यी विस्तृत पृथ्वीले सबै खालका प्राणीलाई आफ्ना गर्भमा धारण गरेको छ, उसै गरी म तिम्रो गर्भ धारण गर्दछु र त्यसको सुरक्षा गर्नका लागि तिमीलाई आह्वान गर्दछु ।

**गर्भं धेहि सिनीवालि गर्भं धेहि सरस्वति । गर्भं ते अश्विनोभा धत्तां पुष्करस्रजा ॥३॥**

हे सिनीवाली देवी ! गर्भलाई तिमी संरक्षण प्रदान गर । हे सरस्वती देवी ! तिमी गर्भका लागि सहायक होऊ । हे स्त्री ! सुनौलो कमलका आभूषण धारण गर्ने अश्विनीकुमारहरूले तिम्रा गर्भलाई स्थिरता प्रदान गरून् ।

**गर्भं ते मित्रावरुणौ गर्भं देवो बृहस्पतिः । गर्भं त इन्द्रश्चाग्निश्च गर्भं धाता दधातु ते ॥४॥**

मित्र र वरुणदेवताले तिम्रा गर्भलाई परिपुष्ट बनाऊन् । बृहस्पतिदेवता, इन्द्रदेवता, अग्निदेवता र धातादेवताले तिम्रो गर्भ धारण गरिदिऊन् ।

**विष्णुर्योनिं कल्पयतु त्वष्टा रूपाणि पिंशतु । आ सिञ्चतु प्रजापतिर्धाता गर्भं दधातु ते ॥५॥**

विष्णुदेवताले नारीरूपी प्रकृतिलाई गर्भ धारण गर्नमा सक्षम गराऊन् । त्वष्टादेवता त्यस गर्भका विभिन्न अवयवहरू निर्माण गरून् । प्रजापतिदेवता सेचन प्रक्रियामा सहायक होऊन् र धातादेवता गर्भधारणका लागि सहायक होऊन् ।

**यद् वेद राजा वरुणो यद् वा देवी सरस्वती । यदिन्द्रो वृत्रहा वेद तद् गर्भकरणं पिब ॥६॥**
जुन गर्भ धारण प्रक्रियालाई राजा वरुणदेवताले जानेका छन्, जसलाई देवी सरस्वतीले जानेकी छिन् र जसलाई वृत्रहन्ता इन्द्रदेवताले जानेका छन्, त्यस गर्भलाई स्थिर गराउने खालका रस तिमी पान गर ।

**गर्भो अस्योषधीनां गर्भो वनस्पतीनाम् । गर्भो विश्वस्य भूतस्य सो अग्ने गर्भमेह धाः ॥७॥**
हे अग्निदेवता ! तिमी औषधि र वनस्पतिका गर्भमा छौ र तिमी समस्त प्राणीका गर्भमा पनि तिमी नै छौ; त्यसो हुनाले तिमी हाम्रो यो गर्भ पनि धारण गर ।

**अधि स्कन्द वीरयस्व गर्भमा धेहि योन्याम् । वृषासि वृष्ण्यावन् प्रजायै त्वा नयामसि ॥८॥**
हे वीर्यले सम्पन्न पुरुष ! तिमी बलवान् छौ । तिमी उठ र पराक्रम गर्दै गर्भाशयमा गर्भलाई स्थापना गर । तिमीलाई हामी केवल सन्तानका लागि मात्रै लिएर आउँछौं ।

**वि जिहीष्व बार्हत्सामे गर्भस्ते योनिमा शयाम् । अदुष्टे देवाः पुत्रं सोमपा उभयाविनम् ॥९॥**
हे अत्यन्त सान्त्वनाले सम्पन्न समागम गर्ने साध्वी ! तिमी विशेष रूपले सजग होऊ, हामी तिम्रो गर्भाशयमा गर्भ स्थापना गर्दछौं । सोमपान गर्ने देवताहरूले तिमीहरू दुईको सुरक्षा गर्नका लागि पुत्र प्रदान गरेका छन् ।

**धातः श्रेष्ठेन रूपेणास्या नार्या गवीन्योः । पुमांसं पुत्रमा धेहि दशमे मासि सूतवे ॥१०॥**
हे धातादेवता ! यस स्त्रीका गर्भ धारण गर्ने दुवै कोखाका बीचमा सुन्दर रूप भएको पुरुष सन्तान राखिदेऊ र त्यसलाई दसौँ महिनामा उत्पन्न हुनका लागि योग्य बनाऊ ।

**त्वष्टः श्रेष्ठेन रूपेणास्या नार्या गवीन्योः । पुमांसं पुत्रमा धेहि दशमे मासि सूतवे ॥११॥**
हे त्वष्टादेवता ! यस स्त्रीका गर्भ धारण गर्ने दुवै कोखाका बीचमा सुन्दर रूप भएको पुरुष सन्तान राखिदेऊ र त्यसलाई दसौँ महिनामा उत्पन्न हुनका लागि योग्य बनाऊ ।

**सवितः श्रेष्ठेन रूपेणास्या नार्या गवीन्योः । पुमांसं पुत्रमा धेहि दशमे मासि सूतवे ॥१२॥**
हे सवितादेवता ! यस स्त्रीका गर्भ धारण गर्ने दुवै कोखाका बीचमा सुन्दर रूप भएको पुरुष सन्तान राखिदेऊ र त्यसलाई दसौँ महिनामा उत्पन्न हुनका लागि योग्य बनाऊ ।

**प्रजापते श्रेष्ठेन रूपेणास्या नार्या गवीन्योः । पुमांसं पुत्रमा धेहि दशमे मासि सूतवे ॥१३॥**
हे प्रजापतिदेवता ! यस स्त्रीका गर्भ धारण गर्ने दुवै कोखाका बीचमा सुन्दर रूप भएको पुरुष सन्तान राखिदेऊ र त्यसलाई दसौँ महिनामा उत्पन्न हुनका लागि योग्य बनाऊ ।

## २६. नवशाला सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** वास्तोष्पति, अग्नि, सविता, इन्द्र, निविद्, मरुद्गण, अदिति, विष्णु, त्वष्टा, भग, सोम, अश्विनीकुमार, बृहस्पति । **छन्द–** द्विपदा प्राजापत्या बृहती, द्विपदार्ची उष्णिक्, त्रिपदा विराट् गायत्री, त्रिपदा पिपीलिकमध्या पुर उष्णिक्, परातिशक्वरी चतुष्पदा जगती ।

**यजूंषि यज्ञे समिधः स्वाहाग्निः प्रविद्वानिह वो युनक्तु ॥१॥**
हे यजुर्वेदका मन्त्र तथा समिधाहरू हो ! विशेष ज्ञानी अग्निदेवताले यस यज्ञमा तिमीहरूलाई भेटून् । उनका लागि हामी हवि समर्पित गर्दछौं ।

**युनक्तु देवः सविता प्रजानन्नस्मिन् यज्ञे महिषः स्वाहा ॥२॥**
परम ज्ञानी सवितादेवता यस यज्ञमा सामेल होऊन् । हामी उनका लागि हवि समर्पित गर्दछौं ।

**इन्द्र उक्थामदान्यस्मिन् यज्ञे प्रविद्वान् युनक्तु सुयुजः स्वाहा ॥३॥**
हे उक्थ तथा मन्त्रहरू हो ! ज्ञानी इन्द्रदेवताले यस यज्ञमा तिमीहरूलाई भेटून् । हामी उनलाई हवि समर्पित गर्दछौं ।

[illegible] यज्ञे निविदः स्वाहा शिष्यः पत्नीभिर्वहतेह युक्ताः ॥४॥

[illegible] निसहरू हो ! तिमीहरू आआफ्ना पत्नीहरूलाई लिएर उनीहरूका साथमा यस यज्ञमा [illegible] वचन धारण गर । तिमीहरूका लागि हामी हवि समर्पित गर्दछौँ ।

छन्दांसि यज्ञे मरुतः स्वाहा मातेव पुत्रं पिपृतेह युक्ताः ॥५॥

आमाले जसरी छोरालाई पाल्दछिन् उसै गरी मरुत्‌गण यस यज्ञमा सामेल भएर छन्दहरूलाई पोषण प्रदान गरून् । उनीहरूलाई हामी हवि समर्पित गर्दछौँ ।

एयमगन् बर्हिषा प्रोक्षणीभिर्यज्ञं तन्वानादितिः स्वाहा ॥६॥

यी अदितिदेवी कुश र प्रोक्षणी लिएर यस यज्ञलाई समृद्ध गराउनका लागि आएकी छिन् । हामी उनका लागि हवि समर्पित गर्दछौँ ।

विष्णुर्युनक्तु वहुधा तपांस्यस्मिन् यज्ञे सुयुजः स्वाहा ॥७॥

भगवान् विष्णु आफ्ना तपस्याका शक्तिले यस यज्ञमा सामेल भएका छन् । हामी उनका लागि हवि समर्पित गर्दछौँ ।

त्वष्टा युनक्तु बहुधा नु रूपा अस्मिन् यज्ञे सुयुजः स्वाहा ॥८॥

ज्ञानी त्वष्टादेवताले ठिक गरिएका अनेकौँ रूपहरूलाई यस यज्ञमा संयुक्त गराऊन् । हामी उनका लागि हवि समर्पित गर्दछौँ ।

भगो युनक्त्वाशिषो न्व१स्मा अस्मिन् यज्ञे प्रविद्वान् युनक्तु सुयुजः स्वाहा ॥९॥

ज्ञानी भगदेवताले यस यज्ञलाई श्रेष्ठ आशीर्वाद दिँदै यहाँ सामेल हुन आऊन् । हामी उनलाई हवि समर्पित गर्दछौँ ।

सोमो युनक्तु बहुधा पयांस्यस्मिन् यज्ञे सुयुजः स्वाहा ॥१०॥

ज्ञानी सोमदेवता यस यज्ञमा आफ्नो जलरूपी रसलाई अनेकौँ किसिमले संयुक्त गर्नका लागि आऊन् । हामी उनका लागि हवि समर्पित गर्दछौँ ।

इन्द्रो युनक्तु बहुधा वीर्याण्यस्मिन् यज्ञे सुयुजः स्वाहा ॥११॥

ज्ञानी इन्द्रदेवता आफ्ना पराक्रमलाई विविध किसिमले संयुक्त गराउन यस यज्ञमा आऊन् । हामी उनलाई हवि समर्पित गर्दछौँ ।

अश्विना ब्रह्मणा यातमर्वाञ्चौ वषट्कारेण यज्ञं वर्धयन्तौ । बृहस्पते ब्रह्मणा याह्यर्वाङ् यज्ञो अयं स्वरिदं यजमानाय स्वाहा ॥१२॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै मन्त्र तथा दानले यज्ञलाई समृद्ध गराउँदै हाम्रा नजिक आओ । हे बृहस्पतिदेवता ! तिमी मन्त्रका साथ हाम्रा नजिक आऊ । यो यज्ञ याजकलाई स्वर्ग प्रदान गर्न सक्ने होस् । अश्विनीकुमार र बृहस्पतिदेवताका लागि हामी हवि समर्पित गर्दछौँ ।

## २७. अग्नि सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– अग्नि, इडा, सरस्वती, भारती । **छन्द**– बृहतीगर्भा त्रिष्टुप्, द्विपदा साम्नी भुरिक् अनुष्टुप्, द्विपदार्ची बृहती, द्विपदा साम्नी भुरिक् बृहती, द्विपदा साम्नी त्रिष्टुप्, द्विपदा विराट् गायत्री, द्विपदा साम्नी बृहती, संस्तार पङ्क्ति, षटपदा अनुष्टुप् गर्भा परातिजगती, पुरउष्णिक् ।

ऊर्ध्वा अस्य समिधो भवन्त्यूर्ध्वा शुक्रा शोचींष्यग्नेः । द्युमत्तमा सुप्रतीकः ससूनुस्तनूनपादसुरो भूरिपाणिः ॥१॥

अग्निका समिधा र ज्वाला ऊर्ध्वमुखी भएका छन् । अग्निदेवता अत्यन्त प्रकाशले सम्पन्न तथा मनोहर रूपका छन् । सूर्यजस्तै प्राण प्रदान गर्ने अग्नि अनेकौँ हातले युक्त भएर यज्ञमा छन् ।

देवो देवेषु देवः पथो अनक्ति मध्वा घृतेन ॥२॥

सबै देवताहरूमा यिनै प्रमुख हुन् । यिनले मधु र घिउले मार्गलाई पवित्र गराउँछन् ।

**मध्वा यज्ञं नक्षति प्रैणानो नराशंसो अग्निः सुकृद् देवः सविता विश्ववारः ॥३॥**

मानिसले प्रशंसा गरिएका र सत्कर्म गर्ने सवितादेवता र सबैले वरण गर्ने अग्निदेवता मधुरताले यज्ञलाई संयुक्त गर्दै सबैतिर व्याप्त भएका छन् ।

**अच्छायमेति शवसा घृता चिदीडानो बह्निर्नमसा ॥४॥**

अग्निदेवता घिऊ बल र हविष्यान्नसहित स्तुति प्राप्त गर्दै अगाडि आएका छन् ।

**अग्निः स्रुचो अध्वरेषु प्रयक्षु स यक्षदस्य महिमानमग्नेः ॥५॥**

देवताहरूको अत्यन्त मेल रहेको यस यज्ञमा अग्निदेवता महिमा र स्रुचाहरूका साथमा आफूलाई संलग्न गराउँछन् ।

**तरी मन्द्रासु प्रयक्षु वसवश्चातिष्ठन् वसुधातरश्च ॥६॥**

तारण गर्नमा समर्थ अग्निदेवता र ऐश्वर्यले सम्पन्न गराउने वसुदेवता आनन्द प्रदान गर्ने र देवताहरूलाई एकत्र गराउने यस यज्ञमा विद्यमान रहेका हुन्छन् ।

**द्वारो देवीरन्वस्य विश्वे व्रतं रक्षन्ति विश्वहा ॥७॥**

दिव्यद्वार र विश्वेदेवताले याजकहरूको सङ्कल्प विभिन्न किसिमले सुरक्षा गर्दछन् ।

**उरुव्यचसाग्नेर्धाम्ना पत्यमाने । आ सुष्वयन्ती यजते उपाके अषासानक्तेमं यज्ञमवतामध्वरं नः ॥८॥**

अग्निका विस्तृत धामबाट अवतरण हुने गरेका, गतिशील, साथैमा रहने उषा र नक्ता नामका सन्ध्या र रात्रिका देवीहरूले हाम्रो यस हिंसारहित यज्ञका कार्यलाई सुरक्षा गरून् ।

**दैवा होतार ऊर्ध्वमध्वरं नोऽग्नेर्जिह्वयाभि गृणत गृणता नः स्विष्टये । तिस्रो देवीर्बर्हिरेदं सदन्तामिडा सरस्वती मही भारती गृणाना ॥९॥**

हे दिव्य होताहरू हो ! आफ्ना जिब्राले हाम्रो कल्याण गर्ने उच्चस्तरीय अग्निदेवतालाई तिमीहरू प्रशंसा गर । इडा नामकी पृथ्वी, भारती र सरस्वती यी तीनै देवीहरू गुणगान गर्दै कुशको यस आसनमा विराजमान होऊन् ।

**तन्नस्तुरीपमद्भुतं पुरुक्षु । देव त्वष्टा रायस्पोषं वि ष्य नाभिमस्य ॥१०॥**

हे त्वष्टादेवता ! तिमी यस थैलीमा लगाएको गाँठो फुकाऊ र हामीलाई प्रचुर अन्न, जल तथा ऐश्वर्यले पुष्टि प्रदान गर ।

**वनस्पतेऽव सृजा रराणः । त्मना देवेभ्यो अग्निर्हव्यं शमिता स्वदयतु ॥११॥**

हे वनस्पति ! ध्वनि गर्दै तिमी आफूलाई फुक्का गराऊ र शमन गर्ने अग्निदेवताले हवनीय पदार्थलाई देवताहरूका लागि स्वादिष्ट बनाऊन् ।

**अग्ने स्वाहा कृणुहि जातवेदः । इन्द्राय यज्ञं विश्वे देवा हविरिदं जुषन्ताम् ॥१२॥**

हे जातवेदा अग्निदेवता ! तिमी इन्द्रदेवताका लागि स्वाहा भनेर यज्ञ सम्पन्न गराऊ र समस्त देवताले यो हव्य सेवन गरून् ।

## २८. दीर्घायु सूक्त

**ऋषि–** अथर्वा । **देवता–** त्रिवृत्, अग्नि । **छन्द–** त्रिष्टुप्, पञ्चपदातिशक्वरी, ककुम्मती अनुष्टुप्, पुर उष्णिक् ।

**नव प्राणान्नवभिः सं मिमीते दीर्घायुत्वाय शतशारदाय । हरिते त्रीणि रजते त्रीण्ययसि त्रीणि तपसाविष्ठितानि ॥१॥**

सय वर्षको पूरा आयु प्राप्त गर्नका लागि प्राणलाई शरीरमा रहेका नौ वटा चक्र वा नौ वटा दिव्य धारासित संयुक्त गराउँछौँ । तिनीहरूमध्ये तीन सद्गुणरूपी स्वर्णमय हरियो वर्णका, तीन

रजोगुणरूपी चाँदी वर्णका र तीन तमोगुणरूपी फलाम वर्णका छन् । तिनीहरू तपस्यारूपी ताप अथवा साधनाले उचित किसिमले अडिएका हुन्छन् ।

**अग्निः सूर्यश्चन्द्रमा भूमिरापो द्यौरन्तरिक्षं प्रदिशो दिशश्च । आर्तवा ऋतुभिः संविदाना अनेन मा त्रिवृता पारयन्तु ॥२॥**

अग्नि, सूर्य, चन्द्रमा, पृथ्वी, जल, अन्तरिक्ष, द्युलोक, दिशा, उपदिशा र ऋतु तथा ऋतुहरूका विभाग यी सबैले त्यही त्रिवृत्को संयोगबाट हामीलाई पार लगाऊन् र आफ्नो लक्ष्यसम्म पुऱ्याऊन् ।

**त्रयः पोषास्त्रिवृति श्रयन्तामनक्तु पूषा पयसा घृतेन । अन्नस्य भूमा पुरुषस्य भूमा भूमा पशूनां त इह श्रयन्ताम् ॥३॥**

यी त्रिवृत्हरूमा तीन वटा पुष्टि आश्रित छन् । पूषा नामका पुष्टिका देवताले दुध, घिउ आदिको वृद्धि गर्दै प्रचुर अन्नका साथै पुरुष तथा पशुहरूमा पनि वृद्धि गराऊन् ।

**इममादित्या वसुना समुक्षतेममग्ने वर्धय वावृधानः । इममिन्द्र सं सृज वीर्येणास्मिन् त्रिवृच्छ्रयतां पोषयिष्णु ॥४॥**

हे आदित्यदेवता ! तिमी यस साधकलाई ऐश्वर्यले परिपूर्ण गराऊ । हे अग्निदेवता ! तिमी स्वयं बढेर यिनीहरूलाई पनि बढाऊ । हे इन्द्रदेवता ! तिमी यिनलाई बलले युक्त गराऊ । पालन गर्ने त्रिवृत्ले यिनीहरूमै आश्रय ग्रहण गरोस् ।

**भूमिष्ट्वा पातु हरितेन विश्वभृदग्निः पिपर्त्वयसा सजोषाः । वरुद्भिष्टे अर्जुनं संविदानं दक्षं दधातु सुमनस्यमानम् ॥५॥**

हरियो वर्णका भूमिले उनीहरूलाई सुरक्षा प्रदान गरोस् । विश्वका पोषक तथा प्रेमले सम्पन्न अग्निदेवताले अयस् नामको फलामको कर्मशक्तिले पालन गरून् । औषधियुक्त अर्जुन नामका चन्द्रमाले मनमा शुभ सङ्कल्पका साथमा सामर्थ्य स्थापित गराऊन् ।

**त्रेधा जातं जन्मनेदं हिरण्यमग्नेरेकं प्रियतमं बभूव सोमस्यैकं हिंसितस्य परापतत् । अपामेकं वेधसां रेत आहुस्तत् ते हिरण्यं त्रिवृदस्त्वायुषे ॥६॥**

यो हिरण्य जन्मदेखि नै तीन किसिमको रहेको छ । यसको पहिलो जन्म अग्निदेवताका लागि अति प्रिय रहेको छ, दोस्रो जन्म कुटिएको वा पेलिएको सोमबाट बाहिर निस्केको छ तेस्रो जन्म सारका रूपमा रहेको जलको बीजका रूपमा रहेको छ । हे धारणकर्ता ! यस्तो हिरण्यमय त्रिवृत्ले तिमीलाई आयु प्रदान गरोस् ।

**त्र्यायुषं जमदग्नेः कश्यपस्य त्र्यायुषम् । त्रेधामृतस्य चक्षणं त्रीण्यायूंषि तेऽकरम् ॥७॥**

प्रज्वलित अग्निका रूपमा रहेका जमदग्नि ऋषिको तीन किसिमको आयु, तत्त्वदर्शी कश्यप ऋषिको तीन किसिमको आयु र अमृतत्त्वको तीन किसिमको धारण गर्ने क्षमताको दर्शन, यी तीनै वटाले तिम्रो आयुलाई संस्कारयुक्त र परिपुष्ट गराऊन् ।

**त्रयः सुपर्णास्त्रिवृता यदायन्नेकाक्षरमभिसंभूय शक्राः । प्रत्यौहन्मृत्युममृतेन साकमन्तर्दधाना दुरितानि विश्वा ॥८॥**

एउटै ओंकाररूपी अक्षरमा तीन वटा सुन्दर पर्णले त्रिवृत् तयार गरेर आफैँ समर्थ हुन्छन्, त्यस बेला ती अमृतले युक्त भएर समस्त विकृतिहरूलाई निवारण गर्दै मृत्युलाई पनि पर पुऱ्याउने किसिमका हुन्छन् ।

**दिवस्त्वा पातु हरितं मध्यात् त्वा पात्वर्जुनम् । भूम्या अयस्मयं पातु प्रागाद् देवपुरा अयम् ॥९॥**

हरियो वर्णको हिरण्य वा सत्ले तिमीलाई द्युलोकबाट सुरक्षा गरोस्, सेतो चाँदी रङ्ग वा रजसले मध्यलोकबाट सुरक्षा गरोस् र अयस् वा फलामजस्तो कर्मशक्तिले भूलोकबाट सुरक्षा गरोस् भन्ने खालको यो ज्ञान देवताहरूकै लोकमा प्राप्त भएको छ ।

**इमास्तिस्रो देवपुरास्तास्त्वा रक्षन्तु सर्वतः । तास्त्वं बिभ्रद् वर्चस्व्युत्तरो द्विषतां भव ॥१०॥**

देवताका यी तीन सहरले तिमीलाई चारै तिरबाट सुरक्षा गरून् । तिनले धारण गरेपछि तेजस्वी हुन लागेका शत्रुका तुलनामा तिमी अधिक श्रेष्ठ होऊ ।

**पुरं देवानाममृतं हिरण्यं य आबेधे प्रथमो देवो अग्रे । तस्मै नमो दश प्राचीः कृणोम्यनु मन्यतां त्रिवृदाबधे मे ॥११॥**

देवताको स्वर्णिम नगरी अमृतको स्वरूप हो । जुन प्रमुख देवताहरूले यी त्रितलाई धारण गरेका थिए, तिनलाई हामी आफ्ना दस औँला जोडेर नमस्कार गर्दछौँ । यी त्रिवृत्‌लाई बाँध्न वा धारण गर्न उनै देवताहरूले हामीलाई पनि अनुमति प्रदान गरून् ।

**आ त्वा चृतत्वर्यमा पूषा बृहस्पतिः । अहर्जातस्य यन्नाम तेन त्वाति चृतामसि ॥१२॥**

अर्यमादेवता, पूषादेवता र बृहस्पतिदेवताले उचित किसिमले बाँधून् । प्रत्येक दिन उत्पन्न हुने सूर्यको प्रकाशसरह नै हामी पनि तिनलाई आफूसँग आबद्ध गर्दछौँ ।

**ऋतुभिष्ट्वार्तवैरायुषे वर्चसे त्वा । संवत्सरस्य तेजसा तेन संहनु कृण्मसि ॥१३॥**

हामी आयु तथा वर्चस्‌को प्राप्तिका लागि ऋतुहरू, ऋतुहरूका विभाग तथा संवत्सरलाई पनि उसै तेजस्‌सित एकीकृत गराउँछौँ ।

**घृतादुल्लुप्तं मधुना समक्तं भूमिदृंहमच्युतं पारयिष्णु । भिन्दत् सपत्नानधरांश्च कृण्वदा मा रोह महते सौभगाय ॥१४॥**

तिमी घिउरूपी सारतत्त्वले युक्त, मधुरूपी मधुरताले सिञ्चित, पृथ्वीजस्तै स्थिर र पार लगाउने किसिमका छौ । तिमी शत्रुलाई छिन्नभिन्न गरेर उनलाई होच्याउँदै हामीलाई सौभाग्य प्राप्त गराउनका लागि हामीभन्दा माथि स्थित होऊ ।

## २९. रक्षोघ्न सूक्त

**ऋषि—** चातन । **देवता—** जातवेदा । **छन्द—** त्रिष्टुप्, त्रिपदा विराट् गायत्री, पुरोतिजगती विराट् जगती, भुरिक् अनुष्टुप्, अनुष्टुप्, चतुष्पदा पराबृहती ककुम्मती अनुष्टुप् ।

**पुरस्ताद् युक्तो वह जातवेदोऽग्ने विद्धि क्रियमाणं यथेदम् । त्वं भिषग् भेषजस्यासि कर्ता त्वया गामश्वं पुरुषं सनेम ॥१॥**

हे जातवेद अग्निदेवता ! तिमी औषधिहरूलाई चिनेका वैद्य हौ । तिमी विगतका कार्यको भार वहन गर र वर्तमानमा हुँदै गरेका कार्यहरूलाई पनि जान । तिम्रा सहायताले हामी गाई, घोडा र मानिसले रोगरहितको अवस्था प्राप्त गरौँ ।

**तथा तदग्ने कृणु जातवेदो विश्वेभिर्देवैः सह संविदानः । यो नो दिदेव यतमो जघास यथा सो अस्य परिधिष्पताति ॥२॥**

हे जातवेदा अग्निदेवता ! तिमी समस्त देवताहरूका साथमा मिलेर यस्तो उपाय गर, जसबाट रोगको त्यो परिधि नै समाप्त होस्; जुन रोगले हामीलाई दुःख दिन्छन् र जुन रोगले हामीलाई खान खोजेका छन् ।

**यथा सो अस्य परिधिष्पताति तथा तदग्ने कृणु जातवेदः । विश्वेभिर्देवैः सह संविदानः ॥३॥**

हे जातवेदा अग्निदेवता ! तिमी देवताहरूका साथमा मिलेर यस्तो उपाय गर, जसबाट रोगका सबै घेराबन्दीहरू समाप्त होऊन् ।

**अक्ष्यौ३ नि विध्य हृदयं नि विध्य जिह्वां नि तृन्द्धि प्र दतो मृणीहि । पिशाचो अस्य यतमो जघासाग्ने यविष्ठ प्रति तं शृणीहि ॥४॥**

हे अग्निदेवता ! जुन पिशाचले यिनलाई खाने विचार गरेका छन्, तिनका आँखा र उनको हृदयलाई तिमी छेडिदेऊ, तिनको जिब्रो काटिदेऊ । हे बलवान् अग्निदेवता ! तिनलाई तिमी

विनाश गर ।

**यदस्य हृतं विहृतं यत् पराभृतमात्मनो जग्धं यतमत् पिशाचैः । तदग्ने विद्वान् पुनरा भर त्वं शरीरे मांसमसुमेरयामः ॥५॥**

पिशाचहरूले यिनका शरीरका जुन भागलाई भाँचेका छन्, लुछेका छन्, खोसेका छन् र जुन भाग खाइसकेका छन्, हे जातवेदा अग्निदेवता ! तिमी ती भागहरू सबै भराइदेऊ । हामी यिनका शरीरमा फेरि पनि विधिवत् रूपमा मांस र प्राण स्थापित गर्दछौँ ।

**आमे सुपक्वे शबले विपक्वे यो मा पिशाचो अशने ददम्भ । तदात्मना प्रजया पिशाचा वि यातयन्तामगदो३यमस्तु ॥६॥**

पिशाचरूपी जुन कृमिले काँचा, पाकेका, अच्कल्टा र ज्यादा पाकिसकेका भोजनहरूमा प्रवेश गरेर हामीलाई हानी गर्न खोजिरहेका छन्, त्यस्ता पिशाचहरू आफैँले र तिनका सन्तानले पनि कष्ट भोग्नुपरोस् र यी रोगीहरू निरोग हुन सकून् ।

**क्षीरे मा मन्थे यतमो ददम्भाकृष्टपच्ये अशने धान्ये३ यः । तदात्मना प्रजया पिशाचा वि यातयन्तामगदो३यमस्तु ॥७॥**

जुन पिशाचहरू दुध वा दुधजन्य पदार्थमा र खेतीविना नै उत्पन्न हुने खाद्य पदार्थमा प्रवेश गरेर हामीलाई हानी गर्न खोजिरहेका हुन्छन्, ती पिशाचहरू सबैले शाखासन्तानहरूका साथमा स्वयं पनि दुःख पाऊन् यी रोगीहरू निरोग होऊन् ।

**अपां मा पाने यतमो ददम्भ क्रव्याद् यातूनां शयने शयानम् । तदात्मना प्रजया पिशाचा वि यातयन्तामगदो३यमस्तु ॥८॥**

जुन पिशाचहरू जल पिउँदा वा ओछ्यानमा सुत्ने समयमा पनि हामीलाई दुःख दिन खोजिरहेका हुन्छन्, ती सबै पिशाचहरू आफ्ना शाखासन्तानका साथै पर भागून् र रोगीहरू सबै स्वस्थ होऊन् ।

**दिवा मा नक्तं यतमो ददम्भ क्रव्याद् यातूनां शयने शयानम् । तदात्मना प्रजया पिशाचा वि यातयन्तामगदो३यमस्तु ॥९॥**

जुन पिशाचहरू दिउँसो वा राती बिस्तरामा सुत्ने बेलामा समेत हामीलाई दुःख दिन खोज्दछन् ती सबै पिशाचहरू आफ्ना शाखासन्तानका साथै पर भागून् र रोगीहरू सबै निरोग होऊन् ।

**क्रव्यादमग्ने रुधिरं पिशाचं मनोहनं जहि जातवेदः । तमिन्द्रो वाजी वज्रेण हन्तु च्छिनत्तु सोमः शिरो अस्य धृष्णुः ॥१०॥**

हे जातवेदा अग्निदेवता ! मांसभक्षक, रक्तभक्षक र मन खिन्न गराउने पिशाचहरूलाई तिमी विनाश गर । शक्तिशाली इन्द्रदेवताले तिनलाई वज्रले हानेर मारुन् र निर्भीक सोमदेवताले तिनको टाउको छिनाऊन् ।

**सनादग्ने मृणसि यातुधानान् न त्वा रक्षांसि पृतनासु जिग्युः । सहमूराननु दह क्रव्यादो मा ते हेत्या मुक्षत दैव्यायाः ॥११॥**

हे अग्निदेवता ! दुःख दिने खालका यातुधानहरूलाई तिमी सधैँ विनाश गर्दछौ र सङ्ग्राममा असुरहरूले तिमीलाई पराजित गराउन सक्दैनन् । मांस भक्षण गर्ने असुरलाई तिमी समूल भस्म गराऊ, तिम्रो दिव्य हतियारबाट कुनै उम्किन नपाऊन् ।

**समाहर जातवेदो यद्धृतं यत् पराभृतम् । गात्राण्यस्य वर्धन्तामंशुरिवा प्यायतामयम् ॥१२॥**

हे जातवेदा अग्निदेवता ! यस व्यक्तिको जति भाग हरण गरिसकिएको छ र नष्ट गराइएको छ, त्यस भागलाई तिमी पुनः पूरा गराइदेऊ; जसले गर्दा यसका अङ्गप्रत्यङ्ग सबै पुष्ट भएर चन्द्रमाको जस्तै यसले वृद्धि प्राप्त गरोस् ।

**सोमस्येव जातवेदो अंशुरा प्यायतामयम् । अग्ने विरप्शिनं मेध्यमयक्ष्मं कृणु जीवतु ॥१३॥**

हे जातवेदा अग्निदेवता ! यस पुरुषले चन्द्रमाको कलाजस्तै पुनः वृद्धि प्राप्त गरोस् । हे अग्निदेवता ! तिमी यस निर्दोष व्यक्तिलाई पवित्र एवं निरोग गराऊ, जसले गर्दा यो जीवित रहोस् ।

**एतास्ते अग्ने समिधः पिशाचजम्भनीः । तास्त्वं जुषस्व प्रति चैना गृहाण जातवेदः ॥१४॥**

हे अग्निदेवता ! तिम्रा यी समिधाहरू कृमि वा पिशाचलाई विनाश गर्ने खालका छन् । हे जातवेदा अग्निदेवता ! तिमी यिनलाई स्वीकार गर र यिनलाई ग्रहण गर ।

**तार्ष्टाघीरग्ने समिधः प्रति गृह्णाह्यर्चिषा । जहातु क्रव्याद्रूपं यो अस्य मांसं जिहीर्षति ॥१५॥**

हे अग्निदेवता ! तिमी आफ्नो लप्काले तृष्णा शमन गर्ने खालका समिधाहरूलाई स्वीकार गर । जुन मांसभक्षी पिशाचले यिनको मांस हरण गर्न खोजेका छन्, तिनले आफ्नो रूप छोडून् ।

## ३०. दीर्घायुष्य सूक्त

**ऋषि**— उन्मोचन । **देवता**— आयुष्य । **छन्द**— अनुष्टुप्, पथ्यापङ्क्ति, भुरिक् अनुष्टुप्, चतुष्पदा विराट् जगती, विराट् पस्तारपङ्क्ति, त्र्यवसाना षट्पदा जगती ।

**आवतस्त आवतः परावतस्त आवतः । इहैव भव मा नु गा मा पूर्वाननु गाः पितॄनसुं बध्नामि ते दृढम् ॥१॥**

तिम्रा अत्यन्त नजिकमा रहेर वा अति टाढाबाटै हामी तिम्रा प्राणलाई अति दृढताका साथ बाँध्दछौं । तिमी उहिलेका पुर्खाहरूको अनुसरण नगर, यतै बस ।

**यत् त्वाभिचेरुः पुरुषः स्वो यदरणो जनः । उन्मोचनप्रमोचने उभे वाचा वदामि ते ॥२॥**

तिम्रा आफन्त वा अरू कुनै हीन व्यक्तिहरूले तिमीसित अभिचार गर्दछन् भने तिनबाट छुट्नका लागि वा अलग हुनका लागि हामी उपाय बताउँछौं ।

**यद् दुद्रोहिथ शेपिषे स्त्रियै पुंसे अचित्त्या । उन्मोचनप्रमोचने उभे वाचा वदामि ते ॥३॥**

यदि तिमीले स्त्री वा पुरुषप्रति द्रोह गरेका छौ वा तिनलाई शाप दिएका छौ भनेदेखि त्यसबाट छुटेर पर हुने खालको विधि हामी तिमीलाई सिकाउँछौं ।

**यदेनसो मातृकृताच्छेषे पितृकृताच्च यत् । उन्मोचनप्रमोचने उभे वाचा वदामि ते ॥४॥**

यदि तिमी माता वा पिताले गरेका पापका कारण सुतेका छौ भनेदेखि त्यस पापरूपी रोगबाट छुटेर पर हुने खालको उपाय हामी तिमीलाई सिकाउँछौं ।

**यत् ते माता यत् ते पिता जामिर्भ्राता च सर्जतः । प्रत्यक् सेवस्व भेषजं जरदष्टिं कृणोमि त्वा ॥५॥**

जुन औषधिलाई तिम्रा मातापिता, दाजुभाइ वा दिदीबहिनीले तयार गरेका छन्, त्यो औषधि तिमी उचित किसिमले सेवन गर । तिमीलाई हामी वृद्धअवस्थासम्म बाँच्ने बनाउँछौं ।

**इहैधि पुरुष सर्वेण मनसा सह । दूतौ यमस्य मानु गा अधि जीवपुरा इहि ॥६॥**

हे मानिसहरू हो ! तिमीहरू आआफ्ना सम्पूर्ण मनले जीवित रहँदै यहाँ निवास गर; यमदूतका पछि नलाग ।

**अनुहूतः पुनरेहि विद्वानुदयनं पथः । आरोहणमाक्रमणं जीवतोजीवतोऽयनम् ॥७॥**

तिमी उदाउने वा उन्नति गर्ने मार्ग जान्दछौ । त्यस उदाउने कर्मभन्दा पछि आवाहित भएर फेरि पनि आऊ । उत्तरायण र दक्षिणायन तिम्रो जीवित अवस्थामा नै व्यतीत भइरहून् ।

**मा बिभेर्न मरिष्यसि जरदष्टिं कृणोमि त्वा । निरवोचमहं यक्ष्ममङ्गेभ्यो अङ्गज्वरं तव ॥८॥**

हे रोगी मानिस ! तिमी भयभीत नहोऊ । तिमीलाई हामी यसै लोकमा वृद्धअवस्थासम्म जीवित रहने खालको बनाउँछौं । हामी तिम्रा अङ्गबाट यक्ष्मा र अङ्गको ज्वरोजति सबै बाहिर निकालेर स्वस्थ गराइदिन्छौं ।

**अङ्गभेदो अङ्गज्वरो यश्च ते हृदयामयः । यक्ष्मः श्येन इव प्रापप्तद् वाचा साढः परस्तराम् ॥९॥**

तिम्रा अङ्गको पीडा, अङ्गको ज्वरो, हृदयको रोग र यक्ष्मा नामको रोग यी सबै नै हाम्रो मन्त्ररूपी वाणीका शक्तिले पराजित भएर बाज पक्षी आकाशमा उडेभैँ पर भागेर जानेछन् ।

**ऋषी बोधप्रतीबोधावस्वप्नो यश्च जागृवि : । तौ ते प्राणस्य गोप्तारौ दिवा नक्तं च जागृताम् ॥१०॥**

बोध र प्रतिबोध नामका दुई जना निद्रारहित र जागृत अवस्थाका ऋषिहरू छन् । ती दुवैले तिम्रा प्राणको सुरक्षा गर्दछन् । उनीहरू तिमीभित्र रातदिन जागिरहेका हुन्छन् ।

**अयमग्निरुपसद्य इह सूर्य उदेतु ते । उदेहि मृत्योर्गम्भीरात् कृष्णाच्चित् तमसस्परि ॥११॥**

यी अग्निदेवता नजिकै राख्नका लागि योग्य छन् । तिम्रा लागि यहाँ सूर्यदेवता उदित होऊन् । तिमी घोर अन्धकाररूपी मृत्युबाट निस्केर उदय उन्नति प्राप्त गर ।

**नमो यमाय नमो अस्तु मृत्यवे नमः पितृभ्य उत ये नयन्ति । उत्पारणस्य यो वेद तमग्निं पुरो दधेऽस्मा अरिष्टतातये ॥१२॥**

जसले हामीलाई लिएर जान्छन्, ती यमलाई नमस्कार छ, मृत्युले लिएर गएका पितृहरूलाई हाम्रो नमस्कार छ, मृत्युलाई हाम्रो नमस्कार छ । जुन अग्निदेवताले पार लगाउन जानेका छन्, उनलाई हामी कल्याण वृद्धि होस् भनेर अगाडि प्रस्तुत गर्दछौँ ।

**ऐतु प्राण ऐतु मन ऐतु चक्षुरथो बलम् । शरीरमस्य सं विदां तत् पद्भ्यां प्रति तिष्ठतु ॥१३॥**

प्राण, मन, आँखा र बल यिनका सामु आऊन् । यिनको शरीर बुद्धिकै अनुसार गमन गरोस् र यिनी आफ्नै गोडामा उभिन सकून् ।

**प्राणेनाग्ने चक्षुषा सं सृजेमं समीरय तन्वा३ सं बलेन । वेत्थामृतस्य मा नु गान्मा नु भूमिगृहो भुवत् ॥१४॥**

हे अग्निदेवता ! तिमी यस व्यक्तिलाई प्राण तथा चक्षुले सम्पन्न गराऊ र शरीरलाई बलले भरिपूर्ण गर्नमा प्रेरित गर । हे अग्निदेवता ! तिमीले अमृत चिनेका छौ । यो व्यक्ति यस लोकबाट नजाओस् र धर्तीलाई आफ्नो घर बनाउँदै माटामा नबिलाओस् ।

**मा ते प्राण उप दसन्मो अपानोऽपि धायि ते । सूर्यस्त्वाधिपतिर्मृत्योरुदायच्छतु रश्मिभिः ॥१५॥**

हे रोगले खिइएका मानिस ! तिम्रो प्राण विनाश नहोस् र तिम्रो अपान पनि आच्छादित नहोस् । अधिष्ठाता सूर्यदेवताले आफ्ना किरणले तिमीलाई मृत्यभन्दा माथि उठाऊन् ।

**इयमन्तर्वदति जिह्वा बद्धा परिष्पदा । त्वया यक्ष्मं निरवोचं शतं रोपीश्च तक्मनः ॥१६॥**

भित्रतिर बाँधिएका यस बोल्ने जिब्राले भन्दछ कि यिनीसित रहने गरेको क्षय रोग र ज्वरका सयौँ किसिमका पीडालाई हामी पर भगाउनेछौँ ।

**अयं लोकः प्रियतमो देवानामपराजितः । यस्मै त्वमिह मृत्यवे दिष्टः पुरुष जज्ञिषे । स च त्वानु ह्वयामसि मा पुरा जरसो मृथाः ॥१७॥**

जुन मृत्युलाई निश्चित रूपमा प्राप्त गर्नका लागि तिमी उत्पन्न भएका छौ, त्यस्तो यो अपराजेय मृत्युको लोक देवताहरूका लागि अत्यधिक प्रिय छ, तर पनि हे मानिस ! तिमीलाई हामी आह्वान गर्दछौँ, तिमी वृद्धअवस्थाभन्दा पहिले नमर ।

## ३१. कृत्यापरिहरण सूक्त

**ऋषि**— शुक्र । **देवता**— कृत्यादूषण । **छन्द**— बृहतीगर्भा अनुष्टुप्, पथ्याबृहती, अनुष्टुप्

**यां ते चक्रुरामे पात्रे यां चक्रुर्मिश्रधन्ये । आमे मांसे कृत्यां यां चक्रुः पुनः प्रति हरामी ताम् ॥१॥**

अभिचारकहरूले जुन अभिचार काँचो माटाको भाँडामा गरेका छन्, जुन धान, जौ, गहुँ, तिल, कागुनु आदि मिश्रित अन्नमा गरेकाछन्, जुन कुखुरा आदिका काँचो मासुमा गरेका छन्, त्यस्ता कृत्याहरू हामी अभिचारकमाथि नै फिर्ता गराउँछौँ ।

**यां ते चक्रुः कृकवाकावजे वा यां कुरीरिणि । अव्यां ते कृत्यां यां चक्रुः पुनः प्रति हरामि ताम् ॥२॥**

जुन कृत्या अभिचारकले भाले कुखुरामाथि गरेको छ, जुन प्रचुर रौँ भएका बाखामा गरेको छ अथवा जुन भेडामा गरेको छ, त्यस्तो कृत्या हामी अभिचारकमाथि नै फिर्ता गराउँछौँ ।

**यां ते चक्रुरेकशफे पशूनामुभयादति । गर्दभे कृत्यां यां चक्रुः पुनः प्रति हरामि ताम् ॥३॥**

जुन कृत्या अभिचारकले एउटा खुर हुने पशुमाथि गरेको छ, जुन दुवैतर्फ दाँत हुने गधा आदि पशुमा गरेको छ, त्यस्तो कृत्या हामी अभिचारकमाथि नै फिर्ता गराउँछौँ ।

**यां ते चक्रुरमूलायां वलगं वा नराच्याम् । क्षेत्रे ते कृत्यां यां चक्रुः पुनः प्रति हरामि ताम् ॥४॥**

जुन कृत्या अभिचारकले मानिसले पूजा गर्ने र भक्षण गर्ने पदार्थहरूमा लुकाएर वा खेतमा गरेको छ, त्यस्तो कृत्या हामी अभिचारकमाथि नै फिर्ता गराउँछौँ ।

**यां ते चक्रुर्गार्हपत्ये पूर्वाग्नावुत दुश्चितः । शालायां कृत्यां यां चक्रुः पुनः प्रति हरामि ताम् ॥५॥**

जुन कृत्या नराम्रो चित्त भएका अभिचारकले पूर्वका गार्हपत्य अग्निमा गरेको छ, जुन यज्ञशालामा गरेको छ, त्यस्तो कृत्या हामी अभिचारकमाथि नै फिर्ता गराउँछौँ ।

**यां ते चक्रुः सभायां यां चक्रुरधिदेवने । अक्षेषु कृत्यां यां चक्रुः पुनः प्रति हरामि ताम् ॥६॥**

जुन कृत्या अभिचारकले सभामा गरेको छ, जुन जुवाको खाल वा पासामा गरेको छ, त्यस्तो कृत्या हामी अभिचारकमाथि नै फिर्ता गराउँछौँ ।

**यां ते चक्रुः सेनायां यां चक्रुरिष्वायुधे । दुन्दुभौ कृत्यां यां चक्रुः पुनः प्रति हरामि ताम् ॥७॥**

जुन कृत्या अभिचारकले सेनामा गरेको छ, जुन कृत्या बाण आदि हतियारमा गरेको छ, जुन दुन्दुभि आदि बाजामा गरेको छ त्यस्तो कृत्या हामी अभिचारकमाथि नै फिर्ता गराउँछौँ ।

**यां ते कृत्यां कूपेऽवदधुः श्मशाने वा निचख्नुः । सद्मनि कृत्यां यां चक्रुः पुनः प्रति हरामि ताम् ॥८॥**

जुन कृत्या अभिचारकले कुवा आदि जलाशयमा गरेको छ, जुन कृत्या श्मशानमा गरेको छ र जुन घरमा गरेको छ, त्यस्तो कृत्या हामी अभिचारकमाथि नै फिर्ता गराउँछौँ ।

**यां ते चक्रुः पुरुषास्थे अग्नौ संकसुके च याम् । म्रोकं निर्दाहं क्रव्यादं पुनः प्रति हरामि ताम् ॥९॥**

जुन कृत्या अभिचारकले मानिसका हड्डीमा गरेको छ, जुन कृत्या प्रज्वलित अग्निमा गरेको छ,

त्यस्तो कृत्या हामी त्यही चोर, मांसभक्षी अभिचारकमाथि नै फिर्ता गराउँछौं ।

**अपथेना जभारैणां तां पथेतः प्र हिण्मसि । अधीरो मर्याधीरेभ्यः सं जभाराचित्त्या ॥१०॥**

जुन मानिस अज्ञानतावश, कुमार्गबाट हामी मर्यादापालकमाथि कृत्याको प्रयोग गर्दछ, त्यसै मार्गबाट त्यस्तो कृत्या हामी अभिचारकमाथि नै फिर्ता गराउँछौं ।

**यश्चकार न शशाक कर्तुं शश्रे पादमङ्गुरिम् । चकार भद्रमस्मभ्यमभगो भगवद्भ्यः ॥११॥**

जुन अभिचारक हामीमाथि कृत्या प्रयोग गरेर हामीलाई हातका औंला र गोडाविहीन बनाउने विचार गर्दछ, ऊ त्यसो गर्नमा सक्षम नहोस् । त्यस्ता अभागीले हामी भाग्यशालीमाथि कल्याण नै गरोस् ।

**कृत्याकृतं वलगिनं मूलिनं शपथेय्यम् । इन्द्रस्तं हन्तु महता वधेनाग्निर्विध्यत्वस्तया ॥१२॥**

गोप्य रूपमा काम गर्नेहरू, गालीगलौज गर्नेहरू र अत्यधिक दुःख दिनेहरूलाई इन्द्रदेवताले आफ्ना विशाल हतियारले नष्ट गरून् र अग्निदेवताले आफ्ना ज्वालाले डढाऊन् ।

## ॥इति पञ्चम काण्डम् ॥

पाँचौं काण्ड सकियो ।

ॐ

**ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।**

## अथर्ववेद – संहिता

# ॥अथ षष्ठं काण्डम् ॥

## १. अमृतप्रदाता सूक्त

**ऋषि–** अथर्वा । **देवता–** सविता । **छन्द–** त्रिपदा पिपीलिकमध्या साम्नी जगती, पिपीलिकमध्या पुर उष्णिक् ।

**दोषो गाय बृहद् गाय द्युमद्धेहि आथर्वण स्तुहि देवं सवितारम् ॥१॥**

हे अविचल ब्रह्मज्ञानले सम्पन्न अथर्वा ऋषिका अनुयायी आथर्वणहरू हो ! तिमीहरू बृहत्साम गाओ, राति पनि गाओ र सबैका उन्नति कर्ता सवितादेवताको स्तुति गर ।

**तमु ष्टुहि यो अन्तः सिन्धौ सूनुः । सत्यस्य युवानम द्रोघवाचं सुशेवम् ॥२॥**

जसले यस भवसागरमा सम्पूर्ण जीवलाई प्रेरित गर्दछन्, जो सधैँ नै युवा भएर रहेका छन्, जसले सुख दिन्छन् र जो द्रोहरहित भएर सबैको हित गर्दछन्, उनै सवितादेवताको स्तुति गर ।

**स घा नो देवः सविता साविषदमृतानि भूरि । उभे सुष्टुती सुगातवे ॥३॥**

त्यस्ता किसिमका उनै सवितादेवताले दुवै किसिमका श्रेष्ठ गायन र मन्त्रपाठका आधारमा पर्याप्त मात्रामा हामीलाई अमृत प्रदान गरिरहून् ।

## २. जेताइन्द्र सूक्त

**ऋषि–** अथर्वा । **देवता–** सोम, वनस्पति । **छन्द–** परोष्णिक् ।

**इन्द्राय सोममृत्विजः सुनोता च धावत । स्तोतुर्यो वचः शृणवद्धवं च मे ॥१॥**

हे याजकहरू हो ! हाम्रो प्रार्थना आदरपूर्वक सुनिदिने विजयी इन्द्रदेवताका लागि तिमीहरू सोमरस पेल र उचित किसिमले छान्नेकेलाउने काम गर ।

**आ यं विशन्तीन्दवो वयो न वृक्षमन्धसः । विरप्शिन् वि मृधो जहि रक्षस्विनीः ॥२॥**

जसका सामु रुखका नजिक चराहरू पुगेझैँ गरी सोमरस पुग्ने गर्दछ, त्यस्ता खालका विशिष्ट ज्ञानले सम्पन्न हे इन्द्रदेवता ! तिमी आसुरी वृत्ति भएकाहरूलाई विनाश गर ।

**सुनोता सोमपाव्ने सोममिन्द्राय वज्रिणे । युवा जेतेशानः स पुरुष्टुतः ॥३॥**

अध्वर्युहरू हो ! सोमपान गर्ने, शत्रुको विनाश गर्ने, वज्र धारण गर्ने, इन्द्रदेवताका लागि सोम पेल्ने काम गर । चिरयुवा, सम्पूर्ण जगत्का स्वामी, यजमानको कामना सिद्ध गराउने इन्द्रदेवताको स्तुति गर ।

## ३. आत्मगोपन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** इन्द्रापूषन्, अदिति, मरुद्गण, अपांनपात्, सिन्धुसमूह, विष्णु, द्यौ, द्यावापृथिवी, ग्रावा, सोम, सरस्वती, अग्नि, अश्विनीकुमार, उषासानक्ता, अपांनपात्, त्वष्टा । **छन्द–** जगती, पथ्याबृहती ।

**पातं न इन्द्रापूषणादितिः पान्तु मरुतः । अपां नपात् सिन्धवः सप्त पातन पातु नो पिष्णुरुत द्यौः ॥१॥**

हे इन्द्र र पूषादेवताहरू हो ! तिमीहरू हाम्रो रक्षा गर । देवताहरूकी माता अदिति र उनन्चास मरुत्हरूले हाम्रो रक्षा गरून् । अपांनपात नामका जललाई आफ्ना स्थानबाट विचलित हुन नदिने अन्तरिक्षका विद्युत्रूपी अग्निदेवता एवं सातै समुद्रहरूले हामीलाई रक्षा गरून् । द्युलो र [illegible]लक विष्णुदेवताले पनि हामीलाई रक्षा गरून् ।

**पातां नो द्यावापृथिवी अभिष्टये पातु ग्रावा पातु सोमो नो अंहसः । पातु नो देवी सुभगा सरस्वती पात्वग्निः शिवा ये अस्य पायवः ॥२॥**

अभीष्ट कामना पूरा गराउनका लागि द्युलोक र पृथ्वीलोकले हामीलाई रक्षा गरून् । सोम पेल्ने ढुङ्गा, निकालिएको सोमरस र श्रेष्ठ ऐश्वर्यले सम्पन्न सरस्वती नामकी विद्याकी अधिष्ठात्री देवीले हामीलाई पापबाट जोगाऊन् । अग्निदेवताले आफ्ना रक्षक प्रवाहले हाम्रो सुरक्षा गरून् ।

**पातां नो देवाश्विना शुभस्पती उषासानक्तोत न उरुष्यताम् । अपां नापदभिह्रुती गयस्य चिद् देव त्वष्टर्वर्धय सर्वतातये ॥३॥**

पालनकर्ता अश्विनीदेवताहरूले हामीलाई रक्षा गरून् । उषा र नक्ता नामका दिन र रातका देवीहरूले हामीलाई रक्षा गरून् । मेघको जललाई सुरक्षित राख्ने अग्निदेवताले हिंस्रकहरूबाट हामीलाई जोगाऊन् । हे त्वष्टादेवता ! सबै किसिमको उन्नतिका लागि हामीलाई तिमी उन्नतिशील बनाऊ ।

## ४. आत्मगोपन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** त्वष्टा, पर्जन्य, ब्रह्मणस्पति, अदिति, अंश, भग, वरुण, मित्र, अर्यमा, मरुद्‌गण, अश्विनीकुमार, द्यौष्पिता । **छन्द–** पथ्याबृहती, संस्तार पङ्क्ति, त्रिपदा विराट् गायत्री ।

**त्वष्टा मे दैव्यं वचः पर्जन्यो ब्रह्मणस्पतिः । पुत्रैर्भ्रातृभिरदितिर्नु पातु नो दुष्टरं त्रायमाणं सहः ॥१॥**

सबै कुराको निर्माण गर्ने त्वष्टादेवता, सुखको वर्षा गराउने पर्जन्यदेवता, सत्यज्ञानले सम्पन्न ब्रह्मणस्पतिदेवता र आफ्ना पुत्र तथा दाजुभाइका साथमा अदितिदेवीले हाम्रो देवोचित स्तुति सुनून् । उनीहरूले हाम्रो प्रचण्ड तथा पोषक बलको रक्षा गरून् ।

**अंशो भगो वरुणो मित्रो अर्यमादितिः पान्तु मरुतः । अप तस्य द्वेषो गमेदभिह्रुतो यावयच्छत्रुमन्तितम् ॥२॥**

अंश, भग, वरुण, मित्र, अर्यमा, अदिति र समस्त मरुत्‌गणले हाम्रो रक्षा गरून् । देवताहरूले हाम्रो रक्षा त्यस्ता शत्रुबाट पनि गरून्, जसले हामीलाई विनाश गर्न खोजेका छन् । हामीदेखि टाढा पुगेको त्यस हिंस्रक, द्वेष गर्ने शत्रुलाई अझ पर भगाऊन् ।

**धिये समश्विना प्रावतं न उरुष्या ण उरुज्मन्नप्रयुच्छन् । द्यौश्पितर्यावय दुच्छुना या ॥३॥**

हे अश्विनीकुमारहरू हो ! हाम्रो सद्‌बुद्धि र यज्ञ आदि पवित्र कर्मलाई तिमीहरूले राम्ररी सुरक्षा गर । हे विस्तृत मार्गमा गमन गर्ने वायुदेवता ! प्रमादरहित भएर तिमीले हाम्रो रक्षा गर । हे प्राणीका पालक द्युलोकका देवताहरू हो ! कुकुरको जस्तो दुर्गतियुक्त प्रवृत्तिलाई हामीदेखि धेरै पर भगाइदेओ ।

## ५. वर्चः प्राप्ति सूक्त

**ऋषि–** अथर्वा । **देवता–** अग्नि, इन्द्र । **छन्द–** अनुष्टुप्, भुरिक् अनुष्टुप् ।

**उदेनमुत्तरं नयाग्ने घृतेनाहुत । समेनं वर्चसा सृज प्रजया च बहुं कृधि ॥१॥**

हे अग्निदेवता ! तिमी घिउले आह्वान गर्न योग्य छौ । आफ्ना याजकलाई उत्तम स्थान प्रदान गरेर तिनलाई तिमी श्रेष्ठ बनाऊ, तेजले सम्पन्न गराऊ र पुत्रपौत्रादि सन्तान वृद्धि गराऊ ।

**इन्द्रेमं प्रतरं कृधि सजातानामसद् वशी । रायस्पोषेण सं सृज जीवातवे जरसे नय ॥२॥**

हे इन्द्र ! यी याजकलाई ऊर्ध्वगामी बनाऊ । यिनीहरू तिम्रा कृपाका कारण स्वजातिहरूमा सर्वश्रेष्ठ, स्वतन्त्र र सबैलाई वशमा गर्न सक्ने होऊन् । यिनलाई प्रचुर धन दिएर पुष्ट गराऊ र सुखपूर्वक सय वर्षसम्म बाँच्ने गराऊ ।

**यस्य कृण्मो हविर्गृहे तमग्ने वर्धया त्वम् । तस्मै सोमो अधि ब्रवदयं च ब्रह्मणस्पतिः ॥३॥**

हे अग्निदेवता ! हामी जसका घरमा यज्ञ आदि अनुष्ठान गर्दछौं, त्यसलाई तिमी श्रीसमृद्धिले

सम्पन्न गराऊ । सोम र ब्रह्मणस्पति देवताले आशीर्वचन प्रदान गर ।

## ६. शत्रुनाशन सूक्त

**ऋषि**— अथर्वा । **देवता**— ब्रह्मणस्पति, सोम । **छन्द**— अनुष्टुप् ।

**योऽस्मान् ब्रह्मणस्पतेऽदेवो अभिमन्यते । सर्वं तं रन्धयासि मे यजमानाय सुन्वते ॥१॥**

हे ब्रह्मणस्पति ! देवताको विमुख भएका जुन शत्रुहरूले हामीलाई समाप्त गर्ने विचार गर्दछन्, तिनलाई तिमी सोमयज्ञ गर्ने हाम्रा याजकहरूका वशमा गराऊ ।

**यो नः सोम सुशंसिनो दुःशंस आदिदेशति । वज्रेणास्य मुखे जहि स संपिष्टो अपायति ॥२॥**

हे सोम ! श्रेष्ठ विचार भएका हामीहरूमाथि जुन कटुभाषी शत्रुले शासन गर्न खोज्दछन्, तिनका मुखमा तिमी वज्रले प्रहार गर, जसले गर्दा उनीहरू चूर्ण भएर पर भागून् ।

**यो नः सोमाभिदासति सनाभिर्यश्च निष्ट्यः । अप तस्य बलं तिर महीव द्यौर्वधत्मना ॥३॥**

हे सोम ! स्वजातीय वा विजातीय निकृष्ट जुन शत्रुले हाम्रो विनाश गर्दछन्, अन्तरिक्षबाट खस्ने बिजुलीजस्तै भएर तिमी उनका बल र सैन्यदललाई संहार गर ।

## ७. असुरक्षण सूक्त

**ऋषि**— अथर्वा । **देवता**— सोम, विश्वेदेवा । **छन्द**— निचृत् गायत्री, गायत्री ।

**येन सोमादितिः पथा मित्रा वा यन्त्यद्रुहः । तेना नोऽवसा गहि ॥१॥**

हे सोम ! तिम्रो जुन उचित नियमका कारण देवयान नामका मार्गमा मित्र आदि द्वादश आदित्य र उनीहरूकी माता अदिति एकापसमा नठोकिईकन आवागमन गर्दछन्, तिमी त्यसै खालको भावना लिएर हाम्रो रक्षा गर्नका लागि आऊ ।

**येन सोम साहन्त्यासुरान् रन्धयासि नः । तेना नो अधि वोचत ॥२॥**

हे अपराजित शक्तिले सम्पन्न सोम ! जुन शक्तिले तिमी हाम्रा शत्रुलाई परास्त गर्दछौ, उसै शक्तिका साथमा हामीलाई आशीर्वाद देऊ ।

**येन देवा असुराणामोजांस्यवृणीध्वम् । तेना नः शर्म यच्छत ॥३॥**

हे देवताहरू हो ! तिमीले आफ्ना जुन शक्तिले देवविरोधी असुरको बल र आयुध प्रहार गर्ने शत्रुको बल समाप्त गरेर तिनलाई जितेका थियौ, उसै बलले हामीलाई सुख प्रदान गर ।

## ८. कामात्मा सूक्त

**ऋषि**— जमदग्नि । **देवता**— कामात्मा, सुपर्ण, द्यावापृथिवी, सूर्य । **छन्द**— पथ्यापङ्क्ति

**यथा वृक्षं लिबुजा समन्तं परिषस्वजे । एवा परि ष्वजस्व मां यथा मां कामिन्यसो यथा मन्नापगा असः ॥१॥**

हे देवी ! जसरी लहराहरू रुखको सहारा लिएर माथि फैलिन्छन्, उसै गरी तिमी मेरो कामना गरेर मसित घनिष्टतापूर्वक आबद्ध होऊ, मदेखि पर नजाऊ ।

**यथा सुपर्णः प्रपतन् पक्षौ निहन्ति भूम्याम् । एवा नि हन्मि ते मनो यथा मां कामिन्यसो यथा मन्नापगा असः ॥२॥**

माथि चढ्न लागेका गरूडले जसरी आफ्ना पँखेटालाई तलतिर थिच्दछ, उसै गरी तिमीलाई कामक्षेत्रमा ऊर्ध्वगामी बनाउनका लागि तिम्रो मन आफूसित राख्दछु । त्यसो भएपछि मप्रति कामना राख्दै तिमी मेरा नजिक आउनेछौ ।

**यथेमे द्यावापृथिवी सद्यः पर्येति सूर्यः । एवा पर्येमि ते मनो यथा मां कामिन्यसो यथा मन्नापगा असः ॥३॥**

सूर्य जसरी पृथ्वी आदि लोकहरूमा आफ्नो प्रकाश व्याप्त गराउँछन्, उसै गरी हामी आफ्ना मनबले तिम्रा मनलाई पनि आकर्षित गर्दछौँ । त्यसो भएपछि हामीप्रति कामना राख्दै पर नगई

तिमी हामीतिर आउनेछौ ।

## ९. कामात्मा सूक्त

**ऋषि–** जमदग्नि । **देवता–** कामात्मा, गोसमूह । **छन्द–** अनुष्टुप् ।

**वाञ्छ मे तन्वं पादौ वाञ्छाक्ष्यौ३ वाञ्छ सक्थ्यौ । अक्ष्यौ वृषण्यन्त्याः केशा मां ते कामेन शुष्यन्तु ॥१॥**

तिमी मेरो शरीर र दुई खुट्टाको रहर गर्दछौ । मेरा दुवै आँखा र दुवै तिघ्राको कामना गर्दछौ । मेरा अङ्गप्रत्यङ्गलाई स्नेहपूर्ण दृष्टिले हेर । सेचनको कामना गर्ने तिम्रा आँखा र केशले मेरो चित्तमा सुखद प्रेरणा प्रदान गर्दछन् ।

**मम त्वा दोषणिश्रिषं कृणोमि हृदयश्रिषम् । यथा मम क्रतावसो मम चित्तमुपायसि ॥२॥**

म तिमीलाई आफ्ना बाहु र हृदयमा आश्रय ग्रहण गर्ने बनाउँछु । त्यसो भएपछि तिमी मेरा कार्यमा कुशल हुँदै मेरै चित्तअनुकूल व्यवहार गर्नेछौ ।

**यासां नाभिरारेहणं हृदि संवननं कृतम् । गावो घृतस्य मातरोऽमूं सं वानयन्तु मे ॥३॥**

जसको नाभी हर्षदायक र हृदय स्नेहयुक्त हुन्छ, त्यस्ता स्त्री आदिलाई घिउ उत्पादन गर्ने किरणरूपी गाईका साथ संयुक्त गरौं ।

## १०. संप्रोक्षण सूक्त

**ऋषि–** शन्ताति । **देवता–** अग्नि, वायु, सूर्य । **छन्द–** साम्नी त्रिष्टुप्, प्राजापत्या बृहती, साम्नी बृहती ।

**पृथिव्यै श्रोत्राय वनस्पतिभ्योऽग्नयेऽधिपतये स्वाहा ॥१॥**

विशाल पृथ्वी, शब्द गर्ने इन्द्रिय या पृथ्वीका श्रोत्ररूपी दिशाहरू, वृक्षवनस्पतिका अधिष्ठाता देवता र पृथ्वीका स्वामी अग्निदेवताका लागि यो हवि समर्पित गरिएको छ ।

**प्राणायान्तरिक्षाय वयोभ्यो वायवेऽधिपतये स्वाहा ॥२॥**

सम्पूर्ण जीवमा सञ्चरण गर्ने, सम्पूर्ण जीवलाई चेतन गराउने प्राणका लागि र त्यसको विचरण गर्ने स्थान अन्तरिक्षका लागि आहुति प्रदान गरिएको छ । अन्तरिक्षमा विचरण गर्ने पक्षी र त्यसका अधिष्ठाता देवता र वायुका लागि पनि यो आहुति समर्पित गरिएको छ ।

**दिवे चक्षुषे नक्षत्रेभ्यः सूर्यायाधिपतये स्वाहा ॥३॥**

प्रकाशरूपी द्युलोकका लागि, त्यसलाई ग्रहण गर्ने इन्द्रिय चक्षुका लागि, त्यसका प्रकाशले प्रकाशित नक्षत्रका लागि र त्यसका स्वामी तथा प्राणीहरूका प्रेरक सूर्यका लागि यो आहुति समर्पित गरिएको छ ।

## ११. पुंसवन सूक्त

**ऋषि–** प्रजापति । **देवता–** रेतस्, प्रजापति, अनुमति, सिनीवाली । **छन्द -** अनुष्टुप् ।

**शमीमश्वत्थ आरूढस्तत्र पुंसुवनं कृतम् । तद् वै पुत्रस्य वेदनं तत् स्त्रीष्वा भरामसि ॥१॥**

शमीमाथि अश्वत्थले आरोहण गरेपछि पुंसवन गरिन्छ । त्यसैबाट पुत्र प्राप्तिको योग तयार हुन्छ । त्यस प्रभावलाई हामी स्त्रीहरूले भर्ने गर्दछौं ।

**पुंसि वै रेतो भवति तत् स्त्रियामनु षिच्यते । तद् वै पुत्रस्य वेदनं तत् प्रजापतिरब्रवीत् ॥२॥**

पुरुषत्व नै रेतस्का रूपमा उत्पादक शुक्र बन्दछ । त्यसको आधान स्त्रीमा गरिन्छ अनि त्यसबाट पुत्र उत्पत्तिको योग हुने गर्दछ भन्ने खालको प्रजा उत्पन्नसम्बन्धी प्रजापति नामका देवताको कथन हो ।

**प्रजापतिरनुमतिः सिनीवाल्य चीक्लृपत् । स्त्रैषूयमन्यत्र दधत् पुमांसमु दधदिह ॥३॥**

यस किसिमको अनुशासनभन्दा भिन्न स्थितिका अन्यत्र प्रजापति, अनुमति र सिनिवाली देवीहरू

गर्भ धारण गराउँछन्, त्यस बेला स्त्रैषूय नामले कन्या उत्पन्न हुने योग बन्दछ तर पहिले बताइएको अनुसारको मर्यादामा भने पुत्रको नै उत्पत्ति हुने गर्दछ ।

## १२. सर्पविषनिवारण सूक्त

**ऋषि–** गरुत्मान् । **देवता–** तक्षक । **छन्द–** अनुष्टुप् ।

**परि द्यामिव सूर्योऽहीनां जनिमागमम् । रात्री जगदिवान्यद्धंसात् तेना ते वारये विषम् ॥१॥**

जसरी सूर्यले द्युलोकलाई जान्दछन्, उसै गरी हामी पनि सबै खालका सर्पको जन्मका विषयमा जान्दछौँ । जसरी रात्रिले संसारलाई सूर्यभन्दा पर गराउँछ, उसै गरी हामी पनि विषको निवारण गर्दछौँ ।

**यद् ब्रह्मभिर्यदृषिभिर्यद् देवैर्विदितं पुरा । यद् भूतं भव्यमासन्वत् तेना ते वारये विषम् ॥२॥**

ब्राह्मण, ऋषि र देवताहरूले जुन उपचारलाई पहिले जानेका थिए, जो भूत र भविष्यत् यी दुवै कालमा रहने गर्दछन्, त्यसले हामी तिमीहरूजस्ता सर्पको विष हटाउँछौँ ।

**मध्वा पृञ्चे नद्यः पर्वता गिरयो मधु । मधु परुष्णी शीपाला शमास्ने अस्तु शं हृदे ॥३॥**

सर्पको विषले ग्रस्त पारेका रोगीलाई मधुले सेचन गर्दछौँ । नदी, पर्वत, सानातिना टाकुरा यी सबैले मधुरूपी औषधिले भरिएका स्थानहरू हुन् । शीपाला नामका शान्तिदायक वनस्पति, परुष्णी नामका भुमरी परेका धाराहरू अथवा त्यस्तो नामका नदी यी सबै नै मधुले भरिएका छन् । विषनाशक मधु हृदय र मुखका लागि शान्ति प्रदान गर्ने खालको होस् ।

## १३. मृत्युञ्जय सूक्त

**ऋषि–** अथर्वा । **देवता–** मृत्यु । **छन्द–** अनुष्टुप् ।

**नमो देववधेभ्यो नमो राजवधेभ्यः । अथो ये विश्यानां वधास्तेभ्यो मृत्यो नमोऽस्तु ते ॥१॥**

देवता वा विद्वान् ब्राह्मणको घात गर्ने आयुधहरूलाई हामी नमस्कार गर्दछौँ । राजाका संहारकारक अस्त्रशस्त्रहरूलाई हामी नमस्कार गर्दछौँ । वैश्य, धनीहरूले मृत्युबाट बचाउने हुनाले तिनीहरूलाई नमस्कार गर्दछौँ ।

**नमस्ते अधिवाकाय परावाकाय ते नमः । सुमत्यै मृत्यो ते नमो दुर्मत्यै त इदं नमः ॥२॥**

हे मृत्यु ! तिम्रो पक्षपातपूर्ण कुराको सूचना दिने दूतलाई हामी नमस्कार गर्दछौँ । तिम्रो पराजयको सूचना प्रदान गर्ने दूतहरूलाई हामी नमस्कार गर्दछौँ । हे मृत्यु ! तिम्रो कृपालु बुद्धिलाई नमस्कार गर्दछौँ र तिम्रो दण्ड प्रदान गर्ने कठोर बुद्धिलाई पनि हामी नमस्कार गर्छौं ।

**नमस्ते यातुधानेभ्यो नमस्ते भेषजेभ्यः । नमस्ते मृत्यो मूलेभ्यो ब्राह्मणेभ्य इदं नमः ॥३॥**

हे मृत्यु ! मेरा लागि तिमीलाई बोलाउने रोग आदि यातुधानलाई हामी नमस्कार गर्दछौँ र तिमीबाट रक्षा गरिने औषधिहरूलाई हामी नमस्कार गर्दछौँ । तिमीहरूलाई प्राप्त गराउने मूल कारणहरूलाई पनि हामी नमस्कार गर्दछौँ । यस्ता तिमीलाई र आशीर्वाद दिनमा समर्थ ब्राह्मणलाई पनि हामी नमस्कार गर्दछौँ ।

## १४. बलासनाशन सूक्त

**ऋषि–** बभ्रुपिङ्गल । **देवता–** बलास । **छन्द–** अनुष्टुप् ।

**अस्थिस्रंसं परुस्रंसमास्थितं हृदयामयम् । बलासं सर्वं नाशयाङ्गेष्ठा यश्च पर्वसु ॥१॥**

शरीरका हड्डी र जोर्नीहरू दुखाउने, शरीरको बल नाश गराउने, दम, खोकी आदि रोग हृदय एवं यो शरीरमा व्याप्त भएको छ । हे मन्त्रका शक्ति ! तिनलाई तिमी पर हटाइदेऊ ।

**निर्बलासं बलासिनः क्षिणोमि मुष्करं यथा । छिनद्म्यस्य बन्धनं मूलमूर्वार्वा इव ॥२॥**

जसरी कमलको डाँठ सजिलैसित उखेल्न सकिन्छ उसै गरी बलविनाशक कफले सताइएका रोगीको क्षयरोगलाई हामी उखेल्दछौँ । जसरी पाकेको फल बोटबाट आफैँ खस्दछ, उसै गरी यसको बन्धनबाट शरीरलाई सजिलै हामी छुटाउँछौँ ।

**निर्बलासेतः प्र पताशुङ्गः शिशुको यथा । अथो इट इव हायनोऽप द्राह्यवीरहा ॥३॥**

हे बलविनाशक बलास नामका रोग ! जसरी कुदिरहेको शुशुक नामको मृग परसम्म पुग्न सक्छ, हे वीरलाई नाश गर्ने ! तिमी पनि हाम्रा शरीरबाट त्यसरी नै पर भाग । जसरी बितेको वर्ष फर्किएर आउँदैन, उसै गरी तिमी हाम्रा सन्तानहरूलाई दुःख नदिने गरी पर भाग, फेरि यता नआऊ ।

## १५. शत्रुनिवारण सूक्त

**ऋषि–** उद्दालक । **देवता–** वनस्पिति । **छन्द–** अनुष्टुप् ।

**उत्तमो अस्योषधीनां तव वृक्षा उपस्तयः । उपस्तिरस्तु सोऽस्माकं यो अस्माँ अभिदासति ॥१॥**

हे वनस्पति ! तिमी औषधिहरूमा सर्वश्रेष्ठ छौ । अन्य वृक्षहरू तिम्रा अनुगामी हुन् । जुन रोग हामीमाथि अधिकार जमाउन चाहन्छन्, ती सबै हाम्रा अधीनमा होऊन् ।

**सबन्धुश्चासबन्धुश्च यो अस्माँ अभिदासति । तेषां सा वृक्षाणामिवाहं भूयासमुत्तमः ॥२॥**

जसरी वृक्षहरूमा औषधि प्रवाहित गर्ने वृक्षलाई श्रेष्ठ मानिन्छ, उसै गरी बन्धुहरूका साथमा या एक्लो भएका अवस्थामा जसले हाम्रो अहित गर्न खोजेका हुन्छन्, तिनका बीचमा हामी नै श्रेष्ठ हुन सकौं ।

**यथा सोम ओषधीनामुत्तमो हविषां कृतः । तलाशा वृक्षाणामिवाहं भूयासमुत्तमः ॥३॥**

जसरी वृक्षहरूमा तलाश नामको वृक्ष वा आश्रय प्राप्त गराउने वृक्षहरूमा औषधि वृक्ष वा सोम वृक्ष सर्वश्रेष्ठ हुन्छन् हामी पनि त्यस्तै हुन सकौं ।

## १६. अक्षिरोगभेषज सूक्त

**ऋषि–** शौनक । **देवता–** चन्द्रमा । **छन्द–** निचृत् त्रिपदा गायत्री, अनुष्टुप्, बृहतीगर्भा ककुम्मती अनुष्टुप्, त्रिपदा प्रतिष्ठा गायत्री ।

**आबयो अनाबयो रसस्त उग्र आबयो । आ ते करम्भमद्मसि ॥१॥**

हे औषधि विशेष वा चन्द्रमाका रूपमा रहेका आबय ! तिमीसित खान योग्य उग्र रोगनाशक रस छ । तिम्रो यो स्वरूप दुवै किसिमको मिश्रण वा करम्भका रूपमा रहेको छ ।

**विहह्लो नाम ते पिता मदावती नाम ते माता । स हि न त्वमसि यस्त्वमात्मानमावयः ॥२॥**

विहह्ल नामको चमत्कारी र मदावती नामको मात लगाउने वनस्पतिहरू तिम्रा माता र पिता हुन् भन्ने प्रसिद्ध छ । जसले तिमीलाई खाद्यका रूपमा तयार गरे, तिनीहरू ती मातापिताभन्दा भिन्न हुन् ।

**तौविलिकेऽवेलयावायमैलब ऐलयीत् । बभ्रुश्च बभ्रुकर्णश्चापेहि निराल ॥३॥**

हे तौवालिक नामका औषधि ! हामीलाई शक्ति दिएर तिमी रोगहरूलाई नाश गर । एलब नामको यो आँखाको रोग यहाँबाट हटोस् । रोगका कारणहरूका साथमा बभ्रु र बभ्रुकर्ण नामका रोगहरू पनि यो शरीर छोडेर भागून् र निराल नामको रोग पनि यहाँबाट हटोस् ।

**अलसालासि पूर्वा सिलाञ्जालास्युत्तरा । नीलागलसाला ॥४॥**

हे आलस्यविनाश गर्ने अलसाला नामका मञ्जरी ! तिमी सबैभन्दा पहिले ग्रहण गर्न योग्य हुनाले पूर्वा हौ । हे शलाञ्जला नामका सस्य मञ्जरी ! तिमी अणुअणुमा पुग्न सक्ने र अन्त्यमा ग्रहण गरिने हुनाले उत्तरा नाम भएकी छ्यौ । हे नीलागलसाला नामका औषधि ! तिमीलाई बीचमा ग्रहण गर्ने गरिन्छ ।

## १७. गर्भदृंहण सूक्त

**ऋषि–** अथर्वा । **देवता–** गर्भदृंहण, पृथिवी । **छन्द–** अनुष्टुप् ।

**यथेयं पृथिवी मही भूतानां गर्भमादधे । एवा ते ध्रियतां गर्भो अनु सूतुं सवितवे ॥१॥**

हे स्त्री ! जसरी यो विशाल पृथ्वी नै सम्पूर्ण प्राणीहरूलाई बीजका रूपमा गर्भमा धारण गर्दछ, उसै गरी तिम्रो गर्भ पनि प्रसवको समयसम्म दस महिना स्थिर होस् ।

**यथेयं पृथिवी मही दाधारेमान् वनस्पतीन् । एवा ते ध्रियतां गर्भो अनु सूतुं सवितवे ॥२॥**

जसरी यस विशाल पृथ्वीले पहाड, घाटी आदिका साथमा वृक्षवनस्पतिलाई दृढतापूर्वक धारण गरेको छ, उसै गरी तिम्रो गर्भाशयमा रहेको तिम्रो यो गर्भ पनि प्रसवको उचित समयसम्म सहज प्रसवका लागि स्थिर भएर रहोस् ।

**यथेयं पृथिवी मही दाधार पर्वतान् गिरीन् । एवा ते ध्रियतां गर्भो अनु सूतुं सवितवे ॥३॥**

विशाल पृथ्वीले जसरी विभिन्न किसिमले विभक्त, व्यवस्थित चर एवं अचर जगत्‌लाई आफूभित्र धारण गरेको छ, उसै गरी तिम्रो यो गर्भ पनि प्रसवको उचित समयसम्म स्थिर भएर रहोस् ।

**यथेयं पृथिवी मही दाधार विष्ठितं जगत् । एवा ते ध्रियतां गर्भो अनु सूतुं सवितवे ॥४॥**

जसरी यो विशाल धर्तीले विविध स्वरूप भएका जगत्‌लाई धारण गरेको छ, उसै गरी तिम्रो यो गर्भ पनि प्रसव कालसम्म उचित किसिमले स्थित रहोस् ।

## १८. ईर्ष्याविनाशन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** ईर्ष्याविनाशन । **छन्द–** अनुष्टुप् ।

**ईर्ष्याया ध्राजिं प्रथमां प्रथमस्या उतापराम् । अग्निं हृदय्यं१ शोकं तं ते निर्वापयामसि ॥१॥**

हे ईर्ष्यालु मानिस ! तिम्रो ईर्ष्याबाट हुने प्रथम गति, त्यसपछिको गति र त्यसबाट उत्पन्न हुने हृदयको सन्ताप, अग्नि र शोकलाई हामी सधैँका लागि आफूबाट टाढा पुऱ्याउँछौँ ।

**यथा भूमिर्मृतमना मृतान्मृतमनस्तरा । यथोत मम्रुषो मन एवेर्ष्योर्मृतं मनः ॥२॥**

जसरी भूमि मन मरेझैँ संवेदनहीन भएर मरेका मानिसभन्दा पनि बढी मृत मनको को हुन्छ, उसै गरी ईर्ष्यालुको मन पनि मरेको हुन्छ ।

**अदो यत् ते हृदि श्रितं मनस्कं पतयिष्णुकम् । ततस्त ईर्ष्यां मुञ्चामि निरूष्माणं दृतेरिव ॥३॥**

हे ईर्ष्याग्रस्त पुरुष ! व्यक्तिलाई पतनको मार्गमा लिएर जाने, हृदयमा रहेको ईर्ष्याग्रस्त विचारलाई उसै गरी बाहिर निकालौँ, जसरी शिल्पकारले खलाँतीका सहायताले वायुलाई बाहिर निकाल्ने गर्दछ ।

## १९. पावमान सूक्त

**ऋषि–** शन्ताति । **देवता–** चन्द्रमा, देवजन, मनुवंशी, विश्वाभूतानि (समस्त प्राणी, पवमान, सविता । **छन्द–** गायत्री, अनुष्टुप् ।

**पुनन्तु मा देवजनाः पुनन्तु मनवो धिया । पुनन्तु विश्वा भूतानि पवमानः पुनातु मा ॥१॥**

देवताहरूले मलाई पवित्र गराऊन्, विद्वान् मानिसले हाम्रो बुद्धि र कर्मलाई पवित्र गराऊन् । सबै प्राणीसमुदायले हामीलाई पवित्र गराऊन् । पवित्रकर्ता वायु र सोमदेवताले पनि हामीलाई पवित्र गराऊन् ।

**पवमानः पुनातु मा क्रत्वे दक्षाय जीवसे । अथो अरिष्टतातये ॥२॥**

हे पवित्र सोमदेवता ! हामीलाई तिमी पापमुक्त र पवित्र गराऊ ! कर्म गर्नका लागि, शक्ति प्राप्त गर्नका लागि, दीर्घ जीवन प्राप्त गर्नका लागि र हरेक किसिमको कल्याणका लागि पवित्रकर्ता देवताहरूले हामीलाई पवित्र गराऊन् ।

**उभाभ्यां देव सवितः पवित्रेण सवेन च । अस्मान् पुनिहि चक्षसे ॥३॥**

हे सबैका प्रेरणास्रोतका रूपमा रहेका सवितादेवता ! तिमी यस लोक र परलोकका सबै सुख प्राप्त गर्नका लागि आफ्नो पवित्रकर्ता साधन तेजले र प्रेरणा एवं यज्ञले हामीलाई पवित्र गर ।

## २०. यक्ष्मनाशन सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** यक्ष्मनाशन । **छन्द–** अतिजगती, ककुम्मती प्रस्तारपङ्क्ति, सतःपङ्क्ति ।

**अग्नेरिवास्य दहत एति शुष्मिण उतेव मत्तो विलपन्नपायति । अन्यमस्मदिच्छतु कं चिदव्रतस्तपुर्वधाय नमो अस्तु तक्मने ॥१॥**

आगोले झैँ शरीर जलाउने गरी यो ज्वरो व्याप्त भएको छ । उन्मत्तको जस्तै प्रलाप गर्दै, परालोक गमन गर्दछ, यस्तो प्रबल ज्वरो कुनै अनियमित व्यक्तिसितै जाओस् । तापरूपी अस्त्रले मार्ने र जीवनलाई दुःखी गराउने ज्वरलाई हामी नमस्कार गर्दछौँ ।

**नमो रुद्राय नमो अस्तु तक्मने नमो राज्ञे वरुणाय त्विषीमते । नमो दिवे नमः पृथिव्यै नम ओषधीभ्यः ॥२॥**

रुद्रदेवतालाई हाम्रो नमस्कार छ, दुःख दिने ज्वरलाई हामी नमस्कार गर्दछौँ, तेजस्वी राजा वरुण, द्युलोक, पृथिवी र औषधिहरू सबैलाई हामी नमस्कार गर्दछौँ ।

**अयं यो अभिशोचयिष्णुर्विश्वा रूपाणि हरिता कृणोषि । तस्मै तेऽरुणाय बभ्रवे नमः कृणोमि वन्याय तक्मने ॥३॥**

दुःखी गराउने, सबै स्वरूपलाई नै पहेँलो तेजहीन पार्ने, त्यस लाखौँ किसिमको खैरो रङ्का वनमा फैलने ज्वरलाई हामी नमस्कार गर्दछौँ ।

## २१. केशवर्धनी ओषधि सूक्त

**ऋषि**— शन्ताति । **देवता**— चन्द्रमा । **छन्द**— अनुष्टुप् ।

**इमा यास्तिस्रः पृथिवीस्तासां ह भूमिरुत्तमा । तासामधि त्वचो अहं भेषजं समु जग्रभम् ॥१॥**

तीनै लोकमा श्रेष्ठ, लौकिक र पारलौकिक कर्मलाई उचित फल प्रदान गर्ने, त्वचाजस्ता भूमिमा उत्पन्न भएको व्याधि निवारक यस औषधिलाई हामी ग्रहण गर्दछौँ ।

**श्रेष्ठमसि भेषजानां वसिष्ठं वीरुधानाम् । सोमो भग इव यामेषु देवेषु वरुणो यथा ॥२॥**

हे हरिद्रा नामका औषधि ! दिन र रातका बीचमा सोम नामको शान्तिदायक चन्द्रमा र तेजस्वी सूर्य भएझैँ तिमी सबै औषधिहरूमा श्रेष्ठ छौ र अन्य बुटीहरूमा सबैभन्दा उत्तम, अधिक रसले सम्पन्न, गुण तथा वीर्यले समृद्ध छौ । सबै देवताहरूमा वरुण सर्वश्रेष्ठ राजा हुन् उसै गरी तिमी पनि सबैभन्दा श्रेष्ठ छौ ।

**रेवतीरनाधृषः सिषासवः सिषासथ । उत स्थ केशदृंहणीरथो ह केशवर्धनीः ॥३॥**

हे सामर्थ्यशाली औषधिहरू हो ! तिमीहरू सबैलाई आरोग्य प्रदान गर्दछौ र बल प्रदान गर्ने हुनाले हिंसित गर्ने खालका छैनौ । त्यसो भएको हुनाले नै तिमीहरू आरोग्य प्रदान गर्ने इच्छा गर । केश बढाउनका लागि सफल सिद्ध होओ ।

## २२. भैषज्य सूक्त

**ऋषि**— शन्ताति । **देवता**— आदित्य, रश्मि, मरुद्गण । **छन्द**— त्रिष्टुप्, चतुष्पदा भुरिक् जगती ।

**कृष्णं नियानं हरयः सुपर्णा अपो वसाना दिवमुत् पतन्ति । त आववृत्रन्त्सदनादृतस्यादिद् घृतेन पृथिवीं व्यू दुः ॥१॥**

श्रेष्ठ गतिमान् सूर्यको किरण आफूसितै जललाई उठाउँदै सबैको आकर्षणको केन्द्र यानरूपी सूर्यमण्डलका नजिकै पुगेको छ । त्यहाँ अन्तरिक्षको मेघमा रहेको जललाई बर्साउँदै पृथ्वीलाई सेचन गर्दछ ।

**पयस्वतीः कृणुथाप ओषधीः शिवा यदेजथा मरुतो रुक्मवक्षसः । उर्जं च तत्र सुमतिं च पिन्वत यत्रा नरो मरुतः सिञ्चथा मधु ॥२॥**

हे मरुत्हरू हो ! स्वर्णआभूषणलाई हृदयमा धारण गरेर तिमीहरू गतिमान् हुनाले रसमय जल र अन्न आदि औषधिहरूले सुख प्राप्त गर्दछन् । हे देवताहरू हो ! जहाँ जलको वर्षा हुन्छ, त्यहाँ नै शक्तिदाता अन्न उत्तम बुद्धिको स्थापना हुन्छ ।

**उदप्लुतो मरुतस्ताँ इयर्त वृष्टिर्या विश्वा निवतस्पृणाति । एजाति ग्लहा कन्येव तुन्नैरुं तुन्दाना पत्येव जाया ॥३॥**

हे जल बर्साउने मरुत्हरू हो ! जुन वृष्टिले अन्न आदि सबै धान फलाउने र होचा ठाउँहरू पानीले भराउने गर्दछ, तिमीहरू त्यसै वर्षालाई पत्नीले पतिलाई प्रेरित गरेझैं प्रेरित गर । वर्षा गराउनका लागि गर्जिने मेघले दुःखी कन्याले मातापितालाई कम्पायमान गराएझैं सबैलाई कम्पायमान गराइरहोस् ।

## २३. अपांभैषज्य सूक्त

**ऋषि**— शन्ताति । **देवता**— आपः । **छन्द**—अनुष्टुप्, त्रिपदा गायत्री, परोष्णिक् ।

**सस्रुषीस्तदपसो दिवा नक्तं च सस्रुषीः । वरेण्यक्रतुरहमपो देवीरुप ह्वये ॥१॥**

हामी असल कर्म गर्ने मानिसहरू निरन्तर गतिमान् जलधारामा प्रवाहित दिव्य अप नामको सृष्टिको मूल सक्रिय तत्त्व जललाई आह्वान गर्दछौं ।

**ओता आपः कर्मण्या मुञ्चन्त्वितः प्रणीतये । सद्यः कृण्वन्त्वेतवे ॥२॥**

सर्वत्र व्याप्त, निरन्तर गतिमान् जलका धाराहरू क्रियाशक्ति उत्पन्न गरेर हामीलाई यस्ता हीनताबाट मुक्त गराऊन् र हामीले शीघ्र प्रगति गर्न सकौं ।

**देवस्य सवितुः सवे कर्म कृण्वन्तु मानुषाः । शं नो भवन्त्वप ओषधीः शिवाः ॥३॥**

सबैलाई प्रेरित गर्ने, सबै कुरा उत्पन्न गर्ने सवितादेवताका प्रेरणाले सबै मानिसले आआफ्ना बुद्धिले लौकिक र पारलौकिक दुवै किसिमको काम गरून् । कल्याणकारी औषधिको वृद्धि होस् र हाम्रा लागि जल कल्याणकारी सिद्ध होस् र त्यसै जलले पापलाई क्षय गराओस् ।

## २४. अपांभैषज्य सूक्त

**ऋषि**— शन्ताति । **देवता**— आपः । **छन्द**—अनुष्टुप् ।

**हिमवतः प्रस्रवन्ति सिन्धौ समह संगमः । आपो ह मह्यं तद् देवीर्ददन् हृद्द्योतभेषजम् ॥१॥**

हिउँले ढाकिएका पर्वतका जलधाराहरू बहँदै गएर समुद्रमा मिसिन्छन् । त्यस्ता पापनाशक जलका धाराहरूले हाम्रा हृदयको जलनलाई शान्त गराउनका लागि हामीलई औषधिहरू प्रदान गरून् ।

**यन्मे अक्ष्योरादिद्योत पार्ष्ण्योः प्रपदोश्च यत् । आपस्तत् सर्वं निष्करन् भिषजां सुभिषक्तमाः ॥२॥**

हाम्रा आँखा, कुर्कुच्चा, गोडाको अघिल्लो भाग आदिलाई जुनजुन रोगले सताइरहेका छन्, ती सबै दुःखलाई वैद्यहरूका पनि उत्तम वैद्य बनेर जलले हाम्रा शरीरबाट निकालेर बाहिर फालिदियोस् ।

**सिन्धुपत्नीः सिन्धुराज्ञीः सर्वा या नद्य१ स्थन । दत्त नस्तस्य भेषजं तेना वो भुनजामहै ॥३॥**

हे जलधाराहरू हो ! तिमीहरू समुद्रका पत्नी हौ, समुद्र तिमीहरूको पति हो । हे निरन्तर बग्ने धाराहरू हो ! हामीलाई पीडाबाट मुक्त हुन सक्ने औषधि तिमीहरू देओ । त्यसले हामी आफू र आफन्तहरू सबै निरोगी भएर अन्न आदि बल प्रदायक वस्तु उपभोग गर्न सकौं ।

## २५. मन्याविनाशन सूक्त

**ऋषि**— शुनःशेप । **देवता**— मन्याविनाशन । **छन्द**—अनुष्टुप् ।

**पञ्च च याः पञ्चाशच्च संयन्ति मन्या अभि । इतस्ताः सर्वा नश्यन्तु वाका अपचितामिव ॥१॥**

गलामाथिका नसामा पच्पन्न किसिमका गलगण्डका फोकाफोकीहरू देखिएका छन् । यस औषधिका प्रयोगले तिनीहरू पतिव्रता नारीका सामु गरिएका दोषपूर्ण वचन नाश भएझैं नाश होऊन् ।

**सप्त च याः सप्ततिश्च संयन्ति ग्रैव्या अभि । इतस्ताः सर्वा नश्यन्तु वाका अपचितामिव ॥२॥**

गलामा सतहत्तर किसिमका दुःखपीडाहरू छन्, यस औषधिका प्रयोगले तिनीहरू पतिव्रता नारीका सामु गरिएका दोषपूर्ण वचन नाश भएझैँ नाश होऊन् ।

**नव च या नवतिश्च संयन्ति स्कन्ध्या अभि । इतस्ताः सर्वा नश्यन्तु वाका अपचितामिव ॥३॥**

काँधका चारैतिर फैलिएका उनान्सय किसिमका गलगण्डहरू छन्, यस औषधिका प्रयोगले तिनीहरू पतिव्रता नारीका सामु गरिएका दोषपूर्ण वचन नाश भएझैँ नाश होऊन् ।

## २६. पाप्मनाशन सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– पाप्मा । **छन्द**–अनुष्टुप् ।

**अव मा पाप्मन्त्सृज वशी सन् मृडयासि नः । आ मा भद्रस्य लोके पाप्मन् धेह्यविह्रुतम् ॥१॥**

हे पापका अभिमानी देवता ! हे पापी ! तिमीले मलाई वशमा गराएर दुःख दिन्छौ, अब सुखी गराऊ । हे पापी ! मेरा लागि तिमी सरल र निष्कपट रूपमा स्थापित होऊ ।

**यो नः पाप्मन् न जहासि तमु त्वा जहिमो वयम् । पथामनु व्यावर्तनेऽन्यं पाप्मानु पद्यताम् ॥२॥**

हे पापी ! यदि तिमी मलाई छोड्दैनौ भनेदेखि तिमीलाई हामी चौबाटाको यस अनुष्ठानमा बलपूर्वक छोडिदिन्छौँ । त्यसो भएपछि तिमी असत्‌गामी मानिसहरूसँग जानेछौ ।

**अन्यत्रास्मन्न्युच्यतु सहस्राक्षो अमर्त्यः । यं द्वेषाम तमृच्छतु यमु द्विष्मस्तमिज्जहि ॥३॥**

इन्द्रजस्ता सहस्रौँ विचार भएका हे कहिल्यै विनाश नहुने पाप ! हामीदेखि पर जाऊ । हामीसित द्वेष गर्ने असत्ती विचार भएकाहरू जोजो छन्, तिनीहरूलाई नै नष्ट गराऊ ।

## २७. अरिष्टक्षयण सूक्त

**ऋषि**– भृगु । **देवता**– यम, निर्ऋति । **छन्द**– जगती, त्रिष्टुप् ।

**देवाः कपोत इषितो यदिच्छन् दूतो निर्ऋत्या इदमाजगाम । तस्मा अर्चाम कृणवाम निष्कृतिं शं नो अस्तु द्विपदे शं चतुष्पदे ॥१॥**

हे देवताहरू हो ! पापका देवताले दूतका रूपमा प्रेरित गरेको यो कपोत नामको पक्षी जुन शुभ वा अशुभ सन्देश लिएर हामीलाई कष्ट दिन आएको छ हामी त्यसको अशुभ निवारणका लागि हव्य आदिको कर्म गरेर तिमीहरूलाई पूजा गर्दछौँ । हाम्रा छोरानाति आदि दुई खुट्टे र गाईअश्व आदि चार खुट्टेमा पर्ने अनिष्ट निवारण गर्नका लागि यो कपोत आउँदा पर्ने दोष निवारण होस् ।

**शिवः कपोत इषितो नो अस्त्वनागा देवाः शकुनो गृहं नः । अग्निर्हि विप्रो जुषतां हविर्नः परि हेतिः पक्षिणी नो वृणक्तु ॥२॥**

हे देवताहरू हो ! हाम्रा घरमा आएको यो कपोत कल्याणकारी र निष्कलङ्कको सूचक होस् अनि त्यसका प्रभावले हाम्रा घरमा कुनै अशुभ कार्य नहोस् । हे विद्वान् अग्निदेवता ! हामीले समर्पित गरेको हव्य ग्रहण गरेर यो कपोत आउँदा हुन जाने अनिष्ट वा यसको आयुधलाई निवारण गर ।

**हेतिः पक्षिणी न दभात्यस्मानाष्ट्री पदं कृणुते अग्निधाने । शिवो गोभ्य उत पुरुषेभ्यो नो अस्तु मा नो देवा इह हिंसीत् कपोतः ॥३॥**

पँखेटाको आयुध लिएका कपोतले हामीलाई विनाश गर्न नसकोस् । अग्निशालाका अग्निनजिकै त्यसले आफ्ना खुट्टा राखोस् र त्यो हाम्रा गाई आदि पशु र आफन्तहरूका लागि कल्याणकारी बनोस् । हे देवताहरू हो ! यस कपोत पक्षीले हाम्रो विनाश नगरोस् ।

## २८. अरिष्टक्षयण सूक्त

**ऋषि**— भृगु । **देवता**— यम, निर्ऋति । **छन्द**—त्रिष्टुप्, अनुष्टुप्, जगती ।

**ऋचा कपोतं नुदत प्रणोदमिषं मदन्तः परि गां नयामः । संलोभयन्तो दुरिता पदानि हित्वा न ऊर्जां प्र पदात् पथिष्ठः ॥१॥**

हे देवताहरू हो ! तिमीहरूका मन्त्रले पर हटाउनुपर्ने कपोतलाई पर हटाओ । यस कपोतले हाम्रो अन्नशाला छोडेर उडोस् । हामी यस कपोतका अशुभ पदचिह्नलाई मेटाइदिन्छौँ र अन्नले तृप्त भएर गाईलाई घुमाउँछौँ ।

**परीमेऽग्निमर्षत परीमे गामनेषत । देवेष्वक्रत श्रवः क इमाँ आ दधर्षति ॥२॥**

यी शमन गर्ने अग्निलाई सबैतिर स्थापित गरिएको छ । यिनले गाईरूपी किरणहरूलाई चारैतिर पुऱ्याएका छन् । देवशक्तिले यश आर्जन गरिसकेको छ । यसो हुँदा अब यिनलाई कसले भयभीत गर्न सक्दछ ?

**यः प्रथमः प्रवतमाससाद बहुभ्यः पन्थामनुपस्पशानः । योऽस्येशे द्विपदो यश्चतुष्पदस्तस्मै यमाय नमो अस्तु मृत्यवे ॥३॥**

यमदेवता अन्य देवताहरूमा प्रमुख हुन् । उनले प्राणीको मृत्युका समयको गणना गरेर क्रम मिलाएर त्यसको फल दिने गर्दछन् । दुई खुट्टे मानिस र चार खुट्टे गाई आदि पशुका मृत्युका प्रेरक यम देवतालाई हामी नमस्कार गर्दछौँ ।

## २९. अरिष्टक्षयण सूक्त

**ऋषि**— भृगु । **देवता**— यम, निर्ऋति । **छन्द**— विराट् गायत्री, त्र्यवसाना सप्तपदा विराडष्टि ।

**अमून् हेतिः पतत्रिणी न्येतु यदुलूको वदति मोघमेतत् । यद् वा कपोतः पदमग्नौ कृणोति ॥१॥**

पर देखिने शत्रुहरूसम्म प्वाँख जडिएका हतियारहरू पुगून् । अशुभ बोल्ने उल्लु र गोडालाई अग्निका नजिक राख्ने अशुभ सूचना दिने यो कपोत पनि बलहीन होस् ।

**यौ ते दूतौ निर्ऋत इदमेतोऽप्रहितौ प्रहितौ वा गृहं नः । कपोतोलूकाभ्यामपदं तदस्तु ॥२॥**

हे निर्ऋति नामका पापका देवता ! दूतका रूपमा आएका यी उल्लु र कपोत तिमीले पठाएका होऊन् वा तिमीले नपठाईकन आएका होऊन्, यिनले हाम्रा घरमा आएर आश्रय पाउनेछैनन् ।

**अवैरहत्यायेदमा पपत्यात् सुवीरताया इदमा ससद्यात् । पराङेव परा वद पराचीमनु संवतम् । यथा यमस्य त्वा गृहेऽरसं प्रतिचाकशानाभूकं प्रतिचाकशान् ॥३॥**

हाम्रा वीरहरूका लागि, उल्लु र कपोतका अशुभ चिह्न अहिंसक होऊन् । हाम्रा वीरहरूलाई असफल भएर फर्किनुपर्ने स्थिति नआओस् । हे यमका दूतका रूपमा आएका कपोत ! जसरी तिम्रा स्वामी यमदेवताका घरमा रहेका प्राणीले तिमीलाई निर्वीर्य देख्दछन्, हामी पनि त्यस्तै देख्दछौँ ।

## ३०. पापशमन सूक्त

**ऋषि**— उपरिबभ्रव । **देवता**— शमी । **छन्द**— जगती, त्रिष्टुप्, चतुष्पदा शंकुत्यनुष्टुप् ।

**देवा इमं मधुना संयुतं यवं सरस्वत्यामधि मणावचर्कृषुः । इन्द्र आसीत् सीरपतिः शतक्रतुः कीनाशा आसन् मरुतः सुदानवः ॥१॥**

सरस्वती नदीका किनारमा मानिसहरूलाई देवताहरूले रसयुक्त मधुर यव दिएका छन् । त्यस बेला भूमिमा धान्य उब्जाउनका लागि असल दानी मरुत्गण किसान बनेका थिए र इन्द्रदेवता हलोका अधिपति भएका थिए ।

**यस्ते मदोऽवकेशो विकेशो येनाभिहस्यं पुरुषं कृणोषी । आरात्त्वदन्या वनानि वृक्षि त्वं शमि शतवल्शा वि रोह ॥२॥**

हे शमी ! तिम्रो आनन्ददायक रस केश उत्पन्न गर्ने र बढाउने खालको छ । त्यसले तिमी पुरुषलाई हर्षित गराउँछौ । तिनी सयौँ किसिमका हाँगाबिँगाका साथमा बढ । तिमीलाई छोडेर हामी अरू नै वृक्षहरू काट्दछौँ ।

**बृहत्पलाशे सुभगे वर्षवृद्ध ऋतावरि । मातेव पुत्रेभ्यो मृड केशेभ्यः शमि ॥३॥**

हे सौभाग्यकारी, ठूला पात भएका, वर्षाका जलले बढ्ने गरेका शमी नामका औषधि वृक्ष ! माताले जसरी पुत्रलाई सुख दिन्छन्, उसै गरी तिमी पनि केशलाई सुख देऊ ।

## ३१. गौ सूक्त

**ऋषि**– उपरिब्रभव । **देवता**– गौ । **छन्द**– गायत्री ।

**आयं गौः पृश्निरक्रमीदसदन्मातरं पुरः । पितरं च प्रयन्त्स्वः ॥१॥**

निरन्तर पोषण प्रदान गर्ने सूर्यले गाईका रूपमा रहेर प्राणीहरूलाई उत्पन्न गर्ने माता पृथ्वीलाई अगाडि बढाउने गर्दछन् । यिनले पिता द्युलोकलाई पनि प्रकाशले भरिपूर्ण गराउँछन् ।

**अन्तश्चरति रोचना अस्य प्राणादपानतः । व्यख्यन्महिषः स्वः ॥२॥**

प्राण र अपानको भरमा रहेका प्राणीहरू जति छन् ती सबैका शरीरमा सूर्यकै प्रभा विचरण गर्दछ । यी महान् सूर्यदेवता स्वर्ग र समस्त माथिल्ला लोकमा पनि प्रकाश फिँजाउँछन् ।

**त्रिंशद् धामा वि राजति वाक् पतङ्गो अशिश्रियत् । प्रति वस्तोरहर्द्युभिः ॥३॥**

दिन र रात्रिका अवयवका रूपमा रहेका तीस मुहूर्त यिनै सूर्यदेवताका आभाले प्रत्येक क्षण देदीप्यमान रहेका हुन्छन् । वाणी पनि तीव्र गमनशील सूर्यदेवताको आश्रय लिएर रहन्छ ।

## ३२. यातुधानक्षयण सूक्त

**ऋषि**– चातन, अथर्वा । **देवता**– अग्नि, रुद्र, मित्रावरुण । **छन्द**– त्रिष्टुप्, प्रस्तार पङ्क्ति ।

**अन्तर्दावे जुहुता स्वेश्तद् यातुधानक्षयणं घेतेन । आराद् रक्षांसि प्रति दह त्वमग्ने न नो गृहाणामुप तीतपासि ॥१॥**

हे ऋत्विक्हरू हो ! स्वास्थ्यका लागि हानीकारक यातुधानहरूलाई नष्ट गर्नका लागि प्रज्वलित अग्निमा घिउसहितको हवि आहुतिका रूपमा प्रदान गर । हे अग्निदेवता ! तिमी यी उपद्रवी राक्षसजस्ता रोगका कीटाणुहरूलाई भस्म गराएर हाम्रा घरलाई दुःखी हुनबाट जोगाऊ ।

**रुद्रो वो ग्रीवा अशरैत् पिशाचाः पृष्टीर्वोऽपि शृणातु यातुधानाः । वीरुद् वो विश्वतोवीर्या यमेन समजीगमत् ॥२॥**

हे पिशाचहरू हो ! रुद्रदेवताले तिम्रो गर्धन भाँचिदिएका छन्, तिमीहरूको मांसपेशी भत्काएका छन् । हे यातुधानहरू हो ! अनन्त वीर्यले सम्पन्न औषधिले तिमीहरूलाई यमलोक पुर्‍याउँछ ।

**अभयं मित्रावरुणाविहास्तु नोऽर्चिषात्त्रिणो नुदतं प्रतीचः । मा ज्ञातारं मा प्रतिष्ठां विदन्त मिथो विघ्नाना उप यन्तु मृत्युम् ॥३॥**

हे मित्रावरुण ! हामी निर्भयतापूर्वक यस देशमा निवास गर्न सकौँ । तिमी आफ्ना तेजले मांसभक्षक राक्षसहरूलाई हामीदेखि पर भगाऊ । यिनलाई भूमि र आश्रय दिने कोही पनि नभेटियोस् र आपसमा नै लडाइँ गरेर यिनीहरू मरुन् ।

## ३३. इन्द्रस्तव सूक्त

**ऋषि**– जाटिकायन । **देवता**– इन्द्र । **छन्द**– गायत्री, अनुष्टुप् ।

**यस्येदमा रजो युजस्तुजे जना वनं स्वः । इन्द्रस्य रन्त्यं बृहत् ॥१॥**

हे मानिसहरू हो ! शत्रुलाई विनाश गर्नका लागि प्रेरणा दिने, जुन मनोरञ्जक ज्योतिले सम्पन्न इन्द्रदेवता छन्, उनैको परम सुखदाता, सेवनीय तेजलाई सेवन गर ।

**नाधृष आ दधृषते धृषाणो धृषितः शवः । पुरा यथा व्यथिः श्रव इन्द्रस्य नाधृषे शवः ॥२॥**
अरू सबैबाट सम्माननीय इन्द्रदेवताले तिमीहरूका शत्रुलाई दमन गरिदिन्छन् । वृत्रासुरको वध गर्ने बेलामा उनको जुन बल दमन गर्न नसकिने खालको थियो, त्यो बल आज पनि उसै किसिमको अदमनीय छ ।

**स नो ददातु तां रयिमुरुं पिशङ्गसंदृशम् । इन्द्रः पतिस्तुविष्टमो जनेष्वा ॥३॥**
इन्द्रदेवता देवता तथा मानिसहरूका स्वामी हुन् र सबै किसिमले श्रेष्ठ पनि छन् । उनले हामी सबैलाई पहेँलो वर्णको आभासम्पन्न धन प्रदान गरून् ।

## ३४. शत्रुनाशन सूक्त

**ऋषि**— चातन । **देवता**— अग्नि । **छन्द**— गायत्री ।

**प्राग्नये वाचमीरय वृषभाय क्षितीनाम् । स नः पर्षदति द्विषः ॥१॥**
हे स्तोताहरू हो ! त्यस्ता अग्निदेवतालाई स्तुति गर्ने खालका वाणी उच्चारण गर जसले यातुधानहरूको विनाश गर्न सक्दछन् र इच्छा पूरा गराउन सक्छन् । उनै अग्निदेवताले हामीलाई राक्षसपिशाच आदि द्वेष गर्ने शत्रुबाट जोगाउँछन् ।

**यो रक्षांसि निजूर्वत्यग्निस्तिग्मेन शोचिषा । स नः पर्षदति द्विषः ॥२॥**
जुन अग्निदेवता यातुधानहरूलाई आफ्ना तीखा तेजले विनाश गर्दछन्, उनै अग्निदेवताले हामीलाई राक्षसपिशाच आदि द्वेष गर्ने शत्रुबाट जोगाउँछन् ।

**यः परस्याः परावतस्तिरो धन्वातिरोचते । स नः पर्षदति द्विषः ॥३॥**
जुन अग्निदेवता जलरहित मरुस्थलको बालुवालाई अति तातो गराउँदै चम्कने गर्दछन् उनै अग्निदवताले हामीलाई राक्षसपिशाच आदि द्वेष गर्ने शत्रुबाट जोगाउँछन् ।

**यो विश्वाभि विपश्यति भुवना सं च पश्यति । स नः पर्षदति द्विषः ॥४॥**
जुन अग्निदेवता समस्त भुवनहरूमा विभिन्न रूपमा अनेकौँ किसिमले प्रकाश फैलाउँछन् र सूर्यको रूपमा प्रकट हुन्छन् उनै अग्निदवताले हामीलाई राक्षसपिशाच आदि द्वेष गर्ने शत्रुबाट जोगाउँछन् ।

**यो अस्य पारे रजसः शुक्रो अग्निरजायत । स नः पर्षदति द्विषः ॥५॥**
जुन अग्निदेवता विद्युत् वा सूर्यका रूपमा यस पृथ्वीभन्दा निकै पर अन्तरिक्षमा प्रकट भएका छन् उनै अग्निदेवताले हामीलाई राक्षसपिशाच आदि द्वेष गर्ने शत्रुबाट जोगाउँछन् ।

## ३५. वैश्वानर सूक्त

**ऋषि**— कौशिक । **देवता**— वैश्वानर । **छन्द**— गायत्री ।

**वैश्वानरो न ऊतय आ प्र यातु परावतः । अग्निर्नः सुष्टुतीरुप ॥१॥**
सबै मानिसका हितैषि वैश्वानर अग्निदेवता हाम्रो रक्षा गर्नका लागि दूर देशबाट आऊन् र सुन्दर स्तुति सुनून् ।

**वैश्वानरो न आगमदिमं यज्ञं सजूरुप । अग्निरुक्थेष्वंहसु ॥२॥**
सबै मानिसका हितैषि वैश्वानर अग्निदेवताले हाम्रो सुन्दर स्तुति सुनून् र प्रसन्न भएर हाम्रा यस यज्ञमा आऊन् ।

**वैश्वानरोऽङ्गिरसां स्तोममुक्थं च चाक्लृपत् । ऐषु द्युम्नं स्वर्यमत् ॥३॥**
सबै मानिसका हितैषि वैश्वानर अग्निदेवताले हाम्रा स्तोत्रलाई समर्थ बनाए र यश एवं अन्न प्राप्त गर्ने रीति सिकाउँदै स्वर्गको सुख प्राप्त गराए ।

## ३६. वैश्वानर सूक्त

**ऋषि**— अथर्वा । **देवता**— अग्नि । **छन्द**— गायत्री ।

**ऋतावानं वैश्वानरमृतस्य ज्योतिषस्पतिम् । अजस्रं घर्ममीमहे ॥१॥**
यज्ञात्मक ज्योतिका अधिपति र यज्ञस्वरूप, सधैँ देदीप्यमान रहने वैश्वानर नामका अग्निदेवतालाई हामी उपासना गर्दै उनीबाट श्रेष्ठ फलको याचना गर्दछौँ ।

**स विश्वा प्रति चाक्लृप ऋतूंरुत् सृजते वशी । यज्ञस्य वय उत्तिरन् ॥२॥**

यी वैश्वानर अग्निदेवता समस्त प्रजालाई फल प्रदान गर्दछन् । यी देवताहरूलाई हविष्यान्न प्राप्त गराउने र सूर्यका रूपमा वसन्त आदि ऋतुको नीति निर्माण गर्दछन् ।

**अग्निः परेषु धामसु कामो भूतस्य भव्यस्य । सम्राडेको वि राजति ॥३॥**

उत्तम धामका स्वामी अग्निदेवता नै हुन् । भूत, वर्तमान र भविष्यत् कालका कामनाहरू पूरा गराउने यी अग्निदेवता अधिक दीप्तिले सम्पन्न हुने गरेका छन् ।

## ३७. शापनाशन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** चन्द्रमा । **छन्द–** अनुष्टुप् ।

**उप प्रागात् सहस्राक्षो युक्त्वा शपथो रथम् । शप्तारमन्विच्छन् मम वृक इवाविमतो गृहम् ॥१॥**

हजारौँ किसिमका दृष्टि भएका इन्द्रदेवता रथमा आरुढ भएर हाम्रा नजिक आऊन् र हामीलाई शाप दिनेहरूलाई जसरी ब्वाँसाले भेडाहरूलाई नाश गर्दछ, त्यसै किसिमले नष्ट गरून् ।

**परि णो वृङ्ग्धि शपथ ह्रदमग्निरिवा दहन् । शप्तारमत्र नो जहि दिवो वृक्षमिवाशनिः ॥२॥**

हे शपथ ! तिमी बाधक नबन, हामीलाई छोडिदेऊ र जुन शत्रुले हामीलाई शाप दिने गरेका छन्, उनलाई चट्याङले जसरी रुख ढढाउँछ, त्यसरी नै भस्म गराऊ ।

**यो न शपादशपतः शपतो यश्च नः शपात् । शुने पेष्ट्रमिववाक्षामं तं प्रत्यस्यामि मृत्यवे ॥३॥**

हामी कसैलाई शाप दिँदैनौँ तर यदि कसैले हामीलाई शाप दियो वा कठोर भाषा बोल्यो भनेदेखि त्यस्ता शत्रुलाई हामी मृत्युका मुखमा त्यसरी नै फ्याँक्दछौँ, जसरी कुकुरका अगाडि खाओस् भनेर रोटी फ्याँक्ने गरिन्छ ।

## ३८. वर्चस्य सूक्त

**ऋषि–** अथर्वा । **देवता–** बृहस्पति, त्विषि । **छन्द–** त्रिष्टुप् ।

**सिंहे व्याघ्र उत या पृदाकौ त्विषिरग्नौ ब्राह्मणे सूर्ये या । इन्द्रं या देवी सुभगा जजान सा न ऐतु वर्चसा संविदाना ॥१॥**

सिंह, बाघ र सर्पमा जुन तेज हुन्छ, अग्निदेवतामा, ब्राह्मणमा, सूर्यदेवतामा जुन हुन्छ र जुन तेजले इन्द्रदेवता प्रकट भएका हुन्, त्यही वर्धमान तेज प्राप्त होस् भनेर इच्छा हामी गर्दछौँ ।

**या हस्तिनि द्वीपिनि या हिरण्ये त्विषिरप्सु गोषु या पुरुषेषु । इन्द्रं या देवी सुभगा जजान सा न ऐतु वर्चसा संविदाना ॥२॥**

जुन तेज हात्ती र बाघमा छ, जुन तेज स्वर्णमा, जलमा, गाईमा र मानिसमा छ, जुन तेजले इन्द्रदेवता प्रकट भएका हुन्, त्यही वर्धमान तेज प्राप्त होस् भनेर इच्छा हामी गर्दछौँ ।

**रथे अक्षेष्वृषभस्य वाजे वाते पर्जन्ये वरुणस्य शुष्मे । इन्द्रं या देवी सुभगा जजान सा न ऐतु वर्चसा संविदाना ॥३॥**

आवागमनको साधन रथका अक्षमा, सेचनशक्तियुक्त साँढेमा, तीव्रगामी वायुमा, वर्षाकारक मेघमा र उसका अधिपति वरुणमा जुन तेज छ र जुन तेजले इन्द्रदेवता प्रकट भएका हुन्, त्यही वर्धमान तेज प्राप्त होस् भनेर इच्छा हामी गर्दछौँ ।

**राजन्ये दुन्दुभावायतायामश्वस्य वाजे पुरुषस्य मायौ । इन्द्रं या देवी सुभगा जजान सा न ऐतु वर्चसा संविदाना ॥२॥**

राज्याभिषेकका समयमा बज्ने दुन्दुभी आदि बाजामा, घोडाका तीव्र गमनमा, पुरुषका उच्च स्वरमा जुन त्विषि नामको तेज छ र जुन तेजले इन्द्रदेवता प्रकट भएका हुन्, त्यही वर्धमान तेज प्राप्त होस भनेर इच्छा हामी गर्दछौँ ।

## ३९. वर्चस्य सूक्त

**ऋषि–** अथर्वा । **देवता–** बृहस्पति, त्विषि । **छन्द–** जगती, त्रिष्टुप्, अनुष्टुप् ।

**यशो हविर्वर्धतामिन्द्रजूतं सहस्रवीर्यं सुभृतं सहस्कृतम् । प्रसर्स्राणमनु दीर्घाय चक्षसे हविष्मन्तं मा वर्धय ज्येष्ठतातये ॥१॥**

असीमित शक्तिले सम्पन्न, पराजय गराउने खालको, बल प्रदान गर्नमा समर्थ, प्रसारित हुने खालको यश प्रदान गर्ने हवि वृद्धि होस् । हे इन्द्रदेवता यस किसिमले वृद्धि हुने हविबाट प्रसन्न भएर हामी हवि प्रदान गर्ने यजमानलाई तिमी श्रेष्ठ प्रगतितर्फ लैजाऊ ।

**अच्छा न इन्द्रं यशसं यशोभिर्यशस्विनं नमसाना विधेम । स नो रास्व राष्ट्रमिन्द्रजूतं तस्य ते रातौ यशसः स्याम ॥२॥**

सामनेमा उपस्थित रहेका इन्द्रदेवतालाई हामी नमस्कार आदिका साथमा पूजा गर्दै सेवा गर्दछौं । हे इन्द्रदेवता ! हामीलाई तिमी राज्य र यश प्रदान गर ।

**यशा इन्द्रो यशा अग्निर्यशाः सोमो अजायत । यशा विश्वस्य भूतस्याहमस्मि यशस्तमः ॥३॥**

इन्द्रदेवता र अग्निदेवताले यशको कामना गर्दछन् । सोमदेवता पनि यशको नै कामना गर्दै उत्पन्न भएका हुन् । यिनीहरू जसरी यशस्वी बन्दछन्, उसरी नै हामी पनि समस्त मानिस आदि जीवहरूमा यशस्वी बनौं ।

## ४०. अभय सूक्त

**ऋषि–** अथर्वा । **देवता–** द्यावापृथिवी, सोम, सविता, अन्तरिक्ष, सप्तर्षिगण, इन्द्र । **छन्द–** जगती, अनुष्टुप् ।

**अभयं द्यावापृथिवी इहास्तु नोऽभयं सोमः सविता नः कृणोतु । अभयं नोऽस्तूर्व१न्तरिक्षं सप्तऋषीणां च हविषाभयं नो अस्तु ॥१॥**

हे द्यावापृथिवी ! तिमीहरूका कृपाले हामी भयभीत हुनुनपरोस् । अन्तरिक्ष, चन्द्रदेवता र सूर्यदेवताले हामीलाई निर्भय गराऊन् । सप्तर्षिहरूले प्रदान गरेका हविले हामीलाई निर्भयता प्रदान गरोस् ।

**अस्मै ग्रामाय प्रदिशश्चतस्र ऊर्जं सुभूतं स्वस्ति सविता नःकृणोतु । अशत्र्विन्द्रो अभयं नः कृणोत्वन्यत्र राज्ञामभि यातु मन्युः ॥२॥**

हे सूर्यदेवता ! तिमी यस्तो कृपा गर, जसबाट हामी गाउँमा पर्याप्त अन्न प्राप्त गरेर कुशलतापूर्वक बस्न सकौं । इन्द्रदेवताका कृपाले हामीसित राजा प्रसन्न होऊन् । उनै इन्द्रदेवताका कृपाले हामीलाई शत्रुको डर आइनलागोस् ।

**अनमित्रं नो अधरादनमित्रं न उत्तरात् । इन्द्रानमित्रं नः पश्चादनमित्रं पुरस्कृधि ॥३॥**

हे इन्द्रदेवता ! तिमी प्रसन्न भएर यस्तो कृपा गर, जसबाट उत्तर, दक्षिण, पूर्व र पश्चिमका दिशाहरूमा हाम्रो कुनै शत्रु नहोस् । हामीसित कसैले रिसडाह नगरोस् ।

## ४१. दीर्घायुप्राप्ति सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** चन्द्रमा, सरस्वती, दिव्य ऋषिगण । **छन्द–** भुरिक् अनुष्टुप्, अनुष्टुप्, त्रिष्टुप् ।

**मनसे चेतसे धिय आकूतय उत चित्तये । मत्यै श्रुताय चक्षसे विधेम हविषा वयम् ॥१॥**

मन, चित्त, बुद्धि, मति, श्रुति र चक्षुका शक्तिको वृद्धिका लागि हामी आहुतिले इन्द्रदेवतालाई प्रसन्न गराउँछौं ।

**अपानाय व्यानाय प्राणाय भूरिधायसे । सरस्वत्या उरुव्यचे विधेम हविषा वयम् ॥२॥**

अपान, व्यान र धेरै किसिमले धारण गरिने प्राणको वृद्धिका लागि हामी विस्तृत प्रभावशाली सरस्वती देवीलाई हविद्वारा सेवा गर्दछौं ।

**मा नो हासिषुर्ऋषयो दैव्या ये तनूपा ये नस्तन्वस्तनूजाः । अमर्त्या मर्त्यौंअभि नः सचध्वमायुर्धत्त प्रतरं जीवसे नः ॥३॥**

दिव्य सप्तर्षिहरूले हाम्रा शरीरको रक्षा गरून् । जो हाम्रा शरीरमा उत्पन्न भएका छन्, तिनले हामीलाई नत्यागून् । अमर देवताहरूले हामी मरणशीलहरूको अनुकूल रहेर श्रेष्ठ र दीर्घ जीवन प्रदान गरून् ।

## ४२. परस्परचित्तैकीकरण सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** मन्यु । **छन्द–** भुरिक् अनुष्टुप्, अनुष्टुप् ।

**अव ज्यामिव धन्वनो मन्युं तनोमि ते हृदः । यथा संमनसौ भूत्वा सखायाविव सचावहै ॥१॥**

धनुर्धरले जसरी धनुषमा चढेको ताँदो खसाल्दछन्, उसै गरी हामी तिम्रा हृदयबाट क्रोधलाई ओराल्दछौँ । त्यसो भएर हामी परस्परमा मित्रवत् रहनेछौँ ।

**सखायाविव सचावहा अव मन्युं तनोमि ते । अधस्ते अश्मनो मन्युमुपास्यामसि यो गुरुः ॥२॥**

एकापसमा मन मिलाउँदै हामी एक मन भएर कार्य गरौँ । त्यसै कारणले हामी तिम्रो क्रोधको भारी ढुङ्गामुनि फ्याँकिदिन्छौँ ।

**अभि तिष्ठामि ते मन्युं पार्ष्ण्या प्रपदेन च । यथावशो न वादिषो मम चित्तमुपायसि ॥३॥**

हे रिसाएका देवता ! हामी तिम्रो रिसलाई गोडाका अचिल्ला भाग र कुर्कुच्चाले कुल्चन्छौँ । त्यसो भएपछि तिमी शान्त भएर हाम्रा चित्तको अनुकूल बन र अनियन्त्रित रहने खालको कुरो नगर ।

## ४३. मन्युशमन सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** मन्युशमन । **छन्द–** अनुष्टुप् ।

**अयं दर्भो विमन्युकः स्वाय चारणाय च । मन्योर्विमन्युकस्यायं मन्युशमन उच्यते ॥१॥**

सामुन्ने अगाडि जुन कुश ठडिएको छ, त्यो स्वयं आफ्नै र अरूको पनि क्रोध नष्ट गर्न सक्ने खालको छ । यो स्वाभाविक रूपमा क्रोधी पुरुष र कारणवश क्रोध गर्नेहरूको क्रोध शान्त गर्नमा समर्थ छ ।

**अयं यो भूरिमूलः समुद्रमवतिष्ठति । दर्भः पृथिव्या उत्थितो मन्युशमन उच्यते ॥२॥**

धेरै जरा भएको, समुद्रझैँ मनग्गे पानीको स्रोतका नजिक उत्पन्न हुने, पृथ्वीमा उम्रिएको यो दर्भ क्रोध शान्त गर्ने हो भन्ने गरिन्छ ।

**वि ते हनव्यां शरणिं वि ते मुख्यां नयामसि । यथावशो न वादिशो मम चित्तमुपायसि ॥३॥**

हे क्रोधका देवता ! तिम्रा चिउँडाको नसा क्रोधले फुर्न लाग्दा हामी त्यसलाई शान्त गराउँछौँ र मुखमण्डलमा क्रोधका कारण उत्पन्न भएका चिह्नहरूलाई पनि हामी शान्त गराउँछौँ । तिमी क्रोधमा अताल्लिएर जे पायो त्यही नबोल र हाम्रो चित्तको अनुकूल होऊ ।

## ४४. रोगनाशन सूक्त

**ऋषि–** विश्वामित्र । **देवता–** वनस्पति । **छन्द–** अनुष्टुप्, त्रिपदा महाबृहती ।

**अस्थाद् द्यौरस्थात् पृथिव्यस्थाद् विश्वमिदं जगत् । अस्थुर्वृक्षा ऊर्ध्वस्वप्नास्तिष्ठाद् रोगो अयं तव ॥१॥**

जसरी ग्रहनक्षत्रले भरिएको यो द्युलोक स्थिर रहेको छ, यो पृथ्वी सबै प्राणीको आधार बनेर स्थिर रहेको छ, ठाडै निदाउने गरेका वृक्ष स्थिर छन्, उसै गरी यो रक्तस्राव हुने रोग थामियोस् ।

**शतं या भेषजानि ते सहस्रं संगतानि च । श्रेष्ठमास्रवभेषजं वसिष्ठं रोगनाशनम् ॥२॥**

हे रोगी ! तिमीसित सयौँ किसिमका औषधिहरू छन् र तिनको जुन हजारौँ खालको सम्मिश्रण छ

तिनीहरूमध्ये सबैभन्दा धेरै लाभप्रद जुन औषधि हो, त्यो नै रोग शमन गर्नमा विशिष्ट प्रभावशाली रहेको छ ।

**रुद्रस्य मूत्रमस्यमृतस्य नाभिः । विषाणका नाम वा असि पितॄणां मूलादुत्थिता वातीकृतनाशनी ॥३॥**

रुद्रको मूत्र अमृतरूपी रस नै हो र यो विषाणका नामको औषधि हो । यिनीहरूको विशेष किसिमको मिश्रणले वंशानुगत रूपमा आएको वातको रोग जरैसमेत निको हुने गर्दछ ।

## ४५. दुःष्वप्ननाशन सूक्त

**ऋषि–** अङ्गिरस–अङ्गिरा, प्रचेता, यम । **देवता–** दुष्वप्ननाशन । **छन्द–** पथ्यापङ्क्ति, भुरिक् त्रिष्टुप्, अनुष्टुप् ।

**परोऽपेहि मनस्पाप किमशस्तानि शंससि । परेहि न त्वा कामये वृक्षां वनानि सं चर गृहेषु गोषु मे मनः ॥१॥**

हे पापमा आसक्त भएका मन ! तिमी अशोभनीय विचार भएका छौ, त्यसो भएर नै हामी तिमीलाई रुचाउँदैनौं । हामीदेखि तिमी पर हटेर जाऊ र रुखबिरुवाले भरिएका वनमा विचरण गर । हाम्रो मन घरपरिवार र गाई आदिमा नै लागिरहोस् ।

**अवशसा निःशसा यत् पराशसोपारिम जाग्रता यत् स्वपन्तः । अग्निर्विश्वानयप दुष्कृतान्यजुष्टान्यारे अस्मद् दधातु ॥२॥**

निर्दयतापूर्वक निकट वा टाढा जहाँबाट गरिएको भए पनि हिंसाको पाप र निदाएको वा बिउँभो जुनसुकै अवस्थामा गरिएको पाप भए पनि त्यस्ता सबै दुःस्वप्न र दुष्कर्मलाई अग्निदेवताले हामीबाट पर हटाइदिऊन् ।

**यदिन्द्र ब्रह्मणस्पतेऽपि मृषा चरामसि । प्रचेता न आङ्गिरसो दुरितात् पात्वंहसः ॥३॥**

हे ब्रह्मणस्पति इन्द्रदेवता ! पापका कारण हामी जुन दुःस्वप्नले पीडित भएका छौं, ती पापबाट अङ्गिरा ऋषिका मन्त्रसित सम्बन्धित ज्ञानी वरुणदेवताले हामीलाई जोगाऊन् ।

## ४६. दुष्वप्ननाशन सूक्त

**ऋषि–** अङ्गिरस, प्रचेता, यम । **देवता–** दुष्वप्ननाशन । **छन्द–** ककुम्पती विष्टारपङ्क्ति, त्र्यवसाना पञ्चपाद शक्वरीगर्भा जगती, अनुष्टुप् ।

**यो न जीवोऽसि न मृतो देवानाममृतगर्भो ऽसि स्वप्न । वरुणानी ते माता यमः पितारुर्नामासि ॥१॥**

हे स्वप्न ! तिमी न त जीवित छौ, न मृतक नै । जाग्रत अवस्थामा उत्पन्न भएका वासनाहरूका [illegible] तिमी सधैं रहने गर्दछौ । वरुणपत्नी तिम्री माता हुन् र यम तिम्रा पिता हुन् । तिम्रो नाम [illegible] नि हो ।

**विद्म ते स्वप्न जनित्रं देवजामीनां पुत्रो ऽसि यमस्य करणः । अन्तकोऽसि मृत्युरसि । तं त्वा स्वप्न तथा सं विद्म स नः स्वप्न दुष्वप्न्यात् पाहि ॥२॥**

हे स्वप्नका अभिमानीदेवता ! तिम्रो उत्पत्तिका विषयमा हामी जान्दछौं । तिमी वरुणपत्नीका पुत्र [illegible]का कार्यका साधक हौ । हामीले तिमीलाई ठिकसँग जानेका छौं । हामीलाई तिमी दुःस्वप्नका भयबाट रक्षा गर ।

**यथा कलां यथा शफं यथर्णं संनयन्ति । एवा दुष्वप्न्वं सर्वं द्विषते सं नयामसि ॥३॥**

[illegible] गाईका दूषित खुर आदि अङ्गलाई छेदन गरेर दोषमुक्त गराइन्छ, जसरी ऋणग्रस्त व्यक्तिले [illegible] ऋणमुक्त हुन्छ, उसै गरी दुःस्वप्नबाट हुने भयलाई हामी आफूबाट टाढा पुऱ्याउँछौं र [illegible] शत्रुतर्फ पठाउँछौं ।

## ४७. दीर्घायुप्राप्ति सूक्त

**ऋषि–** अङ्गिरस, प्रचेता, यम । **देवता–** अग्नि, विश्वेदेवा, सौधन्वन् । **छन्द–**

त्रिष्टुप् ।

**अग्निः प्रातः सवने पात्वस्मान् वैश्वानरो विश्वकृद् विश्वशंभूः । स नः पावको द्रविणे दधात्वायुष्मन्तः सहभक्षाः स्याम ॥१॥**

विश्वका स्रष्टा, हितैषि र शान्तिदाता हे अग्निदेवता ! प्रातः सवनका यज्ञमा तिमीले हाम्रो रक्षा गर । हामीलाई यज्ञको फल स्वरूप धन प्रदान गर । कृपापूर्वक हामीले अन्न पुत्रपौत्रादि र दीर्घायु प्राप्त गरौँ ।

**विश्वे देवा मरुत इन्द्रो अस्मानस्मिन् द्वितीये सवने न जह्युः । आयुष्मन्तः प्रियमेषां वदन्तो वयं देवानां सुमतौ स्याम ॥२॥**

आफ्ना सहयोगी मरुत्गणका साथमा इन्द्रदेवताले हामीलाई द्वितीय सवनमा नछोडून् । हाम्रो स्तुतिले उनी खुसी भएर हामीलाई सय वर्षको आयु प्रदान गर्ने कृपा गरून् ।

**इदं तृतीयं सवनं कवीनामृतेन ये चमसमैरयन्त । ते सौधन्वनाः स्व रानशानां स्विष्टिं नो अभि वस्यो नयन्तु ॥३॥**

जसले सोमपान गर्नका लागि चमस नामको पात्र निर्माण गरेका थिए ती आङ्गिरसका पुत्र ऋभु र सुधन्वा रथ एवं चमस निर्माण गरेर देवत्व प्राप्त गर्नमा सफल भए । यो तेस्रो सवन ऋभुहरूकै हो । उनीहरूले उत्तम फल प्राप्त गर्नका लागि हामीलाई असल मति र सिद्धि प्रदान गरून् ।

## ४८. स्वस्तिवाचन सूक्त

**ऋषि**— अङ्गिरस, प्रचेता, यम । **देवता**— श्येन, ऋभु, वृषा । **छन्द**— उष्णिक् ।

**श्येनो ऽसि गायत्रच्छन्दा अनु त्वा रभे । स्वस्ति मा सं वहास्य यज्ञस्योदृचि स्वाहा ॥१॥**

हे यज्ञदेवता ! तिमी बाजपक्षीजस्तै तीव्र गतिका र गायत्री छन्दका छौ । तिमीलाई हामी धारण गर्दछौँ । हामीलाई तिमी यज्ञको अन्तिम चरणसम्म पुऱ्याऊ । तिम्रा लागि हामी स्वाहा भन्छौँ ।

**ऋभुरसि जगच्छन्दा अनु त्वा रभे । स्वस्ति मा सं वहास्य यज्ञस्योदृचि स्वाहा ॥२॥**

हे यज्ञदेवता ! जगती छन्दप्रधान भएका अवस्थामा तिमी ऋभु नामले परिचित हुन्छौ । तिमीलाई हामी सहारा दिने दण्डका रूपमा स्वीकार गर्दछौँ । हामीलाई तिमी यज्ञको अन्तिम ऋचाहरूसम्म पुऱ्याऊ । तिम्रा लागि हामी स्वाहा भन्दछौँ ।

**वृषासि त्रिष्टुप्छन्दा अनु त्वा रभे । स्वस्ति मा सं वहास्य यज्ञस्योदृचि स्वाहा ॥३॥**

हे यज्ञदेवता ! तिमी त्रिष्टुप् छन्दमा रहेका वर्षणशील इन्द्रका रूप हौ । तिनीलाई हामी थालनी गर्दछौँ । हामीलाई तिमी यज्ञको अन्तिम ऋचासम्म पुऱ्याऊ । तिम्रा लागि हामी स्वाहा भन्छौँ ।

## ४९. अग्निस्तवन सूक्त

**ऋषि**— गार्ग्य । **देवता**— अग्नि । **छन्द**— अनुष्टुप्, जगती, विराट् जगती ।

**नहि ते अग्ने तन्वः क्रूरमानंश मर्त्यः । कपिर्बभस्ति तेजनं स्वं जरायु गौरिव ॥१॥**

हे अग्निदेवता ! तिम्रा शरीरको क्रूरतालाई कसैले पनि खप्न सक्दैन । गाईले जसरी आफैँले झारेको साल आफैँ खान्छ उसै गरी यी अग्निदेवता पनि आफैँले उत्पन्न गरेका सबै पदार्थहरू खाने गर्दछन् ।

**मेषइव वै सं च वि चोर्वच्यसे यदुत्तरद्रावुपरश्च खादतः । शीर्ष्णा शिरोऽप्ससाप्सो अर्दयन्नंशून् बभस्ति हरितोभिरासभिः ॥२॥**

हे अग्निदेवता ! तिमी भेडो एकोहोरिएझैँ एकत्रित हुन्छौ र दावाग्निका रूपमा फैलँदै वनका सबै कुरा खान्छौ । तिमी आफ्ना ज्वालारूपी शिरलाई तेजसम्पन्न गराउँदै खैरो वर्णका मुखले सोमलता आदिलाई पनि खाइदिन्छौ ।

**सुपर्णा वाचमक्रतोप द्यव्याखरे कृष्णा इषिरा अनर्तिषुः । नि यन्नियन्त्युपरस्य निष्कृतिं पुरू रेतो दधिरे सूर्यश्रितः ॥३॥**

हे अग्निदेवता ! श्येन पक्षीजस्तै शीघ्रगामी तिम्रो ज्वालाले ध्वनि उत्पन्न गर्दछ र कृष्णसार मृगको

जस्तै गतिका नृत्य गर्दछ । यस ज्वालाले धुवाँ निर्माण गरेर आकाशमा बादल बनाउँछ र त्यस बादलले त्यो जल संसारको हितका लागि धारण गर्दछ ।

## ५०. अभययाचना सूक्त

**ऋषि–** अथर्वा । **देवता–** अश्विनीकुमार । **छन्द–** विराट् जगती, पथ्यापङ्क्ति ।

**हतं तर्दं समङ्कमाखुमश्विना छिन्तं शिरो अपि पृष्टिः शृणीतम् । यवान्नेददानपि नह्यतं मुखमथाभयं कृणुतं धान्याय ॥१॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू हिंस्रक मुसाहरूको नाश गर । तिमीहरू यिनको टाउको छिनाओ र हाडखोड धुलोपिठो पार । यी मुसाहरूको मुख बन्द गरेर तिमीहरू हाम्रो खेतीपाती जोगाइदेओ ।

**तर्द है पतङ्ग है जभ्य हा उपक्वस । ब्रह्मेवासंस्थितं हविरनदन्त इमान् यवानहिंसन्तो अपोदित ॥२॥**

हे हिंसाका मार्गमा लागेका मुसा र किराहरू हो ! ब्रह्मजस्तै भयङ्कर, अश्विनीकुमारहरूका लागि दिइएको यो आहुति तिमीहरूले नष्ट गर्नका लागि नै हो । त्यसैले यो आहुति अर्पित गर्नुभन्दा पहिले नै तिमीहरू हाम्रो जौ आदिको खेत छोडेर भाग ।

**तर्दापते वघापते तृष्टजम्भा आ शृणोत मे । य आरण्या व्यद्वरा ये के च स्थ व्यद्वरास्तान्त्सर्वाञ्जम्भयामसि ॥३॥**

... र किराफट्याङ्ग्राहरूका स्वामी ! हामीले भनेको तिमी सुन । विभिन्न ढङ्गले खाने, ... या गाउँमा रहने यी सबै उपद्र्याहाहरूलाई यसै प्रयोगले हामी नष्ट गर्दछौँ ।

## ५१. एनोनाशन सूक्त

**ऋषि–** शन्ताति । **देवता–** आपः, वरुण । **छन्द–** त्रिष्टुप्, गायत्री, जगती ।

**वायोः पूतः पवित्रेण प्रत्यङ् सोमो अति द्रुतः । इन्द्रस्य युज्यः सखा ॥१॥**

... पवित्र गराएको सोमरस मुखबाट सेवन गर्दाखेरि अति तीव्र गतिले प्रत्येक शरीरमा ... पुग्ने गर्दछ । त्यो सोम इन्द्रको मित्र हो ।

**आपो अस्मान् मातरः सूदयन्तु घृतेन नो घृतप्वः पुनन्तु । विश्वं हि रिप्रं प्रवहन्ति देवीरुदिदाभ्यः शुचिरा पूत एमि ॥२॥**

...जस्तै पोषक जलले हामीलाई पवित्र गराओस् । घिउरूपी जलले हाम्रो अशुद्धि निवारण ...स् । जलको दिव्यताका आफ्नै दिव्य स्रोतले सबै खालका पापहरूलाई शोधन गरोस् । ...बाट नै शुद्ध र पवित्र भएर हामी उन्नतिशील हुन सकौँ ।

**यत् किं चेदं वरुण दैव्ये जनेऽभिद्रोहं मनुष्या३श्चरन्ति । अचित्त्या चेत् तव धर्मा युयोपिम मा नस्तस्मादेनसो देव रीरिषः ॥३॥**

...षादेवी ! तिमी स्तोताहरूलाई धन प्रदान गर्नका लागि र हामीलाई सत्य भाषण प्राप्त गर्नका ... प्रेरित गर । तिमी अन्धकारलाई नाश गर्दछ्यौ । हामीलाई धन प्रदान गर्नका लागि तिमी ... होऊ । कल्याणकारी साधनले हामीलाई पालन गर ।

## ५२. भैषज्य सूक्त

**ऋषि–** भागली । **देवता–** सूर्य गौ, भेषज । **छन्द–** अनुष्टुप् ।

**उत् सूर्यो दिव एति पुरो रक्षांसि निजूर्वन् । आदित्यः पर्वतेभ्यो विश्वदृष्टो अदृष्टहा ॥१॥**

...स आदि रातको अँध्यारो समयमा उपद्रव मच्चाउने गर्दछन्, उनलाई समाप्त गर्नका लागि ...देवता उदयाचल शिखरमाथि सबैका सामु अन्तरिक्षमा प्रकट हुँदै छन् । हामीले नदेख्ने ...का यातुधानहरूलाई पनि उनै देवताले आफ्ना सामर्थ्यले समाप्त गरिदिऊन् ।

**नि गावो गोष्ठे असदन् नि मृगासो अविक्षत । न्यू३र्मयो नदीनां न्य१दृष्टा अलिप्सत ॥२॥**

...देवता प्रकट हुनाले अन्धकारमा लुकेका नदीका लहर र प्रवाह स्पष्ट देखिने लागेका छन् ।

जङ्गली हिंस्रक पशु पनि जङ्गलमा बसेका छन् र हाम्रा गाईहरू यस बेला निर्भय भएर गोठमा बसेका छन् ।

**आयुर्दद विपश्चितं श्रुतां कण्वस्य वीरुधम् । आभारिषं विश्वभेषजीमस्यादृष्यन् नि शमयत् ॥३॥**

दीर्घ आयु प्रदान गर्ने, रोग नष्ट गर्नमा समर्थ महर्षि कण्वले निर्देशित औषधि हामीले प्राप्त गरेका छौँ । यो औषधि अदृश्य जीवाणुका कारणका साथमा रोग नष्ट गरेर हामीलाई पूर्ण रूपमा मुक्त गराऊन् ।

## ५३. सर्वतोरक्षण सूक्त

**ऋषि**— बृहच्छुक्र । **देवता**— द्यौ, पृथिव, शुक्र, सोम, अग्नि, वायु, सविता, वैश्वानर, त्वष्ट्य । **छन्द**— त्रिष्टुप्, जगती ।

**द्यौश्च म इदं पृथिवी च प्रचेतसौ शुक्रो बृहन् दक्षिणया पिपर्तु । अनु स्वधा चिकितां सोमो अग्निर्वायुर्नः पातु सविता भगश्च ॥१॥**

द्यावापृथिवीले हामीलाई मनोवाञ्छित फल प्रदान गरून् । सूर्यदेवताले धन, वस्त्र आदि प्रदान गर्दै दक्षिण दिशाबाट हाम्रो रक्षा गरून् । पितृसम्बन्धी स्वधाले सम्मानित देवताले कृपा गरेर हामीलाई अन्न आदि प्रदान गरून् । अग्निदेवता, सवितादेवता, वायुदेवता, भगदेवता र सोमदेवता आदि देवताहरू पनि हाम्रै अनुकूल रहून् ।

**पुनः प्राणः पुनरात्मा न ऐतु पुनश्चक्षुः पुनरसुर्न ऐतु । वैश्वानरो नो अदब्धस्तनूपा अन्तस्तिष्ठाति दुरितानि विश्वा ॥२॥**

जीवनको आधार प्राण हामीलाई फेरि प्राप्त होस्, हामीलाई फेरि पनि जीवन प्राप्त होस्, आँखा र प्राण हामीलाई फेरि प्राप्त होऊन् । हे सर्वहितैषि, अदम्य, नेतृत्वक्षमताले युक्त अग्निदेवता ! तिमी हाम्रा शरीरमा रहेर रोग आदि पापलाई नष्ट गराऊ ।

**सं वर्चसा पयसा सं तनूभिरगन्महि मनसा सं शिवेन । त्वष्टा नो अत्र वरीयः कृणोत्वनु नो मार्ष्टु तन्वो३ यद् विरिष्टम् ॥३॥**

तेज तथा पयबाट हाम्रा शरीरका अङ्गअवयवहरू कान्तियुक्त होऊन् र मन कल्याणकारी होस् । त्वष्टादेवताले आफ्नै हातले रोगबाट दुःखी भएका शरीरलाई शोधित गरेर अझै धेरै श्रेष्ठ, स्वस्थ र कान्तियुक्त बनाइदिऊन् ।

## ५४. अमित्रदम्भन सूक्त

**ऋषि**— ब्रह्मा । **देवता**— अग्नीषोम । **छन्द**— अनुष्टुप् ।

**इदं तद् युज उत्तरमिन्द्रं शुम्भाम्यष्टये । अस्य क्षत्रं श्रियं महीं वृष्टिरिव वर्धया तृणम् ॥१॥**

हामी यस व्यक्तिलाई तिर्मासित संयुक्त गराउँछौँ । हे देवता ! तिमी प्रसन्न भएर यसको बल, धन र अन्य महत्त्वपूर्ण सम्पदा उसै किसिमले वृद्धि गराऊ जसरी वर्षाका जलले घाँस बढ्ने गर्दछ ।

**अस्मै क्षत्रमग्नीषोमावस्मै धारयतं रयिम् । इमं राष्ट्रस्याभीवर्गे कृणुतं युज उत्तरम् ॥२॥**

हे अग्निदेवता ! यजमानलाई श्रेष्ठ फल प्राप्त होस् भनेर नै हामी यहाँ यज्ञ आदि उत्तम कर्म गर्दछौँ । हे सोमदेवता ! यस यजमानलाई फेरि पनि बल र धन प्रदान गर ।

**सबन्धुश्चासबन्धुश्च यो अस्माँ अभिदासति । सर्वं तं रन्धयासि मे यजमानाय सुन्वते ॥३॥**

हे इन्द्रदेवता ! तिमी ती शत्रुलाई संहार गर, जो हिंसक छन् । हे इन्द्रदेवता ! तिमी स्वगोत्रीय या अन्य गोत्रीय दुवै किसिमका शत्रुलाई सोम अभिषव गर्ने यस यजमानका वशमा गराऊ ।

## ५५. सौमनस्य सूक्त

**ऋषि–** ब्रह्मा । **देवता–** विश्वेदेवा, रुद्र । **छन्द–** जगती, त्रिष्टुप् ।

**ये पन्थानो बहवो देवयाना अन्तरा द्यावापृथिवी संचरन्ति । तेषामज्यानिं यतमो वहाति तस्मै मा देवाः परि धत्तेह सर्वे ॥१॥**

हे देवताहरू हो ! तिमीहरू हामीलाई देवयानको त्यो मार्ग देखाओ, जुन मार्गबाट देवताहरू जाने गर्दछन् र जुन मार्ग द्यावापृथिवीका बीचमा रहेको छ ।

**ग्रीष्मो हेमन्तः शिशिरो वसन्तः शरद् वर्षाः स्विते नो दधात । आ नो गोषु भजता प्रजायां निवात इद् वः शरणे स्याम ॥२॥**

ग्रीष्म ऋतुका अधिष्ठाता देवताहरूले हामीलाई उत्तम रीतिले प्राप्त हुने खालको धनले सम्पन्न गराऊन् । जसरी हामी घरको आश्रयमा निर्भय भएर सुखपूर्वक रहन्छौँ, उसै गरी तिम्रा आश्रयमा रहेर गाई, पुत्रपौत्रादिले युक्त भएर सुखपूर्वक रहन पाऔँ ।

**इदावत्सराय परिवत्सराय संवत्सराय कृणुता बृहन्नमः । तेषां वयं सुमतौ यज्ञियानामपि भद्रे सौमनसे स्याम ॥३॥**

हे मानिसहरू हो ! इदावत्सर, परिवत्सर र संवत्सरहरूप्रति अनेकौँ किसिमले नमस्कार गरेर उनलाई प्रसन्न गराओ । इदावत्सर आदिका कृपाले यज्ञ आदि गर्ने सद्बुद्धि प्राप्त होस् र त्यसको उचित फल हामीलाई पनि प्राप्त होस् ।

## ५६. सर्परक्षण सूक्त

**ऋषि–** शन्ताति । **देवता–** विश्वेदेवा, रुद्र । **छन्द–** उष्णिग्गर्भा पथ्यापङ्क्ति, अनुष्टुप्, निचृत् अनुष्टुप् ।

**मा नो देवा अहिर्वधीत् सतोकान्त्सहपूरुषान् । संयतं न वि ष्परद् व्यात्तं न सं यमन्नमो देवजनेभ्यः ॥१॥**

सर्पले हामीलाई र हाम्रा सन्तानलाई दुःख दिन नसकून् । सर्पको बन्द मुख सधैँ बन्द नै रहोस् र खुला मुख खुलै रहोस् भन्ने हाम्रो उद्देश्य पूरा गराउने देवताहरूलाई हामी नमस्कार गर्दछौँ ।

**नमोऽस्त्वसिताय नमस्तिरश्चिराजये । स्वजाय बभ्रवे नमो नमो देवजनेभ्यः ॥२॥**

कालो वर्णका सर्पका राजालाई नमस्कार छ । तेर्छो बाटो हिँड्ने गरेका खैरो रङ्गका स्वज नामका सर्पलाई हामी नमस्कार गर्दछौँ र यिनको नियम बनाउने देवतालाई पनि नमस्कार छ ।

**सं ते हन्मि दता दतः समु ते हनवा हनू । सं ते जिह्वया जिह्वां समवास्नाह आस्यम् ॥३॥**

हे सर्पहरू हो ! तिमीहरूका माथि र तलका दाँतका लहरलाई आपसमा मिलाइदिन्छौँ । सर्पहरूको चिउँडोका भागलाई सिइदिन्छौँ । दुवै जिब्रलाई टाँसिदिन्छौँ र अनेकौँ फणाहरूलाई एक ठाउँमा बाँधिदिन्छौँ ।

## ५७. जलचिकित्सा सूक्त

**ऋषि–** शन्ताति । **देवता–** रुद्र । **छन्द–** अनुष्टुप्, पथ्याबृहती ।

**इदमिद् वा उ भेषजमिदं रुद्रस्य भेषजम् । येनेषुमेकतेजनां शतशल्यामपब्रवत् ॥१॥**

यो निश्चित रूपमा औषधि नै हो । यो रुद्रदेवताको औषधि हो । यसको प्रयोग एउटा लाठाका डण्डाबाट अनेकौँ शूल भएका बाणले लगाएका चोटहरूलाई निको पार्नका लागि गरिन्छ ।

**जालाषेणाभि षिञ्चत जालाषेणोप सिञ्चत । जालाषमुग्रं भेषजं तेन नो मृड जीवसे ॥२॥**

हे जलको सेवा गर्नेहरू हो ! तिमीहरू औषधियुक्त शुद्ध जलले रोगीलाई रोगयुक्त अङ्गमा उचित ढङ्गले पूरै वा आंशिक रूपमा सेचन गर । यो रोग निको पार्ने उग्र औषधि हो । हे रुद्रदेवता ! तिमी यस औषधिले हामीलाई सुख प्राप्त होस् ।

**शं च नो मयश्च नो मा च नः किं चनाममत् । क्षमा रपो विश्वं नो अस्तु भेषजं सर्वं नो अस्तु भेषजम् ॥३॥**

हे देवता ! हामीलाई रोगव्याधिले उब्जाउने दुःखबाट परै राख । हाम्रा पशु र प्रजाहरू रोगबाट मुक्त रहून् । रोगका मूलभूत कारणका रूपमा रहेको पापलाई नाश गर । समस्त स्थावरजङ्गम एवं कर्मलाई नाश गराउने रोगलाई समाप्त गर्ने शक्तिको ज्ञान हामीलाई प्राप्त होस् ।

## ५८. यशःप्राप्ति सूक्त

**ऋषि–** अथर्वा । **देवता–** बृहस्पति, इन्द्र, द्यावापृथिवी, सविता, अग्नि, रुद्र, सोम । **छन्द–** जगती, प्रस्तार पङ्क्ति, अनुष्टुप् ।

**यशसं मेन्द्रो मघवान् कृणोतु यशसं द्यावापृथिवी उभे इमे । यशसं मा देवः सविता कृणोतु प्रियो दातुर्दक्षिणाया इह स्याम् ॥१॥**

धनवान्, इन्द्रदेवता, द्यावापृथिवी र सवितादेवताले हामीलाई यश प्रदान गरून् । हामी दक्षिणा प्रदान गर्नेहरूका लागि प्रिय हुन सकौँ ।

**यथेन्द्रो द्यावापृथिव्योर्यशस्वान् यथाप ओषधीषु यशस्वतीः । एवा विश्वेषु देवेषु वयं सर्वेषु यशसः स्याम ॥२॥**

आकाशबाट पृथ्वीमा जल वर्षा गराउने इन्द्रदेवता जसरी यशस्वी भएका छन्, औषधिंहरूमा जल यशस्वी भएको छ, उसरी नै सबै देवता र मानिसहरूमा हामीले यश प्राप्त गरौँ ।

**यशा इन्द्रो यशा अग्निर्यशाः सोमो अजायत । यशा विश्वस्य भूतस्याहमस्मि यशस्तमः ॥३॥**

इन्द्रदेवता, अग्निदेवता र सोमदेवता आदि देवताहरू जसरी यशस्वी भएका छन्, उसै गरी बल प्राप्त गर्न खोज्ने हामी पनि सबै प्राणीहरूमा यशस्वी बनौँ ।

## ५९. ओषधि सूक्त

**ऋषि–** अथर्वा । **देवता–** रुद्र, अरुन्धती, ओषधि । **छन्द–** अनुष्टुप् ।

**अनड्डुद्भ्यस्त्वं प्रथमं धुनभ्यस्त्वमरुन्धति । अधेनवे वयसे शर्म यच्छ चतुष्पदे ॥१॥**

हे अरून्धती नामका दिव्य औषधि ! तिमी गोरुलाई, गाईलाई, अन्य चार खुट्टे पशुलाई र पक्षीहरूलाई सुख प्रदान गर ।

**शर्म यच्छत्वोषधिः सह देवीररुन्धती । करत् पयस्वन्तं गोष्ठमयक्ष्माँ उत पूरुषान् ॥२॥**

सहदेवी नामका यस औषधिले हामीलाई सुख प्रदान गरेर गाईको दुधले सम्पन्न बनाओस् र हाम्रा पुत्रपौत्रादिलाई रोगमुक्त पारोस् ।

**विश्वरुपां सुभगामच्छावदामि जीवलाम् । सा नो रुद्रस्यास्तां हेतिं दूरं नयतु गोभ्यः ॥३॥**

हे सहदेवी नामका औषधि ! अनेकौँ खालका रूप भएको, सौभाग्यशाली र जीवनदायी तिमीले रुद्रद्वारा फालिएका रोगरूपी शस्त्रबाट हाम्रा पशुलाई कृपा गरेर बचाऊ ।

## ६०. पतिलाभ सूक्त

**ऋषि–** अथर्वा । **देवता–** अर्यमा । **छन्द–** अनुष्टुप् ।

**अयमा यात्यर्यमा पुरस्ताद् विषितस्तुपः । अस्या इच्छन्नग्रुवै पतिमुत जायामजानये ॥१॥**

प्रशंसनीय सूर्यदेवता पूर्व दिशामा उदाउँदै छन् । उनले स्त्रीरहित पुरुषलाई स्त्री र कन्याहरूलाई पति प्राप्त गराउने इच्छाले उदीयमान भइरहेका छन् ।

**अश्रमदियमर्यमन्नन्यासां समनं यती । अङ्गो न्वर्यमन्नस्या अन्याः समनमायति ॥२॥**

हे अर्यमा नामका सूर्यदेवता ! पतिको कामना गर्ने यी कन्याहरू अहिलेसम्म पति प्राप्त नभएकाले खिन्न बनेका छन् । हे अर्यमा ! अरू कन्याहरू पनि यिनका लागि शान्ति होस् भनेर कर्ममा संलग्न भएका छन् ।

**धाता दाधार पृथिवीं धाता द्यामुत सूर्यम् । धातास्या अग्रुवै पतिं दधातु प्रतिकाम्यम् ॥३॥**

समस्त विश्वलाई नै धारण गर्नेले पृथ्वीलोक, द्युलोक र सविताका लागि आआफ्ना स्थान धारण गरेका छन् । उनै विधाताले यी पतिको खोजी गर्ने कन्याहरूलाई इच्छा लागेको पति प्रदान गर्ने कृपा गरून् ।

## ६१. विश्वस्रष्ट्य सूक्त

**ऋषि**– अथर्वा । **देवता**– रुद्र । **छन्द**– त्रिष्टुप्, भुरिक् त्रिष्टुप् ।

**मह्यमापो मधुमदेरयन्तां मह्यं सूरो अभरज्ज्योतिषे कम् । मह्यं देवा उत विश्वे तपोजा मह्यं देवः सविता व्यचो धात् ॥१॥**

सबैलाई प्रेरणा प्रदान गर्ने सूर्यदेवताले सुखदायक तेज सबैतिर फिँजाएका छन् । जलका अधिष्ठाता देवताहरूले मधुर जल प्रदान गरून् । तपस्याले उत्पन्न भएका देवताले हामीलाई खोजेको जस्तो फल प्रदान गरून् र सवितादेवता हाम्रा लागि विस्तृत भइदिऊन् ।

**अहं विवेच पृथिवीमुत द्यामहमृतूंरजनयं सप्त साकम् । अहं सत्यमनृतं यद् वदाम्यहं दैवीं परि वाचं विशश्च ॥२॥**

म सूर्य वा रुद्रदेवताले द्युलोक र पृथ्वीलाई अलग गराएको छु । वसन्त आदि छ वटा ऋतुहरू र अधिक मासको सातौँ ऋतुलाई पनि मैले नै बनाएको हुँ । मानवी र दैवी वाणीहरू बोल्ने पनि म नै हुँ ।

**अहं जजान पृथिवीमुत द्यामहमृतूंरजनयं सप्त सिन्धून् । अहं सत्यमनृतं यद् वदामि यो अग्निषोमावजुषे सखाया ॥३॥**

पृथ्वी, स्वर्ग, गङ्गा आदि सात नदी एवं सातै समुद्रको उत्पादक पनि म नै हुँ । सत्यासत्यको वक्ता तथा मित्र, अग्नि र सोमलाई एकै साथमा संयुक्त गराउने पनि म नै हुँ ।

## ६२. पावमान सूक्त

**ऋषि**– अथर्वा । **देवता**– रुद्र, वैश्वानर, वात, द्यावापृथिवी । **छन्द**– त्रिष्टुप् ।

**वैश्वानरो रश्मिभिर्नः पुनातु वातः प्राणेनेषिरो नभोभिः । द्यावापृथिवी पयसा पयस्वती ऋतावरी यज्ञिये नः पुनीताम् ॥१॥**

सबै मानिसहरूमा व्याप्त अग्निदेवता आफ्ना किरणले, वायुदेवता प्राणले, जल आफ्ना रसले र रस एवं जलतत्त्व धारण गर्ने द्यावापृथिवी आआफ्ना पोषक तत्त्वले हामीलाई पवित्र गराऊन् ।

**वैश्वानरीं सूनृतामा रभध्वं यस्या आशास्तन्वो वीतपृष्ठाः । तया गृणन्तः सधमादेषु वयं स्याम पतयो रयीणाम् ॥२॥**

हे मानिसहरू हो ! वैश्वानरसम्बन्धी सत्य स्तुति गाउन थाल । जुन वाणीका शरीरको पृष्ठ भाग विस्तृत छ, त्यसै वाणीले वैश्वानर अग्निदेवता प्रसन्न होऊन् र हामीलाई धन प्रदान गरून् ।

**वैश्वानरीं वर्चस आ रभध्वं शुद्धा भवन्तः शुचयः पावकाः । इहेडया सधमादं मदन्तो ज्योक् पश्येम सूर्यमुच्चरन्तम् ॥३॥**

शुद्ध पवित्र भएर र अर्कालाई पनि पवित्र गराउँदै वैश्वानर अग्निदेवतालाई स्तुति गर । अन्नले हृष्टपुष्ट हुँदै लामो समयसम्म सूर्यदेवताको दर्शन गरौँ र स्वस्थ रहँदै दीर्घायु प्राप्त गरौँ ।

## ६३. वर्चोबलप्राप्ति सूक्त

**ऋषि**– द्रुह्वर्ण । **देवता**– निर्ऋति, यम, मृत्यु, अग्नि । **छन्द**– जगती, अतिजगतीगर्भा जगती, अनुष्टुप् ।

**यत् ते देवी निर्ऋतिराबबन्ध दाम ग्रीवास्वविमोक्यं यत् । तत् ते वि ष्याम्यायुषे वर्चसे बलायादोमदमन्नमद्धि प्रसूतः ॥१॥**

हे पुरुष ! निर्ऋति नामकी अविद्याकी देवीले आकर्षक रूप धारण गरेर मोहित गराएर तिम्रा घाँटीमा जुन बन्धन हालिदिएकी छिन्, म आयु, बल र तेजस्विताका लागि त्यस पापरूपी डोरीबाट

तिमीलाई मुक्त गराउँछु । तिमी हर्षदायी अन्न ग्रहण गर ।

**नमोऽस्तु ते निर्ऋते तिग्मतेजोऽयस्मयान् वि चृता बन्धपाशान् । यमो मह्यं पुनरित् त्वां ददाति तस्मै यमाय नमो अस्तु मृत्यवे ॥२॥**

हे निर्ऋति ! तिमीलाई नमस्कार छ । तिमी फलामे बन्धबाट हामीलाई मुक्त गर । यमले तिमीलाई फेरि पनि मेरै अधीनमा गराएका छन् । उनै यमदेवतालाई हामी नमस्कार गर्दछौँ ।

**अयस्मये द्रुपदे बेधिष इहाभिहितो मृत्युभिर्ये सहस्रम् । यमेन त्वं पितृभिः संविदान उत्तमं नाकमधि रोहयेमम् ॥३॥**

हे निर्ऋति ! जब तिमी पुरुषलाई फलामे बन्धनमा बाँध्दछ्यौ, त्यस बेला मृत्युको ज्वर आदिरूपी दुःखका हजारौँ खालका पासाहरूमा त्यो बाँधिन पुग्दछ । आफ्ना अधिष्ठाता यम देवता र पितृहरूका सहमतिले यसलाई आनन्दमय स्वर्गलोकमा पुऱ्याइदेऊ ।

**संसमिद् युवसे वृषन्नग्ने विश्वान्यर्य आ । इडस्पदे समिध्यसे स नो वसून्या भर ॥४॥**

हे इच्छित कामनाहरूलाई पूरा गराउने अग्निदेवता ! तिमी यज्ञवेदीमा देदीप्यमान होऊ । तिमी सबै किसिमका धनका स्वामी हौ, त्यसैले प्रसन्न भएर हामीलाई धन प्रदान गर ।

## ६४. सांमनस्य सूक्त

**ऋषि**— अथर्वा । **देवता**— विश्वेदेवा, मन । **छन्द**— अनुष्टुप्, त्रिष्टुप् ।

**सं जानीध्वं सं पृच्यध्वं सं वो मनांसि जानताम् । देवा भागं यथा पर्वे संजानाना उपासते ॥१॥**

हे साधकहरू हो ! जसरी उहिलेको समयदेखि नै देवताहरू संयुक्त भएर आआफ्ना भाग ग्रहण गर्दथे, उसै किसिमले तिमीहरू पनि समान रूपले सहयोगपूर्वक ज्ञान प्राप्त गर । आपसमा मिलेर सङ्गठित जीवन निर्वाह गर र तिमीहरूको मनको भाव पनि संयुक्त भएर नै प्रकट गर ।

**समानो मन्त्रः समितिः समानी समानं व्रतं सह चित्तमेषाम् । समानेन वो हविषा जुहोमि समानं चेतो अभिसंविशध्वम् ॥२॥**

हे स्तोताहरू हो ! तिमीहरू सबैको विचार, मन, बुद्धि, चित्त, तन्त्र, मन्त्र, व्रत, सिद्धान्त सबै एक समान होऊन् । तिमीहरूका जीवनलाई हामी एकताको मन्त्रले नै अभिमन्त्रित गर्दछौँ र समान रूपले नै आहुति प्रदान गरेर यज्ञमय बनाउँछौँ ।

**समानी व आकूतिः समाना हृदयानि वः । समानमस्तु वो मनो यथा वः सुसहासति ॥३॥**

हे स्तोताहरू हो ! तिमीहरूका हृदयका भावनाहरू एक समान होऊन्, तिमीहरूको विचार एक समान होस्, सङ्कल्प उस्तै खालका होऊन् र त्यसै गरी तिमीहरू एकीकृत भएर सबैले आआफ्ना कार्य पूरा गर्न सक ।

## ६५. शत्रुनाशन सूक्त

**ऋषि**— अथर्वा । **देवता**— चन्द्र, इन्द्र, पराशर । **छन्द**— पथ्यापङ्क्ति, अनुष्टुप् ।

**अव मन्युरवायताव बाहू मनोयुजा । पराशर त्वं तेषां पराञ्चं शुष्ममर्दयाधा नो रयिमा कृधि ॥१॥**

शत्रुको क्रोध र शस्त्रास्त्र पर होऊन् । शत्रुको भुजाहरू पनि अशक्त र साहसहीन होऊन् । टाढैबाट बाणको निसाना ताक्नमा सिपालु हे देवताहरू हो ! तिमीहरू शत्रुको बललाई पराङ्मुख गरेर नष्ट पार र उनीहरूको धन हामीलाई प्रदान गर ।

**निर्हस्तेभ्यो नैर्हस्तं यं देवाः शरुमस्यथ । वृश्चामि शत्रूणां बाहूननेन हविषाहम् ॥२॥**

हे देवताहरू हो ! तिमीहरू असुरका भुजाको बल क्षीण गराउनका लागि जुन बाणहरूको प्रयोग गर्दछौ उनै बाणको आहुति दिएर शत्रुहरूका भुजा काटिदिन्छौँ ।

**इन्द्रश्चकार प्रथमं नैर्हस्तमसुरेभ्यः । जयन्तु सत्वानो मम स्थिरेणेन्द्रेण मेदिना ॥३॥**

उहिलेका समयमा इन्द्रदेवताले असुरहरूलाई बाहुबलले हीन गराएका थिए, उनैका कृपा र

सहायताले हाम्रा पराक्रमी वीर योद्धाहरूले शत्रुलाई जितून् ।

## ६६. शत्रुनाशन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** चन्द्र, इन्द्र । **छन्द–** त्रिष्टुप्, अनुष्टुप् ।

**निर्हस्तः शत्रुरभिदासन्नस्तु ये सेनाभिर्युधमायन्त्यस्मान् । समर्पयेन्द्र महता वधेन द्रात्वेषामघहारो विविद्धः ॥१॥**

हे इन्द्रदेवता ! हामीमाथि आक्रमण गर्ने शत्रुको बाहुबल समाप्त होस् । जुन शत्रु हामीसित लडाइँ गर्नका लागि सेनासहित आउँछन् तिनलाई तिमी आफ्नो घोर संहारकारी वज्रले नष्ट गराऊ र जो विशेष किसिमले घात गर्ने खालका छन्, ती वीरहरू पनि बाणले घोचिएर भागून् ।

**आतन्वाना आयच्छन्तोऽस्यन्तो ये च धावथ । निर्हस्ताः शत्रवः स्थनेन्द्रो वोऽद्य पराशरीत् ॥२॥**

हे शत्रुहरू हो ! धनुषमा प्रत्यञ्चा चढाएर हामीमाथि बाण बर्साउनका लागि कुदेर आउने तिमीहरूलाई इन्द्रदेवताले पराजित गराएर मारिदिऊन् ।

**निर्हस्ताः सन्तु शत्रवोऽङ्गैषां म्लापयामसि । अथैषामिन्द्र वेदांसि शतशो वि भजामहै ॥३॥**

हाम्रा शत्रुका पाखुराको बल समाप्त होस् । उनीहरूका अङ्ग शक्तिहीन होऊन् । हे इन्द्रदेवता ! तिम्रा कृपाले शत्रुको सम्पत्ति हामी प्राप्त गरौँ ।

## ६७. शत्रुनाशन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** चन्द्र, इन्द्र । **छन्द–** अनुष्टुप् ।

**परि वर्त्मानि सर्वत इन्द्रः पूषा च सस्रतुः । मुह्यन्त्वद्यामूः सेना अमित्राणां परस्तराम् ॥१॥**

हे इन्द्र र पूषादेवता ! शत्रुका सेनाले अति मुर्छाइँ गरेका हुनाले उचित निर्णय लिन सकेनन् । तिमी ती शत्रुहरूको मार्ग अवरुद्ध गराइदेऊ ।

**मूढा अमित्राश्चरताशीर्षण इवाहयः । तेषां वो अग्निमूढानामिन्द्रो हन्तु वरंवरम् ॥२॥**

हे शत्रुहरू हो ! इन्द्रदेवताले तिमीहरूका प्रधान वीरलाई संहार गरिदिऊन् र तिमीहरू फणा काटिएको सर्पजस्तो तेजहीन, ज्ञानशून्य भएर व्यर्थ नै सङ्ग्राम स्थानमा भौँतारिइराख ।

**ऐषु नह्य वृषाजिनं हरिणस्या भियं कृधि । पराङमित्र एषत्वर्वाची गौरुपेषतु ॥३॥**

हे कामना पूर्ति गराउने इन्द्रदेवता ! हाम्रा यी वीरहरूलाई कवचका रूपमा तिमी काला मृगको छाला ओढाइदेऊ र शत्रुका मनमा भय उत्पन्न गराइदेऊ । त्यसबाट पराजित भएर भागेका ती शत्रुहरूको धन, गाई आदि सबै कुरो हामीलाई प्राप्त होस् ।

## ६८. वपन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** सविता, आदित्यगण, रुद्रगण, वसुगण, अदिति, आपः, प्रजापति, सविता, सोम, वरुण । **छन्द–** चतुष्पदा पुरोविराट् अतिशाक्वरगर्भा जगती, अनुष्टुप्, अतिजगतीगर्भा त्रिष्टुप् ।

**आयमगन्त्सविता क्षुरेणोष्णेन वाय उदकेनेहि । आदित्या रुद्रा वसव उन्दन्तु सचेतसः सोमस्य राज्ञो वपत प्रचेतसः ॥१॥**

सर्वप्रेरक सवितादेवता मुण्डन गर्ने छुरा लिएर आएका छन् । हे वायुदेवता ! तिमी पनि शिर भिजाउनका लागि तातो पानी लिएर आऊ । एकचित्त भएर रुद्र एवं आदित्यगणले बालकको शिर भिजाइदिऊन् । हे ज्ञानी पुरुषहरू हो ! तिमीहरू बालक सोमको शिर मुण्डन गराओ ।

**अदितिः श्मश्रु वपत्वाप उन्दन्तु वर्चसा । चिकित्सतु प्रजापतिर्दीर्घायुत्वाय चक्षसे ॥२॥**

अदिति माताले यिनका केशलाई रोपिदिऊन्, जलदेवताका आफ्ना तेजले त्यस केशलाई सेचन गरून् । दीर्घायु र दर्शनशक्तिका लागि प्रजापतिले यिनको चिकित्सा गरून् ।

**येनावपत् सविता क्षुरेण सोमस्य राज्ञो वरुणस्य विद्वान् । तेन ब्रह्माणो वपतेदमस्य गोमानश्ववानयमस्तु प्रजावान् ॥३॥**

ज्ञानी सवितादेवताले राजा सोमको शिर जुन छुराले मुण्डन गरे हे ब्राह्मणहरू हो ! त्यस्तो छुराले नै तिमीहरू यिनको केश मुण्डन गर । यस श्रेष्ठ संस्कारद्वारा यिनी गाई, घोडा र पुत्रपौत्रादिले समृद्ध हुन सकून् ।

## ६९. वर्चसप्राप्ति सूक्त

**ऋषि**— अथर्वा । **देवता**— बृहस्पति, अश्विनीकुमार । **छन्द**— अनुष्टुप् ।

**गिरावरगराटेषु हिरण्ये गोषु यद् यशः । सुरायां सिच्यमानायां कीलाले मधु तन्मयि ॥१॥**

हिउँले ढाकिएका पर्वतमा, रथमा आरुढ भएका वीर योद्धाका जयघोषमा, स्वर्णमा र गाईको दुध प्रदान गर्नमा जुन यश हुन्छ र पर्जन्य धारा तथा अन्नका मधुर रसमा जुन मधुरता हुन्छ, त्यो सबै हामीलाई पनि प्राप्त होस् ।

**अश्विना सारघेण मा मधुनाङ्क्तं शुभस्पती । यथा भर्गस्वतीं वाचमावदानि जनाँ अनु ॥२॥**

हे कल्याणकारी अश्विनीकुमारहरू हो ! तिमीहरू हामीलाई मधुको मधुर तत्त्वले युक्त गराओ, जसले गर्दा हाम्रो वाणी मधुर होस् । मानिसहरूप्रति मधुर एवं भावनाले भर्गशक्तिले सम्पन्न वाणी बोलौँ ।

**मयि वर्चो अथो यशोऽथो यज्ञस्य यत् पयः । तन्मयि प्रजापतिर्दिवि द्यामिव दृंहतु ॥३॥**

अन्न एवं यज्ञको फलको सारका रूपमा जुन यश रहेको हुन्छ र हामीभित्र जुन तेजस्विता रहेको छ, त्यसलाई प्रजापतिदेवताले उसै किसिमले सुदृढ गराऊन्, जसरी द्युलोकमा दीप्तिलाई सुदृढ रूपमा स्थिर गराइएको छ ।

## ७०. अघ्न्या सूक्त

**ऋषि**— काङ्कायन । **देवता**— अघ्न्या । **छन्द**— जगती ।

**यथा मांसं यथा सुरा यथाक्षा अधिदेवने । यथा पुंसो वृषण्यत स्त्रियां निहन्यते मनः । एवा ते अघ्न्ये मनोऽधि वत्से नि हन्यताम् ॥१॥**

मांसाहारीलाई मासु, जँड्याहालाई जाँड, जुवाडेलाई जुवा र कामुक पुरुषलाई स्त्री जसरी प्रिय हुन्छन्, उसै गरी हे अवध्य गौका रूपमा रहेकी प्रकृति माता ! तिमी आफ्ना बाछारूपी सन्तानसित प्रेमको भावना बढाऊ ।

**यथा हस्ती हस्तिन्याः पदेन पदमुद्युजे । यथा पुंसो वृषण्यत स्त्रियां निहन्यते मनः । एवा ते अघ्न्ये मनोऽधि वत्से नि हन्यताम् ॥२॥**

मत्ता हात्तीले ढोईका खुट्टासित आफ्ना खुट्टा जोडेर जसरी प्रसन्नता प्राप्त गर्दछ र कामुक पुरुषको मन स्त्रीमा नै रमाउने गर्दछ, उसै गरी हे अवध्य गौका रूपमा रहेकी प्रकृति माता ! तिमी आफ्ना बाछारूपी सन्तानसित प्रेमको भावना बढाऊ ।

**यथा प्रधिर्यथोपधिर्यथा नभ्यं प्रधावधि । यथा पुंसो वृषण्यत स्त्रियां निहन्यते मनः । एवा ते अघ्न्ये मनोऽधि वत्से नि हन्यताम् ॥३॥**

रथका पाङ्ग्राहरूलाई धुराले जसरी बलियोसित अड्याएको हुन्छ, कामुक पुरुषको मन स्त्रीमा नै रमाउने गर्दछ, उसै गरी हे अवध्य गौका रूपमा रहेकी प्रकृति माता ! तिमी आफ्ना बाछारूपी सन्तानसित प्रेमको भावना बढाऊ ।

## ७१. अन्न सूक्त

**ऋषि**— ब्रह्मा । **देवता**— अग्नि, विश्वेदेवा । **छन्द**— जगती, त्रिष्टुप् ।

**यदन्नमद्मि बहुधा विरूपं हिरण्यमश्वमुत गामजामविम् । यदेव किं च प्रतिजग्रहाहमग्निष्टद्धोता सुहुतं कृणोतु । ॥१॥**

हामीले अन्नका रूपमा विविध किसिमका अन्न, सुवर्ण, घोडा, गाई, बाखा, भेडा आदिलाई सङ्ग्रह

गरेका छौं, अग्निदेवताले त्यस सम्पत्तिलाई प्रतिग्रहका दोषबाट मुक्त गरेर यज्ञीय संस्कारले सम्पन्न भएको सुहुत बनाइदिऊन् ।

**यन्मा हुतमहुतमाजगाम दत्तं पितृभिरनुमतं मनुष्यैः । यस्मान्मे मन उदिव रारजीत्यग्निष्टद्धोता सुहुतं कृणोतु ॥२॥**

यज्ञीय संस्कारले संस्कारित भएका वा नभएका दुवै किसिमका द्रव्यहरू नै पितृ, देवता र मानिसहरूबाट हामीलाई प्राप्त भएका हुन् । तिनैका कारणले हाम्रो मन अत्यन्त हर्षित भइरहेको छ । त्यस सम्पत्तिलाई अग्निदेवताले प्रतिग्रहका दोषबाट मुक्त गरेर यज्ञीय संस्कारले सम्पन्न भएको सुहुत बनाइदिऊन् ।

**यदन्नमद्म्यनृतेन देवा दास्यन्नदास्यन्नुत संगृणामि । वैश्वानरस्य महतो महिम्ना शिवं मह्यं मधुमदस्त्वन्नम् ॥३॥**

हे देवताहरू हो ! असत्य व्यवहारबाट खाइएको अन्न एवं लिइएको ऋण चुक्ता नगरीकन हामीले जुन कुरो सङ्ग्रह गरेका छौं, त्यस सम्पत्तिलाई वैश्वानर अग्निदेवताले प्रतिग्रहका दोषबाट मुक्त गरेर यज्ञीय संस्कारले सम्पन्न भएको सुहुत बनाइदिऊन् ।

## ७२. वाजीकरण सूक्त

**ऋषि–** अथर्वाङ्गिरा । **देवता–** शेपोऽर्क । **छन्द–** जगती, अनुष्टुप्, भुरिक् अनुष्टुप् ।

**यथासितः प्रथयते वशाँ अनु वपूंषि कृण्वन्नसुरस्य मायया । एवा ते शेपः सहसायमर्कोऽङ्गेनाङ्गं संसमकं कृणोतु ॥१॥**

बन्धनरहित मानिसले आसुरी मायाद्वारा जसरी अनेकौं किसिमका रूप सृजन गर्दछ, उसै गरी हे देवताहरू हो ! तिमीहरू प्रजनन गर्ने अङ्गलाई सन्तान उत्पत्ति गर्नका लागि सक्षम बनाओ ।

**यथा पसस्तायादरं वातेन स्थूलभं कृतम् । यावत् परस्वतः पसस्तावत् ते वर्धतां पसः ॥२॥**

शरीरको जस्तो अङ्ग सन्तान उत्पन्न गर्नका लागि सक्षम हुन्छ, उसै किसिमको पूर्ण पुरुषजस्तै तिमीहरूका अङ्गले सन्तान उत्पन्न गर्न सकोस् ।

**यावदङ्गीनं पारस्वतं हास्तिनं गार्दभं च यत् । यावदश्वस्य वाजिनस्तावत् ते वर्धतां पसः ॥३॥**

जङ्गली हात्ती, घोडा आदि पशुले जसरी आफ्ना शरीरका अङ्गलाई बलियो र वीर्यशाली बनाइराखेका हुन्छन्, उसै गरी यी पुरुषहरूका अङ्ग पनि बलिया र पूर्ण पुरुषजस्तै परिपुष्ट होऊन् ।

## ७३. सांमनस्य सूक्त

**ऋषि–** अथर्वा । **देवता–** सांमनस्य, वरुण, सोम अग्नि, बृहस्पति, वसुगण, वास्तोष्पति । **छन्द–** भुरिक् अनुष्टुप्, त्रिष्टुप् ।

**एह यातु वरुणः सोमो अग्निर्बृहस्पतिर्वसुभिरेह यातु । अस्य श्रियमुपसंयात सर्व उग्रस्य चेत्तुः संमनसः सजाताः ॥१॥**

अग्निदेवता, सोमदेवता, वरुणदेवता यहाँ आऊन् । समस्त देवताहरूका स्वामी बृहस्पतिदेवता पनि आठै वसुहरूका साथमा यहाँ आऊन् । हे समान जन्म भएकाहरू हो ! तिमीहरू समान मनका भएर यस उग्र चेतनालाई श्रीसम्पन्न बनाओ ।

**यो वः शुष्मो हृदयेष्वन्तराकूतिर्या वो मनसि प्रविष्टा । तान्त्सीवयामि हविषा घृतेन मयि सजाता रमतिर्वो अस्तु ॥२॥**

हे बन्धुबान्धवहरू हो ! तिमीहरूका हृदयमा जुन बल र मनमा जुन सङ्कल्प रहेको छ, उनीहरूलाई हविष्यान्न र घिउसित हामी आबद्ध गराउँछौं । तिमीहरू श्रेष्ठ कुलमा उत्पन्न भएका हौ र तिमीहरूको रुचि हामीतर्फ सधैं रहोस् ।

**इहैव स्त माप याताध्यस्मत् पूषा परस्तादपथं वः कृणोतु । वास्तोष्पतिरनु वो जोहवीतु मयि सजाता रमतिर्वो अस्तु ॥३॥**

हे बन्धुबान्धवहरू हो ! हामीलाई छोडेर अलग नजाओ, हामीसित स्नेहपूर्ण व्यवहार गर । मार्गरक्षक पूषादेवताले हाम्रो प्रतिकूल चलनबाट तिमीहरूलाई रोकून् । वास्तोस्पति देवताले हाम्रा लागि अनुकूलतापूर्वक बोलाऊन् ।

## ७४. सांमनस्य सूक्त

**ऋषि–** अथर्वा । **देवता–** सांननस्य, नाना **देवता,** त्रिणामा । **छन्द–** अनुष्टुप्, त्रिष्टुप् ।

**सं वः पृच्यन्तां तन्व१ः सं मनांसि समु व्रता । सं वोऽयं ब्रह्मणस्पतिर्भगः सं वो अजीगमत् ॥१॥**

हे स्नेहको मन भएकाहरू हो ! तिमीहरूको तन र मन परस्परमा स्नेहका साथ मिलेको होस् । कर्म पनि आपसमा मिलिजुलीकन श्रेष्ठ ढङ्गले सम्पन्न होऊन् । भगदेवता र ब्रह्मणस्पतिदेवताले तिमीहरूलाई हाम्रा निम्ति बारम्बार बोलाऊन् ।

**संज्ञपनं वो मनसोऽथो संज्ञपनं हृदः । अथो भगस्य यच्छ्रान्तं तेन संज्ञपयामि वः ॥२॥**

हे समान मनको भावना बनाउन इच्छुकहरू हो ! भगदेवताले परिश्रमपूर्वक गरेको तपस्याजस्तो श्रेष्ठ कर्मद्वारा तिमीहरूलाई हामी समान ज्ञानले सम्पन्न बनाउँछौँ । त्यसो भएपछि तिमीहरूको मन र हृदय सधैँ समान ज्ञानले सम्पन्न बनोस् ।

**यथादित्या वसुभिः संबभूवुर्मरुद्भिरुग्रा अहृणीयमानाः । एवा त्रिणामन्नहृणीयमान इमाञ्जनान्त्संमनसस्कृधीह ॥३॥**

अदितिका पुत्र मित्रावरुणले आठ वसुहरूलाई र उग्र रुद्रहरूले आफ्नो उग्रतालाई छोडेर मरुत्हरूको साथ लागेर जसरी समान ज्ञानसम्पन्न भए, उसै गरी हे तीन नाम भएका अग्निदेवता ! तिमी पनि क्रोध त्यागेर यी साम्मनस्यको इच्छा गर्ने मानिसहरूलाई परस्परमा सङ्गठित गराऊ ।

## ७५. सपत्नक्षयण सूक्त

**ऋषि–** कबन्ध । **देवता–** इन्द्र । **छन्द–** अनुष्टुप्, षद्पदा जगती ।

**निरमुं नुद ओकसः सपत्नो यः पृतन्यति । नैर्बाध्येन हविषेन्द्र एनं पराशरीत् ॥१॥**

हामीलाई दुःख दिनका लागि शत्रुको जुन सेना एकत्रित भइरहेको छ, त्यो आफ्ना स्थानबाट पतित होस् । शत्रुको नाश गर्नका लागि अर्पित गरिएको आहुतिले इन्द्रदेवता प्रसन्न भएर शत्रुहरूलाई नाश गरून् ।

**परमां तं परावतमिन्द्रो नुदतु वृत्रहा । यतो न पुनरायति शश्वतीभ्यः समाभ्यः ॥२॥**

वृत्रासुरलाई संहार गर्ने इन्द्रदेवताले ती शत्रुलाई लखेट्दै लगेर परको ठाउँसम्म पुऱ्याऊन् र त्यस ठाउँबाट उनीहरू सयौँ वर्षसम्ममा पनि फर्केर आउन नसकून् ।

**एतु तिस्रः परावत एतु पञ्च जनाँ अति । एतु तिस्रोऽति रोचना यतो न पुनरायति शश्वतीभ्यः समाभ्यो यावत् सूर्यो असद् दिवि ॥३॥**

ती शत्रुहरू तीनै वटा लोक र पाँचै किसिमका जनसमूहबाट पर पुगून् । उनीहरू यस्ता ठाउँमा पुगून्, जहाँ सूर्य र अग्निको प्रकाश पनि पुग्न नसकोस् । सूर्यदेवता जहिलेसम्म द्युलोकमा हुन्छन्, त्यस बेलासम्म तिनीहरू समाजमा फिर्ता आउन नसकून् ।

## ७६. आयुष्य सूक्त

**ऋषि–** कबन्ध । **देवता–** सान्तपनाग्नि । **छन्द–** अनुष्टुपं, ककुम्मती अनुष्टुप् ।

**य एनं परिषीदन्ति समादधति चक्षसे । संप्रेद्धो अग्निर्जिह्वाभिरुदेतु हृदयादधि ॥१॥**

उपासना गर्नका लागि जुन मानिस यी अग्निका वरिपरि बस्दछन् र दिव्य दृष्टिका लागि यिनको जसले आराधना गर्दछन्, उनका हृदयमा ज्ञानको अग्नि प्रदीप्त होस् ।

**अग्नेः सांतपनस्याहमायुषे पदमा रभे । अद्धातिर्यस्य पश्यति धूममुद्यन्तमास्यतः ॥२॥**
त्यसरी तातिने ज्ञानाग्निलाई हामी आयु वृद्धिका लागि प्राप्त गर्दछौं । ती अग्निका मुखबाट धुवाँ निस्कँदै गरेको अद्धाति नामका ज्ञानी ऋषिले देखेका हुन्छन् ।

**यो अस्य समिधं वेद क्षत्रियेण समाहिताम् । नाभिह्वारे पदं नि दधाति स मृत्यवे ॥३॥**
जुन क्षत्रिय पुरुषहरू विधिवत् रहेका अग्निको आहुतिका विषयमा जान्दछन्, तिनीहरूले कुटिल क्षेत्रमा भौँतारिँदै मृत्युका दिशातर्फ गोडा अघि सारेका हुँदैनन् ।

**नैनं घ्नन्ति पर्यायिणो न सन्नाँ अव गच्छति । अग्नेर्यः क्षत्रियो विद्वान्नाम गृह्णात्यायुषे ॥४॥**
यस्ता क्षत्रियहरूले दीर्घजीवनको कामना गर्दै अग्निदेवताको स्तोत्र पाठ गर्दछन्, तिनलाई शत्रुले छेकारो हालेर पनि मार्न सक्दैनन् ।

## ७७. प्रतिष्ठापन सूक्त

**ऋषि–** कबन्ध । **देवता–** जातवेदा, अग्नि । **छन्द–** अनुष्टुप् ।

**अस्थाद् द्यौरस्थात् पृथिव्यस्थाद् विश्वमिदं जगत् । आस्थाने पर्वता अस्थु स्थाम्न्यश्वाँ अतिष्ठिपम् ॥१॥**
द्युलोक, भूलोक र यी दुवै लोकका माझमा रहेका सम्पूर्ण लोकहरू नै आआफ्ना मर्यादामा अडिएका छन् । पर्वत पनि आआफ्ना स्थानमा स्थिर भएर रहेका छन् । उसै गरी हामी पनि आफ्नो गमनशील शक्तिलाई स्थाम्नीको मर्यादाले स्थिर गराउँछौं ।

**य उदानट् परायणं य उदानण्न्यायनम् । आवर्तनं निवर्तनं यो गोपा अपि तं हुवे ॥२॥**
इन्द्रिय आदिको शक्तिरूपी जुन गाईका पालकले प्राण, मन आदि परम स्थान पाएर पनि प्राणीका बीचमा निम्न स्थानतर्फ आउँछन् र जसमा सर्वत्र आउनेजाने सामर्थ्य छ, हामी उनैलाई आह्वान गर्दछौं ।

**जातवेदो नि वर्तय शतं ते सन्त्वावृतः । सहस्रं त उपावृतस्ताभिर्नः पुनरा कृधि ॥३॥**
हे जातवेदा अग्निदेवता ! तिमी यी शक्तिलाई निम्न गमनबाट फिर्ता गराऊ । आउनका लागि तिमीसित सहस्रौं मार्गहरू छन्, तिनबाट आउन हामीलाई समर्थ बनाऊ ।

## ७८. धनप्राप्तिप्रार्थन सूक्त

**ऋषि–** अथर्वा । **देवता–** चन्द्रमा, रयि, त्वष्टा । **छन्द–** अनुष्टुप् ।

**तेन भूतेन हविषायमा प्यायतां पुनः । जायां यामस्मा आवाक्षुस्तां रसेनाभि वर्धताम् ॥१॥**
यी पुरुषलाई जुन हवि र स्त्री प्रदान गरिएका छन्, तिनलाई पनि बारम्बार पुष्ट गराऊ । पुष्टिकारक रसले यी दुवैको वृद्धि होस् ।

**अभि वर्धतां पयसाभि राष्ट्रेण वर्धताम् । रय्या सहस्रवर्चसेमौ स्तामनुपक्षितौ ॥२॥**
पतिपत्नी दुवै दुध आदिले पुष्ट होऊन्, राष्ट्रका साथमा यिनीहरू विकसित होऊन् र अनेकौं किसिमले तेजस्वी ऐश्वर्य पाएर यी दुवै परिपूर्ण होऊन् ।

**त्वष्टा जायामजनयत् त्वष्टास्यै त्वां पतिम् । त्वष्टा सहस्रमायूंषि दीर्घमायुः कृणोतु वाम् ॥३॥**
त्वष्टादेवताले यी स्त्रीलाई उत्पन्न गरेका हुन् । हे पति ! तिमीलाई पनि यी स्त्रीका लागि त्वष्टादेवताले नै उत्पन्न गरेका हुन् । उनै त्वष्टादेवताले तिमीहरू दुवैलाई दीर्घायु प्रदान गरेर हजारौं वर्षसम्म जीवनयापन गर्नका लागि सक्षम बनाऊन् ।

## ७९. ऊर्जाप्राप्ति सूक्त

**ऋषि–** अथर्वा । **देवता–** संस्फान । **छन्द–** गायत्री, त्रिपदा प्राजापत्या जगती ।

**अयं नो नभसस्पतिः संस्फानो अभि रक्षतु । असमातिं गृहेषु नः ॥१॥**
अग्निदेवताले आहुतिलाई द्युलोकसम्म पुऱ्याउँछन् र त्यसको पालक भनेर चिनिएका छन् । उनै अग्निदेवताले हाम्रा घरलाई धनधान्य आदि सामग्रीले भरपूर गराऊन् ।

**त्वं नो नभसस्पत ऊर्जं गृहेषु धारय । आ पुष्टमेत्वा वसु ॥२॥**

हे अन्तरिक्षका स्वामी वायुदेवता ! हाम्रा घरलाई तिमी बलवर्द्धक रसले युक्त अन्नले सम्पन्न गराऊ । प्रजा, पशु र अन्य पुष्टिकारक धनधान्य पनि हामीलाई प्राप्त होस् ।

**देव संस्फान सहस्रापोषस्येशिषे । तस्या नो रास्व तस्य नो धेहि तस्य ते भक्तिवांसः स्याम ॥३॥**

हे आदित्यदेवता ! तिमी हजारौँ पोषक सम्पदाका ईश्वर हौ । तिमी आफ्ना ती सम्पदाहरू हामीलाई प्रदान गर । तिम्रो कृपा र अनुग्रहले हामी ऐश्वर्यका भागीदार बन्न सकौँ ।

## ८०. अरिष्ट क्षयण सूक्त

**ऋषि**– अथर्वा । **देवता**– चन्द्रमा, । **छन्द**– भुरिक् अनुष्टुप्, अनुष्टुप्, प्रस्तार पङ्क्ति ।

**अन्तरिक्षेण पतति विश्वा भूतावचाकशत् । शुनो दिव्यस्य यन्महस्तेना ते हविषा विधेम ॥१॥**

संसारका सबै प्राणी र पदार्थलाई प्रकाशित गर्दै जो अन्तरिक्षबाट अवतरित हुने गर्दछन्, उनै दिव्य लोकका शुनः नामका फैलिएको प्रकाशपुञ्ज सूर्यदेवताको जुन महत्त्व रहेको छ, त्यसैबाट प्राप्त हुने हविष्य हामी तिमीलाई अर्पित गर्दछौँ ।

**ये त्रयः कालकाञ्जा दिवि देवा इव श्रिताः । आन्सर्वानह्व ऊतयेऽस्मा अरिष्टतातये ॥२॥**

कालकाञ्ज नामका आसुरी पदार्थका रूपमा रहेका यी जुन तीन वटा कण द्युलोकमा देवताझैँ बनेर बसेका छन्, हामी आफ्नो रक्षा र कल्याणका लागि तिनैलाई आह्वान गर्दछौँ ।

**अप्सु ते जन्म दिवि ते सधस्थं समुद्रे अन्तर्महिमा ते पृथिव्याम् । शुनो दिव्यस्य यन्महस्तेना ते हविषा विधेम् ॥३॥**

हे अग्निदेवता ! जलमा तिमी विद्युत्का रूपमा उत्पन्न हुने गरेका छौ, द्युलोकमा तिम्रो स्थान आदित्यका रूपमा रहेको छ । समुद्रका बीचमा र पृथ्वीमा तिम्रो महिमा स्पष्ट छ । हे अग्निदेवता ! दिव्य श्वानका रूपमा रहेका सूर्यको तेजरूपी हविले हामी तिम्रो पूजा गर्दछौँ ।

## ८१. गर्भाधान सूक्त

**ऋषि**– अथर्वा । **देवता**– आदित्य, त्वष्टा । **छन्द**– अनुष्टुप् ।

**यन्तासि यच्छसे हस्तावप रक्षांसि सेधसि । प्रजां धनं च गृह्वानः परिहस्तो अभूदयम् ॥१॥**

हे अग्निदेवता ! आसुरी वृत्ति एवं शक्तिलाई तिमी आफ्ना वशमा राख्नका लागि समर्थ छौ र यी दुवै हातले उनलाई नष्ट गर्दछौ । त्यसै किसिमका देवताले पुत्रपौत्रादि प्रजा एवं धनको सुरक्षा गर्ने तेजले सम्पन्न तेजोवलय नामका चुराका रूपमा सिद्ध होऊन् ।

**परिहस्त वि धारय योनिं गर्भाय धातवे । मर्यादे पुत्रमा धेहि तं त्वमा गमयागमे ॥२॥**

हे तेजोवलय ! तिमी गर्भ र योनिको सुरक्षा गर । हे मर्यादा ! तिमी पुत्र धारण गर र समय पूरा भएपछि उसलाई बाहिर आउने प्रेरणा देऊ ।

**यं परिहस्तमबिभरदितिः पुत्रकाम्या । त्वष्ट्य तमस्या आ बध्नाद् यथा पुत्रं जनादिति ॥३॥**

जुन चुरालाई पुत्रको कामना गर्ने अदितिदेवीले धारण गरेकी थिइन्, त्यो त्वष्टादेवताले उसै नारीलाई धारण गराऊन् र त्यो नारी पुत्र उत्पन्न गर्नका लागि समर्थ होस् ।

## ८२. जायाकामना सूक्त

**ऋषि**– भग । **देवता**– इन्द्र । **छन्द**– अनुष्टुप् ।

**आगच्छत आगतस्य नाम गृह्णाम्यायतः । इन्द्रस्य वृत्रघ्नो वन्वे वासवस्य शतक्रतोः ॥१॥**

वृत्रासुरलाई समाप्त गर्ने, वसुहरूले उपासना गरिएका, सयौँ किसिमका यज्ञ आदि कर्म गरेका इन्द्रदेवताको नाम लिएर उनैका साक्ष्यमा आउनेहरू अति नजिक आइपुगेका छन् । शक्तिप्रवाहका रूपमा रहेका तिनीहरूलाई म आफ्नै इन्द्रियमा पुत्री प्राप्त गर्नका लागि वरण गर्दछु ।

**येन सूर्यां सावित्रीमश्विनोहतुः पथा । तेन मामब्रवीद् भगो जायामा वहतादिनि ॥२॥**
भगदेवताले मसित— अश्विनीकुमारहरूले जुन मार्गद्वारा सूर्या-सावित्रीलाई प्राप्त गरेका थिए, उसै उत्तम मार्गबाट तिमी पनि स्त्री प्राप्त गर भनेका थिए ।

**यस्तेऽङ्कुशो वसुदानो बृहन्निन्द्र हिरण्ययः । तेना जनीयते जायां मह्यं धेहि शचीपते ॥३॥**
हे इन्द्रदेवता ! तिमीसित धन प्रदान गर्नमा समर्थ सुनको जुन ठूलो अङ्कुश छ, त्यसैले मलाई पुत्रको अभिलाषा गर्ने खालकी स्त्री प्राप्त गराऊ ।

## ८३. भैषज्य सूक्त

**ऋषि—** अङ्गिरा । **देवता—** सूर्य, चन्द्र, रोहिणी, रामायणी । **छन्द—** अनुष्टुप्, एकावसाना द्विपदा निचृदार्ची अनुष्टुप् ।

**अपचितः प्र पतत सुपर्णो वसतेरिव । सूर्यः कृणोतु भेषजं चन्द्रमा वोऽपोच्छतु ॥१॥**
हे रोगका रूपमा रहेका गलगाँड ! तिमी यस शरीरलाई छोडेर गुँडबाट उडेको गरूडझैँ निस्केर जाऊ । सूर्यदेवताले रोगको औषधि निर्माण गरून् र चन्द्रदेवताले रोगहरू हटाइदिऊन् ।

**एन्येका श्येन्येका कृष्णैका रोहिणी द्वे । सर्वासामग्रभं नामावीरघ्नीरपेतन ॥२॥**
हे गलगण्डहरू हो ! तिमीहरू वात, पित्त, कफ आदिका विभिन्न भेदले छिबिरे, सेतो, कालो र रातो वर्णका छौ । हामीले यसै किसिमका तिमीहरूका नाम राख्यौँ । यिनै नामबाट प्रसन्न भएर तिमीहरू वीर पुरुषलाई हिंसा नगरीकन यहाँबाट निस्केर जाओ ।

**असूतिका रामायण्यपचित् प्र पतिष्यति । ग्लौरितः प्र पतिष्यति स गलुन्तो नशिष्यति ॥३॥**
गल्ने, सड्ने गलगण्डको जरो नसाहरूमा लुकेर बसेको हुन्छ । मूल कारणसहित यो गलगण्ड नष्ट होस् ।

**वीहि स्वामाहुतिं जुषाणो मनसा स्वाहा मनसा यदिदं जुहोमि ॥४॥**
हामी मन लगाएर हवन गर्दछौँ, यो हवन उत्तम होस् । तिमी आफ्नो भाग आहुति ग्रहण गर र यहाँबाट भाग ।

## ८४. निर्ऋतिमोचन सूक्त

**ऋषि—** अङ्गिरा । **देवता—** निर्ऋति । **छन्द—** भुरिक् जगती, त्रिपदार्षी बृहती, जगती, भुरिक् त्रिष्टुप् ।

**यस्यास्त आसनि घोरे जुहोम्येषां बद्धानामवसर्जनाय कम् । भूमिरिति त्वाभिप्रमन्वते जना निर्ऋतिरिति त्वाहं परि वेद सर्वतः ॥१॥**
हे निर्ऋति नामका दुर्गतिका बन्धन ! पीडितलाई मुक्त गर्नका लागि हामी तिम्रो क्रूर मुखमा आहुति प्रदान गर्दछौँ । तिमी मन लगाएर त्यसलाई ग्रहण गर र रोगीलाई रोगबाट मुक्त गराऊ । औषधिसहित तयार पारिएका यस जलले रोगीलाई रोगमुक्त गराओस् । साधारणतया मानिसहरूले तिमीलाई ब्रह्मका रूपमा चिनेका छन् तर हामीले तिम्रो कारणरूपी पापलाई पनि चिनेका छौँ ।

**भते हविष्मती भवैष ते भागो यो अस्मासु । मुञ्चेमानमुनेनसः स्वाहा ॥२॥**
हे सर्वत्र विद्यमान निर्ऋति नामका सङ्कट ! हामीले दिएका आहुतिले तिमी हवियुक्त होऊ र आफूलाई शमन गर । यी गाईरूपी इन्द्रियलाई रोगको कारणरूपी पापबाट मुक्त गर ।

**एवो ष्व१स्मन्निर्ऋतेऽनेहा त्वमयस्मयान् वि चृता बन्धपाशान् । यमो मह्यं पुनरित् त्वां ददाति तस्मै यमाय नमो अस्तु मृत्यवे ॥३॥**
हे निर्ऋति ! रोगका बन्धनबाट मुक्त पारेर सुख हामीलाई तिमी सुख प्रदान गर । हे रोगी ! तिमीलाई मृत्युका देवता यमले फेरि हामीतिरै फिर्ता गरेका छन् । त्यसैले ती प्राण अपहरण गर्ने यमदेवतालाई हाम्रो नमस्कार छ ।

**अयस्मये द्रुपदे बेधिष इहाभिहितो मृत्युभिर्ये सहस्रम् । यमेन त्वं पितृभिः संविदान उत्तमं नाकमधि रोहयेमम् ॥४॥**

हे निर्ऋति ! जब तिमी आफ्ना फलामे र काठका बन्धनभित्र बाँध्छौ, त्यस बेला हजारौं खालका दुःखदायी बन्धनमा हामी बाँधिएका हुन्छौं । पितृहरू र यमसित मिलेर तिमी यस्तो ठूलो दुःखबाट मुक्त गराएर स्वर्गको जस्तै सुखका स्थितिमा पुऱ्याऊ ।

## ८५. यक्ष्मनाशन सूक्त

**ऋषि**— अथर्वा । **देवता**— वनस्पती । **छन्द**— अनुष्टुप् ।

**वरणो वारयाता अयं देवो वनस्पतिः । यक्ष्मो यो अस्मिन्नाविष्टस्तमु देवा अवीवरन् ॥१॥**

दान आदि असल गुणले सम्पन्न वरण नामका वृक्षको यस मणिले राजयक्ष्मा आदि रोगहरूलाई नष्ट गरोस् । यस रोगपीडित व्यक्तिलाई देवगणले रोगबाट मुक्त गराऊन् ।

**इन्द्रस्य वचसा वयं मित्रस्य वरुणस्य च । देवानां सर्वेषां वाचा यक्ष्मं ते वारयामहे ॥२॥**

हे रोगी ! इन्द्रदेवता, मित्र, वरुण तथा अन्य देवताहरूको वचनले हामी मणिबन्धन गर्नेहरू तिमीलाई यक्ष्मा रोगबाट मुक्त गराउँछौं ।

**यथा वृत्र इमा आपस्तस्तम्भ विश्वधा यतीः । एवा ते अग्निना यक्ष्मं वैश्वानरेण वारये ॥३॥**

संसारलाई पोषण पुऱ्याउने मेघमा रहेको जलको प्रवाहलाई जसरी वृत्रासुरले रोकेको थियो, उसरी नै हे रोगी ! हामी वैश्वानर अग्निका सहायताले तिम्रा रोगलाई पनि रोकिदिन्छौं ।

## ८६. वृषकामना सूक्त

**ऋषि**— अथर्वा । **देवता**— एकवृष । **छन्द**— अनुष्टुप् ।

**वृषेन्द्रस्य वृषा दिवो वृषा पृथिव्या अयम् । वृषा विश्वस्य भूतस्य त्वमेकवृषो भव ॥१॥**

श्रेष्ठताको कामना गर्ने यी पुरुष इन्द्रदेवताको कृपाले तृप्त गराउने होऊन् । यिनले द्युलोकलाई सन्तुष्ट गराएर पर्जन्यदेवबाट वर्षा गराउँदै समस्त लोकका प्राणीको तिर्खा मेटाऊन् । हे श्रेष्ठता प्राप्त गर्न खोज्ने पुरुष ! तिमी सर्वश्रेष्ठ हुनेछौ ।

**समुद्र ईशे स्रवतामग्निः पृथिव्या वशी । चन्द्रमा नक्षत्राणामीशे त्वमेकवृषो भव ॥२॥**

जसरी जलका स्वामी समुद्र, पृथ्वीका स्वामी अग्नि र नक्षत्रका स्वामी चन्द्रमा हुन् उसै गरी हे श्रेष्ठताको कामना गर्ने पुरुष ! तिमी पनि सबैभन्दा श्रेष्ठ बन ।

**सम्राडस्यसुराणां ककुन्मनुष्याणाम् । देवानामर्धभागसि त्वमेकवृषो भव ॥३॥**

हे इन्द्रदेवता ! तिमी असुरहरूका सम्राट् र तुलनाका दृष्टिले सम्पूर्ण देवताका आधा भाग छौ । हे श्रेष्ठताको कामना गर्ने पुरुष ! यस्ता श्रेष्ठ इन्द्रदेवताका कृपाले तिमी पनि सर्वश्रेष्ठ बन ।

## ८७. राज्ञः संवरण सूक्त

**ऋषि**— अथर्वा । **देवता**— ध्रुव । **छन्द**— अनुष्टुप् ।

**आ त्वाहार्षमन्तरभूर्ध्रुवस्तिष्ठाविचाचलत् । विशस्त्वा सर्वा वाञ्छन्तु मा त्वद्राष्ट्रमधि भ्रशत् ॥१॥**

हे राजा ! तिमीलाई यस राष्ट्रका सबै क्षेत्रको अधिपतिका रूपमा नियुक्त गरिएको छ । तिमी यसका स्वामी हौ । तिमी सधैं अविचल र स्थिर भएर बस । प्रजाले तिमीलाई रुचाऊन् । तिम्रा कारणले राष्ट्रको गौरव क्षीण नहोस् ।

**इहैवैधि माप च्योष्ठाः पर्वतइवाविचाचलत् । इन्द्र इवेह ध्रुवस्तिष्ठेह राष्ट्रमु धारय ॥२॥**

तिमी यसै राष्ट्रमा निश्चल भएर बस । तिमी आफ्ना पदबाट कहिल्यै च्युत नहोऊ । पर्वतझैं तिमी निश्चल भएर बस । स्वर्गलोकमा इन्द्रदेवता जस्ता किसिमले रहेका छन् त्यस्तै किसिमल यस पृथ्वीमा तिमी पनि स्थिर भएर राष्ट्रका शासनको नेतृत्व गर ।

**इन्द्र एतमदीधरद् ध्रुवं ध्रुवेण हविषा । तस्मै सोमो अधि ब्रवदयं च ब्रह्मणस्पतिः ॥३॥**

इन्द्रदेवताले यी अधिपतिलाई अक्षय यजनीय सामग्री उपलब्ध गराएर स्थिरता प्रदान गरून् ।

सोमले उनलाई आफ्नै आत्मीय बनाऊन् । ब्रह्मणस्पतिदेवताले पनि उनलाई आत्मीय मानून् ।

## ८८. ध्रुवोराजा सूक्त

**ऋषि**— अथर्वा । **देवता**— ध्रुव । **छन्द**— अनुष्टुप्, त्रिष्टुप् ।

**ध्रुवा द्यौर्ध्रुवा पृथिवी ध्रुवं विश्वमिदं जगत् । ध्रुवासः पर्वता इमे ध्रुवो राजा विशामयम् ॥१॥**

जसरी आकाश, पृथ्वी, सम्पूर्ण पर्वत र समस्त विश्व नै अविचल रहेको छ, उसै गरी यी प्रजाका स्वामी राजा पनि स्थिर रहून् ।

**ध्रुवं ते राजा वरुणो ध्रुवं देवो बृहस्पतिः । ध्रुवं त इन्द्रश्चाग्निश्च राष्ट्रं धारयतां ध्रुवम् ॥२॥**

हे राजन् ! तिम्रा राष्ट्रलाई वरुणदेवताले स्थायित्व प्रदान गरून् । दिव्य गुणले सम्पन्न बृहस्पतिदेवताले स्थिरता प्रदान गरून् । इन्द्रदेवता र अग्निदेवताले पनि तिम्रा राष्ट्रलाई स्थिर रूप धारण गर्ने बनाऊन् ।

**ध्रुवोऽच्युतः प्र मृणीहि शत्रूञ्छत्रूयतोऽधरान् पादयस्व । सर्वा दिशः समनसः सध्रीचीर्ध्रुवाय ते समितिः कल्पतामिह ॥३॥**

हे राजा ! आफूलाई सुदृढ राखेर शत्रुलाई सखाप बनाऊ । जसको आचरण शत्रुको जस्तै हुन्छ, त्यस्तालाई पनि ढालिदेऊ । शत्रु नाश भएपछि समस्त दिशाहरूमा रहेका प्रजालाई समान बुद्धि र समान मन भएका बनाऊ र उनीहरूको सङ्गठन तिम्रो सुदृढताका लागि योजना बनाउनमा समर्थ होस् ।

## ८९. प्रीतिसंजनन सूक्त

**ऋषि**— अथर्वा । **देवता**— रुद्र, सोम, वात, मित्रावरुण । **छन्द**— अनुष्टुप् ।

**इदं यत् प्रण्यः शिरो दत्तं सोमेन वृष्ण्यम् । ततः परि प्रजातेन हार्दिं ते शोचयामसि ॥१॥**

सोमले प्रदान गरेको यो बलशाली शिर हो, यसबाट उत्पन्न भएका प्रेमरूपी बलले हामी तिम्रा हृदयको भावनालाई उद्दीप्त गराउँछौं ।

**शोचयामसि ते हार्दिं शोचयामसि ते मनः । वातं धूम इव सध्र्यङ् मामेवान्वेतु ते मनः ॥२॥**

हामी तिम्रा हृदयको भावनालाई उद्दीप्त गराउँछौं र तिम्रा मनको प्रेमभावलाई प्रभावित गर्दछौं । त्यसो भएपछि हामीप्रति तिमी उसै किसिमले अनुकूल रहनेछौ, जसरी धुवाँ वायुको अनुकूल भएर एकै दिशामा प्रवाहित हुने गर्दछ ।

**मह्यं त्वा मित्रावरुणौ मह्यं देवी सरस्वती । मह्यं त्वा मध्यं भूम्या उभावन्तौ समस्यताम् ॥३॥**

मित्रावरुणदेवता, देवी सरस्वती, पृथ्वीका दुवै अन्तिम भाग र मध्य भागका निवासी प्राणीले तिमीलाई हामीसित संलग्न गराऊन् । यी सबै दिव्य शक्तिका कृपाले तिम्रो स्नेह हामीसित बढोस् ।

## ९०. इषुनिष्कासन सूक्त

**ऋषि**— अथर्वा । **देवता**— रुद्र, । **छन्द**— अनुष्टुप्, आर्षी भुरिक् उष्णिक् ।

**यां ते रुद्र इषुमास्यदङ्गेभ्यो हृदयाय च । इदं तामद्य त्वद् वयं विषूचीं वि वृहामसि ॥१॥**

हे रोगी मानिस ! शूलको रोगका अधिष्ठाता देवता र रुवाउने रुद्रदेवताले तिम्रा अङ्ग तथा हृदयमा घोच्नका लागि बाण हानेका छन् । हामी त्यसलाई उखेलिदिन्छौं ।

**यास्ते शतं धमनयोऽङ्गान्यनु विष्ठिताः । तासां ते सर्वासां वयं निर्विषाणि ह्वयामसि ॥२॥**

हे शूलको रोग लागेका मानिस ! तिम्रो शरीरका अङ्ग र मुटुको धमनी आदिमा रहेको विष यस औषधिले समाप्त गरेर तिनलाई विषरहित गराउँछ ।

नमस्ते रुद्रास्यते नमः प्रतिहितायै । नमो विसृज्यमानायै नमो निपतितायै ॥३॥

हे रुद्र ! तिमीलाई नमस्कार छ । तिम्रा धनुषमा चढाएको बाण र छोडिएका बाणहरूलाई पनि नमस्कार छ ।

## ९१. यक्ष्मनाशन सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** यक्ष्मनाशन, आपः । **छन्द–** अनुष्टुप् ।

**इमं यवमष्टायोगैः षड्योगेभिरचर्कृषुः । तेना ते तन्वो३ रपोऽपाचीनमप व्यये ॥१॥**

आठ वटा र छ वटा गोरुलाई हलोमा जोतेर औषधिका लागि यो जौ उत्पन्न गरिएको हो । हामी यसै जौद्वारा रोगका बिउलाई ओरालोतिर लगाएर धपाउँछौँ ।

**न्य१ग् वातो वाति न्यक् तपति सूर्यः । नीचीनमघ्न्या दुहे न्यग् भवतु ते रपः ॥२॥**

वायुदेवता दिव्यलोकबाट तलतिरका लोकमा प्रवाहित हुन्छन्, सूर्यदेवता माथिको लोकबाट तल्लो लोकमा ताप फिँजाउँछन्, गाईको दुध पनि तलतिरै दुहिन्छ भने त्यसरी नै शरीरका रोग आदि अमङ्गललाई पनि ओरालो नै लगाउँछौँ ।

**आप इद् वा उ भेषजीरापो अमीवचातनीः । आपो विश्वस्य भेषजीस्तास्ते कृण्वन्तु भेषजम् ॥३॥**

सबै रोगको ओखती जल नै हो । जलले नै रोगका मूल कारणहरूलाई समाप्त पार्दछ । जल नै सबैलाई हित गर्ने खालको औषधिको रूप हो, त्यसैले त्यो तिम्रा लागि पनि रोगनाशक होस् ।

## ९२. वाजी सूक्त

**ऋषि–** अथर्वा । **देवता–** वाजी । **छन्द–** जगती, त्रिष्टुप् ।

**वातरंहा भव वाजिन् युज्यमान इन्द्रस्य याहि प्रसवे मनोजवाः । युञ्जन्तु त्वा मरुतो विश्ववेदस आ ते त्वष्टा पत्सु जवं दधातु ॥१॥**

हे अश्व ! तिमी रथमा नारिँदाखेरि वायुको जस्तै वेगले सम्पन्न होऊ । तिमी इन्द्रदेवताको प्रेरणाले मनजस्तै वेगवान् भएर आफ्नो लक्ष्यसम्म पुग । सबैको ज्ञान भएका मरुत्गण तिमीसितै होऊन् र त्वष्टादेवताले तिम्रा खुट्टा बलशाली बनाऊन् ।

**जवस्ते अर्वन् निहितो गुहा यः श्येने वात उत योऽचरत् परीत्तः । तेन त्वं वाजिन् बलवान् बलेनाजिं जय समने पारयिष्णुः ॥२॥**

हे अश्व ! श्येन पक्षीको जस्तै र वायुको जस्तै वेग तिमीभित्र लुकेको छ । त्यसलाई प्रकट गरेर बलवान् बन र तीव्र गतिले सङ्ग्रामबाट पार लगाउनुपर्ने भएर युद्ध जित ।

**तनूष्टे वाजिन् तन्व१ं नयन्ती वाममस्मभ्यं धावतु शर्म तुभ्यम् । अह्रुतो महो धरुणाय देवो दिवीव ज्योतिः स्वमा मिमीयात् ॥३॥**

हे वेगवान् अश्व ! तिम्रा शरीरमा सवार भएको हाम्रो शरीर गन्तव्यसम्म चाँडै पुगोस् । तिमीलाई घाउचोटबाट जोगाएर हामी सुख दिन्छौँ । तिमी द्युलोकका सूर्यजस्तै बनेर सहज ज्ञानले चल्दै आफ्ना निवाससम्म पुग ।

## ९३. स्वस्त्ययन सूक्त

**ऋषि–** शन्ताति । **देवता–** रुद्र, यम, मृत्यु, शर्व, भव, विश्वेदेवा, मरुद्गण, अग्नीषोम, वरुण, वातपर्जन्य । **छन्द–** त्रिष्टुप् ।

**यमो मृत्युरघमारो निर्ऋथो बभ्रुः शर्वोऽस्ता नीलशिखण्डः । देवजनाः सेनयोत्तस्थिवांसस्ते अस्माकं परि वृञ्जन्तु वीरान् ॥१॥**

मृत्युदेवता, मारिनुपर्ने, उत्पीडक, पोषक, हिंसक, शस्त्र हान्ने, नीलो शिखा भएका देवताले पापीहरूलाई हिंसा गर्नका लागि आफ्नो सेना साथमा लिएर आक्रमण गर्दछन् । त्यस्ता अवस्थामा नियम बनाएर लागु गर्ने देवताले हाम्रा पुत्रपौत्रादिलाई सुरक्षित र सुखी बनाऊन् ।

**मनसा होमैर्हरसा घृतेन शर्वायास्त्र उत राज्ञे भवाय । नमस्येभ्यो नम एभ्यः**

**कृणोम्यन्यत्रास्मदघविषा नयन्तु ॥२॥**

सङ्कल्पद्वारा घिउ आदिको आहुति दिएर अस्त्रका स्वामी शर्व नाम भएका रुद्रदेवता र अन्य योग्य देवताहरूलाई हामी नमस्कार गर्दछौँ । पापरूपी विष हामीदेखि पर जाओस् ।

**त्रायध्वं नो अघविषाभ्यो वधाद् विश्वे देवा मरुतो विश्ववेदसः । अग्नीषोमा वरुणः पूतदक्षा वातापर्जन्ययोः सुमतौ स्याम ॥३॥**

हे मरुत्गण र विश्वेदेवताहरू हो ! तिमीहरू अघविषा नामको कृत्या र त्यसको संहारक साधनबाट हामीलाई जोगाओ । मित्र, वरुण, अग्नि र सोम नामका देवताले हामीलाई जोगाऊन् र वायु तथा पर्जन्य देवताले हामीमाथि कृपा गरून् ।

## ९४. सांमनस्य सूक्त

**ऋषि–** अथर्वाङ्गिरा । **देवता–** सरस्वती । **छन्द–** अनुष्टुप्, विराट् जगती ।

**सं वो मनांसि सं व्रता समाकूतीर्नमामसि । अमी ये विव्रता स्थन तान् वः सं नमयामसि ॥१॥**

हे विरोधी मन भएका मानिसहरू हो ! तिमीहरूको मन, विचार र सङ्कल्पलाई हामी एकै भावले युक्त बनाएर परस्पर विरोधी कार्यलाई पनि अनुकूलतामा परिवर्तन गराउँछौँ ।

**अहं गृभ्णामि मनसा मनांसि मम चित्तमनु चित्तभिरेत । मम वशेषु हृदयानि वः कृणोमि मम यातमनुवर्त्मान एत ॥२॥**

हे विरुद्ध मन भएका मानिसहरू हो ! तिमीहरूका मनलाई हामी अनुकूल गराउँछौँ । तिमीहरू अनुकूल चित्त भएका होओ । तिमीहरूको हृदयलाई हामी आफ्ना वशमा गराउँछौँ । तिमीहरू हाम्रो अनुसरण गर्दै आआफ्ना कर्म गर ।

**ओते मे द्यावापृथिवी ओता देवी सरस्वती । ओतौ म इन्द्रश्चाग्निश्चर्ध्यास्मेदं सरस्वती ॥३॥**

द्यावापृथिवी परस्परमा अभिमुख भएर हामीसित सम्बद्ध रहेका छन् । वाणीकी देवी सरस्वती पनि हामीसितै सम्बद्ध छिन् । इन्द्र र अग्निदेवता पनि हामीसित सम्बद्ध छन् । त्यसैले हामी यी सबैका कृपाले समृद्ध होऔँ ।

## ९५. कुष्ठौषधि सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** वनस्पति । **छन्द–** अनुष्टुप् ।

**अश्वत्थो देवसदनस्तृतीयस्यामितो दिवि । तत्रामृतस्य चक्षणं देवाः कुष्ठमवन्वत ॥१॥**

यहाँभन्दा तेस्रो लोक माथि रहेको द्युलोकमा देवताहरूले बस्ने गरेको अश्वत्थ नामको वृक्ष छ । त्यस ठाउँमा अमृतका विषयमा वर्णन गर्ने देवताहरूले कुष्ठ नामका औषधिको ज्ञान पाए ।

**हिरण्ययी नौरचरद्धिरण्यबन्धना दिवि । तत्रामृतस्य पुष्पं देवाः कुष्ठमवन्वत ॥२॥**

हिरण्यले बनेको नौका हिरण्यका बन्धनमा बाँधिएको स्वर्गमा नै फेला पर्दछ । त्यहाँ अमृतरूपी कुष्ठ नामको पुष्प देवताहरूले प्राप्त गर्दछन् ।

**गर्भो अस्योषधीनां गर्भो हिमवतामुत । गर्भो विश्वस्य भूतस्येमं मे अगदं कृधि ॥३॥**

हे अग्नि ! तिमी औषधिहरूका गर्भमा रहेका छौ । हिउँका गर्भमा पनि तिमी नै छौ । तिमी नै समस्त प्राणीहरूका गर्भमा रहेका छौ । तिमी यस्ता हुनाले हे अग्निदेवता ! हामीलाई रोगमुक्त गराऊ ।

## ९६. चिकित्सा सूक्त

**ऋषि–** भृग्वङ्गिरा । **देवता–** वनस्पति, सोम । **छन्द–** अनुष्टुप्, त्रिपदा विराट् गायत्री ।

**या ओषधयः सोमराज्ञीर्बह्वीः शतविचक्षणाः । बृहस्पतिप्रसूतास्ता नो मुञ्चन्त्वंहसः ॥१॥**

सयौँ किसिमको यी जुन औषधिहरू छन्, यिनैमा सोमको पनि निवास रहेको छ । बृहस्पतिदेवताले अनेकौँ रोगमा जुन औषधिहरू प्रयोग गरेका थिए, उनै औषधिले हामीलाई

रोगरूपी पापबाट छुटाइदिऊन् ।

**मुञ्चन्तु मा शपथ्याऽदथो वरुण्या दुत । अथो यमस्य पड्वीशाद् विश्वस्माद् देवकिल्बिषात् ॥२॥**

जल अथवा औषधिहरूले हामीलाई शापबाट उत्पन्न भएको रोग वा पापबाट मुक्त गराऊन्। मिथ्या भाषणबाट लाग्ने पापबाट हामीलाई वरुण देवताले मुक्त गराऊन् । यमराजले पापको बन्धनरूपी पाशबाट हामीलाई मुक्त गराऊन् र समस्त देवताहरूले हामीलाई पापरूपी बन्धनबाट मुक्त गराऊन् ।

**यच्चक्षुषा मनसा यच्च वाचोपारिम जाग्रतो यत् स्वपन्तः । सोमस्तानि स्वधया नः पुनातु ॥३॥**

हामीले जागा रहेका अवस्थामा, सुतेका समयमा जुन पापहरू आफ्ना कर्म, इन्द्रिय, वाणी वा मनले गरेका छौं, हाम्रा ती सबै पापहरूबाट सोमदेवताले आफ्नै पवित्र शक्तिले हामीलाई छुटाएर मुक्त गराऊन् ।

## ९७. अभिभूर्वीर सूक्त

**ऋषि**– अथर्वा । **देवता**– देवगण, मित्रावरुण । **छन्द**– त्रिष्टुप्, जगती, भुरिक् त्रिष्टुप् ।

**अभिभूर्यज्ञो अभिभूरग्निरभिभूः सोमो अभिभूरिन्द्रः । अभ्य१हं विश्वाः पृतना यथासान्येवा विधेमाग्निहोत्रा इदं हविः ॥१॥**

यज्ञदेवता, अग्निदेवता, सोमदेवता र इन्द्रदेवताले शत्रुलाई पराजित गरून् । हामी यी समस्त देवताका कृपाले शत्रुको सेनालाई जित्न सकौं भन्नका लागि नै यो हवि अग्निदेवतालाई अर्पित गर्दछौं ।

**स्वधास्तु मित्रावरुणा विपश्चिता प्रजावत् क्षत्रं मधुनेह पिन्वतम् । बाधेथां दूरं निर्ऋतिं पराचैः कृतं चिदेनः प्र मुमुक्तमस्मत् ॥२॥**

हे विद्वान् मित्र र वरुणदेवता ! यो हविरूपी अन्नले तिमीहरूलाई सन्तुष्ट गराओस् । तिमीहरू प्रजालाई क्षत्रिय बलले सेचन गर । निर्ऋतिदेवतालाई हामीबाट टाढै राख र पापदेखि पनि हामीलाई मुक्त गर ।

**इमं वीरमनु हर्षध्वमुग्रमिन्द्रं सखायो अनु सं रभध्वम् । ग्रामजितं गोजितं वज्रबाहुं जयन्तमज्म प्रमृणन्तमोजसा ॥३॥**

हे वीरहरू हो ! यी पराक्रमी राजा वीररसले हर्षित होऊन् । तिमीहरू पनि यिनका अनुयायी बन । गाईहरू जित्ने, उग्र स्वभावका, इन्द्रियलाई वशमा राख्ने, वज्रजस्तै बलिया भुजा भएका, शत्रुलाई जित्ने शस्त्र हानेर शत्रुमाथि आक्रमण गर्ने वीरहरूको अनुकूल रहेर आआफ्नो व्यवहार गर र युद्धका निम्ति सधैं तयार होओ ।

## ९८. अजरक्षत्र सूक्त

**ऋषि**– अथर्वा । **देवता**– इन्द्र । **छन्द**– त्रिष्टुप्, बृहतीगर्भा आस्तार पङ्क्ति ।

**इन्द्रो जयाति न परा जयाता अधिराजो राजसु राजयातै । चर्कृत्य ईड्यो वन्द्यश्चोपसद्यो नमस्यो भवेह ॥१॥**

राजारूपी इन्द्रको विजय होस् । उनी कहिल्यै पराजित नहोऊन् । राजाका पनि राजा हे इन्द्रदेवता ! तिमी शत्रुलाई नाश गर्ने र स्तुत्य छौ, वन्दनीय छौ । त्यसो भएकै हुनाले तिमी हामीले नमस्कार गर्न योग्य छौ ।

**त्वमिन्द्राधिराजः श्रवस्युस्त्वं भूरभिभूतिर्जनानाम् । त्वं दैवीर्विश इमा वि राजायुष्मत् क्षत्रमजरं ते अस्तु ॥२॥**

हे राजाहरूमा श्रेष्ठ राजा ! तिमी अन्य राजाहरूका तुलनामा अधिक कीर्तिसम्पन्न होऊ । तिमी

प्रजाहरूलाई समृद्धिशाली बनाऊ । देवताहरूसित सम्बन्धी यी प्रजाहरूका तिमी अधिपति बन । तिम्रो क्षात्रबल बढोस् र तिमी नबुढिने खालका भएर लामो आयु बाँच ।

**प्राच्या दिशस्त्वमिन्द्रासि राजोतोदीच्या दिशो वृत्रहञ्छत्रुहोऽसि । यत्र यन्ति स्रोत्यास्तज्जितं ते दक्षिणतो वृषभ एषि हव्यः ॥३॥**

हे इन्द्रदेवता ! तिमी पूर्व आदि सबै दिशाहरूका स्वामी हौ । वृत्रहन्ता पनि तिमी नै हौ र शत्रु नाश गर्ने हौ । समस्त भूमण्डल तिम्रै हो । कामनाको वर्षा गराउने हे इन्द्रदेवता ! तिमीलाई हामी आह्वान गर्दछौँ, हामीलाई तिमी सङ्ग्राममा विजयी बनाऊ ।

## ९९. संग्रामजय सूक्त

**ऋषि–** अथर्वा । **देवता–** इन्द्र, सोम, सविता । **छन्द–** अनुष्टुप्, भुरिक् बृहती ।

**अभि त्वेन्द्र वरिमतः पुरा त्वांहूरणाद्धुवे । ह्वयाम्युग्रं चेत्तारं पुरुणामानमेकजम् ॥१॥**

हे इन्द्रदेवता ! पाप या पराजयभन्दा पहिले नै तिमीलाई हामी आह्वान गर्दछौँ । तिमी प्रचण्ड बलले सम्पन्न र सङ्ग्राम जित्नमा निपुण छौ । तिमी धेरै खालका नाम भएका र एक्लै नै युद्ध जित्ने शूरवीर हौ ।

**यो अद्य सेन्यो वधो जिघांसन् न उदीरते । इन्द्रस्य तत्र बाहू समन्तं परि दद्मः ॥२॥**

शत्रुको सेनाले हामीलाई मार्नका लागि आयुध उठाइरहेको छ । त्यसबाट जोगाउनमा समर्थ इन्द्रदेवताका भुजाहरूलाई रक्षाकवचका रूपमा हामीले चारै तिरबाट धारण गरेका छौँ ।

**परि दद्म इन्द्रस्य बाहू समन्तं त्रातुस्त्रायतां नः । देव सवितः सोम राजन्त्सुमनसं मा कृणु स्वस्तये ॥३॥**

उनै इन्द्रदेवता, जसका भुजाहरूलाई हामीले आफ्ना चारैतिर धारण गरेका छौँ, तिनले हामीलाई रक्षा गरून् । हे सवितादेवता र सोमदेवता ! तिमीहरू कल्याणकारी हौ, तिमीहरूले हाम्रो मनलाई श्रेष्ठ बनाओ, त्यसबाट हामी युद्धमा विजय पाउन सकौँ ।

## १००. विषदूषण सूक्त

**ऋषि–** गरुत्मान् । **देवता–** वनस्पति, आसुरी दुहिता । **छन्द–** अनुष्टुप् ।

**देवा अदुः सूर्यो अदाद् द्यौरदात् पृथिव्यदात् । तिस्रः सरस्वतीरदुः सचित्ता विषदूषणम् ॥१॥**

इन्द्र आदि सबै देवताहरूले हामी स्थावर वा जङ्गमलाई समेत विषनाशक औषधि प्रदान गरून् । सर्वप्रेरक सवितादेवता, इडा, सरस्वती र भारती देवीहरूले पनि हामीलाई यस्तै औषधि प्रदान गरून् ।

**यद् वो देवा उपजीका आसिञ्चन् धन्वन्युदकम् । तेन देवप्रसूतेनेदं दूषयता विषम् ॥२॥**

हे देवताहरू हो ! उपजिका नामको यस औषधिले जलरहित मरुस्थलमा पनि जलले चिस्याउने गर्छ । देवताहरूले प्रदान गरेका जलले विषलाई नष्ट गरोस् ।

**असुराणां दुहितासि सा देवानामसि स्वसा । दिवस्पृथिव्याः संभूता सा चकर्थारसं विषम् ॥३॥**

हे औषधि ! तिमी असुरकी सन्तान र देवताहरूकी बहिनी हौ । हे अन्तरिक्ष र पृथ्वीबाट उत्पन्न भएकी ! तिमी स्थावर र जङ्गमको विष हटाऊ ।

## १०१. वाजीकरण सूक्त

**ऋषि–** अथर्वाङ्गिरा । **देवता–** ब्रह्मणस्पति । **छन्द–** अनुष्टुप् ।

**आ वृषायस्व श्वसिहि वर्धस्व प्रथयस्व च । यथाङ्गं वर्धतां शेपस्तेन योषितमिज्जहि ॥१॥**

हे पुरुष ! तिमी सेचन गर्नमा समर्थ साँढेजस्तै शक्तिशाली छौ । तिम्रा शरीरका अङ्गप्रत्यङ्गहरू सुदृढ र वर्द्धित होऊन् । यसै किसिमले शारीरिक एवं मानसिक रूपमा परिपक्व तथा पुष्ट भएर तिमी उस्तै स्त्री प्राप्त गर ।

**येन कृशं वाजयन्ति येन हिन्वन्त्यातुरम् । तेनास्य ब्रह्मणस्पते धनुरिवा तानया पसः ॥२॥**

जुन रसका प्रभावले ख्याउटे पुरुष पनि वीर्यवान् हुने गर्दछन् र जसका प्रभावले रोगी पुरुषलाई पनि पुष्ट गर्ने गरिन्छ; हे ब्रह्मणस्पतिदेवता ! उसै औषधिले तिमी यी पुरुषका शरीरका अङ्गप्रत्यङ्गलाई ताँदो चढेको धनुषजस्तै बलियो र सुदृढ बनाऊ ।

**आहं तनोमि ते पसो अधि ज्यामिव धन्वनि । क्रमस्वर्श इव रोहितमनवग्लायता सदा ॥३॥**

हे पराक्रमको कामना गर्ने पुरुष ! यस बेला हामी लक्ष्यभेदन गर्नका लागि समर्थ हुँदै धनुषमा चढेको ताँदोजस्तै बनाउन तिम्रा शरीरका अङ्गलाई पुष्ट गर्दछौँ । तिमी प्रसन्न र हृष्टपुष्ट शरीरका भएपछि जीवनसङ्गिनीलाई साथैमा लिएर बस ।

## १०२. अभिसांमनस्य सूक्त

**ऋषि–** जमदग्नि । **देवता–** अश्विनीकुमार । **छन्द–** अनुष्टुप् ।

**यथायं वाहो अश्विना समैति सं च वर्तते । एवा मामभि ते मनः समैतु सं च वर्तताम् ॥१॥**

हे अश्विनीकुमारहरू हो ! जसरी रथमा नारिएका घोडाले वाहकको इच्छाअनुसार व्यवहार गर्दछ, उसै गरी तिम्रो मन पनि हामीतिर आकर्षित भएर रहोस् र तिमी पनि हामीप्रति सधैँ अनुकूल व्यवहार गर ।

**आहं खिदामि ते मनो राजाश्वः पृष्ट्यामिव । रेष्मच्छिन्नं यथा तृणं मयि ते वेष्टतां मनः ॥२॥**

तिम्रा मनलाई हामी उसै किसिमले आकर्षित गर्दछौँ, जसरी अश्वराजले डोरीमा बाँधिएको किलो सहज रूपमा उखेल्दछ र आफूतिर तान्दछ अथवा वायुले उखेलेका घाँस आदि हावामा नै घुमिरहेको हुन्छ उसै गरी तिम्रो मन पनि हामीसित रमण गरिरहोस् ।

**आञ्जनस्य मदुघस्य कुष्ठस्य नलदस्य च । तुरो भगस्य हस्ताभ्यामनुरोधनमुद्भरे ॥३॥**

तिम्रो ऐश्वर्यप्रदायक अञ्जनजस्तो हर्षदायक कुष्ठ र नल नामका औषधिका हातले तिमीहरूका हातले हामी अनुकूलता प्राप्त गरौँ ।

## १०३. शत्रुनाशन सूक्त

**ऋषि–** उच्छोचन । **देवता–** इन्द्राग्नी, बृहस्पति, सविता, मित्र, अर्यमा, भग, अश्विनीकुमार, इन्द्र, अग्नि । **छन्द–** अनुष्टुप् ।

**संदानं वो बृहस्पतिः संदानं सविता करत् । संदानं मित्रो अर्यमा संदानं भगो अश्विना ॥१॥**

हे शत्रुहरू हो ! बृहस्पतिदेवताले तिमीहरूलाई पाशमा बाँधून् । सर्वप्रेरक सवितादेवताले तिमीहरूलाई बाँधून् । अर्यमादेवताले पनि तिमीहरूलाई बाँधून्, भगदेवताले र अश्विनीकुमारहरूले पनि तिमीहरूलाई आआफ्ना बन्धनमा बाँधून् ।

**सं परमान्त्समवमानथो सं द्यामि मध्यमान् । इन्द्रस्तान् पर्यहार्दाम्ना तानग्ने सं द्या त्वम् ॥२॥**

हामी शत्रुहरूलाई आफ्ना पाशमा बाँध्दछौँ । पर रहेका, बीचको दूरीमा रहेका र नजिकै रहेका सेनाहरूलाई पनि हामी नष्ट गराउँछौँ । इन्द्रदेवताले सेनापतिहरूलाई अलग गराऊन् र हे अग्निदेवता ! पाशमा बाँधेर तिमी पनि उनीहरूलाई आफ्ना वशमा गराऊ ।

**अमी ये युधमायन्ति केतून् कृत्वानीकशः । इन्द्रस्तान् पर्यहार्दाम्ना तानग्ने सं द्या त्वम् ॥३॥**

फर्फराउँदा झन्डा भएको शत्रुहरूको सङ्गठन लडाइँ गर्नका लागि रणक्षेत्रमा हतारिँदै आइरहेको छ ! हे इन्द्रदेवता ! तिमी यिनीहरूलाई अलगअलग गराऊ र हे अग्निदेवता ! पाशमा बाँधेर तिमी पनि उनीहरूलाई आफ्ना वशमा गराऊ ।

## १०४. शत्रुनाशन सूक्त

**ऋषि**– प्रशोचन । **देवता**– इन्द्राग्नी, मन्त्रोक्त । **छन्द**– अनुष्टुप् ।

**आदानेन संदानेनामित्राना द्यामसि । अपाना ये चैषां प्राणा असुनासून्त्समच्छिदन् ॥१॥**

आदान र संदान नामका पाशमा हामी शत्रुहरूलाई बाँध्दछौँ । प्राण र अपान नामका जीवनी शक्तिले हामी शत्रुहरूलाई छिन्नभिन्न पार्दछौँ ।

**इदमादानमकरं तपसेन्द्रेण संशितम् । अमित्रा येऽत्र नः सन्ति तानग्न आ द्या त्वम् ॥२॥**

हामी यस आदान नामका पाश यन्त्रलाई तपस्याले सिद्ध गरेका छौँ, जसलाई इन्द्रदेवताले तीक्ष्ण गरेका छन् । हे अग्निदेवता ! तिमी सङ्ग्राममा हाम्रा शत्रुलाई पाशमा बाँध ।

**ऐनान् द्यतामिन्द्राग्नी सोमो राजा च मेदिनौ । इन्द्रो मरुत्वानादानममित्रेभ्यः कृणोतु नः ॥३॥**

इन्द्रदेवता र अग्निदेवता प्रसन्न भएर यी शत्रुलाई बन्धनयुक्त गराऊन् । राजा सोम र इन्द्रदेवता मरुत्गणका सहयोगले हाम्रा शत्रुलाई बाँधून् ।

## १०५. कासशमन सूक्त

**ऋषि**– उन्मोचन । **देवता**– कासा । **छन्द**– अनुष्टुप् ।

**यथा मनोमनस्केतैः परापतत्याशुमत् । एवां त्वं कासे प्र पत मनसोऽनु प्रवाय्यम् ॥१॥**

शीघ्रगामी मन जान्न योग्य पदार्थमा जसरी अति चाँडै पुग्दछ, उसै गरी हे कास नामका खोकी ! तिमी यस रोगलाई छोडेर मनकै जस्तो वेगले पर जाऊ ।

**यथा बाणः सुसंशितः परापतत्याशुमत् । एवा त्वं कासे प्र पत पृथिव्या अनु संवतम् ॥२॥**

तीक्ष्ण बाण जसरी पर पुगेर भूमिमा खस्दछ, उसै गरी हे खोकी नामका रोग ! तिमी पनि अति पर पुगेर जमिनको अर्कै ठाउँमा खस ।

**यथा सूर्यस्य रश्मयः परापतन्त्याशुमत् । एवा त्वं कासे प्र पत समुद्रस्यानु विक्षरम् ॥३॥**

जसरी सूर्यको किरण शीघ्रतापूर्वक पर पुग्ने गर्दछ, उसै गरी हे खोकी ! तिमी पनि यस रोगीलाई छोडेर समुद्रका विभिन्न प्रवाहले भरिएका प्रदेशतिर प्रस्थान गर ।

## १०३. दूर्वाशाला सूक्त

**ऋषि**– प्रमोचन । **देवता**– दूर्वाशाला । **छन्द**– अनुष्टुप् ।

**आयने ते परायणे दूर्वा रोहतु पुष्पिणीः । उत्सो वा तत्र जायतां ह्रदो वा पुण्डरीकवान् ॥१॥**

हे अग्निदेवता ! तिमी अभिमुख भएर अथवा पराङ्मुख भएर गमन गर्दछौ । त्यस बेला हाम्रा देशमा फूलसहितको दुबो उम्रिन्छ । हाम्रा घर आदि स्थानमा सरोवर होऊन्, तिनमा कमल फुलून् ।

**अपामिदं न्ययनं समुद्रस्य निवेशनम् । मध्ये ह्रदस्य नो गृहाः पराचीना मुखा कृधि ॥२॥**

हाम्रो घर जलले भरिएको होस् । त्यो घर ठूला जलाशयका निकटमा होस् । हे अग्नि ! तिमी आफ्ना ज्वालाहरूलाई पछाडि राख ।

**हिमस्य त्वा जरायुणा शाले परि व्ययामसि । शीदह्रदा हि नो भुवोऽग्निष्कृणोतु भेषजम् ॥३॥**

हे शाला ! तिमीलाई हामी शीतल वातावरणले युक्त गराउँछौँ । हामीलाई तिमी शीतलता प्रदान गर । अग्निदेवताले हाम्रा घरमा शीत निवारणका लागि औषधिको स्वरूप बनोस् ।

## १०७. विश्वजित सूक्त

**ऋषि**– शन्ताति । **देवता**– विश्वजित् । **छन्द**– अनुष्टुप् ।

**विश्वजित् त्रायमाणायै मा परि देहि । त्रायमाणे द्विपाच्च सर्वं नो रक्ष चतुष्पाद् यच्च नः स्वम् ॥१॥**

हे विश्वजित् नामका देवता ! तिमी जुन त्रायमाण नामको रक्षक शक्तिका सहयोगले संसारको

पालन गर्दछौं, हामीलाई उनैका आश्रयमा राख । तिमी हाम्रा गाई, घोडा आदि चार खुट्टे र पुत्र, पौत्र, सेवक आदि दुई खुट्टेलाई पनि रक्षा गर ।

**त्रायमाणे विश्वजिते मा परि देहि । विश्वजिद् द्विपाच्च सर्वं नो रक्ष चतुष्पाद् यच्च नः स्वम् ॥२॥**

हे त्रायमाण नामका रक्षाका देवता ! हामीलाई तिमी विश्वजित् नामका देवताका हातमा प्रदान गर । हे विश्वजित् ! तिमी हाम्रा गाई, घोडा आदि चार खुट्टे र पुत्र, पौत्र, सेवक आदि दुई खुट्टेलाई पनि रक्षा गर ।

**विश्वजित् कल्याण्यै मा परि देही । कल्याणि द्विपाच्च सर्वं नो रक्ष चतुष्पाद् यच्च नः स्वम् ॥३॥**

हे विश्वजित् नामका देवता ! हामीलाई तिमी कल्याणीशक्तिका अधीनमा गराऊ । हे कल्याणी ! तिमी हाम्रा गाई, घोडा आदि चार खुट्टे र पुत्र, पौत्र, सेवक आदि दुई खुट्टेलाई पनि रक्षा गर ।

**कल्याणि सर्वविदे मा परि देहि । सर्वविद् द्विपाच्च सर्वं नो रक्ष चतुष्पाद् यच्च नः स्वम् ॥४॥**

हे कल्याणी नामकी देवी ! तिमी हाम्रा सबै खालका कार्यका विषयमा जान्दछ्यौ र हामीलाई सर्वविद् देवताका जिम्मा लगाऊ । हे सर्वविद् देवता ! तिमी हाम्रा गाई, घोडा आदि चार खुट्टे र पुत्र, पौत्र, सेवक आदि दुई खुट्टेलाई पनि रक्षा गर ।

## १०८. मेधावर्धन सूक्त

**ऋषि**– शौनक । **देवता**– मेधा, अग्नि । **छन्द**– अनुष्टुप्, उरोबृहती, पथ्याबृहती ।

**त्वं नो मेधे प्रथमा गोभिरश्वेभिरा गहि । त्वं सूर्यस्य रश्मिभिस्त्वं नो असि यज्ञिया ॥१॥**

हे देवत्व धारण गर्नमा समर्थ मेधा ! हामी सबैबाट तिमी नै सर्वप्रथम पूज्य छौ । गाई अश्व आदिका साथमा हामीलाई तिमी प्राप्त होऊ । सूर्यको किरणजस्तै सर्वव्यापक शक्तिका साथमा हामीकहाँ तिमी आऊ ।

**मेधामहं प्रथमां ब्रह्मण्वतीं ब्रह्मजूतामृषिष्टुताम् । प्रपीतां ब्रह्मचारिभिर्देवानामवसे हुवे ॥२॥**

वेदका साथमा ब्रह्मण्वती, ब्राह्मणहरूले सेवा गरिने ब्रह्मजूता, इन्द्रिय विजयको आकाङ्क्षा गर्ने ऋषिहरूहरूले प्रशंसा गरिने, ब्रह्मचारीहरूले प्रवर्धन र स्वीकार गरिने श्रेष्ठ मेधा नामका बुद्धिलाई हामी देवता र देवत्वको रक्षाका लागि आह्वान गर्दछौं ।

**यां मेधामृभवो विदुर्यां मेधामसुरा विदुः । ऋषयो भद्रां मेधां यां विदुस्तां मय्या वेशयामसि ॥३॥**

ऋभुदेवताले जुन बुद्धिलाई चिनेका छन्, दानवहरूमा जुन बुद्धि छ, ऋषिहरूसँग जुन कल्याणकारी बुद्धि छ, उसै मेधा नामका बुद्धिलाई हामी साधकहरू आफूमा स्थापित गर्दछौं ।

**यामृषयो भूतकृतो मेधां मेधाविनो विदुः । तया मामद्य मेधयाग्ने मेधाविनं कृणु ॥४॥**

मन्त्रद्रष्टा ऋषिहरू र पृथ्वी आदि भौतिक तत्त्वलाई रक्षा गर्ने कश्यप, कौशिक आदि बुद्धिमान्हरूले जुन मेधालाई चिनेका छन्, हे अग्निदेवता ! हामीलाई तिमी उही मेधाले सम्पन्न मेधावी बनाऊ ।

**मेधां सायं मेधां प्रातर्मेधां मध्यन्दिनं परि । मेधां सूर्यस्य रश्मिभिर्वचसा वेशयामहे ॥५॥**

हामी प्रातःकाल, मध्याह्नकाल र सायंकालमा मेधादेवीको सेवा गर्दछौं । सूर्यको रश्मिका साथमा स्तुति गरेर हामी मेधाशक्तिलाई धारण गर्दछौं ।

## १०९. पिप्पलीभैषज्य सूक्त

**ऋषि**– अथर्वा । **देवता**– पिप्पली, भैषज्य आयु । **छन्द**– अनुष्टुप् ।

**पिप्पली क्षिप्तभेषज्यू३ताति विद्धभेषजी । तां देवाः समकल्पयन्नियं जीवितवा अलम् ॥१॥**

पिप्पली नामका औषधिले वात नामको रोग बिग्रेर उत्पन्न भएको क्षिप्त नामका रोग निको पार्दछ र

त्यही नै महाव्याधिको पनि औषधि हो भन्ने कुराको कल्पना देवताहरूले गरेका थिए । यही एक औषधि नै निरोगिता र दीर्घायु प्रदान गर्नमा समर्थ छ ।

**पिप्पल्य१ः समवदन्तायतीर्जननादधि । यं जीवमश्नवामहै न स रिष्याति पूरुषः ॥२॥**

आफ्नो जन्मभन्दा पहिले, पछि आउने समयमा पिप्पलीले— जीवित मानिस वा जुनसुकै प्राणीले नै औषधिका रूपमा मलाई खाएमा ऊ कहिल्यै नष्ट हुँदैन भन्ने कुरो बताएको थियो ।

**असुरास्त्वा न्यखनन् देवास्त्वोदवपन् पुनः । वातीकृतस्य भेषजीमथो क्षिप्तस्य भेषजीम् ॥३॥**

हे पिप्पली नामका औषधि ! तिमी वात रोगको विकृतिबाट पीडित भएको, हातगोडा फ्याँक्ने उन्माद रोगका लागि औषधि हौ । तिमीलाई पहिले असुरले प्रयोग गरेका थिए, त्यसपछि संसारको हितका लागि देवताहरूले तिम्रो उद्धार गरेका हुन् ।

## ११०. दीर्घायु सूक्त

**ऋषि—** अथर्वा । **देवता—** अग्नि । **छन्द—** त्रिष्टुप्, पंक्ति ।

**प्रत्नो हि कमीड्यो अध्वरेषु सनाच्च होता नव्यश्च सत्सि । स्वां चाग्ने तन्वं पिप्रायस्वास्मभ्यं च सौभगमा यजस्व ॥१॥**

उहिलेका जमानादेखि नै तिमी यज्ञीय कार्यमा देवताहरूलाई आह्वान गर्ने र यजन कार्य गर्ने गर्दछौ । हे अग्निदेवता ! तिमी नयाँनौलो होताका रूपमा वेदीमा प्रतिष्ठित भएर हामीलाई सुख, सौभाग्य र ऐश्वर्य प्रदान गर ।

**ज्येष्ठघ्न्यां जातो विचृतोर्यमस्य मूलबर्हणात् परि पाह्येनम् । अत्येनं नेषद् दुरितानि विश्वा दीर्घायुत्वाय शतशारदाय ॥२॥**

हे अग्निदेवता ! तिमी यस जातकलाई ज्येष्ठा नक्षत्रको हानीकारक तथा मूल नक्षत्रको घातक प्रभावबाट जोगाऊ । यी नक्षत्रहरूमा जन्मिएका यस बालकलाई यमका संहारक दोषबाट मुक्त गर र सय वर्षसम्म बाँच्ने आयु प्रदान गर ।

**व्याघ्रेऽह्न्यजनिष्ट वीरो नक्षत्रजा जायमानः सुवीरः । स मा वधीत् पितरं वर्धमानो मा मातरं प्र मिनीज्जनित्रीम् ॥३॥**

क्रूर नक्षत्र परेका दिनमा जन्मिएको यो बालक अरूलाई सुख दिन सक्ने, वीर, पराक्रमी बनोस् । ठूलो भएपछि यसले आफूलाई जन्म दिने माता र पालनपोषण गर्ने पितालाई हरेक किसिमले सुख प्रदान गरोस् ।

## १११. उन्मत्ततामोचन सूक्त

**ऋषि—** अथर्वा । **देवता—** अग्नि । **छन्द—** अनुष्टुप्, परानुष्टुप् त्रिष्टुप् ।

**इमं मे अग्ने पुरुषं मुमुग्ध्ययं यो बद्धः सुयतो लालपीति । अतोऽधि ते कृणवद् भागधेयं यदानुन्मदितोऽसति ॥१॥**

हे अग्निदेवता ! पापबाट उत्पन्न भएका रोगरूपी बन्धनमा बाँधिएका यी मानिस रोगका कारण प्रलाप गरिरहेका छन् । कृपा गरेर तिमी यिनलाई रोग र त्यसको कारणका रूपमा रहेका पापबाट मुक्त गराऊ । यिनले तिम्रो हविको भाग अझै धेरै प्रदान गरून् ।

**अग्निष्टे नि शमयतु यदि ते मन उद्युतम् । कृणोमि विद्वान् भेषजं यथानुन्मदितोऽससि ॥२॥**

हे गन्धर्वग्रहले जकडिएका मानिस ! अग्निदेवताले तिमीलाई उन्मादबाट मुक्त गराऊन् । तिम्रो बहकिन लागेका मनलाई शान्त र स्थिर गराउनका लागि हामी ती औषधिहरू प्रयोग गर्दछौँ, जसका विषयमा हामीले जानेका छौँ ।

**देवैनसादुन्मदितमुन्मत्तं रक्षसस्परि । कृणोमि विद्वान् भेषजं यदानुन्मदितोऽसति ॥३॥**

दैवी अथवा राक्षसी पाप गरिएको फलस्वरूप उत्पन्न भएको उन्मादलाई शान्त गर्नका लागि

हामीले औषधि जानेका छौँ । जुन औषधिले हाम्रो चित्त भ्रमरहित रूपमा स्थिर हुने गर्छ तिनै औषधि हामी प्रयोग गर्दछौँ ।

**पुनस्त्वा दुरप्सरसः पुनरिन्द्रः पुनर्भगः । पुनस्त्वा दुर्विश्वे देवा यथानुन्मदितोऽससि ॥३॥**

हे पुरुष ! अप्सराहरूले तिमीलाई रोगमुक्त गरिदिएका छन् । भग एवं इन्द्रदेवतासहित समस्त देवताहरूले तिमीलाई रोगमुक्त गराएर फिर्ता गरेका छन् ।

## ११२. पाशमोचन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– अग्नि । **छन्द**–त्रिष्टुप् ।

**मा ज्येष्ठं वधीदयमग्न एषां मूलबर्हणात् परि पाह्येनम् । स ग्राह्याः पाशान् वि चृत प्रजानन् तुभ्यं देवा अनु जानन्तु विश्वे ॥१॥**

हे अग्निदेवता ! यिनले आफूभन्दा ठूलाको संहार नगरून्, असत्यले यिनलाई जरो काट्ने दोषबाट मुक्त गरोस् । हे देवता ! तिमी दोषबाट मुक्त गराउने उपाय जान्दछौ । तिमी यिनलाई बन्धनमा पार्ने शक्तिका बन्धनबाट मुक्त गर । यसैका लागि नै समस्त देवताले तिमीलाई मुक्त गर्ने आज्ञा दिऊन् ।

**उन्मुञ्च पाशांस्त्वमग्न एषां त्रयस्त्रिभिरुत्सिता येभिरासन् । स ग्राह्याः पाशान् वि चृत प्रजानन् पितापुत्रौ मातरं मुञ्च सर्वान् ॥२॥**

हे अग्निदेवता ! तिमी ती पाशहरूबाट मुक्त गर, जुन पाशका कारण दूषित भएका यी पुरुषका माता, पिता र पुत्र गरी तीनै जना बाँधिएका छन् । किनभने यस्ता पाशबाट मुक्त गर्ने उपाय तिमीले जानेका छौ ।

**येभिः पाशैः परिवित्तो विबद्धोऽङ्गेअङ्ग आर्पित उत्सितश्च । वि ते मुच्यन्तां विमुचो हि सन्ति भ्रूणघ्नि पूषन् दुरितानि मृक्ष्व ॥३॥**

जुन पाशले दाजुभन्दा पहिले बिहा गर्ने बाँधिएको छ, उसका प्रत्येक अङ्ग जुन बन्धनले बाँधिएका छन्, पाशो खोल्ने गरेका हे अग्निदेवता ! तिमी यिनका पाशहरू खोलिदेऊ र पाशको मूल कारणका रूपमा रहेको पापलाई भ्रूणहत्या गर्नेहरूमा आरोपित गराऊ ।

## ११३. पापनाशन सूक्त

**ऋषि**– अथर्वा । **देवता**– पूषा । **छन्द**–त्रिष्टुप्, पङ्क्ति ।

**त्रिते देवा अमृजतैतदेनस्त्रित एनन्मुष्येषु ममृजे । ततो यदि त्वा ग्राहिरानशे तां ते देवा ब्रह्मणा नाशयन्तु ॥१॥**

यस किसिमका दाजुभन्दा पहिले विवाह गर्ने परिवित्त नामको पापलाई देवताहरूले उहिले नै मन, बुद्धि र चित्त गरी यी तीन ठाउँमा त्रित भन्ने संज्ञा दिएर राखे । त्रित नामका मनले त्यस दोषलाई मानिसका शरीरमा आरोपित गरायो । त्यस पापबाट उत्पन्न भएका गठिया आदि रोगले तिमीलाई छोपे भनेदेखि देवताहरूले मन्त्रका बलले तिम्रो त्यस्ता रोगको दुखाइ हटाइदिऊन् ।

**मरीचीर्धूमान् प्र विशानु पाप्मन्नुदारान् गच्छोत वा नीहारान् । नदीनां फेनाँ अनु तान् वि नश्य भ्रूणघ्नि पूषन् दुरितानि मृक्ष्व ॥२॥**

हे पाप ! तिमी सूर्यका किरणमा, धुवाँमा, बाफको रूप लिएका बादलमा, कुहिरोमा, नदीका फिँजमा प्रवेश गरेर लुक । हे पूषादेवता ! तिमी यस पापलाई भ्रूण अथवा श्रोत्रिय विद्वान्को हत्या गर्नेहरूलाई खन्याइदेऊ ।

**द्वादशधा निहितं त्रितस्यापमृष्टं मनुष्यैनसानि । ततो यदि त्वा ग्राहिरानशे तां ते देवा ब्रह्मणा नाशयन्तु ॥३॥**

त्रितको त्यो पाप तीन ठाउँबाट दस इन्द्रिय, चिन्तन र स्वभाव गरी जम्मा यी बाह्र ठाउँमा आरोपित भएको छ । त्यही पाप मानिसमा प्रवेश हुने गर्दछ । हे पुरुष ! तिमीलाई यदि पापबाट उत्पन्न रोग आदिले अँठ्याएका छन् भनेदेखि देवताहरूले ती रोग आदिलाई मन्त्र वा ज्ञानका शक्तिले नष्ट

गराऊन् ।

## ११४. उन्मोचन सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– विश्वदेवा । **छन्द**–अनुष्टुप् ।

**यद् देवा देवहेडनं देवासश्चकृमा वयम् । आदित्यास्तस्मान्नो यूयमृतस्यर्तेन मुञ्चत ॥१॥**

हामीले जानेर वा नजानीकन जुन पाप गरिसकेका छौं, जुन पापका कारण देवताहरू रिसाएका छन्, हे देवताहरू हो ! हामीलाई यज्ञसम्बन्धी सत्यको ज्ञान गराएर तिमीहरू त्यस्ता पापबाट जोगाओ ।

**ऋतस्यर्तेनादित्या यजत्रा मुञ्चतेह नः । यज्ञं यद् यज्ञवाहसः शिक्षन्तो नोपशेकिम ॥२॥**

हे देवताहरू हो ! जुन पापका कारण हामी यज्ञ गर्ने इच्छा हुँदा पनि यज्ञ गर्नमा असमर्थ भयौं, तिमीहरू यज्ञको सत्य र परम सत्यरूपी ब्रह्मको सहायताले हामीलाई त्यस पापबाट जोगाओ ।

**मेदस्वता यजमानाः स्रुचाज्यानि जुह्वतः । अकामा विश्वे वो देवाः शिक्षन्तो नोप शेकिम ॥३॥**

हे विश्वेदेवताहरू हो ! हामी घिउ आदिको आहुति हालेर जुन यज्ञकर्म गर्न खोज्दछौं, पापका कारण तिनलाई गर्न सकिरहेका छैनौं । हे देवताहरू हो ! हामीलाई त्यस्ता पापबाट तिमीहरू जोगाओ ।

## ११५. पापमोचन सूक्त

**ऋषि**– ब्रह्मा । **देवता**– विश्वदेवा । **छन्द**–अनुष्टुप् ।

**यद् विद्वांसो यदविद्वांस एनांसि चकृमा वयम् । यूयं नस्तस्मान्मुञ्चत विश्वे देवाः सजोषसः ॥१॥**

हे विश्वेदेवताहरू हो ! जानेर वा नजानीकन हामीले गरेका पापबाट हामीलाई जोगाओ । कृपा गरेर तिमीहरू हाम्रा सबै प्रियजनलाई जोगाओ ।

**यदि जाग्रद् यदि स्वपन्नेन एनस्योऽकरम् । भूतं मा तस्माद् भव्यं च द्रुपदादिव मुञ्चताम् ॥२॥**

जागा रहेका अवस्थामा वा स्वप्नका अवस्थामा पनि अज्ञानतावश हामीबाट भएका पापहरूबाट हामीलाई उसरी नै मुक्त गराओ जसरी काठका खाँबामा बाँधेका पशुलाई किलाबाट मुक्त गर्नुपर्दछ ।

**द्रुपदादिव मुमुचानः स्विन्नः स्नात्वा मलादिव । पूतं पवित्रेणेवाज्यं विश्वे शुम्भन्तु मैनसः ॥३॥**

पशुलाई जसरी बन्धनबाट मुक्त गराइन्छ अथवा नुहाएपछि मानिस फोहोरमैलाबाट मुक्त भएर शुद्ध हुने गर्दछ अथवा सफा र बाक्लो चाल्नीले घिउ आदि पदार्थलाई छान्ने गरिन्छ, उसै गरी समस्त देवताहरूले हामीलाई पापबाट मुक्त गराऊन् ।

## ११६. मधुमदन्न सूक्त

**ऋषि**– जाटिकायन । **देवता**– विवस्वान् । **छन्द**–जगती, त्रिष्टुप् ।

**यद् यामं चक्रुर्निखनन्तो अग्रे कार्षीवणा अन्नविदो न विद्यया । वैवस्वते राजनि तज्जुहोम्यथ यज्ञियं मधुमदस्तु नोऽन्नम् ॥१॥**

खेतीको काम गर्ने मानिसहरू जमिन जोत्ने आदिजस्ता कामहरू सक्रिय रूपमा गर्दछन्, उसै कृषि विद्याले उनीहरू अन्नका धनी होऊन् । हामी त्यही अन्न वैवस्वत् नामका सूर्यलाई हविका रूपमा अर्पित गर्दछौं । त्यसो भएपछि हाम्रो अन्न पनि यज्ञका लागि योग्य र मधुर हुने गर्दछ ।

**वैवस्वतः कृणवद् भागधेयं मधुभागो मधुना सं सृजाति । मातुर्यदेन इषितं न आगन् यद् वा पितापराद्धो जिहीडे ॥२॥**

वैवस्वत् नामका सूर्यदेवता आफ्ना लागि प्रदान गरिएको हविको भाग ग्रहण गर्दछन् । हविको मधुर भागले प्रसन्न भएर उनले हामीलाई मधुर अन्न प्रदान गरून् । मातापितासित द्रोह गरेजस्तो

जुन पाप हामी अपराधीलाई आइलागेको छ, त्यो शान्त होस् ।

**यदीदं मातुर्यदि वा पितुर्नः परि भ्रातुः पुत्राच्चेतस एन आगन् । यावन्तो अस्मान् पितरः सचन्ते तेषां सर्वेषां शिवो अस्तु मन्युः ॥३॥**

मातापिता अथवा दाजुभाइप्रति अपराध गरेकाले त्यसको दण्डका रूपमा प्राप्त भएको पाप शान्त होस् र जुन पितृहरूसित यसको सम्बन्ध हुन्छ, उनको मन्यु अर्थात् सुधार गर्ने जोस वा रिस हाम्रा लागि हितकारी सिद्ध होस् ।

## ११७. आनृण्य सूक्त

**ऋषि–** कौशिक । **देवता–** अग्नि । **छन्द–**त्रिष्टुप् ।

**अपमित्यमप्रतीत्तं यदस्मि यमस्य येन बलिना चरामि । इदं तदग्ने अनृणो भवामि त्वं पाशान् विचृतं वेत्थ सर्वान् ॥१॥**

फिर्ता गर्नुपर्ने जुन ऋण हुन्छ, त्यो चुक्त नगरेका कारण हामी ऋणी भएका छौँ । यस्तो बलियो ऋणका कारण यमराजका वशमा हामी पर्नेछौँ । हे अग्निदेवता ! ऋणका कारण हुने पारलौकिक पाशबाट मुक्त गर्न तिमी जान्दछौ । त्यसैले तिम्रो कृपाबाट हामी ऋणरहित हुन सकौँ ।

**इहैव सन्तः प्रति दद्म एनज्जीवा जीवेभ्यो नि हराम एनत् । अपमित्य धान्यं यज्जघसाहमिदं तदग्ने अनृणो भवामि ॥२॥**

यसै लोकमा छँदैछँदै मर्नुभन्दा पहिले नै हामीले ऋण चुक्ता गर्ने विचार गरेका छौँ । हे अग्निदेवता ! हामीले ऋण लिएर अन्न खाएका छौँ, तिम्रो कृपाले हामी त्यस ऋणबाट मुक्त हुन सकौँ ।

**अनृणा अस्मिन्ननृणाः परस्मिन् तृतीये लोके अनृणाः स्याम । ये देवयानाः पितृयाणाश्च लोकाः सर्वान् पथो अनृणा आ क्षियेम ॥३॥**

हे अग्निदेवता ! तिम्रा कृपाले हामी यस लोकमा ऋणमुक्त हुन सकौँ, परलोकमा ऋणमुक्त हुन सकौँ र तेस्रो लोकमा पनि ऋणबाट मुक्त रहन सकौँ । देवयान र पितृयानका मार्गमा तथा समस्त लोकहरूमा नै हामी ऋणबाट मुक्त भएर रहन पाऔँ ।

## ११८. आनृण्य सूक्त

**ऋषि–** कौशिक । **देवता–** अग्नि । **छन्द–**त्रिष्टुप् ।

**यद्धस्ताभ्यां चकृम किल्बिषाण्यक्षाणां गत्नुमुपलिप्समानाः । उग्रंपश्ये उग्रजितौ तदद्याप्सरसावनु दत्तामृणं नः ॥१॥**

हातगोडा आदि इन्द्रियले जुन पाप गरिएको छ र इन्द्रियको रहर पूरा गर्नका लागि जुन ऋण लिइएको छ, त्यो ऋण तीक्ष्ण दृष्टि भएका उग्रंपश्या र उग्रजिता नामका दुई अप्सराले ऋणदातालाई चुक्ता गरिदिऊन् ।

**उग्रंपश्ये राष्ट्रभृत् किल्बिषाणि यदक्षवृत्तमनु दत्तं न एतत् । ऋणान्नो नर्णमेर्त्समानो यमस्य लोके अधिरज्जुरायत् ॥२॥**

हे उग्रपश्या र राष्ट्रभृत् नामकी राष्ट्रलाई भरणपोषण गर्ने अप्सराहरू हो ! हामीले जुन पाप गरेका छौँ र इन्द्रियको रहर पूरा गर्नमा जुन पाप हामीबाट भए तिनलाई तिमीहरू मेटाइदेओ; तिनबाट हामीले दुःख नपाऔँ । हामीलाई ऋणमुक्त गराओ; जसले गर्दा हामीलाई यमलोकमा ऋणदाताले पाशो हालेर कष्ट नदिऊन् ।

**यस्मा ऋणं यस्य जायामुपैमि यं याचमानो अभ्यैमि देवाः । ते वाचं वादिषुर्मोत्तरां मद्देवपत्नी अप्सरसावधीतम् ॥३॥**

जोसित लुगाफाटो र गरगहना ऋण लिएको छौँ र जसकी जसकी आइमाईका छेउमा आशा लिएर जाने गर्दछौँ, हे देवताहरू हो ! उनीहरूले हामीलाई अनुचित कुरो नभनून् । हे देवपत्नीहरू हो ! हे अप्सराहरू हो ! हाम्रो यो प्रार्थनामा तिमीहरू ध्यान देओ ।

## ११९. पाशमोचन सूक्त

**ऋषि—** कौशिक । **देवता—** वैश्वानर अग्नि । **छन्द—**त्रिष्टुप् ।

**ययदीव्यन्नृणमहं कृणोम्यदास्यन्नग्न उत संगृणामि । वैश्वानरो वो अधिपा वसिष्ठ उदिन्नयाति सुकृतस्य लोकम् ॥१॥**

ऋण दिने रहर हुँदा पनि र ऋण चुक्ता गर्ने वचन दिँदा पनि ऋण दिनका लागि असमर्थ रहियो । समस्त प्राणीका हितैषि एवं सबैलाई व्यवस्थित गर्ने अधिपति हे अग्निदेवता ! हामीलाई त्यस्ता दोषबाट जोगाऊ र पुण्यलोकमा हाम्रो गति श्रेष्ठ बनाऊ ।

**वैश्वानराय प्रति वेदयामि यद्यृणं संगरो देवतासु । स एतान् पाशान् विचृतं वेद सर्वानथ पक्वेन सह सं भवेम ॥२॥**

यस समाजको लौकिक ऋण र देवऋणबाट मुक्त हुनका लागि हामी वैश्वानर अग्निदेवतालाई सङ्कल्प समर्पित गर्दछौं । उनै अग्निदेवताले सबै खालका ऋणका पाशहरूलाई खोल्न जानेका छन् । उनले हामीलाई ऋणको बन्धनबाट मुक्त गरेर परिपक्व रूपमा स्वर्गलोक प्राप्त गराउँछन् ।

**वैश्वानरः पविता मा पुनातु यत् संगरमभिधावाम्याशाम् । अनाजानन् मनसा याचमानो यत् तत्रैनो अप तत् सुवामि ॥३॥**

सबैलाई पवित्र गराउने वैश्वानर अग्निदेवताले हामीलाई पवित्र गराऊन् । हामी त केवल ऋण चुक्ता गर्नका लागि बारम्बार सङ्कल्प मात्रै गरिरहेका छौं । हामी अज्ञानतावश यस लोकका सुखको आशा गरिरहेका छौं र मनबाट तिनैको कामना गर्दै छौं । यस्ता असत्य व्यवहारले गर्दा जुन पाप उत्पन्न भएको छ, त्यो सबै नै पर जाओस् ।

## १२०. सुकृतलोक सूक्त

**ऋषि—** कौशिक । **देवता—** वैश्वानर अन्तरिक्ष, पृथिवी, द्यौ, अग्नि । **छन्द—**जगती, पङ्क्ति, त्रिष्टुप् ।

**यदन्तरिक्षं पृथिवीमुत द्यां यन्मातरं पितरं वा जिहिंसिम । अयं तस्माद् गार्हपत्यो नो अग्निरुदिन्नयाति सुकतस्य लोकम् ॥१॥**

द्युलोक, अन्तरिक्ष, पृथ्वीका प्राणीहरू र मातापिताप्रति कष्टदायी व्यवहार गरेका कारण हामीबाट जेजति पाप भएको छ, त्यस पापबाट गार्हपत्य अग्निदेवताले रक्षा गरून् र हामीलाई पुण्यलोकमा श्रेष्ठ गति प्रदान गरून् ।

**भूमिर्मातादितिर्नो जनित्रं भ्रातान्तरिक्षमभिशस्त्या नः । द्यौर्नः पिता पित्र्याच्छं भवाति जामिमृत्वा माव पत्सि लोकात् ॥२॥**

पृथ्वी हाम्री जन्मदात्री माता हुन् । यिनी देवमाता अदितिजत्तिकै पूजनीय छिन् । अन्तरिक्ष हाम्रा दाजुभाइ र द्युलोक हाम्रा लागि पिताजस्तै हुन् । यी सबैले हामीलाई पापबाट जोगाऊन् र हाम्रा लागि कल्याणकारी सिद्ध होऊन् । हामी निषिद्ध स्त्रीका साथमा पापयुक्त व्यवहार गरेर लोकबाट भ्रष्ट नहोऔं ।

**यत्रा सुहार्दः सुकृतो मदन्ति विहाय रोगं तन्व१ः स्वायाः । अश्लोणा अङ्गैरह्रुताः स्वर्गे तत्र पश्येम पितरौ च पुत्रान् ॥३॥**

श्रेष्ठ हृदय भएका, यज्ञ आदि पुण्य कर्म गर्ने, शारीरिक रोगबाट मुक्त भएर हामीले उत्तम गति प्राप्त गरौं । अङ्गको विकारबाट मुक्त भएर सहज, सरल जीवन यापन गर्दै स्वर्ग आदि श्रेष्ठ लोकहरूमा रहँदै आफ्ना आत्मीय पितृ र पुत्रहरूलाई देख्न पाऔं ।

## १२१. सुकृतलोकप्राप्ति सूक्त

**ऋषि**– कौशिक । **देवता**– अग्नि, तारके । **छन्द**–त्रिष्टुप्, अनुष्टुप् ।

**विषाणा पाशान् वि ष्याध्यस्मद् उ उत्तमा अधमा वारुणा ये । दुष्वाप्न्यं दुरितं नि ष्वास्मदथ गच्छेम सुकृतस्य लोकम् ॥१॥**

बन्धनकी अधिष्ठात्री हे निर्ऋति नामकी देवी ! वरुणदेवताका उत्तम, मध्यम र अधम पाशहरूलाई चुँडाउँदै हामीलाई मुक्त गराऊ । दुःस्वप्न र पाप हटाएर हामीलाई स्वर्गलोकमा पुऱ्याऊ ।

**यद् दारुणि बध्यसे यच्च रज्ज्वां यद् भूम्यां बध्यसे यच्च वाचा । अयं तस्माद् गार्हपत्यो नो अग्निरुदिन्नयाति सुकृतस्य लोकम् ॥२॥**

हे पुरुष ! तिमी काठको खम्बामा जुन डोरीले बाँधिन्छौ, जुन भूमिमा तिमी बाँधिन्छौ र जुन वचनले तिमी बाँधिएका हुन्छौ, त्यस्ता समस्त बन्धनबाट यी गार्हपत्य अग्निदेवताले मुक्त गरेर स्वर्गलोकमा पुऱ्याइदिऊन् ।

**उदगातां भगवती विचृतौ नाम तारके । प्रेहामृतस्य यच्छतां प्रैतु बद्धकमोचनम् ॥३॥**

ऐश्वर्यले सम्पन्न भगवती र विचृत् नामकी अन्धकारनाशक दुई वटी ताराका रूपमा रहेका देवीहरूका शक्तिले हामीलाई मृत्युबाट मुक्त गराऊन् । जसले गर्दा बन्धनमा परेको त्यो पुरुषरूपी जीवले मोक्ष प्राप्त गरोस् ।

**वि जिहीष्व लोकं कृणु बन्धान्मुञ्चामि बद्धकम् । योन्या इव प्रच्युतो गर्भः पथः सर्वां अनु क्षिय ॥४॥**

हे देवता ! विभिन्न किसिमले प्रगति गरेर बन्धनमा अल्झिएका दुःखी पुरुषलाई तिमी मुक्त गराऊ । हे पुरुष ! तिमी बन्धनबाट मुक्त भएर गर्भाशयबाट बाहिर आऊ र शिशुजस्तो स्वतन्त्र रूपमा सर्वत्र विचरण गर ।

## १२२. तृतीयनाक सूक्त

**ऋषि**– भृगु । **देवता**– विश्वकर्मा । **छन्द**– त्रिष्टुप्, जगती ।

**एतं भागं परि ददामि विद्वन् विश्वकर्मन् प्रथमजा ऋतस्य । अस्माभिर्दत्तं जरसः परस्तादच्छिन्नं तन्तुमनु सं तरेम ॥१॥**

सम्पूर्ण संसारका सृष्टिकर्ता हे देवता ! तिमी सर्वप्रथम प्रकट भएका छौ । हामी तिम्रो महिमा जानेर यो परिपक्व हवि आफ्नो रक्षाका लागि तिमीलाई अर्पित गर्दछौँ । यज्ञीय प्रक्रियाले यस अविच्छिन्न सूत्रको अनुसरण गरेर हामी बुढ्यौलीपछिको अवस्था पार लाग्नेछौँ र सद्गति पाउनेछौँ ।

**ततं तन्तुमन्वेके तरन्ति येषां दत्तं पित्र्यमायनेन । अबन्ध्वेके ददतः प्रयच्छन्तो दातुं चेच्छिक्षान्त्स स्वर्ग एव ॥२॥**

कैयौँ मानिसहरू जीवनमा स्थान प्राप्त गराउने यस विस्तृत यज्ञीय सूत्रको अनुसरण गरेर पार लाग्दछन् । उनीहरूको आगमनलाई धारण गरेपछि पितृऋण चुक्ता हुन्छ । बन्धुरहितहरू पनि पैतृक धनलाई दान गरेर ऋणमुक्त हुन्छन् र स्वर्ग प्राप्त गर्न सक्दछन् ।

**अन्वारभेथामनुसंरभेथामेतं लोकं श्रद्दधानाः सचन्ते । यद् वां पक्वं परिविष्टमग्नौ तस्य गुप्तये दम्पती सं श्रयेथाम् ॥३॥**

हे दम्पती ! परलोकको हित गर्नका लागि लक्ष्य राखेर सत्कर्म गर्न थाल; निरन्तर त्यसैमा लाग । सत्कर्मको श्रेष्ठ फललाई श्रद्धायुक्त आस्तिकहरूले मात्रै प्राप्त गर्दछन् । तिमी पनि ब्राह्मणलाई दिनका लागि पक्वान्न र अग्निदेवतालाई अर्पण गर्नुपर्ने हविरूपी अन्न दान गरेर श्रेष्ठ लोक प्राप्त गर ।